# लिच्छवि-इतिहास

(नेपालको चौथो शताब्दीदेखि आठौं शताब्दीसम्मको छोटकरी इतिहास)




ग्रन्थकार
डा० जगदीशचन्द्र रेग्मी

प्रकाशक

नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर, काठमाडौं
नेपाल

प्रकाशक–
नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर

प्रथम सँस्करण
प्रकाशन मिति– २०५३ आषाढ
प्रकाशित प्रति– १०००

मूल्य: - १७५/-

मुद्रक– युनाइटेड ग्राफिक प्रिन्टर्स, प्लाजा, पुतलीसडक, काठमाडौं, फोन ४२१४१०

# प्रकाशकीय

खुल्ला प्राज्ञिक वातावरणमा मुलुकको इतिहासको अन्वेषण, अध्ययन-अध्यापन गर्न थालिएको साढे चार दशक भइसकेको छ तर पनि प्रामाणिक स्रोतको सहायताले प्राचीनकालदेखि क्रमवद्ध रुपले मध्यकालसम्मको इतिहास तयार भएको छैन । प्रागइतिहास-आद्यइतिहास-इतिहासबीचका धुप्रै लुप्त कडीहरुलाई खोजी यथास्थानमा जोड्ने काम पनि अधुरै छ । यस्तो अवस्थामा वर्गीकरणका दृष्टिले प्राचीनकाल भनेर लिच्छविकाललाई नै मुख्यत: संकेत गरिन्छ र त्यसअघिको इतिहास अनुश्रुति, वंशावलीहरुमै सीमित छ । लिच्छविकाल ईशाको प्रथम वा द्वितीय शताब्दीदेखि शुरु भएको मानिन्छ तापनि एकाध अपवादलाई छाडेर प्रामाणिक पुरातात्विक श्रोतहरु ईशाको पाँचौ शताब्दी अर्थात् मानदेव प्रथमका समयदेखि मात्र पाइन थाल्छन् । नरेन्द्रदेवका नाति जयदेव द्वितीयले किटानकासाथ आफू पहिले आफ्नो वंशका दर्जनौ राजाहरुले नेपालमा शासन गरिसकेको कुरा पशुपतिको प्रसिद्ध अभिलेखमा उल्लेख गरेका छन् । यसरी लिच्छवि शासनको थालनी ईशाको प्रथम वा दोश्रो शताब्दीको प्रारम्भवाट भएको हुनमा सन्देह देखिँदैन ।

नेपाली भाषामा लेखिएको लिच्छविकालको प्रामाणिक विश्लेषणात्मक इतिहासको हामीकहाँ अभाव रहिआएको छ । यस केन्द्रले धेरै वर्षपहिले तर्जुमा गरेको राष्ट्रिय इतिहास परियोजनाअन्तर्गत प्राचीन नेपालको राजनीतिक इतिहास खण्ड तयार गर्ने निर्णय भएको भए पनि सो पाण्डुलिपि तयार हुन नसक्दा परियोजनाको सो खण्ड अनिश्चित रह्यो । यता त्यस्तो पुस्तकको माग भने बढेर गयो । यस अवस्थालाई दृष्टिगत गर्दै गरिएको अनुरोधअनुसार प्रस्तुत ग्रन्थ तयार भएको हो । यसका ग्रन्थकार डा० जगदीशचन्द्र रेग्मी नेपालको इतिहास-संस्कृतिका पारखी पाठकहरुका लागि नयाँ नाम होइन । अतएव, उहाँले परिश्रमसाथ तयार गर्नु भएको प्रस्तुत ग्रन्थले लिच्छविकालको राजनीतिक इतिहास - यसको उत्कर्ष, उथल-पुथल तथा अधोमुख- लाई सप्रमाण केलाउन सकेको छ । यस कालका कतिपय घटना, तिनका सूत्रधार र समय अद्यापि विवादास्पद रहेकाले तिनवारे लेखकको प्रस्तुतिप्रति मतैक्य नहुन सक्छ । तर अहिलेसम्म प्राप्त पुरातात्विक श्रोत-सामाग्रीलाई दृष्टिगत तथा हृदयङ्गम गरी तिनको विश्लेषणबाट नै यो ग्रन्थ तयार भएकोले प्रस्तुत कालको चित्रण दिन यो सफल हुनेछ भन्ने यस केन्द्रको अपेक्षा रहेको छ ।

प्रस्तुत ग्रन्थको प्रकाशनका लागि आवश्यक आर्थिक सहयोग जुटाउने क्रममा राष्ट्रिय योजना आयोगले थोरै समयमा निर्णायक भूमिका खेली यस केन्द्रप्रति आफ्नो विश्वास व्यक्त गरेकोले हामी आयोगप्रति आभारी छौं ।

यस ग्रन्थलाई तोकिएको अवधिमा तयार गरेर प्रस्तुत गर्नु हुने विद्वान डा० जगदीशचन्द्र रेग्मीले यस केन्द्र तथा इतिहासका पाठकहरुलाई ठूलो सहयोग पु-याउनु भएको छ । अत: उहाँलाई केन्द्रका तर्फबाट हार्दिक धन्यवाद ज्ञापन गर्नु मैले आफ्नो कर्तव्य ठनेको छु । यसैगरी पुस्तक छपाउने क्रममा अत्यधिक खट्नु हुने केन्द्रको अनुसन्धान एकाइका स० प्रा० श्री नानी राम खत्री, स० प्र० नारायण रेग्मी तथा स्टोर कीपर श्री माधव गुरागाईं पनि धन्यवादका पात्र हुनुहुन्छ । अन्तमा यो पुस्तक थोरै समयभित्र प्रकाशित गरिदिने अभिभारा लिनुहुने युनाइटेड ग्राफिक प्रिन्टर्सका व्यवस्थापकज्यूहरुलाई पनि केन्द्रको तर्फबाट हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

डा० प्रेमकुमार खत्री
कार्यकारी निर्देशक

२०५३।३।१४

# भूमिका

नेपालको इतिहासमा लिच्छविकालका आफ्नै विशेषत्ता हुनाले धेरै इतिहासकारहरुको ध्यान यतातिर तानिँदै आएको देखिन्छ र आफू पनि गुरुजनहरुको प्रेरणाबाट यसै विषयतिर विशेष केन्द्रित हुन पुगेको हूँ । त्यसै क्रममा आजभन्दा १७ वर्षअघि ने. रा. प्र. प्रतिष्ठानबाट प्राचीन नेपालको राजनीतिक इतिहास प्रकाशित गराउन सफल भएको थिएँ । साथै २७ वर्षअघि 'लिच्छविसंस्कृति' पनि विद्वान्हरुसमक्ष आइपुगेको हो । उक्त दुवै ग्रन्थ कालान्तरमा बजारमा दुष्प्राप्य भए । उता विभिन्न पाठ्यांशहरुमा ती ग्रन्थ स्वीकृत भएका पनि थिए र विद्यार्थी एवं विद्वत् समाजमा यिनको माग कायमै थियो । धेरै पहिले लेखिएका हुँदा तिनमा केही अभाव र कमी भएकाले तिनको त्यस्तै रुपमा पुन: प्रकाशन गरिहाल्नु उचित थिएन । खासगरी श्री धनवज्र वज्राचार्यले लिच्छविकालका अभिलेख २०३० मा प्रकाशित गरेपछि लिच्छवि इतिकासका सम्बन्धमा पुनर्विचार गर्नुपर्ने धेरै पक्ष उद्घाटित भएका थिए । त्यसै क्रममा मैले लिच्छविकालीन इतिहासलाई पुनर्लेखन गर्नुपर्ने ठानी विस्तारै लेख्दै २०४९ मा यो प्रस्तुत ग्रन्थ तयार पारिसकेको थिएँ तर यत्रो ठूलो आकारको ग्रन्थको प्रकाशनमा कुनै पक्षले रुचि लिएको पाइएन । लेखिसिध्याएको चार वर्ष जतिपछि मात्र यसको प्रकाशन सम्भव भएको छ र यो पनि सम्मानित मित्र डा. प्रेमकुमार खत्रीज्यूको विशेष प्रयासबाट ।

यो पुस्तकका विषयवस्तुका आधारको रुपमा सम्बद्ध सबै विद्वान्का प्रकाशित ग्रन्थ र लेखहरु रहेका छन् । खासगरी २०२८-२९ तिर श्री धनवज्र वज्राचार्यसँग दिन-दिनैको सम्पर्क र छलफल एवं उहाँका कृतिको ठूलो आधार यसमा छ । अन्य विद्वान् मित्रहरुमा श्री ज्ञानमणि नेपाल, श्री महेशराज पन्तज्यूहरुसँगको बराबर सम्पर्क-कुराकानीबाट पनि आफ्ना धारणा स्पष्ट गर्न निकै सघाउ पुगेको हो । साथै डा. श्री रामनिवास पाण्डे, श्री जगमान गुरुङ्ग एवं श्री पुष्करप्रसाद राजभण्डारीहरुको सहयोग र सहानुभूति पनि यसका कारक रुपमा रहेको अनुभव गर्दछु ।

हातले गञ्जागोलसँग लेखिएको करीब ८०० पन्नाको आकारलाई पहिले आफ्नै निर्देशनमा टाइप गराई त्यसपछि कम्प्यूटर सेट गराउने काममा मित्र डा. श्री प्रेमकुरमार खत्रीज्यूले जति परिश्रम र सक्रियता देखाउनु भयो त्यतिबाट यस ग्रन्थको निर्माण र प्रकाशनमा उहाँले श्रेयको अधिकांशं भाग स्वीकार गर्नुपर्ने हुन्छ । यति मात्र हैन सम्पादनको काम पनि उहाँले नै गरिदिई ठूलो योगदान गर्नुभएको छ । तर यसमा पर्न गएका ज्ञात अज्ञात गल्तीहरुको जिम्मेवार म आफैं छु र विद्वान्हरुको संकेत-समीक्षा र आफ्नो भावी अनुभवबाट पछिका संस्करणहरुमा तिनको सुधार गर्ने आशा राख्दछु ।

यस पुस्तकको हस्तलिखित प्रतिलाई खारी कम्प्यूटर सेटिङ्गसम्म उक्ल्याउन मद्दत गर्ने नेपाल र एशियाली अनुसन्धान केन्द्रका श्री अनेश श्रेष्ठाचार्य, श्री कमल वानियाँ, श्री गोबिन्द बहादुर थापाहरुमा हार्दिक धन्यवाद दिनु ज्यादै आवश्यक ठान्दछु । अन्त्यमा युनाइटेड ग्राफिक प्रिण्टर्सका अधिकारी श्री यज्ञ ढुंगानालाई पुस्तकको अन्तिम रुप आकर्षक र छरितो रुपमा छिटो निकालिदिनुभएकोमा पनि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।

डा. जगदीशचन्द्र रेग्मी
टंगाल, काठमाण्डौ
नेपाल ।

# लिच्छवि-इतिहास

## विषय-सूचि

खण्ड- ४



खण्ड- ५



खण्ड - ६



खण्ड- ७
परिशिष्ट

# खण्ड - १

## प्राक्कथन

### इतिहास

पहिले घटेका घटनाहरुलाई नै इतिहास भन्ने साधारण अर्थ गर्न सकिन्छ भने आस्तिक परम्परामा "पारम्परिक उपदेश" भएको विषयलाई मानिएको पाइन्छ (भट्टाचार्य १९६२ ९२४) ।[१] त्यस्तो उपदेश पनि चतुर्वर्ग - धर्म, अर्थ, काम र मोक्षसम्बन्धी पहिलेका घटना र कथाहरुसँग सम्बद्ध हुनुपर्दछ भन्ने पारम्परिक कथन पाइन्छ (ऐजन) ।[२]

इतिहास विषयमा ऋषि, राजा र महापुरुषहरुको वर्णन हुन्छ जसबाट समाजलाई कर्त्तव्य-अकर्त्तव्यको छ्यान गर्ने शक्ति प्राप्त हुन सक्दछ । पारम्परिक विश्वासले इतिहास विषयको परिचय यस रुपमा दिइएको पाइयो ।

हिन्दूहरुले प्रत्येक महत्वपूर्ण विषयलाई माहात्म्यअनुसार देवत्व मान्ने गरिएको परम्परामा इतिहासलाई पनि देव स्वरुप मानिएको सन्दर्भ पाइन्छ । नृसिंहप्रासाद नामक ग्रन्थमा इतिहासको दैवी स्वरुपको वर्णन यस्तो पाइन्छ :-

> "इतिहास कुशको जस्तो आभा भएको, सुंगरको मुख भएको र ठूलो पेट भएको हुन्छ। अक्षसूत्र र घडा लिएको र कमलले घेरिएको हुन्छ । दूर्वाश्याम वर्ण यिनको हुन्छ"
> (ओइयर,१९५८:१०१)।[३]

माथि चर्चित नृसिंहप्रासाद ग्रन्थमैं इतिहास विषयका अधिदेवताको सिद्धान्तको पनि उल्लेख भएको छ । त्यसअनुसार इतिहासका अधिदेवता प्रजापति ब्रह्मा हुन् । तिनको व्यक्तित्व यस किसिमले वर्णन गरिएको पाइन्छ :-

> हाँसमा चढेका र एक मुख भएका, बायाँ काखमा सावित्री लिएका प्रजापति ब्रह्मा । यिनी पाटलवर्ण (रातो) हुन्छन् (ऐजन: १०१) ।[४]

हाम्रो इतिहाससम्बन्धी धारणासँग सम्बन्धित आर्को विषय पुराण हो । यो पुराण विषयलाई पनि इतिहासलाई जस्तै दैवी स्वरुप दिइएको पाइन्छ । माथि चर्चिसकिएको नृसिंहप्रासाद नामक ग्रन्थमा पुराणको स्वरुप यस्तो बयानिएको पाइन्छ :-

> पुराण चाँपोको रंगको, सुगाको मुख भएको र भुँडे स्वरुपको हुन्छ । यसले अक्षसूत्र, अभयमुद्रा र अनेक गहना लगाएको हुन्छ (ऐजन: १००) ।[५]

शैवागम नामको ग्रन्थमा पुराणका अधिदेवता स्वायंभुव मनु हुन् भनेर उल्लेख गरिएको पाइन्छ (ऐजन: १००) ।[६]

इतिहास विषयको प्राच्य र पाश्चात्य सिद्धान्तहरुको तुलनात्मक अध्ययन गर्दा यस्ता सूत्रहरुको अध्ययन गर्नु पर्ने देखिन्छ ।

**लिच्छवि इतिहासको स्रोत सामग्री**

लिच्छविकालको इतिहास निर्माण गर्दा हामीले निम्न श्रोतहरुको आधार लिनुपर्ने हुन्छ–

(१) शिलालेख, अभिलेख र संवत् समस्या
(२) टक
(३) पुरातात्विक उपलब्धि
(४) विदेशी सूचना
(५) वंशावली साहित्य, र
(६) अन्य

यी स्रोतहरुबारे तल अध्ययन गरिने छ ।

**(१) शिलालेख, अभिलेख**

यस किसिमको श्रोतको आफ्नै महत्व छ तर यस किसिमका सामग्री धेरै पछिदेखि अर्थात् ई ४५९ देखि पाउन थालिन्छ । त्यस मितिभन्दा अघिको इतिहास जान्ने स्रोत वंशावली र अन्य खालका साहित्य मात्रै रहन गएका छन् । शिलालेख प्रमाणहरुबाट राजा वृषदेवदेखिको इतिहास केही स्पष्ट हुन थालेकोले प्रस्तुत ग्रन्थमा तिनै राजादेखिको इतिहास प्रस्तुत गरिएको छ ।

भगवान्लाल इन्द्राजीको समयदेखि २०३० मा धनवज्र बज्राचार्यले लिच्छविकालका अभिलेख प्रकाशित गरुन्जेल २०० जति लिच्छविकालका अभिलेखहरुको आधारमा लिच्छविकालको इतिहासको अध्ययन गरी आइएको हो । उक्त ग्रन्थको प्रकाशन भएको आज १७ वर्ष बितिसकेको छ तर यो अवधिमा यस क्षेत्रमा विशेष अभिरुचि बढ्न सकेको पनि देखिँदैन र इतिहासको अध्ययन विषयमा पनि कुनै विकास हुन सकेको छैन । तर यही १७ वर्षको अवधिमा पनि लिच्छविकालका थप ३० जति अभिलेख पाइएका छन् । जुनमध्ये राजनीतिक महत्वका दुईटा मात्र छन् । अरु सामाजिक महत्वका छन् । राजनीतिक महत्वका ती दुई अभिलेख तल उद्धृत गरिएको छ ।

हालको अनुसन्धानबाट मानदेवको चाँगुनारायण अभिलेखभन्दा ५ वर्ष पुरानो संवत् ३८१ (ई. ४५९) को अभिलेख पशुपति मन्दिरमा पाइएको छ । सोको प्रकाशित पाठ (राजवंशी २०४६: १-२) निम्न बमोजिम छ–

१. (संवत्) ३८१ वैशाखमासे शुक्ल (पक्षे) ... ...
२. ... ... अभिजिति मुहूर्ते शिलास्तंभ ... ... ...



३. ... ... स परिचुम्वित वक्त्रपञ्च ... ... ...
४. ... ... मन्मथशरो लभतेवकाशा ... ... ... ...
५. ... ... वग परिवृंहितचारुमूर्ति ... ... ... ... ...
६. ... ... म इव वर्षशतञ्चकार ... ... ... ... ...
७. स्वतनयै: शुशुभे महद्भि ... ... ... ... ... ...
८. ... ... म गुणै: प्रतैरुदारै: ... ... ... ... ...
९. ... ... (उ) च्चगिरिश्रृंगसमाम्प्रतोदीम्... ... ... ...
१०. ... ... र विधानविशारदत्वात् ... ... ... ...
११. ण्डलनभस्तलनिम्र्मलेन्दो: ... ... ... ... ... ...
१२. नयनो वृषदेवनामा ... ... ... ... ... ... ... ...
१३. (भ) गवत: प्रतिमां सुरुपाम् ... ... ... ... ... ...
१४. विपुलानि धनानि तस्मै ध ... ... ... ... ... ...
१५. थित वीटर्यवलप्रतापो ... ...... ... ... ... ... ...
१६. जनभृत्यसुहृद्द्विजानाम ... ... ... ... ... ...
१७. ... ... मिव शक्तै शरर्ष्टिवर्षम् ... ... ... ... ...
१८. ... ... मधिरुह्य सवायुवेगम् ... ... ... ... ...
१९. ... ... म्य युधि सर्व्वगुणोपपन्नो ... ... ... ...
२०. ... ... ग्रह इव प्रियचारुमूर्ति: ... ... ... ... ...
२१. ... ... ... क्रतुषु नैकविधेषुनित्यम् ... ... ...
२२. ... ... ... परिशुद्धविधानकर्म्म ... ... ... ...
२३. ... ... ... यूपचयनैर्व्वसुधांसम (स्ताम्) ... ... ...
२४. ... ... ... य सकलां सुनय (नाम्) ... ... ... ...
२५. ... ... ... नय: प्रतिमा ... ... ... ... ... ... ... ...

यस अभिलेखका सम्पादकले यसलाई मानदेव प्रथमको भनी मान्नुभएको छ तर हामीले यसैलाई राजा धर्मदेवको होला भन्ने विचार गरेका छौं । लिच्छवि अभिलेखको प्राचीनता पाँच वर्षले बढी पुरानो सिद्ध हुनाले पनि यस अभिलेखको महत्व रहेको छ ।

हालैको अनुसन्धानबाट अंशुवर्माको एउटा नौलो अभिलेख पत्तालागेको छ । यस अभिलेखलाई पाउने र प्रकाशन गर्ने काम श्यामसुन्दर राजवंशीले गर्नु भएको छ (राजवंशी, १९९०: ३४) । गोकर्ण बालुवागाउँ महांकाल स्थानमा पाइएको सो अभिलेखको प्रकाशित पाठ निम्न बमोजिम छ :–

१. ऊं त्रैधातुकक्लेशतरुंस्परन्तञ्चतुर्विधानासृतधीभुजेन । समूल-
२. मुन्मूल्यादिदेशमार्गम्मोक्षस्य यस्तन्नमतादरेण ॥ स्वस्ति कैलास–
३. कूटभवनाच्छ्रीमहासामन्ताङ्शुवर्म्मा कुशली अहिदुंकोट्टग्रामनि–
४. वासिन: कुटुम्विनो यथाप्रधानङ्कुशलमामास्य सभाज्ञापय–
५. ति विदितमस्तु वोस्माभिरिमङ०ग्रामङ०कृतसीमनिर्णय: स्व-

६. कारित्तकश्रीराजविहारि (रे) चतुर्दिशान्य (र्य) भिक्षुसङ्घाय-
७. प्रतिपाद्य तदाज्ञासम्पादे (दने) न परितुष्टैर्यत्र मल्लकर प्रति-
८. वद्धकुटुम्बिनो निवसन्ति तेषाम्मलकरापह्रासेन व: प्र-
९. साद: कृतस्तदत:परमितङ०ग्रामनिवासिभिर्मल्लकरम-
१०. नृष्यैचत्वार: पणा मल्लकरवृत्तिभुजे देयाश्चिरस्थित-
११. ये चास्य प्रसादस्य शिलापट्टकशासनमिदन्दत्त-
१२. न्तदेवं वेदिभिरस्मत्पादप्रसादोपजीविभिर्न कैश्चि-
१३. देष प्रसादोन्यथा करणीयो यस्त (द) न्यथाकुर्यात्कारयेद्वा त-
१४. महमुत्पथप्रवर्तितन्न मर्षयिष्यामि भाविभिरपि भूपतिभि-
१५. र्गुरुकृतप्रसादानुवर्तिभिरेव भाव्यन्दूतकश्चात्र महासामन्त-
१६. श्रीभोगवर्मा संवत् ५३६ द्वितीय पौषशुक्लपञ्चम्याम् ॥

शिरोभागमा धर्मचक्र र त्यसको दुइतिर मृगको चित्र अंकित भएको यो अभिलेखको प्रकाशित पाठमा शुद्धि भए नभएकोबारे केही शंका पनि नउठ्ने होइन । तर अभिलेखको अस्तित्व र त्यसको मुख्य विषयवस्तुमा भने शंका गर्ने ठाउं रहेको छैन ।

यो अभिलेखमा अंशुवर्माले पुरानै संवत्को प्रयोग किन गरेका हुन् भन्ने कुरा रहस्यमय हुन गएको छ ।

चावहिल चैत्यको खण्डित अभिलेखलाई धनवज्र वज्राचार्यले मानदेवका बराजु वृषदेवको पालाको हो भन्ने अनुमान गर्नु भएको थियो (वज्राचार्य, २०३०: २-३) । तर शंकरमान राजवंशीले लिपिको तुलना र ज्योतिष गणनाबाट पनि वसन्तदेवको समसामयिकमा यो अभिलेख पर्न आउने निर्णय गर्नु भएको छ (राजवंशी, २०३१-३४: ११४- ११६) । यही अभिलेखलाई ज्ञानमणि नेपालले करीब मानदेवकै समयको मान्नुभएको छ (नेपाल, २०४०: ११४) ।

दुईजना इतिहासकारको यो विचारबाट धनवज्र वज्राचार्यले प्रस्तावित गर्नु भएको अनुमानको स्पष्टीकरण हुन आएजस्तो लागेको छ ।

नयाँ पाइएका सामाजिक सांस्कृतिक महत्वका अन्य अभिलेखहरु फुटकर रुपमा पाइएका हुनाले ती सबैको सूचना पाउन सकिएन । केही प्रयासबाट पाउन सकिएका त्यस्ता केही अभिलेखहरु तल उद्धृत गरिएका छन् ।

मोहन प्रसाद खनालले लिच्छविकालका अनेक महत्वपूर्ण अभिलेख पत्ता लगाउने र प्रकाशन गर्ने श्रेय पाउनु भएको छ । चाँगुनारायण स्थानबाट पाइएको मानदेव प्रथमको पालाको एक अभिलेख उहाँले छपाउनु भएको छ । यसको पाठ यस्तो छ –

१. ... ... ... देवस्य सम्यक् पा (ल) यते ... ... ... ... ... ...
२. ... ... महस्य पितुरनुग्रहार्थं शिवपादाम्वापी संप्रतिष्ठापित इति॥
अरिवलगड (?) जित्वा सप्रपेदे महत्वम् ॥
३. अनुनव (य) ति परार्थं शान्तये



पुत्रमङ्गम् । शमयति ... ... । जयतु
भुवननाथो स्थापितो लोकत्रात: ॥
४. तथा तत्र मातापित्रो: पुण्या-
प्यायनार्थं दोम्मायाम् त्यौं
क्षेत्रं प्रदत्तं पञ्चाशत् भूमि: ५० ।(खनाल २०४०: १४१) ।

चांगुमैं गणेश मूर्तिमा लेखिएको सातौं शताव्दीतिरको छोटकरी अभिलेख "प्राणधर शर्मभ्य:" (?) को पनि उहाँलेनै प्रकाशन गर्नु भएको छ (ऐजन: १४९)।

चाँगुनारायणको भण्डारमा सुरक्षित प्राचीनकालका थुप्रै धातुमूर्तिहरुको प्रकाशन पनि बनालले गर्नु भएको छ ।

यस समयको आर्को अभिलेख हो २०५२ असोज महीनामा ललितपुर स्वथटोलमा प्राप्त संवत् ४११ को राजा मानदेव प्रथमको पालाको अभिलेख । भगवती मूर्तिको पादपीठमा लेखिएको यो अभिलेख तल उद्धृत भए वमोजिम छ-

१. सम्वत् ४११ ज्येष्ठमासे शुक्लपक्षे तिथौ त्रयोदश्याम् तत्राज्ञापयति प्रभौ
गुणनिधौ श्रीमानदेवौ नृपो स्वर्वार्णवरदामनुत्तमगुणांसर्व्वाभिवन्द्युक्रमाम्
२. शश्वत्पुण्याभिवृद्धयैवविधिवत्स्थापयामास भक्तयाश्रीलवतीप्रसन्न
हृदयाभीमाभिमानिप्रिया
३. भगवत्यैदेव्यैसम्यक्कारणपूजादिक्रियाप्रवर्तनात्थविषयपतिमहाप्रतिहार
भीमगुप्तस्यभायर्ययाश्रीलवत्या
४. दत्तंचात्रवाहनपश्चिमप्रदेशे दशोत्तरशतम्भूमि११०त्रिंशशत्प्रस्थिकया
पिण्डकम्मान्यष्टपञ्चाशदिति ५८ ॥
(श्यामसुन्दर राजवंशी, गोरखापत्र असोज ५ गते २०५२ पृ. १ । ई. ४८८ )।

डा डिल्लीरमण रेग्मीले लिच्छविकालिक अभिलेखसम्बन्धी आफ्नो ग्रन्थमा दुइटा नौला अभिलेखको अस्तित्वबारे उल्लेख गर्नु भएको छ । एउटा अभिलेख चोभार चारघरेमा रहेको छ जुन ज्यादै खिइएको छ तर शैलीबाट यो प्रशासनिक खालको देखिएको छ (रेग्मी १९८३, १ १११-११२) । अर्को अभिलेख कान्तिपुर मुसुंवहालमा रहेको छ । यो पनि ज्यादै खिइएको छ तर"स्वस्ति मानगृहाद्" र "लिच्छविकुलकेतु" जस्ता शब्द पढ्न सकिन्छ । (ऐजन: १६६) ।

हाल पाइएका अभिलेखहरुबाट लिच्छविकालको सांस्कृतिक इतिहासका विविध पक्षबारे बढी कुरा धमाधम थाहापाइनु पनि सुखद कुरा छ । यस कुराको एक उदाहरण भक्तपुर वागेश्वरी गाउँ बाघहिटीबाट पाइएको अभिलेख हो । सो अभिलेख यस प्रकारको छ–

१.(क) ऊं उद्योतकारख्ये सततं मनोज्ञे
(ख) सुरालस्याध्वनि सद्विहारे
२.(क) हारेयधारेयमतिप्रसन्ना

(ख) झषस्य वक्रात्पतती विराजते ।

(शाक्य, २०४५: ६) । यो अभिलेखको अनुवाद यस प्रकार गरिएको छ–

ॐ सधैं राम्रो, देवमन्दिरको बाटोमा पर्ने उद्योतक असल विहारमा हार जस्तै ज्यादा सफा, माछाको मुखबाट निस्किरहेको यो धारा सुहाइरहेको छ (ऐजन) ।

पूर्व लिच्छविकालीन लिपिमा लेखिएको २२" X ८" आकारको सो अभिलेख मानदेव प्रथम वा केही पछिको हुन सक्ने अनुमान गरिएको छ । यस अभिलेखमा सम्पादकले सो वाघहिटी र सोको वरिपरि रहेका सांस्कृतिक विधिको अवलोकन यसरी गरेका छन् –

धारामा माछा वा बाघको मुखाकृति बनेको छ र सोमाथि भग्न बुद्ध मूर्ति छ । हिटी नजिकै महादेवको सानो देवल र सँढि, पञ्चपाण्डव र द्रौपदीको पूजास्थल (Shrine), गणेश र हनुमान्को पूजा स्थल, राम, कृष्ण, सीता र लक्ष्मणका मूर्ति तथा गजूर समेत एउटै ढुंगामा कुँदिएको विष्णुको मूर्ति रहेका छन् । ती मूर्तिहरु कुन कालका हुन् भन्ने कुरा सो विवरणबाट थाहापाईदैन तर उक्त स्थलको सांस्कृतिक महत्वपूर्ण तथ्य त के हो भने लिच्छविकालमा भक्तपुर भेकमा बौद्ध विहार रहेको थाहानपाइने परिप्रेक्ष्यमा यो अभिलेखले सो अभावको पूर्ति गरेको छ ।

हाल पत्ता लागेका अभिलेखहरुमध्ये गोंगबू महादेव मन्दिरमा रहेको राजा वसन्तदेवको ज्यादै जीर्ण अभिलेख पनि हो (शाक्य, २०४५: ३) । बीच बीचका शब्दहरु मात्र पढिएकोले यो अभिलेख प्रशासनिक खालको रहेको बुफिन्छ।

हाल विदेश पुगिसकेका नेपाली कलाकृति मध्ये सबभन्दा पुरानो ई.५९१ को छ । देखिएको अमेरिका पुगिसकेको एक ढलौटे बुद्धमूर्तिको पादपीठमा संवत् ५१३ अर्थात् ई.५९१ को मितिको अभिलेख लेखिएको छ । धनवज्र वज्राचार्यबाट उपलब्ध सो अभिलेखको पाठ यस प्रकार छ–

१. ॐ देयधर्मोयं लडितग्रामे
यंग्वलविहारे शा (क्य) भिक्षुण्या

२. परिशुद्धमत्या यदत्र पुण्यं
तद् भवतु सर्व्वसत्वाना-

३. मनुत्तरसर्व्वज्ञानावाप्तये ॥ संवत्
(क) ५०० १० ३ चैत्यकूटजिनवन्धु–
विहारपूर्व्वभूद्देशे
(ख) पिण्डकेन भोजनं कर्त्तव्य (म्)

समय गणनाबाट राजा शिवदेव प्रथमको पालाको देखिने यो बुद्ध मूर्ति पाटनको विहारमा स्थापित रहेको बुफिन्छ । राजाको नाम यहाँ उल्लिखित



भएको छैन तर समय उही छ । "लडितग्राम" को रुपमा ललितपुरको उल्लेख यति पहिले पाइनु पनि महत्वपूर्ण भएको छ ।

काठमाडौं गणवहालमा पनि संवत् ५१३ (ई. ५९१) को अभिलेख रहेको प्रस्तर चैत्य रहेको छ (भिक्षु, ११०३ : ५३) । यसको पूरा पाठ प्रकाशित भएको छैन[७] तर यसमा तत्कालीन राजा शिवदेव प्रथमको उल्लेख भएको छैन ।

लिच्छविकालीन लिपिको (छैठौं - सातौं शताब्दी?) अभिलेख पादपीठमा लेखिएको आर्को ढलौटे बुद्ध मूर्ति अमेरिकाको कुनै संग्रहालयमा पुगेको छ । सो मूर्तिको पादपीठमा लेखिएको अभिलेख धनवज्र वज्राचार्यबाट प्राप्त भएको छ जुन निम्न उद्धृत बमोजिम छ–

१.(क) मातापितृपुरोगाणां
२.(ख) सत्वानां दु:खशान्तये
ध्यानदेवो यतिर्भक्त्या
३.(ग) गाण्डविम्वमचीकरत्

भक्तपुरमा प्रसिद्ध भैरव मन्दिरसँगै दक्षिणपट्टि चोकभित्र "ढुंगाको वाटुलो पानीको पात्र" जस्तोमा संवत् ८८ को अभिलेख लेखिएको पाइन्छ । ई. ६६४ को सो अभिलेख ज्यादै खिइएको भए पनि बाँकी भागबाट "ललितमहेश्वर" लाई नमस्कार गरी कुनै मन्दिरमा "ताम्रकलश" अर्पण गरिएको कुरा बुफिन्छ (खनाल, २०३०: ७९) ।

नक्साल नागपोखरीको सफाई गर्दा पाइएको एउटा दु:खलाग्दो गरी खण्डित अभिलेखको पनि यहाँ चर्चा गर्न सकिन्छ जसलाई सातौं शताब्दीतिरको मानिएको छ (राजवंशी, १९८७: ४३) । शीर्ष भागमा बीचमा चक्र र दुइतिर शंखको चित्र अँकित भएको अवशेष रुप चक्रको चित्र बाँकी रहेको यो अभिलेख राजकीय प्रशासकीय खालको हो भन्ने हामीलाई लाग्दछ ।[८]

डा. गोविन्द टण्डनले पनि पशुपति मन्दिर प्रांगणमा वासुकि मन्दिरको पश्चिमतर्फ रहेको प्रस्तरको खम्बामा लेखिएको लिच्छविलिपिको अभिलेख पत्ता लगाउनुभएको छ (टण्डन, २०४६: १३४९) । मिति पनि नभएको राजाको नाम पनि नभएको यो अभिलेखमा धार्मिक कुरा परेको छ । लिपिको आधारमा यो सातौं - आठौं शताब्दीको मानिएको छ ।[९]

उत्तरलिच्छविकालीन लिपिको अभिलेख पादपीठमा लेखिएको बुद्धको तामाको मूर्ति पूर्व सिन्धुपाल्चोकको बाह्रबिसे चेकपोष्टबाट बरामद गरिएको थियो (राजवंशी, २०४०: १२) ।[१०]

हांडीगाउंमा संवत् १७४ अथवा ई. ७४९ को छोटकरी अभिलेख जलद्रोणीमा लेखिएको पाइन्छ–

१. ॐ अन्दिग्रामे प्रणालीयं जलद्रोणी ... ... ...
२. भक्त्याहं प्रियवर्मणा ॥ कारिता तेन
पुण्ये (न मातापितृपुर)

३. स्सरः सत्वराशिरयं तूर्णं
जैनं पदमवाप्नु(यात् ॥)
४. संवत् १०० ७० ४ वैशाख शुक्ल दिवा पञ्चम्याम्
(वेरार्डी, १९८८: १०२, प्लेट १०३, चित्र ९५) ।

ने. सं. १०३ माघशुक्ल द्वादशि सोमवार (ई. ९८३) को अभिलेख लेखिएको एक धातुनिर्मित विष्णुमूर्ति अमेरिकाको लस एन्जेलिस संग्रहालयमा रहेको छ । सो अभिलेख यस प्रकार पढिएको छ–

१. त्रयसमधिके वत्सरके शते
तपसः द्वादशी शुक्लतिथौ विधौ
२. प्रवरवैद्यकुलकम ... ... भुवणजीव
इति जेन ख्यातय ... ... ...
३. वर सुवर्ण ....................जन
४. ......... ज नारायण .........सत्व .........
(एल्सप, १९८४: ३३) ।

हालका वर्षहरुमा आकल भुकल पाइएका लिच्छविकालीन शिलालेखहरुमा २०४९ जेठमा मालीगाउँमा पाइएको तथाकथित राजाको मूर्तिको पादपीठमा लेखिएको संक्षिप्त अभिलेख पनि हो जसमा निम्न उद्धृत वाक्यांश लेखिएको छ–

संवत् १०७ श्री पञ्चदेवप्क महाराजस्य जयवर्म्मन
(श्यामसुदर राजवंशी, गोरखापत्र, जेठ १२ गते, २०४९, मे २५,१९९२)।

यस अभिलेखको ऐतिहासिक महत्वबारेमा केही ठेगान गर्न गाहारो परेको छ तर एकजना इतिहासकारको गणनाअनुसार यो ई. १८४ वा वि. सं. २४० को अभिलेख हो ।[११] नेपालमा लिच्छवि राज्यको जग मजबूत पार्ने पहिला राजाका रुपमा मानिने जयदेव प्रथमको उक्त अभिलेखका जयवर्मासँग समीकरण गरेर हेर्न सकिने भए पनि यसबारेमा अहिले निश्चय गर्न सकिएको छैन ।

### मध्यकालका उल्लेखनीय नयाँ अभिलेखहरु

मकवानपुर जिल्ला फाखेलचौर गाउँ पञ्चायतमा २०३४ सालमा जमीनबाट एघार थान धातुका मूर्ति आदि सामग्री भेटिएको थियो । सोमध्ये केहीमा अभिलेख पनि लेखिएको पाइएको थियो (थापा, २०३४: १५) । अभिलेखमा ने. सं . १२५ (ई. १००५) को मिति र "महाराजाधिराज परममाहेश्वर श्रीमदार्ज्जुणदेवस्य विजयराज्ये", दाताको नाम पद्मोदर सिंह रहेको थाहापाइन्छ।



यहीं पाइएको ने.सं . १४० को अभिलेखमा "श्री फणपिंग विषयाधिपति महासमन्त श्रीकिरणाकरजीवस्य प्रवर्तमाने", लेखिएको छ ।

नेपाल संवत् २२२ (ई. ११०२) को नरदेवीको जलद्रोणीको छोटकरी अभिलेखमा "श्री देवगुप्तकेन प्रनालि दातव्ये" लेखिएको छ (राजवंशी, १९४७:४८)।

आफ्नो मध्यकालका अभिलेख नामको अप्रकाशित ग्रन्थ (पृ. ६६- ६७) मा धनवज्र वज्राचार्यले देवगुप्तलाई आभीर गुप्तका सन्तान हुन सक्ने अनुमान गर्नु भएको छ । नरेन्द्रदेवको समयदेखि आभीर गुप्तहरुको पतन भएपछि उनीहरु राजनीतिक क्षितिजबाट पर पुगे पनि सामाजिक रुपमा प्रतिष्ठित नै रहिरहेको हुनुपर्दछ जुन कुराको संकेत उक्त अभिलेखले गरेको छ । उक्त अभिलेख पाइएकै ठाउँनिर किलागढ नरदेवी भेकमा "अहिर" (आभीर) हरुको बस्ती रहेकोले तिनको सम्बन्ध लिच्छविकालका आभीर गुप्तहरुसंग रहेको मान्न सकिन्छ । तिनै "अहिर" हरु हाल ज्यापु कहिन्छन् ।

माथिको छोटकरी चर्चाबाट पहिलो शताव्दीदेखि मानदेवसम्मको पाँच शताव्दी जति अवधिको निमित्त एउटा पनि अभिलेख नपाइनु र ई. ४५९ देखि ८७७ सम्मको करीब सवा चार .शताव्दीको अवधिमा पनि २३० जति मात्र शिलालेख - अभिलेख प्रमाण आजसम्म पाउन सकिएबाट नेपालको प्राचीनकालको इतिहास जान्ने मुख्य श्रोतको सीमितता स्पष्ट हुन्छ ।

आर्को उल्लेखनीय कुरा के छ भने यी अभिलेखहरुको भूगोल जति सीमित छ त्यतिनै तिनको विषयवस्तु । धेरै जसो अभिलेखमा तात्कालिक शासकका महत्वाकाङ्क्षा ग्रामीण व्यवस्थासँगै जोडिएको देख्दा पनि हामीलाई आश्चर्य लाग्दछ । पाइएका अभिलेखहरु मध्ये पनि भाँचिएका र खिइएका थुप्रै हुनाले पनि हाम्रो इतिहास अध्ययनमा ठूलो बाधा परेको छ ।

हालसम्म पाइएका अभिलेखहरुमध्ये शुरुका अभिलेखहरु पशुपतिको संवत् ३८१ को, चांगुको संवत् ३८६ को र स्वयम्भूको अभिलेख पनि खण्डित अवस्थामा रहनुबाट तात्कालिक इतिहासको अध्ययनमा निकै ठूलो बाधा उपन्न भएको छ । पछिका पनि थुप्रै अभिलेख ज्यादै खण्डित भएको हुँदा धेरै ऐतिहासिक महत्वका तथ्यहरुको उपलब्धिबाट वञ्चित हुनु परेको छ । अंशुवर्माका गोकर्ण र हनूमान्ढोका अभिलेख, नरेन्द्रदेवको पाटन वटुकभैरव अभिलेख र जयदेव द्वितीयको नक्शाल अभिलेख यस कुराका उदाहरण हुन् ।

कति खण्डित र खिइएका अभिलेखहरुको अझ राम्ररी पाठ पढ्न सकिएमा थप सूचनाहरु पाइने आशा गर्न सकिछ ।

### अभिलेख

शिलालेख बाहेक अन्य खालका अभिलेखहरु पनि हामीकहां सीमित रुपमैं पाइएका छन् । यस्ता सामग्री पनि केही पुरातात्विक उत्खननबाट र केही संयोगवश पाइएका हुन् ।

हाँडीगाउँमा सन् १९६५ मा गरिएको उत्खननबाट प्राप्त सामग्रीहरुमा लिच्छविकालीन अन्य सामग्रीका अवशेष (देव, १९६८: प्लेट १५) साथै माटाका भाँडामा बाच्छाले दूध चुसिरहेको गाईको चित्रसाथ "प्रस्थदा" लेखिएको छ । त्यस्तै माटाका भाँडामा "नायक नमणजीवस्य प्रस्थ" र "समचन्द्र" जस्ता अभिलेख पढिएको छ (मिश्र, २०२९: ४१) ।

संयोगले पाइएका केही पुराना ईंटमा ऐतिहासिक महत्वका अभिलेख पनि पाइएका छन् । टंगाल मानेश्वरी मन्दिरनेर पाइएका ईंटमा दुइ किसिमका लेख पाइएका छन् । एकमा "महासामन्तांशुवर्मण:" लेख छ भने आर्कोमा "श्रीमहासामन्तांशुवर्मण:" लेख छ (मानन्धर, १९७७, चित्र पनि)।[१२]

बत्तीसपुतलीबाट पाइएको एउटा ईंटमा "राज्ञोमरदेवस्य" अभिलेख छ । यो अभिलेखबाट एक नौला राजाको नाम ज्ञात हुन आएको छ ।

लिच्छविकालीन विभिन्न समयका माटाका त्यस्ता बौद्ध पूजा छाप चैत्यहरुको पनि उल्लेख गर्नु आवश्यक छ जुनमा "ये धर्मा०" श्लोक लेखिएको हुन्छ । यस्ता छापहरु थुप्रै पाइएका हुन सक्दछन् तर हालसम्म चावेल (वज्राचार्य २०३०:५८७, रिजाल, २०२७: ५५-५६) र जुम्ला लामथाडा गुफामा पाइएका छन् (वज्राचार्य, २०३०: ५९८) । हालै गोकर्णबाट पनि यस्ता छाप प्रा. मुकुन्दराज अर्यालले पनि पाउनु भएको छ ।

यस्ता छापमा एउटै वक्तव्य लेखिएको पाइने भए पनि तिनले सामाजिक गतिविधि बताउने हुनाले यस्ता छापहरुको पनि आफ्नै महत्व छ । यस्ता छापमा अंकित हुने बुद्धमूर्ति र चैत्यको स्वरुपमा देखिने विविधताले कला र धार्मिक वास्तु (चैत्य) को इतिहास बुझ्न पनि निकै सहयोग पाइन्छ ।

संवत् समस्या

नेपाली इतिहासको अध्ययन आरम्भ भएदेखिनै लिच्छविकालका अभिलेखहरुमा प्रयोग भएका दुइथरि संवतेबारेमा इतिहासकारहरुमा मतमतान्तर चलेर आएको छ । हालसम्म पनि यो समस्याको सबैलाई चित्त बुझ्ने समाधान निकाल्न सकिएको छैन ।

संवत्सम्बन्धी अध्ययनको आरम्भिक युगमा यी संवत्लाई विदेशी राजाहरुले चलाएको भन्ने र नेपाललाई पराधीन सिद्ध गर्ने क्रम चलेको थियो । यो विषयको प्रशस्त चर्चा अन्य ग्रन्थहरुमा गरिसकिएको छ (रेग्मी, २०२६:३-६, रेग्मी, २०३५: १४-१७) । त्यो कुराको पिष्टपेषण यहाँ गर्नु आवश्यक छैन ।

संवत् सम्बन्धी अध्ययनको आर्को वेग स्वदेशमैं स्थापित, चर्चित हुँदै घनघोर शास्त्रार्थको स्तरमा पुगिरहेको छ । पं. नयराज पन्तले अघिल्लो लामो संवत्लाई शक संवत् र पछिल्लो संवत्लाई ई. ५७६ मा स्थापित मानदेव द्वितीय संवत् भन्ने मानी यस विषयमा थुप्रै लेख र एक ग्रन्थको समेत प्रकाशन गरिसक्नु भएको छ (पन्त, २०४३) । यो मतको खण्डन गर्दै पन्तज्यूकै शिष्य शंकरमान राजवंशीले अघिल्लो संवत् ई. ५७ (वि.सं. ११३) मा स्थापित लिच्छवि



संवत् र आर्को संवत् शक संवत् वा ४७४ ई. ५५२ मा स्थापित अंशुवर्म संवत् मान्नुभएको छ (राजवंशी, २०३० राजवंशी, २०४६) । दुवै विद्वान्हरुले आफ्-आफ्नो मतको प्रचार र विपक्षीको मतको खण्डनमा पत्र पत्रिकामा अनगिन्ती लेखहरुको प्रकाशन पनि गरिसक्नुभएको छ । हालै गोकर्णबाट पाइएको अंशुवर्माको अभिलेखमा संवत् ५३६ द्वितीय पौषशुक्ल पञ्चमी तिथि लेखिएकोमा शकसंवत्मा पौषमा अधिमास नपर्ने हुनाले सो संवत्लाई शकसंवत् मान्ने विचार खण्डित भएको छ भन्ने शंकरमान राजवंशीको विचार छ (राजवंशी, २०४७क: २३) ।[१३]

अघिल्लो संवत्को उपयोग भएका सबै अभिलेखमा संवत् मात्रै भनिएको हुनाले त्यसको ठीक परिचय पाउन गाह्रो भएको हो । हुन त शंकरमान राजवंशीले अर्थ गरेजस्तो यो संवत् मात्रै भन्नाले "लिच्छवि राज्य स्थापना भएदेखि" ...... यति वर्ष भन्ने अर्थ पनि कता कता अर्थिन खोजेको पनि देखिन्छ । तर तथाकथित लिच्छवि संवत्सम्बन्धी कुनै प्रमाण नपाइने हुनाले र मानदेव अघिको इतिहास अन्धकारसरह रहन गएको हुनाले यो विचार मानिहाल्न अप्ठेरो परेको हो । यससम्बन्धी प्रमाण पाइएमा वैचारिक-सैद्धान्तिक परिपर्तन हुन सक्ने पनि देखिन्छ ।

ज्योतिष र कालगणनामा शकसंवत्को ज्यादै महत्व मानिएको देख्दा यो शकसंवत्नै हुनु धेरै सम्भव लाग्दछ । समकालिक भारतका अभिलेखहरुमा अन्य संवत्को प्रयोग हुनु र नेपालमा आर्कै संवत्को प्रयोग भएको देख्दा यस कुरामा नेपालको गौरव झल्केजस्तो अनुभव हुन्छ । अझ लिच्छविसंवत्नै सिद्ध गर्न सके त नेपालको गौरव अझ बढिरहेको मान्न सकिने थियो ।

तथाकथित मानदेव द्वितीय संवत्को स्थापनासम्बन्धी स्पष्ट विवरण नपाइए पनि[१४] हालसम्म उपलब्ध सूचनाहरुबाट यसको सत्यता र ऐतिहासिकताबारे हामीलाई विश्वास हुँदै गएको छ । यस बारेमा मानदेव द्वितीयबारेमा तल विशेष रुपले चर्चा गरिएको छ ।[१५]

ई. ५७६ (वि.सं. ६३३) देखि मानदेव संवत् चलेपछि कालमानमा वारको पनि प्रवेश हुन थालेको र पछि ई. ८८० मा नेपाल संवत् चलेपछि अयनांशको विषयमा विचार हुन थाल्यो भन्ने थाहापाइन्छ (पन्त, २०४१ २९) । संवत् परिवर्तनबाट व्यवहारमा पनि केही परिवर्तन आएको कुरा यसबाट स्पष्ट हुन्छ ।

संवत् समस्याको सर्वमान्य समाधान कहिले होला यसै भन्न सकिंदैन तर हाललाई अघिल्लो संवत्लाई शकसंवत् र पछिल्लो संवत्लाई मानदेव द्वितीय संवत्नै मानेर यस ग्रन्थमा मिति गणना गरिएको छ ।

२. टक

शिलालेख र अभिलेखपछि टक वा मुद्राको स्थान आउँछ । यस्ता टकमा छोटकरी अभिलेख र विभिन्न थरिका चित्र अङ्कित गरिएका हुनाले तात्कालिक इतिहासको एक महत्वपूर्ण स्रोतको रुपमा यिनको स्थान रहेको छ । तर यिनको संख्या कम हुनाले यस्तो स्रोतले हामीलाई जति सहयोग मिल्नु पर्ने थियो त्यति मिलेको छैन ।

लिच्छविकालको त्यत्रो कालावधिको लागि मानाङ्क, गुणाङ०क, वैश्रवण, अंशुवर्माका तीन थरी मुद्रा, जिष्णुगुप्त र २० थरी जति पशुपति खालका मुद्रा मात्रै पाइएका छन् । यसरी यो स्रोतको सीमितता स्पष्ट हुन्छ । तर यो सीमितता भए पनि तिनले अन्य स्रोतबाट ज्ञात विवरणलाई समर्थन गर्ने तथ्य महत्वपूर्ण छ । केही उदाहरणबाट त यो स्रोतले बहुमूल्य सूचना पनि थपेको छ। अंशुवर्मा र जिष्णगुप्तका मुद्राले यस्तै महत्वपूर्ण सूचना दिएका छन् । यिनका मुद्रा नपाइएका भए शिलालेखहरुमा उल्लिखित सन्दर्भले मात्रै तिनको वास्तविक राजनीतिक स्थिति स्पष्ट गर्न सक्ने थिएनन् ।

लिच्छविकालका मुद्राहरुमा "पशुपति" र "वृष" मुद्राहरुको पनि गणना गरिन्छ । "पशुपति" अभिलेख र थरी थरीका चित्र अंकित तामाका टक र तिनका तौलको भेदको विचार गर्दा जम्मा २० थरी यस्ता मुद्रा पाइएको छ (जोशी, २०३३: १८७-२०९, ढुंगेल, २०४३: १०३-१०७) । यसै गरी "वृष" अभिलेख अङ्कित र विभिन्न थरीका चित्र अंकित तामा र तामा-पित्तल मिस्कट भएका साना ठूला आकार र तौलका यस्ता ६ किसिमका मुद्रा पाइन्छन् (जोशी, २०३३: २१७-२२३, ढुंगेल, २०४३: १०७-१११) ।

पशुपति र वृष खालका उक्त मुद्राहरुमा प्रसारक राजाको नाम नलेखिएको हुनाले यिनको राजनीतिक महत्व छैन । विनिमयको माध्यमका रुपमा यी मुद्राको आर्थिक महत्व मान्न सकिन्छ । यी मुद्राहरुको विशेष कलात्मक र धार्मिक महत्व भने स्पष्ट छ । विभिन्न थरीका चित्र अंकन गरिएको हुंदा लिच्छविकालको कलाका एक किसिमका उदाहरणका रुपमा पनि यी मुद्राहरुको विशेष महत्व छ । यतिका मुद्रामा शैवधर्मसम्बन्धी तत्व देखिंदा लिच्छविकालमा शैव धर्मको विशेष महत्व रहेको कुरा यी मुद्राले प्रष्ट्याएका छन् ।

३. पुरातात्विक उपलब्धि

पुरातात्विक उत्खननबाट प्राप्त हुने ऐतिहासिक सामग्री पनि इतिहास निर्माणको महत्वपूर्ण स्रोत हो तर नेपालको सन्दर्भमा यस किसिमका सामग्रीको अभावै छ, किनभने यहां व्यापक उत्खनन कार्य हुन सकेको छैन ।

हाँगीगाउँमा करीव तीन दशक पहिले भएको उत्खननबाट लिच्छविकालका माटाका भांडा कुंडा खेलौना पाइएका थिए । तिनमा केहीमा साना साना लेख पनि लेखिएका छन् (देव, १९६८) तर यस्ता लेखमा राजनीतिक महत्वका कुरा थाहापाइएको छैन । यस उत्खननबाट प्राप्त केही साना



लेखहरुको चर्चा अभिलेख शीर्षक अन्तर्गत गरिएको छ । यस उत्खननबाट प्राप्त सामग्रीहरुको राम्रो अध्ययन हुन नपाउंदै सिंहदरबार अग्निकाण्ड परेकोले उपलब्ध सामग्री विनष्ट हुन गए ।

सन् १९८४-८८ मा हाँडीगाउँ सत्यनारायण स्थाननेर भएको उत्खननबाट पनि (एण्टोनीनी, १९८५, वेराडीं, १९८८) विशेष उपलब्धि हुन सकेको छैन । अतएव भविष्यमा गरिने पुरातात्विक उत्खननबाट यस क्षेत्रमा विशेष सूचनाहरु पाउने विश्वास गर्न सकिन्छ ।

४. विदेशी सूचना

लिच्छविकालमा नेपालको दक्षिण र उत्तरतर्फ मात्रै केही सम्पर्क रहेको कुरा त्यस कालको इतिहासले बताउने हुनाले ती क्षेत्रको इतिहासमा नेपालको जति र जस्तो किसिमको सूचना आउनुपर्थ्यो त्यस्तो नआएको देख्दा यो स्रोतको सीमितता स्पष्ट हुन्छ ।

भारततर्फ नेपालको चर्चा निकै पहिलेदेखि हुन थालेको पाइए पनि त्यो क्रम कायम नभइरहेकोले पनि होला उताका ऐतिहासिक र साहित्यिक सामग्रीमा नेपालको चर्चा कमै पाइन्छ । नेपालले त्यतिखेर एकाकी नीति (Policy of Isolation) लिएकोले पनि यस्तो भएको हुन सक्दछ ।

यस क्षेत्रमा व्यवस्थित अनुसन्धान र अध्ययनको पनि उत्तिकै आवश्यक छ भन्ने कुरा एउटा उदाहरणबाट स्पष्ट हुन्छ । राहुल साँकृत्यायन र काशीप्रसाद जायसवालको प्रयासबाट प्रकाशित भएको "मन्जुश्रीमूलकल्प" नामको बौद्ध पुराण खालको ग्रन्थमा पाइएको नेपालसम्बन्धी १० श्लोकको सन्दर्भबाट भारतीय स्रोतमा पनि नेपालको ऐतिहासिक चर्चा पाउन सकिंदो रहेछ भन्ने तथ्य बुझ्न सकिन्छ । सो ग्रन्थ (जायसवाल, १९३४: ४०) को रचनाकाल ई.७७०- ८०० तिर हुन सक्ने मानिएको छ र यसको रचनास्थल बंगाल हुन सक्ने सम्भावना जायसवालज्यूले व्यक्त गर्नु भएको छ (ऐजन: ३) । यो ग्रन्थको अनुवाद ई.१०६० तिर तिब्बती भाषामा गरिएको पनि थाहा पाइएको छ । यो ग्रन्थ लेख्नाको उद्देश्य बौद्ध धर्मको इतिहास बताउनु हो जसमा प्रासंगिक रुपमा राजनीतिक इतिहास पनि छ्यासमिस पर्न गएको छ (ऐजन: ४) ।

मंजुश्रीमूलकल्पमा उल्लेख भएका राजाका नाम ठम्याउन अप्ठेरो छ किनभने त्यहां आफ्नै किसिमको शैलीमा राजाको उल्लेख गरिएको छ । त्यहाँ "लिच्छविकुलमा उत्पन्न" (लिच्छवीनां कुलोद्भव:) "मानवेन्द्र" को उल्लेख भएको छ जसको समीकरण राजा मानदेव प्रथमसंग गर्न सकिन्छ । त्यहां उल्लिखित "ववष" लाई जायसवालज्यूले अशुद्धपाठ मानेर "वृष" शुद्ध पाठ हुनु पर्ने बताई त्यस नामलाई वृषदेवसंग समीकरण गर्नु भएको छ । उहाँले "भावसुशभमासु" लाई शंकरदेव, भाक्रमलाई धर्मदेव, भागुप्त र वत्सकलाई

अंशुवर्मा र उदयलाई उदयदेव र ज़िन्हुलाई जिष्णुगुप्त भनेर समीकरण गर्नु भएको छ (ऐजनः २१) ।

मन्जुश्रीमूलकल्पमा उल्लिखित नामावलीलाई काशीप्रसाद जायसवालज्यूले वृषदेवदेखि शंकरदेव, धर्मदेव र मानदेवलाई लिच्छविवंशी क्रमका शासक मान्नुभएको छ । अंशुवर्मा, उदयदेव र जिष्णुगुप्तलाई उहाँले "पश्चिमको ठकुरी वंश" मान्नुभएको छ (ऐजनः २०-२१) । पहिलो क्रमका राजाहरुलाई मन्जुश्रीमूलकल्पले "म्लेच्छ" भनिदिएको छ र "शास्तुपूजक" वा बौद्धमार्गी भनिदिएको छ ।

मन्जुश्रीमूलकल्पमा जिष्णुगुप्तपछिको नेपालको राजनीतिक अवस्थाबारे पनि केही संकेत गरिएको छ । जायसवालज्यूले त्यस अंशको व्याख्या गर्नु भएको छ । त्यस व्याख्या अनुसार जिष्णुगुप्तपछि नेपालमा "विविध म्लेच्छ" राजाहरु हुनेछन्, ती राजा "भ्रष्ट मर्यादा वा सम्मानरहित, विदेशीका सेवक, प्रजा खाने खालका हुनेछन्, नेपालको आधिपत्य शस्त्रबद्ध ध्वस्त हुनेछ, विद्या लुप्त हुनेछ, राजा लुप्त हुनेछन् र ती "म्लेच्छ" (विदेशी) र "तस्कर" (usurper) का सेवक हुनेछन् । पुराणको शैलीमा लेखिएको यस्तो टिप्पणीको व्याख्या तल इतिहास खण्डमा गरिने छ ।

मन्जुश्रीमूलकल्पले लिच्छविकालको इतिहासलाई आफ्नै ढंगले प्रस्तुत गरेको छ तर त्यो ज्यादै अस्पष्ट छ । तैपनि यो विवरणमा केही ऐतिहासिक सार पनि खोज्न सकिन्छ जस्तो लाग्दछ ।

लिच्छविकालको इतिहास निर्माण गर्दा चिनियाँ स्रोत अत्यन्त महत्वपूर्ण छ भन्ने कुरा उदयदेव र नरेन्द्रदेवसम्बन्धी विवरणबाट स्पष्ट हुन्छ । तर यस क्षेत्रमा राम्ररी अनुसन्धान हुनु आवश्यक छ । चिनियाँ ऐतिहासिक स्रोतहरुको गम्भीर र सूक्ष्म अध्ययनको ठूलो क्षेत्र अझै इतिहासकारहरुको पहुँचदेखि बाहिर रहेको अनुभव गरिन्छ । चिनियां भाषाको दुरुहता र त्यस भाषामा लेखिएका प्रकाशित सामग्रीहरुको अनुपलब्धि आदि कारणबाट यो स्रोतको उपयोग राम्ररी हुन सकेको छैन ।

यसैगरी तिब्बती ऐतिहासिक ग्रन्थहरुबाट नेपालसम्बन्धी सन्दर्भहरुको पनि हालसम्म सदुपयोग गर्न सकिएको छैन । तिब्बती भाषामा विशेष दखल भएका इतिहासकारहरुले यस क्षेत्रमा कायम भैरहेको अभावको पूर्ति गर्नेछन् भन्ने आशा गर्न सकिन्छ ।

## ५. वंशावली साहित्य

इतिहासको स्रोतको रुपमा वंशावलीको स्थान विचित्रको छ । यो स्रोतलाई कति पत्याउने कति नपत्याउने भन्ने कुरामा इतिहासकारहरुमै मतभेद छ तर यिनको सतर्क उपयोग हामीलाई आवश्यक छ नत्र हामीलाई धेरै सन्दर्भबाट



वञ्चित हुनुपर्ने हुन्छ । यसैले इतिहासको एक स्रोतको रुपमा वंशावली साहित्यलाई लिनुपर्ने हुन्छ ।

नेपालको वंशावली साहित्यको उपयोगिताबारे महेशराज पन्तले आफ्नै सन्दर्भमा भन्नुभएको निम्न भनाईलाई यहां अगाडि सार्न सकिन्छ–

"वंशावली पहिला कालमा लेखिएका भए पनि पुरानो परम्पराको आधारमा ती लेखिएका हुनाले तिनमा पुराना प्रमाण अनुश्रुति धेरथोर सुरक्षित नरहेका छैनन् । पछि गएर इतिहासको लागि नभई नहुने तात्कालिक सामग्रीको सुरक्षा गरेर राख्ने संघटित परम्परा अझै नबसिसकेको हाम्रो देशमा वंशावलीलाई वास्ता नगर्ने हो भने इतिहासका कति कडी छुट्ने र नबुझिने हुन पुग्छन्" (पन्त, २०४०: १०) ।

एकजना प्रसिद्ध इतिहासकारको यो भनाई पूर्णतया सत्य छ ।

वंशावली साहित्यका पनि विविध स्वरुप छन् र तिनको कथ्य शैलीमा पनि आफ्नै विशेषता रहेको देखिन्छ ।

हालसम्म प्राप्य वंशावलीहरुलाई मुख्य रुपले दुई शीर्षकमा बाँडिर विवेचना गर्न सकिन्छ– गोपाल वंशावली वर्ग र भाषावंशावली वर्ग ।

गोपालवंशावली वर्गका .वंशावलीहरुमा गोपालवंशावली प्रमुख हो । यो वंशावलीको हाल पाइने प्रति ई. १३८९ मा संकल- सम्पादन गरिएको पाइन्छ (वज्राचार्य, मल्ल, १९८५) । यस वंशावलीभित्र पनि केही खण्ड छन् । तिनले पनि गोपालवंशावलीका केही भेदको अस्तित्व बताउँछन् ।

गोपालवंशावलीले प्रस्तुत गरेको लिच्छविकालीन इतिहास त्यति स्पष्ट नभए पनि उस बेलाका शिलालेखहरुबाट ज्ञात सूचनाहरुलाई अर्थ्याउने काममा यो स्रोतले निकै सहयोग पु-याएको पाइन्छ । यस ग्रन्थमा ठाउं ठाउंमा त्यस किसिमका सूचनाको समीक्षात्मक उपयोग गरिएको छ ।

एकथरी वंशावली साहित्यलाई संक्षिप्त गोपालवंशावली भन्ने नामकरण विद्वानहरुले गरेका छन् । यस्ता वंशावलीलाई गोपालवंशावलीसँगै सम्बद्ध गरिएको भए पनि यिनको विवरण शैलीमा केही अन्तर देखिँदा यिनलाई भिन्नै वर्गमा पनि राख्न सकिन्छ ।[१६]

संक्षिप्त गोपालवंशावलीहरुमध्ये केशरपुस्तकालयमा सुरक्षित खण्डित वंशावली पनि हो जसको हाल प्राप्य खण्डमा मध्यकालको इतिहास टिपिएको पाइन्छ (वज्राचार्य, मल्ल, १९८५: २१५-२२२) । तर हाल डा. कमलप्रकाश मल्लले राष्ट्रिय अभिलेखालयमा सुरक्षित एक वंशावलीलाई सोही केशरवंशावलीको पूर्ण रुप मान्नुभएको छ र त्यसको प्रकाशन गर्नु भएको छ (मल्ल १९८५: ७५-१०१। यो स्रोतबाट ज्ञात केही नौला सूचनाहरुको यस ग्रन्थमा उपयोग गरिएको छ ।

भाषावंशावली खालका ऐतिहासिक साहित्यको निर्माण निकै पछि भएको देखिए पनि तिनमा गोपालवंशावलीको साधर्म्य र वैधर्म्य पनि देख्दा यसको आफ्नै किसिमको शैली रहेको देखिन्छ । खास गरी यो किसिमका वंशावलीहरुमा विभिन स्रोतहरुको तुलनात्मक अध्ययन गर्ने आधुनिक इतिहास

शैली रहनुमा विशेषता देखिन्छ । पुराणहरु, तान्त्रिक साहित्य र अनेक किसिमका आख्यानहरुको यिनमा प्रयोग भएको देख्दा यसो भन्नुपरेको हो । भाषावंशावली साहित्यको यो विशेषता रहे पनि यसले दिएका विवरणहरु ठाउं ठाउंमा अविश्वसनीय पनि देखिने हुनाले यथार्थता स्पष्ट हुन्छ ।

तुलनात्मक अध्ययन गर्ने भाषावंशावलीको विशेषता पछि गएर शिलालेखहरुको अध्ययनसम्म पुग्न थालेको पाइनु महत्वपूर्ण छ ।

डा.डेनियल राइटले पाटनका गुणानन्दलाई तयार पार्न लगाएको भाषा वंशावलीमा अंशुवर्माको बयान गर्दा बीचमा एउटा सन्दर्भ परेको छ – यी राजाको पालामा एकजना बुभुवर्मा राजंशीले बुद्धको मूर्ति थापेर सातओटा इंड भएको एउटा हिटीधारा बनाए र एउटा धाराको इंडको दाहिनेतिर यस्तो श्लोक लेखाए – "अंशुवर्माको निगाहाबाट आफ्ना पिताको पुण्यको लागि विभुवर्माले यो धारा बनाएको हो" (राइट, १९६६: ८९) ।[१७]

यो विवरण अंशुवर्माको पालाको टुण्डिखेल धाराको अभिलेखबाट लिएको हो जसमा – "श्रीअंशुवर्माको निगाहाबाट वार्त्त विभुवर्माले आफ्ना पिताको पुण्य बढोस् भनेर यो असल धारा बनाउन लाए । संवत् ४४ ज्येष्ठशुक्ल ... (वज्राचार्य, २०३०: ३७८) ।[१८]

उक्त ग्रन्थका सम्पादक राइटले यो अभिलेख लेखिएको धारा रानीपोखरीनिर छ भनेर टिप्पणी पनि गरेका थिए ।[१९] तर शिलालेख प्रमाणहरुको तुलनात्मक अध्ययन गर्ने यो स्वदेशी क्रम अगाडि बढ्न सकेको देखिंदैन ।

वंशावली र भाषा वंशावलीका अन्य विविध रुपको (रेग्मी, २०४६) अध्ययन गर्ने काम बांकीनै रहेकोले हामीले यो स्रोतको पुरापूर अध्ययन गर्न सक्ने स्थिति आइसकेको छैन ।

## ६. अन्य प्रकारका सामग्री

माथि वर्णित स्रोतहरु बाहेक अरु खालका सामग्रीले पनि लिच्छविकालको इतिहास निर्माणमा सहयोग दिएको देखिन्छ ।

यस्ता स्रोतहरुमा ज्ञात अज्ञात पुराणहरुको महत्व मान्न सकिन्छ । हाल प्रकाशित नेपाली पुराण मध्ये हिमवत्खण्ड, नेपालमाहात्म्य, गण्डकीमाहात्म्य र स्वयम्भूपुराण हुन् । यिनमा आख्यानका रुपमा कति पुराना ऐतिहासिक घटनाहरुको वर्णन गरिएको पाइन्छ । त्यस्ता आख्यानहरुको राम्ररी विश्लेषण गर्न सके नेपालमा लिच्छवि राज्यको स्थापनासम्बन्धी घटना अन्य ऐतिहासिक महत्वका घटनाबारे ज्ञान प्राप्त गर्न सकिने देखिन्छ । अप्रकाशित रुपमा अरु पुराण पनि अभिलेखालय र व्यक्तिगत संग्रहहरुमा हुन सक्ने अनुमान गर्न सकिन्छ । शिलालेख प्रमाण नपाइने मानदेव अघिको युगको इतिहास यस्तै पौराणिक आख्यानहरुबाट निर्माण गर्न सकिएला जस्तो लाग्दछ ।



समसामयिक लेखौट ग्रन्थहरु पनि इतिहास निर्माणका निम्ति महत्वपूर्ण स्रोत देखिएका छन् । लिच्छवि लिपिमा लेखिएका अनेक खण्डित लेखौट किताबहरु अभिलेखालय र स्वदेशी विदेशी पुस्तकालय संग्रहालयहरुमा रहेका छन् । तिनको सूक्ष्म र विश्लेषणात्मक अध्ययन गर्न सके इतिहास निर्माणका लागि कति सूत्र उपलब्ध गर्न सकिने अनुमान गर्न सकिन्छ । एक लेखोट किताबको पुष्पिकावाक्यबाट मानदेव चतुर्थको अस्तित्व थाहापाइने तथ्य यहां उल्लेखनीय छ।

ज्ञात लिच्छविकालको इतिहास साधारणतया गौरवपूर्णनै रहेको परिप्रेक्ष्यमा त्यस कालमा काव्य, नाटक तथा अन्य प्रकारका साहित्यिक ग्रन्थहरु अवश्यनै लेखिएको हुनुपर्दछ तर आजसम्म यस्ता ग्रन्थको अस्तित्वबारे कुनै किसिमको सुईंको लाग्न सकेको छैन । अंशुवर्माले लेखेको भनिने व्याकरणको ग्रन्थ समेत नपाइनु आश्चर्य लाग्दो छ ।

## काल निर्धारण

नेपालको इतिहासलाई अध्ययन सुविधाको लागि कसरी मूल्यांकन गर्न सकिन्छ भन्ने कुरामा धेरै मत मतान्तर हुन सक्दछ । साधारणतया विचार गर्दा राजा वृषदेवदेखि प्राचीनकालको इतिहासलाई प्राचीनकाल नामकरण गर्न उचित देखिन्छ । मानदेव प्रथमले वृषदेवदेखि आफ्नो वंशावली लेखाएको कारणबाट त्यस समयदेखिको इतिहास केही स्पष्ट हुन थालेको हुँदा प्राचीनकाल भनेर वृषदेवदेखि शुरु हुने काललाई लिनु उचित देखिएको छ । साथै वृषदेवअगिको काललाई पूर्वप्राचीनकाल भनेर छुट्याएर हेर्न सकिन्छ ।

राजा मानदेव प्रथमको पहिलो ज्ञात वर्ष ई. ४६४ लाई कालगणनाको आधार मान्ने हो भने उनीभन्दा पहिले भएका तीन पुस्ता धर्मदेव, शंकरदेव र वृषदेवलाई साधारणतया २५ - २५ वर्षमा समयावधि दिएर विचार गर्दा ई.४६४ मा ७५ वर्ष घटाउंदा वृषदेवको समय ई.३८९ तिर पर्न जान्छ । यो कुरो तल प्रस्तुत आनुमानिक तालिकाबाट बुझ्न सकिन्छ–

| | | | |
|---|---|---|---|
| १. | वृषदेव | - | ई. ३८९ - ४१३ |
| २. | शंकरदेव | - | ई. ४१४ - ४३८ |
| ३. | धर्मदेव | - | ई. ४३९ - ४६३ |

यहां एक पुस्तालाई २५ वर्ष शासनकाल दिने चलनअनुसार हिसाब गरिएको हो र यसमा केही वर्षको अन्तर पनि पर्न सक्दछ ।

यस सन्दर्भमा गोपाल वंशावलीले दिएको वर्षगणनाको पनि चर्चा गर्न सकिन्छ जसमा मानदेवअघिका तीन पुस्तालाई निम्नानुसार जम्मा १८१ वर्षको अवधि दिइएको पाइन्छ–

| | | | |
|---|---|---|---|
| १. | वृषदेव | - | १०० वर्ष |
| २. | शंकरदेव | - | ४० वर्ष |

३. धर्मदेव - ४१ वर्ष
(वज्राचार्य, मल्ल, १९८५: २८-२९) ।

हामीले माथि तीन पुस्तालाई ७५ वर्ष लिएको तुलनामा गोपालवंशावलीमा बताइएको १८१ वर्षको अवधिमा निकै अन्तर पाइन्छ । गोपालवंशावलीले बताएको अवधि मान्ने हो भने मानदेवको पहिलो ज्ञात मिति ई.४६४ मा १८१ वर्ष घटाउंदा वृषदेवको शासनको आरम्भ ई.२८३ हुनुपर्ने देखिन्छ । गोपालवंशावलीले बताएको समयावधि ठीक छ भन्ने ठम्याउने हामीसँग अरु साधन छैन भने त्यसलाई अमान्य गर्ने साधनको पनि अभाव छ । तर गोपालवंशावलीले बताएका कति कुरा शिलालेख प्रमाणबाट पनि समर्थित भएको हुनुबाट उक्त विवरणलाई त्यत्तिकै पन्छाउन सकिँदैन । धर्मदेवको ई.४५९ को पशुपति अभिलेखमा वृषदेवको वर्णन सन्दर्भमा "वर्षशतञ्चकार" भन्ने उल्लेख परेकोले (राजवंशी २०४६: १) वृषदेवले शय वर्ष शासन गरे भन्ने गोपालवंशावलीको भनाई सत्य सिद्ध हुन्छ । मानदेव प्रथमले ४१ वर्ष शासन गरे भन्ने गोपालवंशावलीले बताएको कुरा ती राजाका शिलालेखहरुबाट पनि समर्थित भएको हुनाले माथि गरिएको विचारको पनि महत्व छ भने स्पष्ट हुन्छ ।



पादटिप्पणी

१. इति ह पारम्पर्योपदेश आस्तेअस्मिन्, आस आधारे घञ् षष्ठीतत्पुरुषः ॥
२. धर्मार्थिकाममोक्षाणामुपदेशसमन्वितम् ।
पूर्ववृत्तकथायुक्तमितिहासं प्रचक्ष्यते ॥
३. इतिहासः कुशाभासः सूकरास्यो महोदरः ।
अक्षसूत्रं घटं बिभ्रत्पंकजावरणान्वितः ॥
दूर्वाश्यामवर्णः ॥
४. हंसयानेन कर्त्तव्यो न च कार्यश्चतुर्मुखः ।
सावित्री तस्य कर्त्तव्या वामोत्संगगता शुभा ॥
ब्रह्मोक्तं परमं रुपं सर्वं कार्यं प्रजापतेः ।
पाटलवर्णः॥
५. पुराणं चम्पकाभासं शुकवक्त्रं च तुन्दिलम् ।
अक्षसूत्राभयं ज्ञेयं नानाभरणभूषितम् ॥
चम्पकवर्णम् ।

६. आद्यः स्वायम्भुवो ब्रह्मपुत्रो मनुरिति स्मृतः ।
श्वेतवर्णः ॥
७. भिक्षु सुदर्शनले "ॐ संवत् ४१३ ...... देयधर्मोयं यदत्र पुण्यं तद् भवतु मातापितृपूर्वङ०गमङ०कृत्वावाप्तये भवतु" मात्रै पाठ पढ्नु भएको छ ।
८. प्रकाशित पाठ निम्न उद्धृत बमोजिम छ–
(क) ............ ४ व ............सूताण्य..................
(ख) ............ सम्यक् ....................................
(ग) ............स्य साक्ष्या...... संध्योयं ... भु............
(घ) ............ शाठ्या ...... देषुप्रसादा नविरायत ...
(ङ०) ............ (स) मूह (संध्या) ...... मदाभियुक्तेन यथावद...
(च) ...... त्वष्य न धित शैभा ... प्रसादं गतान्नीयत लंभ...नी
(छ) ...... राष पिसाभियु ...... येन्यान्त सदाहित्त कर्म शैत्राः
(ज) ...... वारे भि कुशौ ......(श) ठदिकै नास्मद ताखुषा
खण्डित हुनाले छेउटुप्पो नलागे पनि धार्मिक विषय सम्बन्धी देखिन्छ ।
९. डा. टण्डनको पाठ निम्न बमोजिम छ–
(क) हरिकमलासने वाम-
(ख) मुखे मुनिसिद्धयक्ष (म)
(ग) म पितृगणे मध्य पु-

(घ) प्योवहाब्धेः पूज्यते यः
(ङ०) शिवोत्र स्थाप्यते विष्णु-
(च) (त्ना) चार्येन

१०. अभिलेख यस प्रकार रहेको छ–
१. ऊँ देयधर्मोयं
२. सुसुंदया कृतं
३. तथा सार्क मातामतं
४. तौ भगिनी भ्रातरम्
(यो दत्त धर्म सुसुंदाले राखे । त्यसबेला साथमा बहिनी र भाई थिए)।

११. श्यामसुन्दर राजवंशी - लिच्छविकालीन सम्वत्को निश्चय, काठमाडौं वि.सं . २०५२, पृ. २१२)।

१२. लेखमा मानन्धरज्यूले श्रीको उपयोगमा फरक भएको चर्चा गर्नु भएको छैन ।

१३. धनवज्र वज्राचार्यले पनि यो अभिलेखको प्राप्तिबाट शकसंवत् सम्बन्धी धारणामा परिवर्तन हुन सक्ने सम्भावना व्यक्त गर्नु भएको छ ।

१४. अंशुवर्माको संवत् ३१ को चांगुनारायणको सुनको कवचको अभिलेखमा "एकत्रिंशत्तमे वर्षे वर्तमाने स्वसंस्थय" भनिएको र त्यसको अर्थ "आफ्नै परिपाटी अनुसार चलेको संवत् ३१" हुन्छ । यो भनाईबाट नयां संवत्को स्थापना सम्बन्धी घटनाको संकेत पाइन्छ । (राजवंशी,२०३४: ४) ।

१५. एक जापानी विद्वान्ले अक्टोबर २० ई. ५७२ देखि नेपालमा नयां संवत्को स्थापना भएको सूचना तिब्बती स्रोतबाट ल्याएको पनि थाहापाइन्छ (मल्ल, १९८५: ६४) । यसबारेमा बढी अध्ययन हुनु आवश्यक छ ।

१६. ज्ञानमणि नेपालले यो वंशावलीबारे विशेष विवेचना गर्नु भएको छ (नेपाल, २०४५:१-१०) ।

१७. "In the reign of this Raja, a Certain Bubhu Barma Rajbansi, or descendant of a Raja, having consercrated a Buddha, built an aqueduct with seven dharas or spouts, and wrote the following slok on the right-hand side of one of the dharas: By the kindness of Ansu-barma, this aqueduct has been built by Bibhu barma, to augment the merit of his fathers."

१८. संवत् ४४ जेष्ठ शुक्ल ......... ।

१९. This dhara still exists on the left-hand side of the road leading south wards from the Ranipokhari." (Wright, 1966: 89).



## खण्ड - २

### राजा वृषदेव

मानदेव प्रथमले आफ्नो पहिलो अभिलेख चाँगुनारायण स्तम्भ लेखमा जुन संक्षिप्त वंशावली लेखाएका छन् त्यसमा पहिलो स्थान दिएर वृषदेवको वर्णन लेखाएका हुनाले मानदेवका पुर्खाहरुमा सबभन्दा बढी ज्ञान पहिला राजाका रुपमा यिनलाई लिन सकिन्छ । यसै कारणले हाम्रो अध्ययनको आरम्भ वृषदेवदेखि भएको छ ।

मानदेवको चाँगु स्तम्भलेखमा राजा वृषदेवको बयान एक श्लोकमा गरिएको छ जसको अनुवाद निम्न बमोजिम छ–

> "राम्रा नीति प्रभाव र ऐश्वर्यद्वारा लडाई भिडाई कम गर्ने, बोलेको कुरा पु-याउने वृषदेव नाउँ भएका बेजोड राजा हुनुभयो । राम्ररी काबूमा राखिएका, विद्वान्, खूब फुर्तिला, गम्भीर, शूरा र अनुशासनमा रहने आफ्ना छोराहरुले चहकिला किरणले सूर्यको जस्तै जसको (वृषदेवको) शोभा हुन्थ्यो" (वज्राचार्य, २०३०: १४) ।[1]

गोपालवंमशावलीमा विश्वदेवका रुपमा वृषदेवको उल्लेख भई उनले "सीनगुं (स्वयम्भू) विहारमा चैत्यभट्टारकको प्रतिष्ठा गरे । त्यहीं ढुंगेधारा" पनि बनाएको उल्लेख गरिएको छ (वज्राचार्य, मल्ल, १९८५: ७६) ।[2] संक्षिप्त गोपालवंशावलिहरुमा पनि यो कुरा टिपिएको पाइन्छ (वज्राचार्य, १९७७: १२३, रेग्मी, २०४६: ४) ।

भाषावंशावली परम्परामा राजा वृषदेवको बौद्ध गतिविधिसम्बन्धी अफ विस्तृत वर्णन पाइन्छ । सोअनुसार ती राजाले चाबेलको धन्दो चैत्यको निर्माण तथा चावहिलको बस्ती, बाँडेगाउ (बन्दे ग्राम) को चैत्य र बानेश्वर नजीकै एउटा ठूलो विहार पनि बनाएका थिए (पौडेल, २०२०: ५६-५७) ।

भाषावंशावली परम्परामै यी राजाको पालामा गौडदेशबाट राजा प्रचण्डदेव आएर स्वयम्भूमा बस्ने गुणाकर बाँडासँग भिक्षुचर्या लिएर नाम फेरेर शान्तश्रीभिक्षुनाम राखेका र ती दुई गुरु चेलाले सल्लाह गरी राजा वृषदेवलाई हात लिएर आफ्नै धर्ममा मिलाई स्वयम्भूको चैत्य बनाएको घटना बताइएको पाइछ (पौडेल, २०२०: ५७) ।

मानदेव प्रथमको चाँगुनारायण अभिलेखमा वृषदेवलाई "व्यायामसंक्षेपकृत्" भनिएकोमा त्यसको अर्थ "लडाइ भिडाई कम गर्ने" भन्ने अर्थ गरी उनी राजा "शमप्रिय राजा थिए" भन्ने अर्थ महेशराज पन्तले गर्नु भएको छ (पन्त, २०३१क: २५९) । जयदेव द्वितीयले पशुपतिको अभिलेखमा उनै राजालाई "सुगतशासनपक्षपाती" अर्थात् "बौद्धधर्ममा झुकेका" भनिएकोले "शमप्रधान बौद्ध धर्मका उपासक वृषदेवलाई चाँगुको स्तम्भलेखमा व्यायामसंक्षेपकृत अर्थात् लडाई भिडाई कम गर्ने भन्ने विशेषण लगाई बौद्धधर्ममा भएको उनको

अवस्थालाई संकेत गरेको बुझिन्छ भन्ने व्याख्या महेशराज पन्तले गर्नु भएको छ (पन्त, २०३१क: २५९) । बौद्ध धर्मका अनुयायी भएका राजा वृषदेवले सो धर्मको गतिविधि बढाएको कुरा वंशावली साहित्यमा कतै सूत्र रुपमा र कतै अलि विस्तृत रुपमा लेखिएको पाइन्छ ।

माथि उद्धृत विवरणबाट वृषदेवका विशेषताका कुराहरु सूत्र रुपमा संकेतित भएको करा इतिहासकारहरुले निर्देश गरेका छन् । 'त्यहां व्यायामसंक्षेपकृत्' भनेर वृषदेवलाई लडाई भिडाई कम गर्ने भनेर संकेत गरिएको कुरा धनवज्र वज्राचार्य मान्नुहुन्छ (ऐजन: २०) । पछि जयदेव द्वितीयले पशुपतिको अभिलेखमा पनि "सुगतशासनपक्षपाती" अथवा बौद्ध धर्मको पक्ष लिने, अनुसरण गर्ने भनेर भनिएको हुँदा बौद्ध धर्मतिर लागेका हुनाले शान्तिप्रिय हुन पुगेका थिए भन्ने अर्थ पनि धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजन: २० - २१) ।

चावहिलको चैत्यको आँगनमा पाइएको खण्डित अभिलेखलाई अनेक कारणहरु देखाएर राजा वृषदेवको पालाको हो, अर्थात् लिच्छविकालको वा नेपालकै पहिलो अभिलेख हो भनेर धनवज्र वज्राचार्यले सिद्ध गर्नुभएको छ (वज्राचार्य, २०३०: २ - ३) । शंकरमान राजवंशीले यस अभिलेखको लिपिको तुलना र ज्योतिष गणनाबाट पनि यसलाई बसन्तदेवको पालामा राख्नु भएको छ (राजवंशी २०३१ - ३४: ११४ - ११६) ।

चाँगुको अभिलेखमा 'अनुपम' बेजोड र पशुपतिको अभिलेखमा 'राजोत्तम' उत्तम राजा भनिएकोले गुप्त साम्राज्यको असरबाट नेपाललाई मुक्त पार्ने श्रेय वृषदेवलाई दिन सकिन्छ भन्ने धनवज्र वज्राचार्यको विचार रहेको छ (ऐजन: २०) ।

समुद्रगुप्तको शासन अवधिबारे विद्वान्हरुमा एकमत रहेको छैन कसैले ई.३३६-३७५ र कसैले ई. ३४० - ५० - ३८० को समय उनी सम्राट्लाई दिएको पाइन्छ । यसको समकालिक नेपाली लिच्छवि राजा को थिए यो कुराको विचार गरेर मात्र वृषदेवले गुप्त साम्राज्यबाट स्वतन्त्रताको घोषणा गरे भनेर ठेगान गर्नु उचित हुने देखिन्छ ।

वृषदेवको कालनिर्धारण गर्ने साधन गोपालवंशावलीको वक्तव्य हो जसमा उनको शासनकाल १०० वर्ष जनाइएको छ । यस तथ्यको समर्थन गर्ने स्पष्ट प्रमाणको अभाव छ । पशुपतिको संवत् ३८१ (ई. ४५९) को अभिलेखमा बीचमा वृषदेवको नामको उल्लेख भएको पाइन्छ । त्यस सन्दर्भभन्दा पहिले 'वर्षशतञ्चकार' भन्ने चर्चा परेको छ । ती दुई सन्दर्भको बीचमा अभिलेखको अंश खण्डित छ तर अनुमानको रुपमा सो दुई सन्दर्भलाई जोडेर पनि हेर्न सकिन्छ । खास गरी गोपालवंशावलीको भनाईको सन्दर्भमा यो कुरो मिल्न सक्दछ । कुनै राजाको शय वर्ष लामो शासनकाल हुनु आश्चर्यपूर्ण हुन सक्दछ तर असम्भव हैन । माथि 'कालनिर्धारण' खण्डमा विचार गरिएअनुसार भन्ने हो भने शंकरदेव र धर्मदेवको ४० र ४१ वर्ष र वृषदेवको १०० वर्षको शासन जोड्दा जुन



१८१ वर्षको समय आउँछ त्यसलाई मानदेव प्रथमको पहिलो ज्ञात मिति ई.४६४ बाट घटाउँदा आउने ई.२८३ सम्म उनको शासन चलिरहेको बुझ्नु पर्ने हुन्छ । समुद्रगुप्तको समय ई.३८० सम्म रहेको मानिएको परिप्रेक्षमा समुद्रगुप्तको स्वर्गवास भएको तीन वर्षपछिसम्म वृषदेव बाँचिरहेको देखियो । यही तीन वर्षको बीचको अवधिमा वृषदेवले गुप्त साम्राज्यको अधीनताको परित्याग गर्न सफलता पाएको हुन सक्दछ ।

वृषदेवको माथि चर्चित आनुमानिक कालगणनाको विचार गर्ने हो भने समुद्रगुप्तका समकालिकमा यिनै वृषदेव पर्न आउँछन् । समुद्रगुप्तलाई कर तिर्नु पर्ने कर पनि वृषदेवलाईनै आईपरेको आर्को अनुमान पनि यहां गर्नुपर्ने भएको छ । यही राजनीतिक कुण्ठाको कारणबाट उनी आत्मशान्तिको लागि बौद्ध धर्मतिर लागेको हुनसक्दछ ।

वृषदेवपछि उनका छोरा शंकरदेव राजा भए ।

### शंकरदेव

चाँगु अभिलेखमा वृषदेवका उत्तराधिकारी र छोरा शंकरदेवको वर्णन एक श्लोकमा गरिएको छ जसको नेपाली अनुवाद निम्न बमोजिम छ :-

"उहाँ (वृषदेव) का छोरा, मुलुकको अभिवृद्धि गर्ने,
लडाईमा शत्रुहरुले जित्न नसकिने तेजिला, सत्यविचार
गर्ने शंकरदेव नाउँ भएका बेजोड राजा हुनुभयो ।
सिंह जस्ता भएका जसले पराक्रम दान गौरव र
ऐश्वर्यद्वारा ठूलो यश कमाएका, आफू नियममा
रही तहमा रहेका कर्मचारीहरुद्वारा राज्यको
रक्षा गर्नु भयो" (बज्राचार्य, २०३०: १४) ।[४]

वृषदेवको जीवनमा आएको राजनीतिक उतार-चढावको परिप्रेक्ष्यमा शंकरदेवको राजनीतिक उपलब्धि के थियो भने कुरा जान्न सकिएको छैन । वृषदेवले आफ्नो जीवनको अन्तिम समयमा शुरु गरेको स्वाधीनतालाई कायम गरेको हुनाले यिनलाई चाँगुनारायणको अभिलेखमा "शत्रुहरुले जित्न नसकिने" (सङ्ख्येष्वजेयोरिभि:) भनिएको हुनुपर्दछ ।

वंशावली साहित्यमा शंकरदेवको नामोल्लेख मात्र गरिएको छ र यिनलाई ४० वर्ष शासनकाल दिइएको छ । यो कालगणना सम्भवै देखिएकोले यिनको शासनकाल ई. ३८३ तिरदेखि ई. ४२३ सम्म रहेको मान्न सकिन्छ ।

धर्मदेव

मानदेवले आफ्ना पिता धर्मदेवको विस्तृत वर्णन आफ्नो चाँगुनारायण अभिलेखमा गराएका छन् । उक्त अभिलेखको चौथो श्लोकमा धर्मदेवको वर्णन यसरी गरिएको छ :–

> "उहां (शंकरदेव) का छोरा असल धर्म कर्मनै यस भएका, दण्डनीति जान्ने, धर्मामा, कर्मकाण्ड जान्ने, अनुशासन मनपराउने र असल गुण भएका श्रीधर्मदेव राजाले राजर्षिहरुका नयाँ चाल चलनले जनताको मन जितेर कुलको क्रमैसँग आएको ठूलो (नेपाल-) राज्यलाई धर्म बमोजिम बढाएर रक्षा गर्नु भयो" (वज्राचार्य, २०३०: १४) ।[५]

सोही अभिलेखको पांचौं श्लोकमा धर्मदेवको अरु वर्णन यसरी गरिएको छ–

> "कर्म गरेर शरीर र मन शुद्ध भएका, चन्द्रमाजस्ता उज्याला उहाँ राजाले भने जस्तै भएका, मन्त्र र ऐश्वर्य पुगेका, असल पशुभएका यज्ञबारा देवताहरुको पूजा गर्नु भयो । चोखो कुलमा जन्मेकी बडामहारानी श्रीराज्यवती कुलको गुणले गर्दा विष्णुकी लक्ष्मी जस्तै उहाँ राजा (धर्मदेव) की मुख्य प्राणपियारी हुनुभयो" (ऐजनः १४) ।[६]

हालै पशुपतिनाथको प्रांगणमा पाइएको संवत् ३८१ को स्तम्भलेख खण्डित अवस्थामा भए पनि यसको ऐतिहासिक महत्व रहेको छ । यो अभिलेख पत्तालगाउने र सम्पादन गरी प्रकाशन गर्ने श्यामसुदर राजवंशीले यो अभिलेखलाई मानदेव प्रथमको मान्नुभएको छ (राजवंशी, २०४६:१) तुलनात्मक रुपले विचार गरिएमा संवत् ३८१ वा ई. ४५९ को यो स्तम्भलेख मानदेव प्रथमका पिता धर्मदेवको हुनु धेरै सम्भव लाग्दछ ।

हालसम्म पाइएका अभिलेखहरुबाट मानदेव प्रथमले संवत् ३८६ देखि संवत् ४२७ सम्म (अर्थात् ई. ४६४ देखि ५०५ सम्म) जम्मा ४१ वर्ष शासन गरेको कुरा थाहा पाइन्छ । यही शासन अवधि गोपालवंशावलीमा पनि लेखिएको देख्दा (वज्राचार्य, मल्ल, १९८५: २८) संवत् ३८१ को उक्त अभिलेखलाई पनि मानदेवकै मानेमा उनको शासनकाल ४६ वर्ष लामो हुन जाने र त्यति लामो शासनकाल प्रायः अस्वाभाविक देखिन आउँछ ।

आर्को महत्वपूर्ण कुरा त के छ भने संवत् ३८६ को चाँगु अभिलेखमा धर्मदेवको मृत्यु हालै भएको रुपमा वर्णन गरिएको हुनाले संवत् ३८६ जेष्ठ महिना भन्दा केही महिना पहिले मात्र धर्मदेवको मृत्युको घटना भएको मान्नुपर्ने हुन आउँछ यसै कारणले संवत् ३८१ को उक्त पशुपति अभिलेख मानदेवको हुनु असम्भव लाग्दछ ।

यो पशुपति स्तम्भ लेख खण्डित हुनाले समग्र विवरण बुझ्न सकिएको छैन तर बाँकी भागबाट "पञ्चवन्त्र मूर्ति" थापेको अवसरमा यो स्तम्भ लेख



लेखाई राखिएको बुझिन्छ । त्यसपछि "......वृषदेवनामा......" भन्ने उल्लेख परेकोले लिच्छवि राजाको वंशावलीको पनि वर्णन गरिएको बुझ्न सकिन्छ ।[७]

पशुपतिनाथको प्रांगणमा पाइएको र त्यसमा 'पञ्चवक्त्रमूर्ति' (चतुर्मुखलिंग) को स्थापना गरेको भन्ने संकेत पाइएको छ । राजा धर्मदेवले "श्री पशुपति भट्टारकको दक्षिणमूर्ति र ठूलो वृषध्वज बनाएको" भन्ने गोपाल वंशावलीको बयानसँग (वज्राचार्य, मल्ल, १९८५: २९) यो अभिलेखको विवरण मिल्न आउने देखिन्छ । यसैले पनि यो अभिलेख राजा धर्मदेवले लेखाई राखेका हुन् भन्न सकिने देखिन्छ ।

यति चर्चाको आधारमा नेपालको पहिलो अभिलेख राख्ने श्रेय धर्मदेवलाई दिनुपर्ने देखिएको छ ।

धर्मदेवको आफ्नै अभिलेख पाइए पनि सो अभिलेख खण्डित भएकोले सो अभिलेखले धर्मदेवको राजनीतिक व्यक्तित्वबारे जान्न खास योगदान दिएको छैन । तर सो अभिलेखमा धर्मदेवले आफ्नो वंशावली लेखाएको जस्तो बुझिएकोले र उनका पुर्खा मध्ये बाजे वृषदेवको नाम त स्पष्टै देखिएकोले पनि यो राजवंशको गौरव गान गर्न थालिएको बुझ्न सकिछ । केही राजनीतिक उपलब्धि भएपछि आफ्नो वंशको गौरवगान गर्ने राजनीतिक परम्परा पाइने हुनाले धर्मदेवको वंशले केही राजनीतिक उपलब्धि प्राप्त गरे जस्तो लाग्दछ । तर यो कुराका स्पष्ट विवरण उपलब्ध छैनन् । धर्मदेवको पशुपति अभिलेख खण्डित हुनाले त्यसबाट उनको धार्मिक कार्यबारे मात्रै ज्ञान हुन सकेको छ । तर उनका छोरा मानदेवले आफ्नो चाँगु अभिलेखमा धर्मदेवका बारेमा केही विस्तृत विवरण दिएका छन् । त्यसको चर्चा माथिनै गरिसकिएको छ ।

मानदेवको चाँगुनारायण स्तम्भ लेखमा राजा धर्मदेवको अकस्मात् मृत्यु भएको र सो कारणले गर्दा लिच्छवि राज्यका पूर्व पश्चिमका सामन्तहरुले विद्रोह गरेको कुरा बताइएको छ । धर्मदेवको अकस्मात् मृत्यु सो अभिलेखमा रहस्यमय रुपमा बताइएको छ- "बगैंचामा गएझैं राजा स्वर्ग जानुभयो । रानी राज्यवत्ती राजासँग विछोड हुनु भन्दा पहिले देवताहरुलाई भोजन गराउन लाग्नुभएको थियो ।"[८]

चाँगु अभिलेखको यो सूत्र गोपालवंशावलीहरु र भाषावंशावलीमा विस्तारै विस्तृत हुँदै गएको पाइन्छ ।

गोपालवंशावलीमा त्यो घटनाबारे भनिएको छ – राति ढुंगे धारामा छोराद्वारा शिर काटिएको हुँदा तिनको मृत्यु भयो, बाबुको आज्ञाद्वारा यो गरिएको थियो ।[९] मानदेव......। तिनले थाहा नपाई बाबुको वध गरे । यस्तो महाघोर पाप गरेका हुनाले रुँदै घुम्दै गुंविहार (बज्रयोगिनी सांखुको विहार) को शिरमा पुगी तपस्या गरे । तपस्याको प्रभावले ठूलो चैत्य उत्पन्न भयो र तिनको प्रतिष्ठा गरियो ।[१०](वज्राचार्य, मल्ल,१९८५: ७६) ।

संक्षिप्त गोपालवंशावलीहरुमा यो घटनाबारे केही लेखिएको छैन । तर भाषावंशावलीहरुमा यो घटना विस्तृत रुपले वर्णन गरिएको पाइन्छ । यो आख्यानको ठीक व्याख्या गर्न सकिएको छैन ।

राजा धर्मदेवले लेखाई राखेको भनी मानिएको पशुपतिको संवत् ३८१ अर्थात् ई. ४५९ को अभिलेखमा "क्रतुषुनैकविधेपुनित्यम्" "परिशुद्धविधानकर्म्म" (यज्ञहरुमा अनेक प्रकारका सँधै विधान कर्मले शुद्ध भएका) भनिएको राजा धर्मदेवलाईनै भनिएको बुझिन्छ । त्यही "यूपचयनैर्वसुधां समस्ताम्" पनि भनिएकोले "सारा पृथ्वी यूप (मौला) हरुले भरेको" भन्ने लेखिएकोले धर्मदेवले यज्ञयागादि गरेर धेरै मौलाहरु गाडेर पृथ्वीलाई सिंगारेका भने आलंकारिक भाव व्यक्त भएको छ । धर्मदेवको सन्दर्भमा मानदेवको चाँगु अभिलेखमा पनि यस्तै वर्णन गरिएको पाइन्छ । चाँगु अभिलेखमा धर्मदेवको वर्णनमा एक ठाउँमा उनले "असल पशुभएका यज्ञद्वारा देवताहरुको पूजा गरेको" (ईजे सत्-पशुभिः सुरान्) भनिएको छ र आर्को ठाउँमा मानदेवले "मेरा बुबाले राम्रा अग्ला मौलाहरुले पृथ्वीलाई सिँगार्नु भएथ्यो" (यूपैश्चारुभिरुच्छितैर्व्वसुमती पित्रा ममालंकृता) भनिएकाले पनि माथि भनिएकै कुराको व्याख्या भएको पाइन्छ ।[11]

यिनै विवरणको आधारमा महेशराज पन्तले पनि धर्मदेव यज्ञप्रधान वैदिक धर्मका उपासक थिए भन्ने व्याख्या गर्नु भएको छ (पन्त, २०३१क:२५०-२६५) ।

धर्मदेवले यज्ञहरु गर्दा धेरै 'यूप' (मौला) हरु गाडेको भन्ने वर्णन मानदेवले गराएको देख्दा ललितपुरमा पनि त्यस्तै मौला गाडेको र सो कारणले 'यूपग्राम' नामकरण भएको पाइन्छ । मानदेव प्रथमको पालाको ई. ४७७ को देउपाटनको अभिलेखमा (वज्राचार्य, २०३०: ५१) सर्वप्रथम उल्लेख भएको पाइने यो 'यूपग्राम' को स्थापना वा कुनै वस्तीको सो नामकरण राजा धर्मदेवले गरेको पनि मान्न सकिन्छ ।

## राज्यवती

राजा धर्मदेवकी बडामहारानीको रुपमा राज्यवतीको वर्णन चाँगुनारायणको अभिलेखमा गरिएको छ । पति जीवित छँदै पनि उनी धार्मिक कार्यमा विशेष संलग्न हुने सौम्य खालकी नारीको रुपमा त्यस अभिलेखमा वर्णन गरिएको छ । पतिको अकस्मात् मृत्युपछि सती जान लाग्दा छोराले सती जान निषेध गरेकाले धर्मकर्म गरेर 'अरुन्धती' जस्तै आदर्श सतीको रुपमा उनले जीवन विताउन थालेको कुरा पनि यसै अभिलेखमा बताइएको छ । उनका छोरा मानदेवलाई पनि परम मातृभक्तको रुपमा त्यस अभिलेखमा वर्णन गरिएको पाइन्छ । हुन पनि मानदेवले आफ्नी आमा राज्यवतीको "सँधै पुण्यको बढिबढाउ होस् भनेर "विष्णु विक्रान्तमूर्ति" (वामनावतार) लाजिम्पाट, धोबीचौर र पशुपति तिलगंगामा थापेको कुरा सोही मूर्तिका पादपीठमा लेखिएका अभिलेखबाट थाहा पाइन्छ (वज्राचार्य, २०३०: ३४-३५) । संवत् (ई. ४६७)



वैशाखशुक्ल द्वितीयाको मिति रहेको ती दुई अभिलेखमा मानदेवले आफ्नी आमाको पुण्यको लागि भनेर ठूलो उत्साहसाथ दुई ठाउँमा भगवान् वामनावतार विष्णुका दुई भव्य मूर्ति थाप्नाको कारण मुमा महारानी राज्यवतीको स्वर्गबास भएको र उनको नाममा ती मन्दिर बनाएको हो भने अनुमान गरिएको छ (ऐजनः ३८) । वैदिक साहित्यमा भगवान् विष्णुका तीन पाइलाको बयान पाइन्छ जसमध्ये तेस्रो पाइला चाहिँ 'परमपद' हो भन्ने मानिन्छ (भण्डाकर १९६५: ३३) । मानदेवले पनि आफ्नी आमाको परमपद प्राप्तिको इच्छा गरी यी मूर्ति थापेको बुझ्न सकिने हुनाले यी अभिलेखले घुमाउरो किसिमबाट राज्यवतीको स्वर्गवास ई. ४६७ तिर भएको कुरा बताएको मान्न सकिन्छ ।

उक्त दुई अभिलेखबाट महारानी राज्यवती पतिको मृत्युपछि ३-४ वर्षको अवधिमा यिनको उल्लेख पाइदैन ।

चाँगुनारायण अभिलेखमा राज्यवतीलाई "चोखो कुलमा जन्मेकी" (विशुद्धवंशविभव ।) भनिएको छ (वज्राचार्य, २०३०: ११) । त्यसै अभिलेखमा मानदेवले मल्लपुरीका सामन्तलाई कज्याउन पश्चिमतिर लाग्दा आफ्ना मामालाई फौजसाथ अघिलगाएर आफू पछि लागेको वर्णन गरिएको छ । राज्यवती र उनका दाजु वा भाईसम्बन्धी यो अत्यल्प सूचनाको राजनीतिक महत्व कति छ प्रमाणको अभावमा केही भन्न सकिएको छैन । तर मानदेवले आफ्ना मामालाई सेनामा गतिलो पदाधिकार दिएकाले यी खानदानी कुलका रहेछन् भन्ने अनुमानचाहिँ गर्न सकिन्छ ।

## समुद्रगुप्त र नेपाल

भारतीय सम्राट् समुद्रगुप्तको प्रयाग प्रशस्तिमा "समतट, डवाक, कामरुप, नेपाल, कर्तृपुर आदि सीमानाका राजाहरुले सबै किसिमको कर तिरेर, हुकुममा तामेल रहेर, सलामीमा हाजिर रहेर समुद्रगुप्तको कडा स्थिति बन्देजको पालना गर्दछन्" भनिएको पाइन्छ ।[12]

गुप्त राजा समुद्रगुप्त (अन्दाजी ई. ३४० वा ३५० - ३८०) ले ल्याएको राजनीतिक आँधीमा झण्डै सम्पूर्ण भारतवर्ष व्याप्त भएको बेलामा नेपाल पनि सो आँधीले प्रभावित थियो भन्ने कुरा बुझ्न सकिन्छ । यसबारे विद्वान्हरुले आ-आफ्नो किसिमले व्याख्या प्रस्तुत गरेको पाइन्छ ।

भारतीय इतिहासकार रमेशचन्द्र मजुमदार नेपालका लिच्छविहरुले समुद्रगुप्तको आधिपत्य मान्नुपरेको तथ्यलाई सत्य मान्नुहुन्छ । गुप्त आधिपत्यको अवधिबारे निश्चित रुपले केही भन्न सकिँदैन तर गुप्तहरु खस्केपछिनै नेपालका शासक लिच्छविहरुको उत्थान हुन थालेको घटना संयोग मात्रै हैन भन्ने पनि मजुमदारको विचार रहेको छ (मजुमदार १९६२ ८४) ।[13]

अर्का विद्वान् डा. कमल प्रकाशमल्लले गुप्त साम्राज्यको परम उत्कर्षको समयमा नेपालका शासकहरु सीमान्तका सामन्तका रुपमा रहेका थिए ई. ४६७ मा स्कन्दगुप्तको मृत्युपछि साम्राज्यको पतन हुन थाल्यो र हूणहरुको

आक्रमणबाट त्यसको विखण्डन भयो, स्कन्दगुप्तको मृत्युदेखिनै "नेपालका सामन्तहरु" आफूलाई विस्तृत सामाजिक, राजनीतिक र सांस्कृतिक परिवेशमा प्रस्तुत गर्न थालेका हुन् भन्नुहुन्छ (वज्राचार्य, मल्ल, १९८५: ७) ।[१४]

धनवज्र वज्राचार्यको विचारमा नेपाल गुप्त साम्राज्यभित्र पर्दैनथ्यो, सीमानाको राज्यको रुपमा थियो । भारतमा समुद्रगुप्तले बलियो साम्राज्य खडा गरेपछि नेपालका लिच्छविहरुले आत्मरक्षाको लागि करको रुपमा केही आर्थिक रकम समुद्रगुप्तलाई बुझाउनु परेको थियो (वज्राचार्य, २०३०: १९-२०) ।

भौगोलिक विकटता र यसको सानो आकारका कारणले गुप्त सम्राटहरुले नेपालतिर खास चासो लिएका थिएनन् र यसै कारणले समुद्रगुप्तका उत्तराधिकारीहरुको अभिलेखहरुमा नेपालको उल्लेख पाईंदैन भन्ने एकथरी इतिहासकारको विचार रहेको छ (गोपाल, वर्मा, १९७७: ४७) ।[१५]

अरुको मतमा "सम्राट् समुद्रगुप्तले दिग्विजय गर्दा उत्तरी भारतका कतिपय साना तिना राज्यलाई आफ्नो राज्यमा गाभे तर नेपाललाई गाभेनन्" (राजवंशी, २०३९: ५४) ।

हाम्रा आन्तरिक स्रोतहरुबाट गुप्तसाम्राज्यको आधिपत्यको कुनै संकेत सुरक्षित भएको पनि छैन र सो आधिपत्यबाट मुक्त भएको संकेत पनि कतै नपाइने हुनाले यो विषयमा स्पष्ट विश्लेषण प्रस्तुत गर्न गाह्रो छ ।

समुद्रगुप्तपछिका कुनै पनि गुप्त राजाले नेपाललाई करद भनेर दावा गर्न नसकेको हुनाले समुद्रगुप्तपछि गुप्त साम्राज्यमा केही गडवडी उठेको मौकामा "गुप्तहरुको अलिकता प्रभावबाट पनि नेपाल मुक्त भयो र आफ्नो स्वतन्त्रता कायम गर्न समर्थ भयो" भनेर धनवज्र वज्राचार्यले अर्थ्याउनु भएको छ (ऐजन: २०) ।

भारतका गुप्तहरुको अंकुशबाट स्वतन्त्र गराउने श्रेय वृषदेवलाई दिने गरिएको पाइन्छ । धनवज्र वज्राचार्यले वृषदेवलाई सो श्रेय दिनुभएको छ (वज्राचार्य, २०३०: १९-२० ) ।

गुप्तहरुको नेपालमा राजनीतिक प्रभाव धेरै समयसम्म टिक्न सकेन समुद्रगुप्तको मृत्युपछि नै उठेको गडवडीको मौका छोपी गुप्त प्रभावबाट नेपाल मुक्त हुन गयो र आफ्नो स्वतन्त्रता कायम गर्न समर्थ भयो भने धनवज्र वज्राचार्यको विचार छ (वज्राचार्य, २०३०: २०) ।

धनवज्र वज्राचार्यले गुप्त आधिपत्यबाट नेपाललाई मुक्त गराउने श्रेय वृषदेवलाई दिनुभएको छ भने रमेशचन्द्र मजुमदार सो श्रेय धर्मदेवलाई दिनुहुन्छ। सम्राट् गुप्तहरुको कारणबाट अधीनताको वा अंकुशको स्थितिमा रहनुपरेकोमा सो वंश खस्किन थालेपछि नेपालका लिच्छवि शासकहरुको महत्वपूर्ण उन्नति हुन थाल्यो र करीव सम्पूर्ण नेपालको उनीहरुले एकीकरण गरे ।[१६] सो काम शायद धर्मदेवले शुरु गरेका थिए र त्यसलाई उनका छोरा मानदेवले सफलतापूर्वक कायम गरेका थिए भन्ने रमेशचन्द्र मजुमदारले अनुमान गर्नु भएको छ (मजुमदार,१९६२ ८४) ।[१७]



परिस्थितिको विचार गर्दा समुद्रगुप्तले सिमान्ततिरका राज्यहरुलाई आफ्नो सोभो नियन्त्रणमा राखेका थिएनन् । त्यसो गरेको भए उनको अधिकांश शक्ति यतैतिर केन्द्रित हुने थियो भन्ने विचार अरु इतिहासकारहरुको रहेको छ (मजुमदार, १९६२ए: १३) ।[१८]

## पादटिप्पणी

१. (श्रीम) न्चारु (न), यप्रतापविभ (वैव्र्या) यामसंक्षेपकृत्
(राजा) भूद् वृषदेव इत्यनु(पमःस) त्यप्रतिज्ञोदयः
(यो रेजे) सवितेव दीप्तकिर (णैः) सम्यग्धृतैः स्वैः सुतैः
(वि) द्वभिर्व्वहुगर्व्वितैरचपलैः शू (रै) र्व्विनीतात्मभिः ॥

२. राजा श्रीविश्वदेव वर्ष १०० तेन कृत सीनगुविहारचैत्यभटारिक
प्रतिष्टित सम्पूर्ण कृतम् । तत्रैव पनालिका चः। (वज्राचार्य, मल्ल, १९८५: २८) ।

३. अंशुवर्माअघिका राजाहरुले बौद्धधर्मलाई विशेष प्रश्रय दिएको नदेखिएकोले वृषदेवलाई बौद्धधर्मका पक्षपाती भनिएको यो सन्दर्भबारे कुनै इतिहासकारले शंका प्रकत गरेका पनि छन् (गोपाल, वर्मा, १९७७: ४६) ।

४. (त) स्याभूत्तनयःसमृद्ध (विष)यः सङ्ख्येष्वजेयोरिभिः
(राजा) शंकरदेव इत्यनुप (मो) दीप्तिप्रदः सत्यधीः
(सो) यं विक्रमदानमानविभ (वै) र्ल्लवध्वा यशः पुष्कलम्
(स्वं) संयम्य ररक्ष गाममिमतैर्भृत्यैर्मृगेन्द्रोपमः ॥३॥

५. (त) स्याप्युत्तमधर्म्मकर्म्मयशसः (पुत्रोर्थ) विद् धार्मिकः
(क) र्म्मज्ञो विनयेप्सुरुत्तमगु(णःश्रीध) र्म्मदेवो नृपः ।
(ध) र्म्मेणैव कुलक्रमागत(मपान्नेपाल) राज्यं महत्
(स्फी) तीकृत्य नवैर्न्नृपर्षिचरितैः (सम्) भाव्य चेतो नृणाम् ॥

६. (ई) जे स (त्प) शुभिः सुरानन् (गुणैः) सम्पन्नमन्त्रर्द्धिभिः
(यज्ञैः कर्म्म) विशुद्धदेहहृदयश्चन्द्रद्युतिः पार्त्थिवः ।
(प) त्नी तस्य विशुद्धवंशविभवा श्रीराज्यवत्युत्तमा
(प्रा) णा (नाम) भवत् (प्रिया) कुल (गुणै) र्ल्लक्ष्मीरिवाग्र्या हरेः ।

७. राजा श्री धर्म्मदेव वर्ष ४१ । तेन श्रीपशुपतिभट्टारिकस्य दक्षिणमूर्ति महद्वृषध्वजापि कृतवान् ।

८. यति स्म त्रिदिवालयं नरपतावुद्यानयात्रामिव ।
- - -
देवाहारविधिक्रियास्वभिरता तद्विप्रयोगात्पुरा ॥
चाँगु अभिलेख श्लोक छ का दोस्रो र चौथो हरप ।

९. यति कुरा विश्व(वृष) देवको बयानमा गाँसिएको छ, तर यो धर्मदेव र मानदेव सम्बन्धीनै हो भन्ने कुरा गोपाल वंशावलीको वर्णन शैलीबाट थाहा पाइन्छ ।

१०. तस्य मृत्ती स्वपुत्रेण रात्रे पनालिकास्थाने शिरश्छित्वा पिताज्ञा कृतम् । तस्य पुत्र श्री मानदेव ... तेन मज्ञातेन पिता वध कृत्य । महाघोरपातक कृतेन महारोदमान भ्रमित्वा गुंविहारशिखेरे तप कृतम् । तपः प्रभावान्महाचेतमुतपद्यते प्रतिष्टितश्चा......(वज्राचार्य, मल्ल, १९८५: २८) ।

११. मानदेवको पालाको स्वयम्भूको लामो तर खण्डित अभिलेखमा पनि मानदेवका पिता पुर्खाको वर्णन प्रसंगमा 'ईजे मखैरुदारै' भन्ने वर्णन पनि धर्मदेवकै हो भन्ने देखिन्छ ।

१२. समतट-डवाक-कामरुप, नेपाल, कर्तृपुरादिप्रत्यन्तनृपतिभिः ...... सर्वकरदानाज्ञाकरणप्रणामागमनपरितोषितप्रचण्डशासनस्य ...... - (उद्धरण: वज्राचार्य, २०३०: २०) ।

१३. 'But it is certain that the Licchavis of Nepal had to acknowledge the suzerainty of Samudra Gupta. The nature and duration of the Gupta suzerainty in Nepal cannot be exactly determined. But the fact that the Licchavis of Nepal came into prominence only after the decline of the Gupta empire is not perhaps merely a coincidence?

१४. 'During the height of the Gupta Empire the Nepalese ruling elites were rearly feudatories bordering the Empire. After Skandagupta's death in A.D. 467 the Empire begins to decline until it broke down under the ouslaught of the Hunas. The feudatories in Nepal began to project themselves in larger social, political and cultural profile soon after the death of Skandgupta."

१५. Because of its situation in the difficult Himalayan region and also on account of its dimensions the kingdom of Nepal was quite insignificant for the Guptas and therefore no special attention was required for it. Perhaps this may be one of the reasons that we do not find any more reference to Nepal in subsequent Gupta records.

१६. "We may assume that they were subordinate to, or at least were kept in check by the Gupta emperors, and the decline of the emire gave them the opportunity to rise to prominence and make themselves masters of nearly the whole of Nepal" (Majumdar, 1962: 84).



१७. "The task was probably begun by Duarmadeva, and successfully continued by his son Manadeva."

१८. "But he did not attempt to bring all the outlying kingdoms under his direct away. That would have not only taxed his strength to the utmost, but might have even led to serious disaster for, as is shown by the history of India at all times, it is hard to conquer the frontier states and still harder to retain control over them. Instead of permanently antagonising them by a policy of subjugation such as he had followed in the centre, within a limited sphere, he tried gradually to win them over by a policy a conciliatioin. He also wed them internal autonomy without liberty to create discord and disunion within the body-politic of India". (Majumdar, 1962A: 13).

## खण्ड - ३

### मानदेव प्रथम (ई.४६४-५०५)

हालसालै पाइएको संवत् ३८१ को पशुपति अभिलेखलाई मानदेवको हुन नसक्ने विचार माथि गरिसकिएको छ । यद्यपि यस विषयमा निश्चित रुपले केही भनिहाल्न गाहारो पनि नभएको होइन । यो नयाँ अभिलेखको प्राप्तिले चाँगुनारायण स्थानको संवत् ३८६ को अभिलेखको सर्वप्रथम हुनाको पद खोसिएको छ । यसैगरी अभिलेख लेखाउने पहिला राजाको रुपमा मानदेवको विशेषता पनि कम भएको छ । तर थुप्रै स्पष्ट अभिलेख, राजनीतिक सक्रियता र सांस्कृतिक उपलब्धिको दृष्टिले नेपालको इतिहासमा मानदेवको महत्वपूर्ण स्थान रहेको छ ।

हालसम्मको अनुसन्धानबाट मानदेव आफूले लेखाई राख्न लगाइएका ६ अभिलेख, ३ अभिलेख उनका रानीहरुले राख्न लगाएका, ७ वटा र लिपि तथा मितिको आधारमा यिनको पालाको भन्ने निर्णय गरिएका र खण्डित अरु ४ अभिलेख पाइएका छन् । यसरी २० साना ठूला अभिलेखहरु, मानांक मुद्रा तथा अन्य साहित्यिक विवरणहरुबाट मानदेव र मानदेवकालिक नेपालको इतिहासका विभिन्न पक्ष थाहा पाउन सकिने भएको छ ।

लिच्छविकालको इतिहास एकैपल्ट मानदेवको पालामा आएर स्पष्ट हुन थाल्नु र उनले चाँगुनारायण अभिलेखमा पूर्वदेश र मल्लपुरी जितेको विशेष वर्णन हुनु र उनैले मानांक मुद्रा पनि प्रसारित गरेका तथ्यहरु मानदेवलाई इतिहासमा महत्वपूर्ण स्थान दिलाउन पर्याप्त छन् । यसैले धनवज्र वज्राचार्य मानदेवको राजनीतिक मूल्यांकन गर्दै भन्नुहुन्छ – "मानदेवको समयमा पुगेपछि लिच्छविकालको इतिहास बढी स्पष्ट र प्रामाणिक हुन थाल्छ । एक स्वतन्त्र शासकमा हुनुपर्ने सबै लक्षण उनमा देखापर्छन् । संवत् तिथिमितिसहित अभिलेखहरु, स्वतन्त्र टक यसै बेलादेखि पाइएका छन्" (वज्राचार्य, २०३०: २२) । राजा वृषदेवलाई गुप्त सम्राट्हरुको चंगुलबाट नेपाललाई स्वतन्त्र पार्ने श्रेय दिने धनवज्र वज्राचार्यले यस्तो भनेको कुराबाट वैचारिक अन्योल परेको बुझ्न सकिन्छ ।

मानदेवका अभिलेखहरुमध्ये चाँगुनारायण र स्वयम्भूका प्रशस्ति अभिलेखका वक्तव्यको परिप्रेक्ष्यमा मानदेव आफ्ना, पूर्खाहरुभन्दा विशेष महत्वाकांक्षी देखिन्छन् । चाँगुनारायण अभिलेखमा उनीले आफूमाथिका तीन राजाहरुको जुन किसिमले स्तुति लेखाएका छन् त्यसबाट मानदेव आफ्ना कुलको माहात्म्यको प्रख्यापन गराउन विशेष उत्सुक देखिन्छन् । जब कुनै व्यक्ति विशेष उपलब्धि प्राप्त गर्दछ तब उसलाई आफ्नो वंश र वंशावलीको विशेष ध्यान आउँछ । यही कुरा मानदेवमा पनि स्पष्ट देख्न सकिन्छ ।

राजा मानदेव प्रथमले चाँगुनारायण अभिलेखमा आफ्नो तीनपुस्ते वंशावली लेखाएको कारणको रुपमा कुनै इतिहासकारले विचार गरेका छन् कि



प्रभावशाली इतिहास नभएको राजवंशले जब कुनै बेला केही प्रभाव र शक्ति प्राप्त गर्दछ तब आफ्नो तीनपुस्ते वंशावलीको प्रख्यापन गर्न थाल्दछ । समुद्रगुप्तको प्रयाग प्रशस्तिमा पनि श्रीगुप्त, घटोत्कचगुप्त र चन्द्रगुप्तको तीनपुस्ते लेखिएको समानता पनि पाइन्छ (गोपाल, वर्मा, १९७७: ४२) ।[1] यसै कारणले इतिहासकारहरु मानदेवलाई पहिला स्वतन्त्र राजा मान्दछन् (ऐजन: ४५) ।

यो व्याख्या एक विचारणीय कुरा हो तर यस कुरालाई समग्र रुपले मान्न गाहारो छ खास गरी हालै पशुपतिमा पाइएको संवत् ३८१ को अभिलेखको परिप्रेक्ष्यमा । त्यस अभिलेखमा पनि लिच्छवि वंशावलीको वर्णन भएको पाइन्छ । यो अभिलेखलाई मानदेवका पिता धर्मदेवको मान्न सकिने धेरै सम्भावना रहेको विषयमा माथि चर्चा गरिसकिएकै छ ।

तात्कालिक अभिलेखबाहेक केही साहित्यिक स्रोतहरुमा पनि मानदेवसम्बन्धी संक्षिप्त विवरण उपलब्ध हुन्छन् । यस्ता साहित्यिक स्रोतहरुमा वंशावलीहरु मुख्य हुन् । यस्ता वंशावलीहरुमा गोपालवंशावली, संक्षिप्त गोपालवंशावली र भाषावंशावली हुन् ।

एक थरी संक्षिप्त गोपालवंशावलीमा मानदेवको इतिहास आर्कै किसिमले लेखिएको पाइन्छ । त्यसमा दिएको सबै विवरण त बुझ्न सकिँदैन तर त्यसबाट बुझ्न सकिने केही तथ्य हुन–

राजा श्री धर्मदेवपछि आर्कै वंशमा उत्पन्न प्रतिपालित पुत्र (धर्मपुत्र) मानदेव राजा भए । तिनले स्वयंभूचैत्य भगवान्को दर्शन पाए । मानविहार बनाए । नेपालमा सबभन्दा उत्तम भएको साततले, दुइवटा खाइ भएको र चार ओटा घेरा भएको मानगृह राजदरबार बनाए । उनले मानगृहमा सुनको मन्दिर बनाए । उनी स्वर्गे भएपछि उनकी रानी भोगिनी सती गइन् ।[2]

माथि चर्चिएको संक्षिप्त गोपालवंशावलिमा जस्तै आर्को थरी संक्षिप्त इतिहास दिंदा तिनलाई धर्मदेवका दत्तकपुत्र भनिएको छ र उनले मानगृह र मानविहार बनाएको कुरा भने लेखिएको पाइन्छ (वज्राचार्य, १९७७: ११९) ।[3]

दुइथरी वंशावलीका सन्दर्भमा मानदेवलाई धर्मदेवका दत्तकपुत्र भनिएको कुरा विचारणीय भए पनि यसको खण्डन मण्डन गर्न सक्ने आधार हामीसँग छैन ।

मञ्जुश्रीमूलकल्पमा मानवेन्द्रको रुपमा मानदेवको अलिकति वर्णन गरिएको पाइन्छ (जायसवाल, १९३४: ४०) । त्यहाँ गरिएको वर्णन अनुसार "लिच्छविहरुको कुलमा उत्पन्न राजा मानवेन्द्र मन्त्राथसिद्धि (राजनीतिक सफलता?) पाएर महाभोगी (शान भएका?) भए । तिनको भोगवती नामको विद्या सिद्धि थियो(?)। उनले अशी वर्षसम्म चोरी चकारी हटाएर राज्य गरे ।"

यो वर्णनमा कुनै नौलो वा महत्वपूर्ण ऐतिहासिक तथ्य छैन । तर मानदेवको राजनीतिक सफलताको संकेत त्यहाँ भएको बुझ्न सकिन्छ । मानगृह दरबार बनाएर उनी जुन शानसँग बस्दथे त्यस कुराको व्याख्या शायद यहाँ

भएको छ । भागवती नामको विद्यामा उनको सिद्धि भएको जुन कुरा त्यहां लेखिएको छ त्यसको दुइ अर्थ लाग्न सक्दछ । एक त भोगवती नामले मानदेवकी बडामहारानी भोगिनीलाई संकेत गरेको हुन सक्दछ र उनी महारानीले राजकाजमा राजालाई सक्रिय सहयोग दिएको तथ्यतिर संकेत भएको हुनसक्दछ । हुन त यो भनाईले मानदेवले मानेश्वरी देवीको स्थापना र पूजनपरम्परा शुरु गरेको भन्ने वंशावली साहित्यको विवरणलाई समर्थन गरेको पनि मान्न नसकिने होइन ।

असी वर्षसम्म उनले राज्य गरे भन्ने तथ्यको समर्थन तात्कालिक शिलालेखहरुले गरेको पाईंदैन । शायद अस्सी वर्ष भनेर उनको आयु बताएको हो।

आफ्नो राज्यमा चोरी चकारी हटाए भन्ने आर्को टिपोटको महत्व छ। मानदेवको सुराज्यको जस्तो विवरण तात्कालिक अभिलेखहरुमा पाइएको छ । त्यसलाई यो टिप्पणीले राम्रो व्याख्या गरेको बुझ्न सकिन्छ । मृत्युपछि राजा मानदेव स्वर्ग गए भनेर लेखिएको हुनुबाट ती राजाको व्यक्तित्वको प्रभावको व्यापक सामाजिक मान्यताको झझल्को बुझ्न सकिन्छ । पछि लेखिएको विदेशी स्रोतमा पनि यस्तो सम्मानजनक विवरण लेखिएको हुनुबाट राजा मानदेव प्रथमको राजनीतिक सफलताकै इतिहास व्यक्त भएको बुझ्न सकिन्छ ।

### रहस्यमय आख्यान

भषावंशावलीमा आफ्ना पुर्खाले बनाएको धारा बन्द भएकोले सो धारा फेरि चलाउन बत्तीस लक्षणले युक्त मानिसको बलि दिनुपर्ने भएकोले अप्ठेरो पर्दा धर्मदेवले आफ्नै बलि दिलाउने विचार गरेर छोरा मानदेवलाई राति धारामाथि सुतेको मानिसलाई नहेरिकन काटिदिन अह्राए । छोरा मानदेवले पनि पिताले अह्राहएबमोजिम राति गएर धारमाथि लुगा ओढेर सुतेको मानिसलाई को हो भन्ने नछाम्याइकन काटिदिए । नरबलि पाएपछि धारा खुल्यो तर भोलिपल्ट हेर्दा आफ्नै पिता काटिएको देख्दा मानदेवले पितृहत्याको पाप छुटाउन वज्रयोगिनीको शरणमा गएर पूजा-आजा गर्दा वज्रयोगिनी प्रत्यक्ष भएर बौद्ध चैत्य बनाएमा पाप छुट्ने उपाय बताइन् । सो निर्देशन अनुसार चैत्य बनाउंदा खडेरी परी ईंट बनाउन पानी पनि नपाउँदा शीत जम्मा गरी बडा कष्टले १२ वर्ष लगाई खास्ती बौद्ध चैत्य बनाएपछि वज्रयोगिनी प्रत्यक्ष भएर अब तिम्रो पाप नाश भयो भनेर भनिन् (पौडेल, २०२०: ७४- ७७) ।

यो कथाको अति संक्षिप्त रुप गोपालवंशावलीमा पनि पाइन्छ जहां धर्मदेवको वर्णनमा "राती प्रणालिस्थान (ढुंगेधारा) मा छोराद्वारा शिर काटिएको हुंदा तिनको मृत्युभयो बाबुको आज्ञाद्वारा यसो गरिएको थियो" भनिएको छ (वज्राचार्य, मल्ल, १९८५: २८) ।[४] यसपछि मानदेवको वर्णनमा पनि "तिनले थाहा नपाई बाबुको वध गरे । यस्ता महाघोर पाप गरेका हुनाले रुँदै



घुम्दै गुंविहारको शिखरमा पुगी तपस्या गरे । तपस्याको प्रभवले ठूलो चैत्य उत्पन्न भयो र तिनको प्रतिष्ठा गरियो" भनिएको छ (ऐजन) ।[५]

धनवज्र वज्राचार्यले यो कथालाई कल्पित भन्नुभएको छ (वज्राचार्य, २०३०: २२) तर चाँगुनारायण अभिलेखमा धर्मदेवको अकस्मात् मृत्यु भएको वर्णनमा केही रहस्य रहेको कुरा उहाँ मान्नुहुन्छ ।

माथि चर्चित आख्यानलाई पूर्णत: कपोलकल्पित भनेर छुट्टी पाउन गाहारै छ । यद्यपि त्यसको तारतम्य मिलाउन अप्ठेरो परेको छ । मानदेवको स्वयम्भूको खण्डित अभिलेखमा एक ठउंमा "पितृनिमित्तपाती" अथवा "बाबुको निमित्त दुःख गर्ने" भनिएको छ (ऐजन: ७६) । यो सन्दर्भलाई मानदेवसँग सम्बद्ध गरेर हेर्ने हो भने माथि चर्चित आख्यानले बताएजस्तै कुनै घटनालाई संकेत गरेको बुझ्न सकिने लाग्दछ ।

### मानदेवको व्यक्तित्व र विशेषता

मानदेवका अभिलेख र उनको कालमा जनताले लेखाएका अभिलेखहरुमा उनको व्यक्तित्व र विशेषताहरुबारे पनि लेखिएको पाइन्छ । यो पक्षको यहाँ चर्चा गरिन्छ ।

सर्वप्रथम चाँगुनारायण अभिलेखमा १२ रौं र १३ रौं दुइ श्लोकमा मानदेवको व्यक्तित्वबारे वर्णन गरिएको पाइन्छ । १२ रौं श्लोकमा भनिएको छ–

> "छोरा (राजा मानदेव) पनि छातीदार पराक्रमी, धैर्यवान, सहनशील, दुनियाको प्रेम गर्ने, काम गर्ने तल नउड्किने, मुसुक्क हाँसी कुरा गर्ने, सँधै आफै अघिबाट बोल्ने, तेजिला भए पनि घमण्ड नगर्ने, लोकको व्यवहारलाई ठीक ठीक पहिचान गर्ने, गरीब र अनाथहरुका मित्र, पाहुनालाई प्यारो गर्ने, शत्रुहरुको घमण्ड तोड्ने ।"[६]

> "हतियार चलाउने र रोक्ने काममा सिपालु हुनाले सच्चा पराक्रम जाहेर भएका, राम्रा हात भएका, बाना लाएको सुनजस्तै मिहीन सफा वर्ण भएका, पुष्ट काँध भएका, फुलेको नीलकमलको पातको जोडा लाग्दो आँखा भएका, साक्षात् देहधारी कामदेवजस्ता, सुन्दरीका विलासको उत्सवस्वरुप हुनुहुन्छ ।"[७]

यसैगरी ई.४६७ का विक्रान्तमूर्ति अभिलेखमा "असल सफा बुद्धि भएका, सत्पात्रमा पानी सरह दान वर्षा गर्ने" (शुभविमलमति: पात्रदानाम्बुवर्षी) भनेर मानदेवको महिमा बताइएको छ (ऐजन: ३४-३५) ।

जनतालाई पानीको सुख होओस् भनेर धारा बनाएको अवसरमा मानदेवको तारीफ केलटोलको अभिलेखमा यसरी गरिएको छ–

"शास्त्रमा भनिएअनुसार ......निग्रह (कज्याउनु) मा लागेका, चोखो मन भएका, राजा मानदेव दुनियालाई बाबुले जस्तै मायां गर्नुहुन्छ ... विजयी भएर सधैं राज्यको रक्षा गरेका ... । वेद र धर्मशास्त्रमा विधान गरे बमोजिम धर्म कर्म गर्ने उहां (मानदेव) ले दुनियाहरुको सुख सुविधाको लागि सफा पानी ल्याउन लगाए।"[८]

मानदेवका परिवारका सदस्यहरुले लेखाई राखेका अभिलेखहरुमा पनि उनको खूब गुणगान गरिएको पाइन्छ । उनकी रानी क्षेमसुन्दरीको लाजिम्पाटको ई. ४६८ को अभिलेखमा राजा मानदेवको स्तुति महिमा एक श्लोकमा गरिएको पाइन्छ–

"कान्ति भएकाहरुलाई कान्तिले,
देवताहरुलाई पूजाले, पण्डितहरुलाई विद्वत्ताले,
शूराहरुलाई शुयईले, माग्नेहरुलाई धनले,
राजाहरुलाई सफा कीर्तिले, सिपालुहरुलाई मन
अनुसार चल्नाले (यसरी) सबैलाई सबै गुणले जो खुशी
पार्नुहुन्छ । सफा सुनको जस्तो जीउ भएका उहाँ
राजा श्री मानदेव हुनुहुन्छ ।"[९]

मानदेवकी छोरी विजयवतीले पनि ई. ५०५ को सूर्यघाट शिवलिंग अभिलेखमा आफ्ना पिताको महिमा एक श्लोकमा भनिएको पाइन्छ :-

"सधैं (बुढेसकालमा पनि) सोफो (नकुप्रिएको) जीउ हुँदा अंग ढंग मिलेका, यश बुद्धि पराक्रम र ऐश्वर्य यी सबै थोक भएका शत्रुहरुलाई नष्ट पारेका राजा मानदेव हुनुहुन्थ्यो । उहांका दुनियाहरु उहाँमा रत्तिएका सुखी र सच्चरित्र छन् ।"[१०]

जनतातर्फबाट लेखाई राखिएका अभिलेखहरुमा पनि मानदेवको निकै गुणगान गरिएको पाइन्छ । सार्थवाह रत्नसंघको ई. ४७७ को देउपाटन शिवलिंग अभिलेखमा मानदेवको महिमा गाउँदै भनिएको छ :–

"इन्द्रको जस्तो पराक्रम भएका,
कामदेवको जस्तो कान्ति भएका
राजा मानदेवबाट राम्ररी प्रजाको पालना
गरिरहनुभएको समयमा ।"[११]

सार्थवाह गुहभित्रको ई. ४८० को टेवहाल सूर्यमूर्ति अभिलेखमा पनि भनिएको छ– "राजा मानदेवबाट राम्ररी पृथ्वीको पालना गरिरहनुभएको बेलामा ।"[१२]

निरपेक्षको ई. ५०५ को चाँगुनारायण अभिलेखमा पनि भनिएको छ–



"दानी, ज्यादा विद्वान् प्रभाव
फैलिएका राजा श्रीमानदेवले
पृथ्वीको रक्षा गरिरहनु भएको
बेलामा ... सफा कीर्ति भएका उहाँ मानदेव... ।"[१३]

यसरी धेरै अभिलेखमा राजा मानदेवको महिमा गाइएको कुराको महत्व छ । ती विवरणमा उनको बहुमुखी विशेषताको वर्णन परेको छ । यी कुराबाट मानदेव विशिष्ट व्यक्तित्वका धनी, प्रजापालक र आदर्श राजाका रुपमा रहेको मान्न सकिन्छ । हुन त राजतन्त्रमा राजा जस्ता भए पनि अतिशयोक्तिपूर्ण महिमा गाउने त परम्परानै रहेको पाइन्छ । यसैले यस्ता विवरणमा सत्यताको कमी हुनसक्ने सम्भावना पनि रहन्छ तर त्यतिका अभिलेख-प्रमाणहरुले मानदेवको एकै स्वरले गुणगान गरेको कुरालाई त्यत्तिकै उपेक्षा गर्न पनि सकिँदैन । यस्तै बयान पनि नेपाली इतिहासमा भएका अन्य कुनै राजालाई भनेको नपाइने हुनाले पनि उक्त विवरणहरुको आफ्नै किसिमको महत्व रहेको कुरा मान्न सकिन्छ ।

## परिवार

मानदेवको परिवारबारे अभिलेखहरुमा केही विवरण पाइन्छ । अभिलेखका क्रमको हिसाबले भन्ने हो भने संवत् ३९० (ई. ४६८) को लाजिम्पाटको शिवलिंग अभिलेखबाट उनकी पत्नी क्षेमसुन्दरीको नाम थाहा पाइन्छ (वज्राचार्य, २०३०: ३९) । आफ्नो यो अभिलेखमा क्षेमसुन्दरीले आफूलाई 'पत्नी' मात्रै भनेकोले[१४] उनी रानी वा महारानी स्तरकी थिइनन् कि भन्ने अनुमान गर्न सकिन्छ । यिनको बारेमा अरु कुनै विवरण उपलब्ध छैन ।

लाजिम्पाट टुकुचा शिवलिंगको संवत् ४१९ (ई. ४९७) को अभिलेखबाट मानदेवकी आर्की पत्नी गुणवतीबारे हामीलाई ज्ञात हुन आएको छ । यसमा "पति श्री मानदेवको निगाहाले ऐश्वर्य बढेकी–गुणवती" ले आफ्ना पिता किन्नरवर्माको नाममा शिवमन्दिर थापेको वर्णन परेको छ (ऐजन: ६५) ।[१५] यो अभिलेखबाट मानदेवले वर्मा राजपूत (?) क्षत्रिय परिवारसंग विवाह सम्बन्ध गरेको बुझिन्छ।

संवत् ४२७ (ई. ५०५) को सूर्यघाट शिवलिंगको अभिलेखबाट मानदेवकी आर्की रानी भोगिनीको अस्तित्वबारे थाहा पाइन्छ । यो अभिलेख थाप्ने विजयवतीले आफूलाई मानदेव र "श्री भोगिनीदेवी" को छोरी राजपुत्री र बार्त्त देवलाभकी पत्नी भनेर परिचय दिएकी छन् (वज्राचार्य, २०३०: ८२-८३) । यस अभिलेखबाट भोगिनी मानदेवकी बडामहारानी (देवी) रहिछन् भन्ने थाहा पाइन्छ। मानदेवको पालाको विष्णुपादुका फेदीको स्तम्भलेखमा उल्लेख भएको 'देवी' पनि यिनै भोगिनी हुन् भन्ने अर्थ गरिएको छ (ऐजन: ४४-४५) । त्यस अभिलेखमा ती "देवीको कीर्ति राख्ने इच्छाअनुसार राजाबाट ..." भन्ने संक्षिप्त चर्चा

परेको छ । यस्तो शिलास्तम्भ खडा गराएर कुन किसिमको कीर्ति राख्न महारानी भोगिनीले खोजेकी हुन् स्पष्ट छैन । तर यो सन्दर्भले भोगिनीलाई नै अर्थ्याएको हो भने उनको पनि महत्वाकांक्षा रहेको बुझ्न सकिन्छ ।

मानदेवको मानाङ्क मुद्रामा पछाडिपट्टि "श्री भोगिनी" अभिलेख राखिएकोले पनि यी महारानीको विशेष स्थान रहेको बुझ्न सकिन्छ (जोशी, २०३३: ३१-४८) ।

मानदेवले लिच्छविवंशको इतिहासमा पहिलोपल्ट निकालेको आफ्नो मुद्रामा आफ्नो नामसाथ भोगिनीको नाम लेख्नामा कुनै राजनीतिक कारण पनि थियो कि भन्ने हामीलाई लाग्दछ तर यस कुराको उत्तर उपलब्ध छैन । यद्यपि कसैले यिनलाई कुनै नाग राजवंशकी छोरी हुन् भन्ने अनुमान गरेका छन् (जोशी, १९८७: ३-४) । संस्कृत भाषामा नागको पर्यायवाची भोग शब्द पनि पाइने हुनाले त्यस्तो अर्थ गरिएको हुनुपर्दछ । तर यस किसिमको निराधार अनुमानको खास अर्थ छैन भने पनि हुन्छ । बरु भोगिनी जस्तो नामै किन राखिएको हो भन्ने बारेमा हामीलाई आश्चर्य लागेर आउँछ किनभने भोगिनी नामले ल्याइते स्वास्नीलाई पो अर्थ्याएको जस्तो लाग्दछ । भारतीय नाट्यशास्त्रमा पनि नाटकहरुमा साधारण आइमाईहरुलाई भोगिनी भनेर सम्बोधन गर्नुपर्दछ भनेको पाइन्छ - "भोगिन्य इति शेषास्तु । स्वामिन्य इति वा पुनः ॥ (अध्याय १९, श्लोक २४)" । यो विचार मान्ने हो भने त एक साधारण महिलालाई मानदेवले बडामहारानीको पदवी दिएको मान्नुपर्ने हुन आउँछ ।

मन्जुश्री मूलकल्पमा 'मानवेन्द्र' को रुपमा मानदेवलाई 'महाभोगी' भनिएको पाइन्छ (जायसवाल, १९३४: ४०) । यो भनाईको एउटैमात्र तात्पर्य नहुन सक्दछ तर अभिलेखहरुले उनका तीन पत्नीहरुको उल्लेख गर्नु र तीमध्ये एकको नाम भोगिनी हुनुमा केही तारतम्य त छैन? भन्ने प्रश्न नउठ्ने होइन ।

एकथरी संक्षिप्त गोपालवंशावलीमा मानदेवको स्वर्गवासपछि 'भोगिनी' सती गएको उल्लेख गरिएको पाइन्छ (रेग्मी, २०४६:४) । उसबेला सती जाने चलन रहेको देख्दा यो तथ्य असम्भव पनि लाग्दैन ।

मानदेवसँग नाता जोडेर लेखाइएको एउटा संवत् ४७२ (ई. ५५०) को अभिलेख हाँडीगाउँबाट पाइएको छ । आफूलाई 'श्रीमानदेव' की छोरीका छोरा भनेर दावी गर्ने भारवि नामका व्यक्तिको उल्लेख यस अभिलेखमा भएको छ (वज्राचार्य, २०३०: १७९) । पाटन मंगलबजारमा पाइएको संवत् ४९२ (ई. ५७०) को अभिलेखमा पनि भारविको उल्लेख भएको छ (ऐजन: २०८) । यी दुई सन्दर्भ एक व्यक्तिसँग सम्बद्ध देखिन्छन् ।

यी भारविलाई कुनै इतिहासकारले विजयवती र वार्त्त देवलाभका छोरा हुन् भन्ने अनुमान गरेका छन् (ऐजन: १०८) । स्पष्ट विवरण नपाइने भए पनि यो अनुमान सत्यको नजीक लाग्दछ ।



## मानदेवका उपलब्धि

मानदेवका आफ्ना अभिलेखहरु र उनका पालामा अरुले लेखाइराखेका अभिलेखहरुबाट ती राजाको ४१ वर्षको शासनकाल विभिन्न क्षेत्रमा सक्रियताको अवधि रहेको थाहा पाइन्छ । यस विषयलाई हामी साँस्कृतिक, आर्थिक र राजनीतिक गरी तीन भागमा बाँडी विचार गर्नेछौं ।

### सांस्कृतिक उपलब्धि

तात्कालिक शिलालेखहरुबाट मानदेव स्वयं, उनको परिवारका सदस्य तथा जनतातर्फबाट सांस्कृतिक महत्वका अनेकन् काम भएको थाहा पाइन्छ । यस पक्षको अध्ययन तल दुई शीर्षकमा गरिन्छ ।

### राजा र राजपरिवारका सांस्कृतिक गतिविधि

राजा मानदेव र उनका रानीहरु र छोरीले धार्मिक कार्य गरेका उदाहरणहरुलाई यस वर्गमा समावेश गरिएको छ ।

### गरुडस्तम्भको स्थापना

मानदेवले गरेका निर्माणका कामहरुमा पूर्व-पश्चिम विजय गरी फर्केर आएपछि उत्सव मनाएर दानपुण्य गरेपछि भगवान् चाँगुनारायणलाई प्रस्तरको भव्य गरुडस्तम्भ चढाई त्यसैमा संवत् ३८६ (ई. ४६४ ) को मिति हाली विस्तृत प्रशस्ति अभिलेख पनि लेखाएका थिए । सो अभिलेखको अर्को खण्डित भागबाट मानदेवले चांगुनारायणको वर्षबन्धन पूजा आदिको लागि केही जग्गा गुठी राखेको तथ्य थाहा पाइन्छ (वज्राचार्य, २०३०:१३) ।[१६] मानदेवको यो कृतिबाट त्यसबेलाको कलाको उच्च अवस्थाबारे बोध हुन्छ । खासगरी यस स्तम्भमाथि थापिएको गरुडको भव्य प्रस्तर मूर्तिको आफ्नै महत्व रहेको छ ।

### दुई विष्णुविक्रान्तमूर्तिसहित मन्दिर स्थापना

लाजिम्पाट र पशुपति तिलगंगामा मानदेले आफ्नी मुमा राज्यवतीको पुण्यको लागि भनेर भगवान् विष्णुको विक्रान्तमूर्ति (वामनावतार) का दुइ मूर्ति मन्दिरमा स्थापना (ई.४६७ मा) गरेको कुरा सोही मूर्तिका पादपीठमा लेखिएका अभिलेखबाट थाहा पाइन्छ । सो अभिलेखमा भनिएको छ-

> "... राजा श्री मानदेवले हित गर्ने मन भएकी मुमा श्री राज्यवतीको सधैं पुण्यको बढिबढाउ होओस् भनेर राम्रो असल मन्दिर बनाउन लगाई देवता ऋषिहरुले पूजिएका, सारा संसारका एउटै मालिक विक्रान्तमूर्ति भगवान् विष्णुको मूर्ति राम्ररी यहाँ स्थापना गर्नुभयो ।"[१७]

## धारामानेश्वर र मानेश्वरको स्थापना

विष्णुपादुका फेदीको शिवलिंग अभिलेखबाट राजा मानदेवले संवत् ३९८ (ई.४७६) मा एक शिवलिंग थापेको थाहा पाइन्छ (ऐजन: ४१-४२) । अंशुवर्माको ई. ६०८ को अभिलेखमा मानेश्वर र धारामानेश्वर नामका दुइटा शिवमदिरलाई भेटीको व्यवस्था गरिएको उल्लेख पाइनाले (ऐजन: ३२०) ती दुवै मन्दिरका नाममा मानदेवको नाम जोडिएको देख्दा ती दुवैको स्थापना मानदेव प्रथमलेनै गरेको अनुमान सहजै गर्न सकिन्छ (ऐजन: ३२४-२५) । ती दुई शिव मन्दिरमध्ये एउटाचाहिँ विष्णुपादुका फेदीको शिवलिंग हुनसक्ने अनुमान पनि गरिएको छ (ऐजन: ३२५) ।

मानदेवले मानेश्वरी देवीको पनि स्थापना गरेको वर्णन भाषावंशावलीमा गरिएको छ र मानदेवले स्तोत्र बनाई मानेश्वरीको स्तुति गरेको भनी एक स्तोत्र पनि त्यहाँ दिइएको पाइन्छ (पौडेल, २०२०: ७७-७८) ।

मानेश्वरीको स्थापना मानदेवले गरेको हो हैन निश्चित भन्न गाहारो छ । टंगालमा अवस्थित "मनमानेश्वरी" नामको मन्दिरमा एक पुरानो खालको शिवलिंग स्थापित छ । यसै मन्दिरमा आर्को खण्डमा 'मानेश्वरी' को गुप्ती पूजास्थल रहेको छ । शिव शक्ति रुपमा एकै मन्दिरमा मानेश्वर र मानेश्वरीको स्थापना भएको हुनु सम्भवै लाग्दछ ।

मानेश्वरीको स्थापना मानदेवले गरेको मान्न सकिएमा यी देवीको आराधनाको परम्परा मध्य वा मल्लकालदेखि हालसम्म अटूट रुपले कायम हुने विशिष्टता बुझ्न सकिन्छ ।[१८]

## मानविहार

गोपालवंशावलीमा मानदेवले "आफ्नो नाममा मानविहार बनाएको" (स्वनामेन मानविहार प्रतिष्ठित्तं) भनिएको छ (वज्राचार्य, मल्ल, १९८५: २९) । यस सन्दर्भबाट राजा मानदेवले मानविहार नामको बौद्ध विहारको स्थापना गरेको बुझ्न सकिन्छ । स्वयम्भूमा पाइएको मानदेवकालीन अभिलेखमा पनि "श्री मानविहार" मा गुठी राखेको (क्षेत्रन्चाक्षयं दत्तं (श्री) मानविहारे) (वज्राचार्य, २०३०: ७५) उल्लेख पाइन्छ । यस प्रमाणबाट पनि मानदेवले मानविहार थापी त्यसको लागि जग्गा गुठी राखेको तथ्य स्पष्ट हुन्छ ।

स्वयम्भूमा पाइएको सो खण्डित अभिलेखलाई धनवज्र वज्राचार्यले मानदेवको पालामा कुनै दानपतिले कुँदाएको भन्ने अर्थ गर्नु भएकोमा (ऐजन: ७७) यो अभिलेख स्वयं मानदेवले मानविहारको स्थापना गरी गुठी राखी स्मारक रुपमा लेखाई राखेको बुझ्न सकिन्छ ।

राजाले भर्खर स्थापना गरेको विहारमा जनताले गुठी राख्न आउनु सम्भव नदेखिंदा र जनताले राख्न लगाएको अभिलेखमा राजाको वंशावली लेखाउने चलन पनि कम पाइनाले यो अनुमान सत्यको सन्निकट रहेको देखिन्छ । यो कुरा मान्न सकिएको खण्डमा जसरी मानदेवले चाँगुनारायणमा



राखेको अभिलेखमा आफ्नो वंशावलीको प्रख्यापन गराएका थिए त्यस्तै काम उनले मानविहारमा राखेको अभिलेखमा पनि गराएको बुझ्न सकिन्छ ।

उक्त अभिलेख स्वयम्भूमा पाइएको भनिए पनि त्यसको सम्बन्ध पाटनमा स्थापित मानविहारसँग रहेको देख्दा पहिले त्यहीं रहेको र पछि कारणवश स्वयम्भूमा ल्याई राखिएको पनि अनुमान गर्न सकिन्छ ।

अंशुवर्माको ई. ६०८ को हांडीगाउंको अभिलेखमा "श्रीमानविहार" लाई ६ पुराण र २ पण नगद भेटी छुट्याइएको उल्लेख पाइन्छ (वज्राचार्य, २०३०: ३२०) । राजाले थापेको विहार भएकोले मानविहारलाई यसरी सरकारी अनुदानको व्यवस्था गरिएको बुझ्न सकिन्छ ।

पाटन यागबहालको ई. ६७९ को नरेन्द्रदेवको अभिलेखमा एउटा गाउँको सीमा छुट्याउंदा 'श्रीमानदेवविहार' को उल्लेख भएको छ (ऐजन: ४९७) र यो सन्दर्भले यो विहार पाटनमा रहेको तथ्यलाई स्पष्ट पारेको छ ।

धर्मदेवले वैदिक यज्ञ गर्दा 'यूप' (मौलो) थापेर बनाएको 'यूपग्राम' वा पाटनमा मानदेवले मानविहारको स्थापना समेत गरी त्यहां बौद्ध परम्पराको स्थापना गरेको अनुमान गर्न सकिएला जस्तो लाग्दछ ।

मानदेवका तीन रानी र एक छोरीले सांस्कृतिक गतिविधि गरेका पाइनु पनि महत्त्वपूर्ण हुन गएको छ ।

मानदेवका दुइ रानी क्षेमसुन्दरी र गुणवतीले शिवमन्दिर बनाएको थाहा पाइन्छ । क्षेमसुदरीले ई.४६८ मा लाजिम्पाटमा एक भव्य शिवमन्दिर बनाएको प्रमाण अभिलेखयुक्त शिवलिंग पाइएको छ (ऐजन: ३९) । आर्की रानी गुणवतीले पनि ई. ४९७ मा लाजिम्पाट टुकुचामा आफ्ना पिता किन्नरवर्माको पुण्यको लागि एक शिव मन्दिर बनाएको कुरा अभिलेखयुक्त शिवलिंग पाइएकोले स्पष्ट भएको छ (ऐजन: ६५) ।

विष्णुपादुकाफेदीमा एउटा प्रस्तरस्तम्भमा संक्षिप्त अभिलेख लेखिएको छ जसमा "देवी (वडामहारानी) को कीर्ति राख्ने इच्छाअनुसार श्रीपाद (राजा) बाट ... का दाजु केदुम्बाटलाई यो शिलास्तम्भ बनाउने काममा नियुक्त गरियो"[१९] भनी अभिलेख लेखिएको छ (ऐजन: ४४) । मानदेवकी बडामहारानी भोगिनीले यो शिलास्तम्भ थापेको मानिएको छ । तर यो खम्बा थाप्नाको उद्देश्य त्यति स्पष्ट छैन ।

बडामहारानी भोगिनीकी छोरी विजयवतीले ई. ४२७ मा पशुपति सूर्यघाटमा आफ्नो नाममा विजयेश्वर शिवलिंगको स्थापना गरेको थाहा पाइन्छ (ऐजन: ८२-८३) ।

राजा र राजपरिवारले यतिका धार्मिक-सांस्कृतिक क्रियाकलाप गरेको देख्दा मानदेवको शासनकालमा यस क्षेत्रमा निकै उपलब्धि भएको बुझ्न सकिन्छ।

जनताले गरेका सांस्कृतिक गतिविधि

लाजिम्पाट धोबीचौरमा रहेको अभिलेखयुक्त शिवलिंगबाट ई.४६६ मा राजा मानदेवको आज्ञाले "भक्त सेवक" नरवमले शिवमन्दिर बनाएको भने कुरा थाहा पाइन्छ (ऐजन: ३१-३२)।

रत्नसंघ भन्ने सार्थवाह (व्यापारीका नेता) ले ई. ४७७ र ४८० मा पशुपति क्षेत्रमा रत्नेश्वर र प्रभुकेश्वर शिव मन्दिर थापी धेरै जग्गा गुठी राखेको कुरा तिनै शिवलिंगमा लेखिएका अभिलेखबाट थाहा पाइएको छ (ऐजन: ५०-५१,५५-५६)। उक्त दुवै अभिलेखमा कर्ता रत्नसंघले मानदेवप्रति भक्ति (तत्पादभक्तया) देखाएका र उनीबाट निगाहा पाएको (श्रीमानदेवनृपतेश्चरणप्रसादात्) भनी लेखाएका छन्। अर्का सार्थवाह गुहमित्रले पनि ई.४८० मा वर्तमान टेबहालमा सूर्यमूर्ति थापेको प्रमाण शिलालेख पाइन्छ (ऐजन: ५९)। उनले आफूले थापेका देवताका नाममा केही जग्गाको गुठी पनि राखिदिएका थिए।

पशुपतिनाथ मन्दिरनेर ई. ४९१ को अभिलेखबाट जयलम्भ नामका व्यक्तिले "राजा श्रीमानदेवको निगाहाबाट" जयेश्वर शिवलिंग थापेको कुरा थाहा पाइन्छ (ऐजन: ६२)।

पलाञ्चोकबाट पाइएको अभिलेखअनुसार विजयस्वामिनी नामकी कुनै महिलाले ई. ५०३ मा देवी भगवती विजयेश्वरीको स्थापना गरेकी थिइन् (ऐजन: ६७)। यो अभिलेखमा ती महिलाले आफूलाई "सम्राट" गृहपतिकी पत्नी" भनेकी छन्।[२०] वैदिक याज्ञिक व्यक्तिलाई 'सम्राट' भन्ने चलन रहेकोले विजयस्वामिनीका पति गृहपति त्यस्तै याज्ञिक रहेछन् भन्ने बुझिएको छ (नेपाल, २०४०: ८८-८९)।

चाँगुनारायणस्थानमा रहेको ई. ५०५ को अभिलेखबाट निरपेक्ष भन्ने व्यक्तिले "राजा मानदेवका पाउका निगाहाले" आफ्ना आमाबाबुको सालिकको स्थापना गरेको थाहा पाइन्छ (ऐजन: ७९)।[२१]

यसरी माथिका विवरणबाट राजपरिवार र जनतातर्फबाट गरिएका सांस्कृतिक गतिविधिका विविध उदाहरणबाट मानदेवको शासनकाल यस दृष्टिले गौरवपूर्ण रहेको स्पष्ट हुन्छ। राजपरिवारले गरेका कामहरुमा त मानदेवको संलग्नता स्पष्टै छ भने जनताले गरेका कामहरुमा पनि कति सन्दर्भमा राजाको निगाहाबाट भन्ने उल्लेख पाइनाले यस्ता काममा पनि मानदेवको परोक्ष संलग्नताको अनुमान गर्न सकिन्छ।

आर्थिक उपलब्धि

आफू राजा मानदेव, राजपरिवार र जनताले पनि देव मन्दिरहरु बनाउने जुन वेग आएको देखिन्छ त्यसबाट यस कालमा आर्थिक जागरण पनि भएजस्तो अनुभव हुन्छ। तात्कालिक आर्थिक उपलब्धिको दृष्टिले मानदेवको सामन्तदमनको काण्ड पनि प्रमुख रहेको अनुमान गर्न सकिन्छ। कुनै क्षेत्रमा



विजय गरेपछि लुटपाट मचाएर धन बटुल्ने वा त्यस्ता क्षेत्रका शासक वा सामन्तबाट दण्डका रुपमा पनि धनराशि उठाइने उसबेलाको चलन रहेको देख्दा मानदेवले पूर्वदेश र पश्चिममा मल्लपुरीका सामन्तबाट थुप्रै धन असूल गरेको अनुमान गर्न सकिन्छ। यसैले विजययात्रा सिध्याएर फर्केपछि उनी र उनकी आमा राज्यवतीले ब्राह्मणहरुलाई 'अक्षयदान' गरेको वर्णन चाँगुनारायण अभिलेखको अन्तिम भागमा यसरी गरिएको पाइन्छ:-

> "(राजा मानदेव) मल्लपुरीलाई जितेर त्यहाँबाट बिस्तारै आफ्नो देशमा फर्कनुभयो। तब खुशी हुँदै ब्राह्मणहरुलाई अक्षय धनदान गर्नुभयो। असल बुद्धि भएका छोरा (मानदेव) ले बडामहारानी राज्यवतीलाई "मुमा हजूर पनि खुशी मनले भक्तिपूर्वक आफ्ना तर्फबाट पनि दान गर्नुहोस्" भनी बिन्ति चढाउनुभयो।"[२२]

अन्य अभिलेखहरुमा पनि मानदेवलाई ठूला दानीका रुपमा वर्णन गरिएको पाइन्छ। आफू मानदेव र उनको परिवारका सदस्यहरुले गरेका मन्दिरहरुको निर्माणमा पनि राजाकै आर्थिक प्रोत्साहन रहेको अनुमान गर्न सकिन्छ। जनताले गरेका निर्माणका काममा पनि राजाकै आर्थिक प्रोत्साहन रहेको कुरा सम्बद्ध अभिलेखहरुमा "राजा मानदेवबाट निगाहा पाएर" भन्ने उल्लेख भएको आधारमा बुझ्न सकिन्छ।

मानदेवको शासनकालमा आन्तरिक र वाहय वाणिज्य क्षेत्रमा पनि सक्रियता रहेको थियो। त्यस अवधिमा लेखाइएका तीन अभिलेख सार्थवाहसँग सम्बद्ध रहेका छन्। देउपाटनका ई. ४७७ र ४८० का दुइ अभिलेखमा सार्थवाह रत्नसंघको उल्लेख भएको छ। उनले रत्नेश्वर नामका दुइ शिव मन्दिर बनाएर तिनको लागि प्रशस्त जग्गा गुठी राखिएको कुरा तिनै अभिलेखमा लेखिएको छ (वज्राचार्य, २०३०: ५०-५१, ५५)। अर्का सार्थवाह गुहमित्रले ई.४८० मा सूर्यमूर्ति थापेको अभिलेख पाइएको छ (ऐजन:५९)।

व्यापारीहरुको समूहलाई 'सार्थ' र त्यस्ता व्यापारीहरुका नेतालाई सार्थवाह भनिन्छ। यस्ता नेताको निर्देशनमा व्यापारीहरु देश विदेशमा घुमी व्यापार गर्दथे। रत्नसंघ र गुहमित्र त्यस्तै व्यापारी नेता थिए भन्ने बुझिन्छ। उनीहरुका अभिलेखमा राजा मानदेवको सुशासनको तारीफ गरिएको हुँदा मानदेवको सुशासनमा वाणिज्य व्यवसायले फस्टाउने अवसर पाएको कुरा मानिएको छ (ऐजन: ५२)।

मानदेवको शासनकाल आर्थिक उपलब्धिको रुपले पनि महत्त्वपूर्ण थियो भन्ने कुरा उनले 'मानाङ्क' टक चलाएको र 'मानगृह' दरबार बनाएको तथ्यबाट पनि स्पष्ट हुन्छ। यी विषयमा तल चर्चा गरिएको छ।

वंशावलीहरुको सदर्भबाट मानदेवले भूमि सम्बन्धमा पनि केही व्यवस्था गरेको थाहा पाइन्छ। गोपालवंशावलीमा राजा मानदेव प्रथमको वर्णन प्रसंगमा

"पुनरपि भूमिमानदण्ड कृतं" भन्ने छोटकरी विवरण परेको छ (वज्राचार्य, मल्ल, १९८५: २९) । गोपालवंशावलीका सम्पादकहरुले उक्त वाक्यको अर्थ "फेरि भूमि-मानसम्बन्धी दण्डव्यवस्था गरे" भन्ने गरेका छन् (ऐजन: ७७) । यो अर्थ गराई सचित भएन जस्तो लाग्दछ ।

गोपालवंशावलीले संस्कृतमा टिपेको वाक्यको अनुवाद भाषा वंशावलीमा यस्तो भएको छ "फेरि भूमि नापन्या मानदंड भनी बनाया" (पौडेल, २०२०: ७८) । भाषावंशावलीले मानदण्ड भनेर जग्गा नाप्ने लठ्ठीको रुपमा अर्थ गरेको छ जुन ठीक लाग्दछ । लिच्छविकालका अभिलेखमा जग्गाको नापो सम्बन्धमा जुन 'मानिका' को पारिभाषिक शब्द पाइन्छ त्यसको व्यवस्था राजा मानदेव प्रथमले गरेको हो भन्ने अनुमान गर्न सकिन्छ ।

## राजनीतिक उपलब्धि

नेपालको इतिहासमा मानदेवको विशिष्ट स्थान भएको कुरा माथिका चर्चाहरुबाट निकै स्पष्ट हुन्छ । ती सबै विशिष्टताहरुका आधार उनको राजनीतिक उपलब्धि नै हो भन्ने कुरा हामीलाई स्पष्ट अनुभव हुन्छ ।

मानदेवको मुख्य राजनीतिक उपलब्धि पूर्वदेश र मल्लपुरीमाथि विजय गर्ने घटनानै रहेको स्पष्ट छ । यस विषयमा तल विचार गरिएको छ ।

## पूर्व-पश्चिम विजय

चाँगुनारायण अभिलेखमा १४ धौं देखि १९ सौं श्लोकसम्म पूर्व-पश्चिम विजयसम्बन्धी विवरण परेको छ । मूल संस्कृत श्लोकको नेपाली अनुवाद यहाँ उद्धृत गरिछ–

> "मेरा बुबाले राम्रा अग्ला मौलाहरुले पृथ्वीलाई सिँगार्नुभएथ्यो । लडाईंरुपी यज्ञको आड लिएर क्षत्रियको धर्म बमोजिम दीक्षा लिएर म बसिरहेको छु। पराक्रमैले शत्रुको नाश गर्न पूर्व दिशातिर जान्छु । जो राजाहरु मेरा काबूमा बस्नेछन्, तिनलाई थाम्नेछु ।"[२३]
>
> "यी कुरा सुन्नाले पीर हटेकी मुमा (राज्यवती) लाई राजाले ढोगेर भन्नुभयो- मुमा, शुद्ध तपस्या गरेर म बुबाको अऋणी हुन सक्दिनँ । तर उहाँका पाउको सेवा गरेर विधिपूर्वक (उहाँबाट) सिकेको हतियारको कामले अऋणी हुनेछु । तब अत्यत खुशी भएकी मुमाबाट आज्ञा पाएर राजा पूर्वको बाटो लाग्नुभयो । त्यहां पूर्विया स्वाँठ सामन्तहरुले दबेर शिर निहुराए । तिनका श्रीपेचका माला भुईंमा खसे (तिनहरुले मानदेवलाई ढोगे?) । हुकुममा तामेल रहने तिनीहरुलाई थमौती गरी जगर फिँजाएको सिंह जस्तै निडर भई राजा पश्चिमतर्फ लाग्नुभयो ।"[२४]
>
> "त्यहाँ रजौटाको बदमाशी सुनेर टाउको हल्लाउँदै हात्तीका सूँडजस्ता पाखुरा निमोठ्दै उहाँ (राजा मानदेव) ले घमण्ड गरेर भन्नुभयो – बोलाउँदा त्यो आउँदैन भने मेरो पराक्रमले तहमा आउला। यहाँ व्यर्थै धेरै कुरा गरेर के काम ? छोटकरीमै भन्छु ।"[२५]
>
> "प्यारा मामा, धेरै अड्याङ्ग खड्याङ्ग भएर रुमलिएको, समुद्रको जोडालाग्दो, डरलाग्दा भुमरीले र छालले पानी छ्याल्ल-ब्याल्ल भएको गण्डकी नदी आजै तर्नुहोस् । कस्सिएका सयौं असल हात्ती घोडा लिई नदी तरेर म हजूरको फौजको पछि पछि आउनेछु । यस्तो अठोट गरेर राजाले त्यस बेला आफ्नो कबोल पूरा गर्नुभयो ।"[२६]
>
> "(राजा मानदेव) मल्लपुरीलाई जितेर त्यहाँबाट विस्तारै आफ्नो देशमा फर्कनुभयो । तब खुशी हुँदै ब्राह्मणहरुलाई अक्षय धन दान गर्नुभयो । असल बुद्धि भएका छोरा (मानदेव) ले बडामहारानी राज्यवतीलाई "मुमा, हजूर पनि खुशीमनले भक्तिपूर्वक आफ्नो तर्फबाट पनि दान गर्नुहोस् भनी बिन्ति चढाउनुभयो (वज्राचार्य, २०३०: १२-१३, १५-१६) ।



यसरी यी उद्धरणबाट चाँगुनारायण अभिलेखमा मानदेवको पूर्वपश्चिम विजयसम्बन्धी विवरणमा बढी ध्यान दिइएको देखिन्छ । यो विवरणबाट मानदेवले पहिले पूर्वदेश अथवा पूर्वी भेकका सामन्तहरुमाथि विजय गरेको र त्यसपछि पश्चिमतर्फ गण्डकीपारीपट्टि रहेको मल्लपुरीका सामन्तमाथि विजय गरेको देखिन्छ ।

चाँगुनारायण अभिलेखको उपर्युक्त विवरणको आधारमा इतिहासकारहरुमा मानदेवले नयाँ राज्यक्षेत्र जितेको वा आफ्ना पुर्ख्यौली सामन्तहरुले स्वतन्त्र हुने चेष्टा गरेकोमा उनीहरुलाई फेरि आफ्नो अधीनमा राखेका हुन् भन्ने भिन्न भिन्न विचार प्रचालित रहेका छन् ।

डा. हितनारायण भाले उक्त विवरणलाई मानदेवले नयाँ क्षेत्रमाथि विजय गरेको प्रमाणको रुपमा लिनुभएको छ (झा, १९७०: १०८-११०) ।

मानदेवले दबाएका वा जितेका मल्लपुरी पूर्वदेशलाई नेपालभित्रैका स्वतन्त्र राज्य हुन् जसको सम्बन्ध गुप्त सम्राटहरुसंग रहेको थियो स्कन्दगुप्तको समयमा आएको राजनीतिक अन्योलको फाइदा उठाई मानदेवले तिनलाई आफ्नो अधीनमा पारी आफ्नो राज्यलाई मजबूत पारेका हुन् भन्ने विचार पनि कुनै इतिहासकारको रहेको छ (गोपाल, वर्मा, १९७७: ४७) ।[२७]

मानदेवले नयाँ राज्यक्षेत्र जितेका हुन् भन्ने यस्तो विचारको खण्डन धनवज्र वज्राचार्यले गर्नु भएको छ (वज्राचार्य, २०३०: २६-२७) ।

मानदेवअघिका कुनै प्रामाणिक अभिलेख नपाइएका र मल्लपुरी र पूर्वदेशसम्बन्धी कुनै सन्दर्भ नपाइएको स्थितिमा यस्तो मतभेद उठ्नु स्वाभाविक छ । चाँगुनारायण अभिलेखमै पनि अस्पष्ट र छोटकरी विवरण दिइएकोले यस्तो मतभेदको परिस्थिति आइपुगेको हो । चाँगुनारायण अभिलेखको चौधौं श्लोकमा मानदेवले "लडाईंरुपी यज्ञको आड लिएर क्षत्रियको धर्मबमोजिम दीक्षा लिएर

बसेको छु । पराक्रमैले शत्रुको नाश गर्न पूर्व दिशातिर जान्छु । जो राजाहरु मेरो काबूमा रहनेछन् तिनलाई थाम्नेछु" भनेको कुराबाट त दिग्विजयको ध्वनि पो आउन खोज्दछ । पूर्वदेश र मल्लपुरीका सामन्तहरुले केन्द्रबाट स्वतन्त्र हुने घोषणा गरेकोले हो वा त्यस किसिमको कुनै संकेतै नपाई मानदेवले यस्तो बोलेको देखाइएको हो सो विवरण अस्पष्ट छ ।

### पूर्वदेशका सामन्त

उपर्युक्त पृष्ठभूमिमा यहाँ पूर्वदेशका सामन्त र मल्लपुरीका सामन्तबारे विचार गरिन्छ । चाँगुनारायण अभिलेखमा मानदेवले सर्वप्रथम 'पूर्वपथ' अथवा पूर्वतर्फको बाटो लागी 'पूर्वदेश' मा आश्रय लिइ बसेका 'शठ' सामन्तहरुलाई वशवर्ती पारेको वर्णन गरिएको छ । यति संक्षिप्त कुराको आधारमा विशेष व्याख्या प्रस्तुत गर्न गाहारो छ तर इतिहासकारहरुले यसबारेमा आफ्-आफ्नो विचार प्रस्तुत गरेका छन् ।

लिच्छविहरुबाट पराजित भएर किरातहरु पूर्वतिर गएर बस्न थाले भन्ने परम्परा पाइने हुँदा त्यस्ता किरातहरुलाईनै यो शठ विशेषण लगाइएको अनुमान गर्न सकिन्छ । धनवज्र वज्राचार्यले किरातलाई होच्याएर "शठ" भनिएको हो भन्नुभएको छ (ऐजन: २३) ।

अभिलेखमा 'शठ' को प्रयोग विशेष विचारले गरेको हुनुपर्दछ । एक त विद्रोही पक्ष हुनाले रिसाएर शठ शव्दको प्रयोग गरिएको हुनुपर्दछ यद्यपि यस्तै विद्रोही मल्लपुरीका सामन्तलाई भने त्यो विशेषणको प्रयोग गरिएको छैन । शठको साधारण नेपाली अर्थ स्वाँठ हुन्छ जसको अर्थ मूर्ख हुन्छ र यसको ठीक ठीक अर्थ वेद अथवा वैदिक परम्परा नमान्ने हुन्छ ।[२८] किरातीहरु वैदिक परम्परादेखि भिन्न परम्पराका हुनाले उनीहरुलाई यो शव्दको प्रयोग गरिएको हो कि भन्ने अन्दाजी गर्न सकिन्छ ।

ज्ञानमणि नेपालले उपर्युक्त पूर्वदेशको अर्थ कौशिकीक्षेत्रको किरातभूमि र "शठ सामन्तहरु" किरात सामन्तनै हुन् भन्ने विचार व्यक्त गर्नु भएको छ (नेपाल, २०४०: १७२) ।

### मल्लपुरीका सामन्त

मानदेवले विजय गरेको भनिएको मल्लपुरीको पहिचानबारे पनि इतिहासकारहरुमा मतभेद उठेका छन् । कुषाणहरुको शक्तिको प्रभावले लिच्छविहरु नेपाल उपत्यका पसेजस्तै मल्लहरुले पनि कर्णाली नदीको किनारबाट महाभारतको भञ्ज्याङ पार भएर दैलेख क्षेत्रमा राज्य स्थापना गरे । मल्लहरुले स्थापना गरेको हुनाले राजधानीको नाम मल्लपुरी नाम रहन गयो । कुमाउँका कत्यूरी राज्य र मल्लपुरीका मल्लको राज्यको सीमा सेती नदी थियो भन्ने पनि बाबुराम आचार्यको विचार छ (आचार्य, २०३७क: २) ।



डा. हितनारायण झाले मल्लपुरीको समीकरण गोरखपुर भेकसँग गर्नु भएको र मानदेवले गुप्त साम्राज्यको एक भाग गोरखपुर भेकमा आक्रमण गरेर जितेको मान्नुभएको छ (झा, १९७०: १०८-११०) । डा. झाको यो विचारको खण्डन धनवज्र वज्राचार्यले गर्नुभएको छ । उहाँको विचारमा सप्तगण्डकीमध्ये प्रसिद्ध कालीगण्डकीपारी कतै मल्लपुरी रहेको हुनुपर्दछ (वज्राचार्य, २०३०: २६-२७) ।[२९] मानदेवले आफ्नो पुर्ख्यौली सामन्त क्षेत्रलाई फेरि काबूमा राखेका हुन् नयाँ क्षेत्रको विजय गरेका हैनन भन्ने उहाँको विचार छ ।

मल्लपुरीबारे ज्ञानमणि नेपाल भन्नुहुन्छ– "मानदेवको अभिलेखमा गण्डकीपारीका सामन्तको दुश्चरित्र सुनेर मामालाई साथ लिएर मानदेवले गण्डकी तरेर दुईतिरबाट आक्रमण गरेर मल्लपुरी जिते भन्ने उल्लेख मात्र पाइन्छ । मल्लपुरीमा मल्लकै शासन थियो भन्न पनि गाह्रो छ किनभने प्रजाहरु मल्ल थरका भएर राजा अर्कै थरका पनि हुन सक्छन् । मल्लले बनाएको वा मल्लहरुको आबादी भएको शहर मल्लपुरीका नामले प्रख्यात हुनु सम्भवै छ । राजा मल्लनै हुनुपर्ने केही जरुरी छैन" (नेपाल, २०४०: १४०) ।[३०]

ज्ञानमणि नेपालले मल्लपुरीलाई "गण्डकी प्रदेश" मा अवस्थित मान्नुभएको छ (नेपाल, २०४०: १७२) ।

### मानाङ्क मुद्रा

राजा मानदेवले नेपालको इतिहासमा सर्वप्रथम टक पनि चलाएको पाइन्छ । यो तामाको टकमा अघिल्तिर 'श्रीमानाङ्क' अभिलेख र त्यसमुन्तिर झण्डा लिएको सिंह र पछिल्तिर 'श्रीभोगिनी' अभिलेखमुनि कुनै देवी वा लक्ष्मीको चित्र प्रस्तुत गरिएको छ । मानाङ्क मुद्राका १३ किसिम रहेको कुरा थाहा पाइएको छ (जोशी, २०३३:३१-४८ तथा चित्र) ।[३१]

नेपालमा सर्वप्रथम प्रसारित गरिएको यो मानाङ्क मुद्राको आफ्नै महत्व छ । यो मानाङ्क मुद्रा प्रसारित गरेर मानदेवले मुख्यत: आफ्नो राजनीतिक महत्व स्पष्ट्याएको मान्न सकिन्छ । स्वतन्त्र मुद्राको प्रसारण गर्ने काम आर्थिक महत्वको हुनाको साथै पूर्ण राजनीतिक स्वाधीनताको द्योतकको रुपमा पनि लिन सकिन्छ ।

### मानगृह

मानदेवले मानगृह दरबार बनाएको तथ्यलाई पनि मुख्य रुपले राजनीतिक महत्वको रुपमा लिन सकिन्छ । राजनीतिक उपलब्धि भएपछि आर्थिक सम्पन्नता बढ्न थाल्दछ अनि शान र सोख तथा प्रशासनिक सुगमताको लागि पनि नयाँ दरबारको आवश्यकता पर्न जान्छ । यही कुरा मानगृहको सन्दर्भमा पनि लागू गर्न सकिन्छ ।

मानदेवका नाति वसन्तदेवको पहिलो अभिलेख संवत् ४२८ (ई.५०६) को थानकोट आदिनारायण अभिलेख मानगृहबाट प्रसारित गरिएको छ (वज्राचार्य,

२०३०: ९१) । मानगृहसम्बन्धी यो पहिलो सन्दर्भ हो । तर मानगृह यो नाममा मानदेवको नामको पूर्वार्द्ध जोडिएको देख्दा यसको निर्माण मानदेवले गरेको भन्ने बुझ्न सकिन्छ । हालै ज्ञात हुन आएका दुईथरि संक्षिप्त गोपालवंशावलीमा मानदेवले मानगृह बनाएको वर्णन परेकोले यस कुराको अझ पुष्टि भएको छ (वज्राचार्य, १९७७: ११९, रेग्मी, २०४६: ४) । ती विवरणबाट सो मानगृह दरबार "नेपालमा सबभन्दा उत्तम भएको सात तले र दुइटा खाइले घेरिएको र चारओटा घेरा (पर्खाल?) भएको" थियो भन्ने थाहा पाइन्छ । उक्त खालका स्रोतले बताएको मानगृहको यो विवरण सत्यको कति नजीक छ भन्न गाहारो छ तर यस्तो अनुश्रुति वंशावलीमा सुरक्षित रहेको पाइनु पनि महत्वपूर्ण छ ।

हालैसम्म मानगृहलाई पाटनमा रहेको मंगलबजारसँग सम्बद्ध गरी सो दरबार पाटनमा रहेको मान्ने गरिन्थ्यो (पन्त, २०२६: ३०३-३०४) । ई. ९८७ को पाटनको अभिलेखमा सर्वप्रथम देखिएको 'श्रीमाणिग्वलक' र त्यसका परवर्ती रुप माणिगल आदिलाई मानगृहको अपभ्रंश रुप मानेर यस्तो विश्वास गरिएको थियो तर यो धारणाको खण्डन धनवज्र वज्राचार्यले गर्नु भएको छ (वज्राचार्य, १९७७: १०६) ।

मालिगाउँको नेवारी रुप मंग: हो, यो मानगृहको अपभ्रंश रुप हो भनेर ठाकुरलाल मानन्धरले मानगृह मालिगाउँमा रहेको अनुमान गर्नु भएको छ (मानन्धर, २०३०: ९) ।

राजा मानदेवले बनाएको यो मानगृह उनीभन्दा पछि भएका लिच्छवि राजाहरुको वासस्थल र प्रशासनको केन्द्र रहेको देखिन्छ । शिवदेव प्रथमको शासनकालसम्म त लिच्छवि राजाहरुको राजधानीको रुपमा मानगृहकै स्थान रहेको र अंशुवर्मा ई. ६०५ तिर कैलासकूटभवनमा राजधानी सारेपछि मानगृहको महत्त्व कम हुन थालेको देखिन्छ । तर पछि उदयदेवपछि आएको संयुक्त शासनको अवधिमा भएका लिच्छविवंशी ध्रुवदेव र भीमार्जुनदेवलाई मानगृहमा बस्न दिइएको देखिन्छ । यद्यपि त्यसबेला (ई.६२४-६४१) प्रशासनको केन्द्र कैलासकूटभवनमा रहेको थियो ।

ई. ६४३ देखि लिच्छविहरुको एकलौटी शासन स्थापित गर्ने नरेन्द्रदेवले आफ्नो राजधानी कैलासकूटभवनमा सारेपछि मानगृहको उपेक्षा हुन थाल्यो र सो दरबारको १३६ वर्ष जतिको इतिहासको अन्त्य भयो । त्यस बेलादेखि मानगृहको फेरि उल्लेख भएको पाइदैन ।[३२]



**मानदेवको वंशावली**

वृषदेव
|
शंकरदेव
|
धर्मदेव
|
मानदेव
|
महीदेव
|
वसन्तदेव — जयसुन्दरी

**मानदेवको परिवार**

मानदेव
|
भोगिनी — क्षेमसुन्दरी — गुणवती

भोगिनी
|
महीदेव — विजयवती + देवलाभ (वार्त्त)

महीदेव
|
वसन्तदेव — जयसुन्दरी

विजयवती + देवलाभ (वार्त्त)
|
भारवि

**महीदेव**

मानदेव प्रथमको उल्लेख गर्ने अन्तिम अभिलेख– सूर्यघाटको अभिलेखमा संवत् ४२७ आषाढशुक्ल प्रतिपदाको मिति लेखिएको छ भने उनैका नाति वसन्तदेवको पहिलो अभिलेखको मिति संवत् ४२८ मार्गशीर्षशुक्ल प्रतिपदा रहेको

छ । यी दुइ मितिमा करीव ७ महीनाको मात्र अन्तर रहेको देखिन्छ । तर यही सीमित्त अवधिभित्र पनि मानदेवका छोरा महीदेवको शासनको म्याद मिलाउनुपर्ने भएको छ । विभिन्न स्रोतबाट यिनी राजा भएको थाहा पाइन्छ ।

प्रथमतः जयदेव द्वितीयको पशुपति अभिलेखको लिच्छवि वंशावलीमा वंशक्रम बताउँदा भनिएको छ – श्री धर्मदेवबाट राजा श्री मानदेव हुनुभयो । उहाँबाट प्रसिद्ध महीदेव हुनुभयो (वज्राचार्य, २०३०: ५४९) ।[33] त्यहीँ महीदेवपछि वसन्तदेव राजा भएको वर्णन गरिएकोले यस बेलाको वंशक्रममा महीदेवको स्थान स्पष्ट हुन्छ । ध्रुवदेव र जिष्णुगुप्तको केवलपुर अभिलेखमा पनि भूतपूर्व केही राजाहरुको उल्लेख गर्दा 'भट्टारकमहाराजा' को राजकीय उपाधिसाथ 'श्रीमहीदेव' को उल्लेख भएको छ (ऐजनः ४१४) । गोपालवंशावलीले पनि यिनको नाम लेख्न बिर्सिएको छैन (वज्राचार्य, मल्ल, १९८५: २९) ।

वसन्तदेवले आफ्ना अभिलेखहरुमा आफ्ना पिता महीदेवप्रति ठूलो भक्ति देखाएका छन् । उनका पाँच प्रशासकीय खालका अभिलेखहरुमा वसन्तदेवको नामअघि 'परमदैवतबप्पभट्टारकमहाराजाश्रीपादानुध्यातः' लेखिएको पाइन्छ (वज्राचार्य, २०३०: ९१,११०, ११२, १२२, १३२) । उक्त उपाधिमध्ये 'परमदैवत' विशेषणको ठीक ठीक अर्थ गर्न अप्ठेरो छ । धनवज्र वज्राचार्यले यस विशेषणको "ठूला देवतास्वरुप भएका" भन्ने अर्थ गर्नु भएको छ (ऐजनः १११) र भौमगुप्तको सन्दर्भमा सो विशेषणको व्याख्या गर्दै सो पद भारतका ठूलाठूला राजाहरुमा लागेकोले त्यसले "राजकीय प्रभुता देखाउने" भन्ने व्याख्या पनि गर्नु भएको छ (ऐजनः २००) ।

लिच्छविकालका अभिलेखहरुमा जम्मा दुईपल्ट मात्र यो उपाधिको प्रयोग भएको पाइन्छ महीदेवलाई र एक मात्र अभिलेखमा भौमगुप्तलाई । महीदेवलाई त उनको स्वर्गवास भइसकेपछि उनका छोराले सो उपाधि लगाइदिएका मात्र हुन् । जीवित अवस्थामाचाहिँ भौमगुप्तलाई एकपल्ट मात्र अरुद्वारा सो उपाधि प्रयोग गरिएको छ । यस स्थितिमा सो उपाधि भिन्नै तात्पर्यले प्रयोग भएको बुझ्न सकिन्छ ।

यो परमदैवत उपाधि भारतको गुप्तकालका राजाहरुले प्रयोग गरेको देखिए पनि सो पदवीले पदवीधारी राजाको वैष्णवधर्मप्रति भक्तिको धारणा व्यक्त गरेको देखिने हुँदा यसले राजनीतिक हैन धार्मिक धारणा व्यक्त गरेको बुझ्न सकिन्छ (सरकार, १९६६: २३६) । शुरुका लिच्छवि राजाहरु वैष्णव धर्मतिर्फ विशेष झुकेका हुनाले महीदेवले सो वैष्णव उपाधि लिएको वा सोही उद्देश्यले बसन्तदेवले आफ्ना पितालाई सो उपाधि जोडिदिएको मान्न सकिन्छ ।[34]

महीदेवको छोटकरी शासनकालको कुनै अभिलेख आजसम्म पाइएका छैनन् तर केवलपुरको अभिलेखबाट उनले नुप्पुन्न भन्ने ठाउँको नारायण मन्दिर (अथवा इचंगुनारायण?) को पूजा आजाको बन्दोवस्त गरिदिएको कुरा थाहा पाइन्छ (ऐजनः ४१४) । यो संक्षिप्त उदाहरणले पनि महीदेवको वैष्णव धर्मप्रति भक्ति रहेको तथ्य बताएको छ ।



महीदेवकी छोरी जयसुन्दरीले आफ्ना पिताको नाममा सीतापाइला भेकमा एउटा हिटी धारानै बनाएको कुरा त्यहीँ पाइएको अभिलेखबाट थाहा पाईन्छ (ऐजनः १३३) ।[35] त्यस धाराको टूटफूट मरम्मत गर्नाको लागि वसन्तदेवले केही जग्गाको बन्दोवस्त गरिदिएको कुरा त्यहाँ चर्चिएको पाइन्छ । यस अभिलेखमा शुरुमा महीदेवले सीतापाइला भेकका वासिन्दालाई जग्गा जमीन सम्बन्धी केही बन्दोवस्त गरिदिएको सन्दर्भ पनि परेको छ ।[36]

महीदेवका बसन्तदेव छोरासाथै जयसुन्दरी नामकी छोरी थिईन् भन्ने कुरा माथिको चर्चाबाट बुझ्न सकिन्छ । आफ्नी बहिनी जयसुन्दरीलाई एउटा गाउँनै बसन्तदेवले दाइजो विर्ताको रुपमा दिएको कुरा उनको पहिलो अभिलेख संवत् ४२८ (ई ५०६) को थानकोट आदिनारायणस्थानको अभिलेखबाट थाहा पाइन्छ (ऐजनः ९१-९२) ।

गोपालवंशावलीमा महीदेवलाई ४१ वर्ष दिइएको छ, त्यो उनको शासन वर्ष नभई उमेर हुन सक्ने अन्दाजी गर्न सकिन्छ ।

## वसन्तदेव (ई ५०६-५३२)

महीदेवपछि उनका छोरा वसन्तदेव राजा भए भन्ने कुरा उनकै अभिलेखहरु र अन्य सन्दर्भहरुले पनि बताएका छन् । यिनले प्रसारित गरेका शासकीय खालका ९ ओटा अभिलेख हालसम्म प्राप्त छन् जुनमा संवत् ४२८ देखि संवत् ४५४ सम्मको मिति लेखिएको पाइन्छ (वज्राचार्य, २०३०: ९१-१४८) । जनतातर्फबाट लेखाई राखिएको पाटन खपिँछेको संवत् ४५२ (ई ५३०) को एक अभिलेख (ऐजनः १३८) र वसन्तदेवको नाम लेखिएको खण्डित आर्को अभिलेख पनि पाइन्छ (ऐजनः १४३) । यसरी वसन्तदेव ११ अभिलेखहरुबाट ज्ञात हुन आएका छन् । उनका सन्तति जयदेव द्वितीयले पनि दुई शताब्दीपछि उनको सम्झना सम्मानसाथ गरेका छन्:–

> "उहाँ (महीदेव) बाट वसन्त ऋतुझैं लोकका प्यारा भएका,
> शत्रुसँग कलहलाई शान्त पारेका, कज्याइएका सामन्तहरुले ढोगिएका
> वसन्तदेव" (ऐजनः ५४९) ।[37]

अभिलेख प्रमाणहरुबाट वसन्तदेवको शासनकाल कम्तीमा २६ वर्ष रहेको देखिन्छ । यद्यपि गोपालवंशावलीले उनलाई ४९ वर्षको अवधि दिएको छ (वज्राचार्य, मल्ल, १९८५: २९) । तर भाषावंशावलीमा वसन्तदेव १५ वर्षको उमेरमा गद्दीमा बसेका र उनले ४६ वर्ष राज्य गरेको वर्णन गरिएको छ (पौडेल, २०२०: ७८) । महीदेवको ज्यादै छोटकरी शासन रहेको देख्दा वसन्तदेव कम उमेरमा राजा भएको हुनु धेरै सम्भव लाग्ने हुनाले भाषावंशावलीले भनेको कुरा विचारणीय छ । तर ४६ वर्ष राज्य गरे भनिएको कुराचाहिं मिल्न आउँदैन किनभने ई ५३८ मा वामनदेव देखिने र त्योभन्दा अघि मनुदेव नामका आर्का राजाको अस्तित्व पनि मानिएको छ । यसैले

शिलालेखहरुबाट थाहा पाइने २६ वर्ष जतिको शासनकालनै वसन्तदेवको रहेको बुझ्न सकिन्छ ।

नेपालको इतिहासमा प्रशासनिक खालका अभिलेख प्रसारित गर्ने पहिला राजाको रुपमा वसन्तदेवको स्थान छ । तर उनका ९ ओटा प्रशासनिक खालका अभिलेखले प्रशासनिक कुराहरु बताउने काम बाहेक अरु विशेष कुरा बताएका छैनन् ।

दुइटा अभिलेखमा वसन्तदेवलाई "आफ्ना पढाई, नीति, दया, दान, चतु-याई, पुण्य र प्रभावद्वारा सफा कीर्ति फैलिएका"(श्रुतनयदयादानदाक्षिण्य -पुण्यप्रतापविकसितकीर्तिः) भन्ने प्रभावशाली विशेषण लेखिएको छ (वज्राचार्य, २०३०: ९१, १२२) । यसका साथै जयदेव द्वितीयको पशुपति वंशावलीमा चर्चित वसन्तदेवको वर्णन, जुन यहाँ माथि उद्धृत गरिसकिएको छ, पनि प्रभावशाली छ। तर उनका सबै शिलालेखहरुले एक यस्तो परिस्थिति पनि व्यक्त्याएका छन् जसको व्याख्या इतिहासकारहरुले 'द्वैतशासन' को रुपमा गरेका छन् (ऐजन:१४९) ।

वसन्तदेवको संवत् ४२८ (ई ५०६) को थानकोटको अभिलेखमा उनी राजाले आफ्नी बहिनी जयसुन्दरीलाई एक गाउँ बिर्ता दिएको कुरा लेखिएको छ। यस अभिलेखमा दूतक (अथवा मार्फत) को रुपमा याज्ञिक विरोचनगुप्त राखिएका छन् (ऐजन: ९१-९२) ।

उक्त मितिपछिका अरु ५ अभिलेखहरुमा 'सर्वदण्डनायकमहाप्रतिहार' उपाधिसाथ रविगुप्तको नाम लेखिएको पाइन्छ (ऐजन: ११०,११३, १२३, १३३, १३६)। वसन्तदेवका अन्तिम कालतिरका संवत् ४५४ (ई ५३२) का दुइटा अभिलेखमा भनिएको छ- "सर्वदण्डनायकमहाप्रतिहार रविगुप्तले हाम्रा हजूरमा बिन्ति चढाएका हुँदा ... सो ठीक छ भनी सर्वदण्डनायक महाप्रतिहार रविगुप्त र महाराजा महासामन्त श्रीक्रमलीलसँग मिलेर यो निगाहा गरिदिइएको छ" (ऐजन: १४५-४६, १४७-४८) ।[३८] यी दुइ अभिलेखमा दूतकका रुपमा प्रतिहार भवगुप्तको पनि उल्लेख भएको पाइन्छ ।

संवत् ४४९ (ई ५२७) सम्मका अभिलेखमा दूतकका रुपमा मात्र देखिएका रविगुप्त संवत् ४५४ मा आइपुगेर राजाका अभिलेखमा तीन तीन पल्ट नामोल्लेख गरिने स्थितिमा आइपुगेका देखिन्छन् । यो मितिका दुवै अभिलेखमा राजाका सल्लाहाकारका रुपमा रविगुप्तसाथै "महाराज महासामन्त श्री" उपाधिसाथ क्रमलील पनि देखिएका छन् यस आधारमा क्रमलीलको मद्दतले रविगुप्त वसन्तदेवका सहायक शासक बन्न पुगेको अर्थ धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजन: १४९) ।

आर्का इतिहासकार ज्ञानमणि नेपालको भनाई यहाँ सान्दर्भिक लाग्छ । उहाँको विचारमा पनि शुरुमा वसन्तदेवको स्थिति सन्तोषजनक नै थियो तर मुख्य हजुरिया र मुख्य दण्डनायकका रुपमा रविगुप्तको प्रभाव बढ्न थालेपछि वसन्तदेव कमजोर हुँदै गए । यसै बेला सामन्तहरु पनि शिर उठाउन थाले



जसको उदाहरण महाराज महासामन्त क्रमलील छन् । यसरी उनको शासनको आखिरीतिर 'द्वैधशासन' को आरम्भ भयो (नेपाल, २०४०: ४७) ।

राजा वसन्तदेवको शासनकालमा गुप्तान्त नामधारी व्यक्तिहरु राजाका नजीक रहेका कुरा ती राजाको पहिलो अभिलेखमै दूतकको रुपमा याज्ञिक विरोचनगुप्त राखिएका र अन्य अभिलेखहरुमा रविगुप्त र भवगुप्तको स्थान देखिएकोले स्पष्ट हुन्छ । संवत् ४५४ (ई ५३२) का दुई अभिलेखमा ती तीन तीन पल्ट रविगुप्तको नामोल्लेख हुनुले सामान्य स्थितिलाई संकेत गरेको मान्न सकिँदैन । यस्तै स्थितिमा संवत् ४५२ (ई ५३०) को आर्यघाटको पार्थिवशिलाको छोटकरी अभिलेखमा एकजना ब्राह्मण पुण्यगोमीले आफूलाई 'सर्वदण्डनायकपादानुध्यातः' (सर्वदण्डनायकका पाउको अनुग्रह पाएका) भनी रविगुप्तमाथि विशेष भक्ति गरेको देख्दा (वज्राचार्य, २०३०: १४१) पनि रविगुप्तको राजनीतिक स्थान विशेष रहेको अनुमान गर्ने ठाउँ रहेको छ । ई ५३० (संवत् ४५२) मा उनको विशेष प्रगति भयो भन्न सकिन्छ जसको एक प्रमाण त ब्राह्मण पुण्यगोमीकै अभिलेख छ । हुन त यसै मितिको पाटन खपिन्छेको अभिलेखमा याज्ञिक ब्राह्मणहरुले राखेका अभिलेखमा राजा वसन्तदेवको उल्लेख सम्मानसाथ गरिएको पाइन्छ (ऐजन: १३८) ।[३९]

गोपाल अथवा गुप्त खलकको राजनीतिक अभ्युदयको कारण के होला भन्ने बारेमा यहाँ विचार गर्नुपर्ने देखिन्छ ।

राजा वसन्तदेवको ई. ५०६ को थानकोट आदिनारायणस्थानको अभिलेखमा ती राजाले, आफ्नी बहिनी जयसुन्दरीलाई एउटा गाउँको दान गरेर सो निस्सा गरिदिएको देखिन्छ (वज्राचार्य, २०३०:९१-९२) ।[४०] सो दान गरिएको गाउंको नाम जयपाल्लिकाग्राम भनिएकोमा दान पाउने जयसुन्दरीकै नामको जय जोडिएको देखिन्छ । सो अभिलेखमा दूतकका रुपमा याज्ञिक उपाधिधारी विरोचनगुप्त राखिएका छन् ।

यो जयपल्लिकाग्राम नाउँमा बीचमा जुन पल्लिका शब्द छ त्यसले महत्वपूर्ण तथ्यतिर संकेत गरेको छ । आभीरहरुको बस्ती अथवा टोललाई 'आभीरपल्ली' भनिन्छ भन्ने कुरा संस्कृत कोशबाट थाहा पाइन्छ (गौतम, २०२६: ७९) ।[४१] यही कुरा केही फेरिएको रुपमा जयपल्लिकाग्राममा देखिन्छ । गोपाल वा ग्वलाहरुको बस्ती वा गाउँलाई पल्ली भन्ने चलन रहेको पृष्ठभूमिमा जयसुन्दरीको विवाह आभीर गुप्तवंशी कुनै व्यक्तिसँग भएको अनुमान गर्न सकिन्छ । थानकोट भेक आभीर गुप्तहरुको केन्द्रस्थल रहेको र त्यहीं ती राजकुमारीलाई बिर्ता गाउँ दिएको देख्दा यो अनुमान सत्यको नजीक पुग्न खोज्दछ । यही वैवाहिक सम्बन्धको कारणबाट गुप्तवंशी वा नातेदार कुलको राजनीतिक महत्व बढ्न गएको हुन सक्दछ । वसन्तदेव सानै उमेरमा गद्दीमा बसेका हुनाले राज्यको प्रशासनको काममा ती सम्बद्ध गुप्तवंशी व्यक्तिहरुले सहयोग गरेको पनि मान्न सकिन्छ । रविगुप्त वसन्तदेवका यस्तै नातेदार हुन सक्ने देखिन्छ ।

### ई. ५३३ को राजनीतिक काण्ड?

संवत् ४५४ वा ई ५३२ मा त वसन्तदेव रविगुप्त र क्रमलीलसँग मिलेर 'त्रयीशासन' चलाइरहेका देखिन्छन् तर त्यसको केही समयपछि एउटा राजनीतिक काण्ड मच्चियो जसले गर्दा परिस्थिति मोडिन गयो भन्ने अर्थ इतिहासकारहरुले गरेको पाइन्छ । यस्तो अर्थ गरिएको प्रमाण संवत् ४५५ (ई ५३३) को पशुपति भष्मेश्वरको अभिलेख हो जसमा ध्रुवसंघ प्रतिहार-वार्त्तले भद्रेश्वर, शुभेश्वर, स्थितेश्वर र रवीश्वर नामक पांच ओटा शिवलिंग थापेको वर्णन गरिएको छ (वज्राचार्य, २०३०: १५५) । एकैपल्ट पाँच ओटा शिवलिंग थापिएको यो घटना वास्तवमा कुनै घटनामा एकैपल्ट मारिएका पाँच जना आफ्ना नाता-इष्टमित्रको नाममा धार्मिक स्मारक रुपमा गरिएको हो । रविगुप्त पनि त्यस्तो काण्डमा मारिए यसैले उनको नाम जोडी रवीश्वर शिवलिंग थापिएको र यस्तै गरी भद्रगुप्त, नाथगुप्त, शुभगुप्त र स्थितगुप्तको नाउँमा शिवलिंग थापिएको हो भन्ने व्याख्या धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजन: १४४, १५६-१५७) ।

रविगुप्तको राजनीतिक महत्वाकाङ्क्षालाई क्रमलीलले ई ५३२ मा सहयोग गरी आफू समेतको 'त्रयीशासन' जस्तो स्थितिको निर्माणमा सहयोग गरे तर ई ५३३ मा जुन काण्ड भयो त्यसका सूत्रधार क्रमलील नै थिए भन्ने धनवज्र वज्राचार्यको विचार छ (ऐजन: १५०) ।[४२] यस विषयमा तल रामदेवको वर्णन गर्दा पनि विचार गरिने छ ।

### वसन्तदेवपछिका राजाहरु

ई. ५०६ देखि ई ५३२ सम्म वसन्तदेव राजा रहेको चर्चा माथि गरिएको छ । सो मितिपछिका फुटकर अभिलेखहरुबाट अनेक राजाहरुको नामोल्लेख गरिएको पाइन्छ । यद्यपि यस अवधिको सिलसिला मिलाउन अप्ठेरो परेको छ ।

यस युगको अवधिमा कति राजा भए भन्ने कुराको पनि ठेगान गर्न गाहारो पर्ने स्थितिमा जयदेव द्वितीयको पशुपति अभिलेखमा एउटा सूत्र पाइन्छ जसले राजाहरुको संख्याबारे संकेतसम्म गरेको छ ।

### तेह्र राजाहरु

जयदेव द्वितीयको पशुपति अभिलेखको लिच्छवि वंशावलीमा वृषदेव, शंकरदेव, धर्मदेव, मानदेव, महीदेव र वसन्तदेवको वर्णन गरिसकेपछि यस्तो सूत्र लेखिएको छ–

"यस बीचमा राजा (वसन्तदेव) देखि
तेह्रौं उदयदेव भन्ने हुनु भयो ।
उहाँबाट नरेन्द्रदेव हुनुभयो ।"[४३]



यो सूत्रले वसन्तदेवपछि १२ राजा भएपछि तेह्रौं राजा उदयदेव राजा भएका भन्ने अर्थ गरेको बुझिन्छ । वसन्तदेवको अन्तिम ज्ञात मिति ई ५३२ देखि उदयदेवको एक मात्र ज्ञात ई ६२१ को मितिको बीच ८९ वर्षको व्यवधान रहेको छ । यो ८९ वर्षको अवधिको लागि प्राप्त अभिलेख आदि प्रमाणहरुबाट ज्ञात राजाहरुका नाम र मिति तलको तालिकामा प्रस्तुत गरिएको छ–

| | | | |
|---|---|---|---|
| १ | मनुदेव | - | ? वा वसन्तदेवको लगत्तै पछि |
| २ | वामनदेव | - | ५३८ |
| ३ | रामदेव | - | ५४५ |
| ४ | गणदेव | - | ५५७-५६५ |
| ५ | गंगादेव | - | ५६७ |
| ६ | शिवदेव | - | ५९०-६०४ |
| ७ | उदयदेव | - | ६२१ |

यो सूचीमा अन्य स्रोतबाट ज्ञात हुन आएका निम्न राजाका नाम पनि जोड्न सकिने देखिन्छ :–

१ उदयदेव
२ गुणकामदेव
३ अमरदेव
४ मानदेव द्वितीय

यसरी हिसाब गर्दा ११ जना राजाको नामसूची तयार गर्न सकिन्छ । तर उदयदेवलाई तेह्रौं राजा भनेर पशुपति अभिलेखमा भनिएको कुराबाट २ जना राजाको संख्या कम हुन आउँछ । यो अभावलाई पूरा गर्ने साधन हामीसँग छैन ।[४४]

यी राजाहरुको कालक्रम मिलाएर तल विचार गरिन्छ ।

### उदयदेव प्रथम?

गोपालवंशावलीमा वसन्तदेवपछि उदयदेव राजा भएको उल्लेख गरिएको छ (वज्राचार्य, मल्ल,१९८५: २९) । माथि चर्चित कारणबाट यस युगमा भएका राजाहरुको संख्या मिलाउने काममा यो स्रोतको पनि उपयोग गर्नु परेकोले उदयदेव राजाको अस्तित्व मान्ने सम्भावना व्यक्त गर्नुपरेको हो । पछि भएका उदयदेवसँग फरक देखाउन यिनलाई उदयदेव प्रथम भन्नुपर्ने पनि हुन आउँछ।

### मनुदेव

बूढानीलकण्ठनेर पाइएको अभिलेखमा दुइपल्ट राजा मनुदेवको उल्लेख भएको पाइन्छ (वज्राचार्य, २०३०: १६५) ।[४५]

जितामित्र मल्लले बनाएको सूर्यवंशी राजाहरुको वंशावली र संक्षिप्त वंशावलीमा पनि वसन्तदेवपछि उदयदेव र मनोदेवको नामोल्लेख भएको पाइनाले

वसन्तदेवपछि उदयदेव र उनीपछि मनोदेव वा मनुदेव भएको कुरा धनवज्र वज्राचार्यले मान्नुभएको छ (ऐजन: १६६) ।

संवत् ४६० वा ई ५३८ को प्रमाणबाट वामनदेव राजाको अस्तित्व देखिने हुनाले वसन्तदेवको अन्तिम ज्ञात मिति ई, ५३२ र ५३८ को बीचको ५-६ वर्षमा दुइ राजा उदयदेव र मनुदेवको कालक्रम मिलाउनुपर्ने देखिएको छ।

### वामनदेव

साँखुबाट पाइएको संवत् ४६० (ई ५३८) को अभिलेखबाट राजा वामनदेवको नाउं थाहा पाइन्छ (ऐजन: १६८) ।

### रामदेव

वामनदेवको एक मात्र ज्ञात मिति संवत् ४६० वा ई ५३८ मितिको ७ वर्षपछि संवत् ४६७ (ई ५४५) को पशुपति मृगस्थली शिवलिंगको अभिलेखमा राजा रामदेवको उल्लेख भएको छ (ऐजन: १७५ ) । यही अभिलेखमा राजासाथै महाराजा महासामन्त 'श्रीक्रमलील' को पनि उल्लेख भएको छ ।

वसन्तदेवको समयमा ई ५३२ का दुई अभिलेखमा रविगुप्तका साथमा यिनी क्रमलील पनि देखिएका हुन् । उक्त मितिको १३ वर्षपछि फेरी क्रमलील देखिनुबाट उनको राजनीतिक महत्व यस बेलासम्म कायमै रहेको अनुमान गर्न सकिएला जस्तो लाग्दछ ।

### महाराज महासामन्त क्रमलील (ई ५३२-५४५)

राजा वसन्तदेवको सन्दर्भमा चर्चित विवरणबाट ती राजाको शासनको अन्तिम समयतिर केन्द्रीय प्रशासनमा विचित्रको स्थिति उत्पन्न भएको थाहा पाइन्छ । ई ५१२ तिरदेखि प्रशासनमा सक्रिय देखिने रविगुप्त ई ५३२ का दुइ अभिलेखमा महाराज महासामन्त क्रमलीललाई पनि केन्द्रीय प्रशासनमा सामेल गर्न वाध्य देखिएका हुनाले त्यसबेला 'त्रयीशासन' को स्थिति देखापरेको तथ्य महत्वपूर्ण भएको छ ।

संवत् ४५४ (ई ५३२) मितिमा प्रसारित वसन्तदेवका चौकिटार र पासिंख्य अभिलेखमा–"सर्वदण्डनायकमहाप्रतिहार रविगुप्तले हाम्रा हजूरमा विन्ति चढाएका हुँदा सो ठीक छ भनी...सर्वदण्डनायकमहाप्रतिहार रविगुप्त र महाराजमहासामन्त श्रीक्रमलीलसँग मिली यो निगाहा गरिएको छ" भनिएको छ।[४६]

दुई अभिलेखमा उक्त सन्दर्भ पाइएकोले वसन्तदेव र रविगुप्तसाथै यी क्रमलील पनि अब केन्द्रीय प्रशासनमा हात हाल्न आइपुगेका देखिएका छन् । रविगुप्तलाई जस्तै यिनीलाई पनि वसन्तदेवका सहायक शासक मानिएको (ऐजन: १५०, १७६) हुँदा उक्त प्रमाणहरुले ई ५३२ तिर केन्द्रमा 'त्रयीशासन' को अवस्था रहेको देखाएको छ ।



यसरी ई ५३२ मा अकस्मात् केन्द्रीय प्रशासनमा देखिन आएका यी क्रमलीलबारे विशेष केही थाहा पाउने साधनको अभाव छ । तर यिनको 'महाराज महासामन्तश्री' को प्रभावशाली पदवीबाट यिनी प्रान्तीय क्षेत्रका प्रतिष्ठित सामन्त रहेछन् भन्ने बुझिन्छ । यिनको शासन क्षेत्र कहाँ पर्दथ्यो भन्ने बारेमा केही भन्न सकिँदैन ।

क्रमलील आफ्नो सामन्त क्षेत्रको प्रशासन चलाउन छोडी केन्द्रमा किन आएका हुन् स्पष्ट छैन । ई ५१२ देखि वसन्तदेवका दाहिने हात भइरहेका रविगुप्तले ठाउँ ठाउँका ग्रामीणहरुलाई स्वायत्त शासनको अधिकार सुम्पिँदै केन्द्रीय प्रशासनको कार्यक्षेत्र संकुचित गराउँदै आएकामा क्रमलील पनि थपिएर फेरि उही शैली कायम गर्न संलग्न छन् । यो स्थितिमा केन्द्रमा क्रमलीलको आगमनले रविगुप्तलाई आडभरोसा दिएको कुरा मान्न सकिन्छ सकिँदैन केही भन्न सकिएको छैन ।

ई. ५३३ को पशुपति भष्मेश्वर अभिलेखबाट घुमाउरो किसिमबाट जुन राजनीतिक काण्ड घटेको अनुमान गरिएको छ त्यसका सूत्रधार क्रमलीललाई मान्दा त रविगुप्तको टक्करमा उनी केद्रमा आएको पनि मान्न सकिन्छ । ई ५३३ को 'काण्ड' को अस्तित्व नमाने पनि ई ५३२ पछि वसन्तदेव र रविगुप्तको उल्लेख नपाइने तर क्रमलीलचाहिँ ई ५४५ सम्म टिकिरहेका देख्दा रविगुप्तलाई यिनले उछिनेको बुझ्न सकिन्छ ।

संवत् ४६७ (ई ५४५) को पशुपति आर्यघाटपारीपट्टि रहेको शिवलिंग अभिलेखमा "भट्टारकमहाराजश्रीरामदेवले सयभन्दा बढी वर्ष (लामो काल) सम्म शासन गरिरहनुभएको बेलामा महाराजा महासामन्त श्रीक्रमलील कुशल हुनुहुन्छ" (भट्टारकमहाराजश्रीरामदेवस्य साग्रंवर्षशतं समाज्ञापयति महाराजामहासामन्त श्रीक्रमलील: कुशली:) भनेर लेखिएको देख्दा (ऐजन: १७५) क्रमलील केन्द्रमैं लिच्छवि राजाका सहायक शासकका रुपमा रहेका देखिनु महत्वपूर्ण छ । जनतातर्फबाट लेखाई राखिएको सो अभिलेखमा क्रमलीललाई "कुशल हुनुहुन्छ" (कुशली:) भनेर सम्मान देखाइएको छ । राजा रामदेवको नाम लेखेपछि यसरी क्रमलीलको सम्मानपूर्वक नामोल्लेख गर्नामा तात्कालिक केन्द्रीय प्रशासनमा उनको विशेष स्थान थियो भन्ने स्पष्ट छ ।

ई ५३२ मा जसरी क्रमलील अकस्मात् केन्द्रमा देखापर्दछन् र १२ वर्षको लामो अन्तरालपछि ई ५४५ मा फेरि देखापर्दछन् यसबाट उनको व्यक्तित्व र गतिविधि रहस्यमय हुन गएको छ । उक्त १२ वर्षको अवधिभित्र जनतातर्फबाट लेखाई राखेका पाँच ओटा अभिलेख पाइन्छन् तर तिनमा क्रमलीलको नामोल्लेख नगरिएको हुनाले रहस्यको कुरा उठाउनुपरेको हो । हुन त जनताले लेखाएका अभिलेखमा राजा र सहायक राजाको उल्लेख हुनैपर्छ भन्ने कर थिएन त्यो त सम्बद्ध व्यक्तिको तत्कालीन राजा र उनका सहायकप्रति सम्मान र भक्तिको मात्रामा भर पर्ने कुरा हो । तैपनि त्यस्ता अभिलेखका सन्दर्भले तात्कालिक परिस्थितिबारे सकारात्मक वा नकारात्मक संकेत गरेको मान्न सकिन्छ ।

ई ५३२ र ५४५ बीचका अभिलेखहरुमा " ई ५३३ को काण्ड " बताउने पशुपति भस्मेश्वर अभिलेख पहिलो हो जसमा तात्कालिक शासक उपशासक कसैको नामोल्लेख भएको छैन । यस अभिलेखका संस्थापक ध्रुवसंघ रविगुप्तका पक्षपाती हुनाले उनले यसमा क्रमलीलको उल्लेख नगरेको हुनु सम्भव छ ।

उक्त अवधिमा दुइ जना राजा भएका प्रमाण पाइन्छन् तर तिनमा क्रमलीलको उल्लेख भएको नपाइनाले शंकाको स्थिति उत्पन्न भएको छ । बुढानीलकण्ठनिर रहेको शिवलिंग अभिलेखमा राजा मनुदेवको सम्मानसाथ उल्लेख भएको छ । अभिलेख खण्डित हुनाले यस अभिलेखको मिति ज्ञात हुन सकेको छैन तर यिनीलाई ई ५३३-५४५ को अवधिको बीचमा भएको मान्न सकिने देखिन्छ । यसै गरी साँखुको ई ५३८ को अभिलेखमा राजा वामनदेवको उल्लेख भएको छ तर यहाँ पनि क्रमलीलको उपेक्षा गरिएको छ ।

आर्को महत्वपूर्ण कुरा के छ भने उक्त अवधिमै गुप्त परिवार सम्बन्धी दुइटा अभिलेख पाइएका छन् । एउटा त अनुपरमगुप्तको हाँडीगाउँको प्रसिद्ध 'द्वैपायनस्तोत्र' हो र आर्को ई ५४० को उनै अनुपरमकी पत्नी आभीरीको पशुपति अभिलेख हो ।

अनुपरमको अभिलेखमा तिथिमिति छैन र तात्कालिक राजाको नामोल्लेख पनि नगरिएको हुनाले यो कहिलेको हो बुझ्न अप्ठेरो परेको छ । धनवज्र वज्राचार्यले यो अभिलेखलाई ई। ५३३ र ५४५ को बीचमा राख्नुभएकोले यो अभिलेख लेखाइएको बेलामा क्रमलीलनै शक्तिशाली थिए भन्न सकिन्छ । आभीरीको अभिलेखमा पनि क्रमलील अथवा तात्कालिक राजाको उल्लेख गरिएको छैन ।

रविगुप्त र अनुपरमगुप्तको नाता सम्बन्ध स्पष्ट हुन सकेको छैन तर भौमगुप्तले ई ५५७ देखि हर्ताकर्ता भएर काम गरेको देख्दा यस अवधिमा अनुपरम गुप्तको परिवारले क्रमलीलसँग टक्कर लिन थालेको अनुमान गर्न सकिन्छ । क्रमलीलकै कारणले गुप्त परिवार ई ५३३ देखि ५५७ सम्म २४ वर्ष जति राजनीतिबाट विस्थापित हुन पुगेको देख्दा यी दुइ पक्षबीच टक्कर परेको अनुमान गरिएको हो । यो अवधिमध्ये पनि क्रमलीलको अन्तिम ज्ञात मिति ई ५४५ देखि भौमगुप्तको पहिलो ज्ञात मिति ई ५५७ को बीचको १२ वर्षको अवधिचाहिँ अन्धकार रहन गएको छ । यस विषयमा गुप्त परिवारको अध्ययन गर्दा पनि विचार गरिने छ ।

सारांशमा भन्ने हो भने मानदेवपछि आएको राजनीतिक अन्योलको लामो क्रमको आरम्भमा प्रान्तीय शासक क्रमलील केन्द्रमा आएको घटना महत्त्वपूर्ण छ ।

### गणदेव (ई ५५७-५६५)

रामदेवको संवत् ४६७ (ई ५५४) को करीव १२ वर्षपछिका प्रमाणहरुबाट गणदेव राजाको शासन चल्न थालेको थाहा पाइन्छ ।



वसन्तदेवको समयका ई ५३२ सम्मका प्रशासनिक खालका अभिलेखहरु पाइएको २५ वर्षपछिको अवधिमा कुनै प्रशासनिक खालका अभिलेख पाइँदैनन् । यस क्रममा गणदेवको फर्पिङ्को संवत् ४७९ (इ ५५७) को अभिलेख पहिलो हुन आएको छ (वज्राचार्य, २०३०: १८२-१८३) । यसपछि ६ ओटा अभिलेख थानकोट भेकमा पाइन्छन् जुनमा संवत् (ई ५६०) को मिति लेखिएको छ (ऐजन: १८७-१९३) । यसपछि नुवाकोटबाट संवत् (ई ५६३) को अभिलेख पाइएको छ (वज्राचार्य, श्रेष्ठ, २०३२ ३) । यी सबै प्रशासनिक खालका अभिलेख हुन् । संवत् ४८७ (ई ५६५) मा जनतातर्फबाट राखन लगाइएको पशुपति अभिलेख पाइन्छ जसमा राजा गणदेव र त्यस समयका महत्वपूर्ण व्यक्ति भौमगुप्तको नामोल्लेख गरिएको छ (वज्राचार्य, २०३०:१९८-१९९) । माथि चर्चित्त अन्य आठ प्रशासनिक अभिलेखहरुमा पनि राजाका सल्लाहाकारका रुपमा यी भौमगुप्तको उल्लेख गरिएको पाइन्छ यसै कारणले गणदेव नाम मात्रका राजा रहेको र भौमगुप्तनै हर्ताकर्ता रहेको कुरा मानिन्छ । आर्को शव्दमा भन्ने हो भने भौमगुप्त गणदेवका सहायक वा संयुक्त शासक थिए भन्ने थाहा पाइन्छ ।[४७]

ध्रुवदेव र जिष्णुगुप्तको केवलपुर अभिलेखमा नुप्पुन्न भन्ने ठाउँका "भगवान् नारायणस्वामी" को मन्दिर (इचंगुनारायण?) मा पूजा-आजाको बन्दोबस्त गरिदिने राजाहरुमा 'श्रीगणदेव' को पनि उल्लेख भएको छ (ऐजन: ४१४) ।

गोपालवंशावलीमा यी राजाको पालामा तीन वर्षसम्म खडेरी परेको र त्यसलाई साम्य गर्न के के गरियो भन्ने कुरा लेखिएको छ:–

> "राजा श्रीगणदेव भए, वर्ष ४५ । तिनको राज्यकालमा नेपाल भूमिमा तीन वर्षसम्म वृष्टि भएन । वृष्टि होस् भन्ने कामनाले महानागसाधना गरियो । तिनले मणिसहितको गणदेवनामक कोष बनाई श्रीपशुपतिभट्टारकलाई चढाइयो । त्यसको प्रभावले ठूलो वृष्टि भयो । प्रजाहरु सुखी भए (वज्राचार्य, मल्ल, १९८५: ७७) ।"[४८]

संवत् ३०१ (ई ८७७) को सहोत्तरतन्त्रको पुष्पिकावाक्यमा 'श्रीगणदेवकुलदूरीग्लवक' को उल्लेख पाइनाले (वज्राचार्य, २०३०: ५९९) देउपाटन वा पशुपति मन्दिर परिसरमा राजा गणदेवले कुनै 'देवकुल' अथवा मन्दिर बनाएको अनुमान गर्न सकिन्छ ।

### गंगादेव

गणदेवको उल्लेख गर्ने संवत् ४८७ (ई ५६५) को पशुपति अभिलेखपछि चपलीगाउंको संवत् ४८९ (ई ५६७) को अभिलेखमा राजा गंगादेवको नाम लेखिएको छ । राजा गणदेवका अभिलेखहरुमाझैं यो अभिलेखमा पनि 'सर्वदण्डनायकमहाप्रतिहारश्री' उपाधि साथ भौमगुप्त राजाका सल्लाहाकारका रुपमा उल्लेखित छन् (वज्राचार्य, २०३०: २०४) ।

गंगादेवको एक मात्र ज्ञात मिति संवत् ४८७ देखि शिवदेव प्रथमको विष्णुपादुका फेदीको संवत् ५१२ को अभिलेख अघिको बीचको २३ वर्षको अवधिको लागि कुनै सरकारी अभिलेख पाइएको छैन यसैले प्रामाणिक इतिहास तयार पार्न अप्ठेरो परेको छ । यो २३ वर्षको निराधार युगमा पनि २-३ राजा भएका थिए भन्ने कुरा थाहा पाइन्छ । यसबारेमा तल विचार गरिन्छ ।

### गुणकामदेव

लिच्छवि लिपिमा 'श्रीगुणाङ्क' अभिलेख लेखिएको तामाका टकलाई गुणकामदेव राजाका मान्न सकिने विचार रहेको छ (रेग्मी, २०२६: १७१-१७२, वज्राचार्य, २०३०: २२४) । उक्त मुद्राको लिपि मानदेवपछि र अंशुवर्मा अघिको देखिएको र एकजना गुणकामदेव नामका राजाको उल्लेख शिवदेव र गणदेवको बीचमा भएको भन्ने गोपालवंशावलीमा भएको छ (वज्राचार्य, मल्ल, १९८५: २९) ।

'श्रीगुणाङ्क' अभिलेख भएका लिच्छविकालीन तामाका मुद्राको आधारमा गुण नाम जोडिएका कुनै राजाको अस्तित्व थाहा पाउन सकिन्छ (वज्राचार्य, २०३०: २२४, ५५८) ।[४९] लिपिको आधारमा यसलाई अंशुवर्मभन्दा अघिको समयमा प्रसारित्त भएको मान्न सकिने देखिएकोले यो मुद्रा चलाउने राजाको समय पनि त्यसै अवधितिर खोज्नुपर्ने भएको छ ।

गोपालवंशावलीमा राजा गणदेवपछि गुणकामदेव नामका राजा भएका र तिनले पचास वर्ष शासन गरेको उल्लेख भएको छ (वज्राचार्य, मल्ल, १९८५: २९)। तर गणदेवपछि गंगादेवको पालो भएको देखिनाले गंगादेवपछि यिनलाई राख्न सकिने देखिन्छ ।

### अमरदेवको समस्या

वि.सं. २०३७ कार्तिक महिनामा काठमाण्डौं बत्तीसपुतलीमा एउटा घरको जग खन्दा पाइएको एउटा पाको ईंटमा 'राज्ञोमरदेवस्य' लेख लिच्छविलिपिमा लेखिएको पाइयो । लिपिको आधारमा सो लेखलाई मानदेवपछि र अंशुवर्मा अघिको कालमा राख्न सकिन्छ भन्ने धनवज्र वज्राचार्यको भनाई रहको छ ।[५०]

यो अभिलेखले हामीलाई ठूलो उत्सुकता जगाएको छ कारण नेपालको इतिहाससम्बन्धी कुनै स्रोतमा अमरदेव नामका कुनै राजाको उल्लेख भएको पाइएको छैन । अभिलेख संक्षिप्त हुनाले निश्चित मिति पनि बताउन सकिँदैन ।

### मानदेव द्वितीय

शिवदेव प्रथमभन्दा केही अघि मानदेव नामका एक लिच्छवि राजा भएको विषयमा अनेक किसिमका सन्दर्भको चर्चा विभिन्न स्रोतहरुमा भएको पाइनाले लिच्छविकालको इतिहासमा यिनको पनि गणना हुनुपर्ने देखिएको छ ।

ध्रुवदेव र जिष्णुगुप्तको केवलपुर अभिलेखमा पहिले भएका केही राजाहरुको उल्लेख गर्दा महीदेवको उल्लेख गरेपछि श्रीमानदेव नामका राजाको



उल्लेख गरिएको छ (वज्राचार्य, २०३०: ४१४) । मानदेव महीदेवका पिता हुन् र अभिलेखमा तिनलाई औंल्याएको भए महीदेवभन्दा पहिले तिनको उल्लेख हुनुपर्थ्यो यसैले महीदेवभन्दा पछि भएका त्यही नामका आर्का राजाको अस्तित्वबारे विश्वास गर्नुपरेको छ जसलाई सजिलाको लागि मानदेव द्वितीय भन्ने गरिन्छ ।

सुमतितन्त्र नामको एक हस्तलिखित ज्योतिष ग्रन्थको आधारमा नयराज पन्तज्यूहरुले मानदेव नामका राजाले शक संवत् ४९८ (वि.सं. ६६३) वा ई. ५७६ मा एउटा नयां संवत्को स्थापना गरेको कुराको निर्णय गर्नु भएको छ (पन्त, २०४३: १-६, वज्राचार्य २०३०: ३००, ४१७) ।

मानदेव द्वितीयको आफ्नै कुनै अभिलेख अहिलेसम्म पाइएको छैन न त अन्य तात्कालिक प्रामाणिक स्रोतमैं उनको नाम लेखिएको पाइन्छ । यस स्थितिमा उनले संवत् चलाएको भन्ने कुरा त झन् गाहारो छ । तर वंशावलीहरुमा सुरक्षित सन्दर्भहरुबाट मानदेव द्वितीयको अस्तित्व बुझ्न सकिन्छ र तिनले नयाँ संवत् चलाएको भन्ने कुरा पनि थाहा पाइन्छ । यहाँ त्यस्ता सन्दर्भहरुको छोटकरी चर्चा गरिन्छ ।

कर्कपेट्रिकले पाएको वंशावलीमा मानदेव द्वितीयबारे यस्तो विवरण लेखिएको छ–

> "मानदेव दोस्रा । यिनको शासनकालमा तीन वर्षसम्म खडेरी प-यो । राजाले आफ्नो सारा सम्पत्ति पशुपतिनाथलाई चढाएपछि खडेरी साम्य भयो" (कर्कपेट्रिक: २०६) ।[५१]

एकथरी संक्षिप्त गोपालवंशावलीमा मानदेव प्रथमको इतिहासमा अन्त्यमा दिइएको "सम्वत्सर स्वय (यं) परिवर्त्तकृता" अर्थात् "आफैंले संवत् चलाए" भनिएको टिपोट (रेग्मी, २०४६: ४) चाहिं मानदेव द्वितीयको इतिहासबाट लिएर नामसाम्य भएका प्रथम मानदेवको इतिहासमा जोडिदिएको कुरा बुझ्न सकिन्छ ।

नेपालको इतिहास राजाभोगमाला वंशावलीमा मानदेव द्वितीयले संवत् चलाएको बारेमा यस्तो किसिमले चर्चा भएको पाइन्छ–

> "फेरी अरीनिशिला नाम अघि विक्रम सम्वत् नेपालमा चलाउँदा मानदेव राजाले प्रजाहरुका रिण सवै तिरि पत्र तौली हेर्न निमित्त मगायाका शिला भैरव वनि गया र स्थापना गरी मानि राषदा भया" (प्राचीन नेपाल, २०२६: १९) ।

'भूमिगुप्त' लाई पराजित गरी सूर्यवंशको पुन: उदय गराउने शिवदेव नामका राजाले "शिला भैरव" को स्थापना गरेको सन्दर्भमा उक्त विवरण दिइएको छ ।

माथि चर्चित वंशावलीमैं मानदेव प्रथमको वर्णन गर्दा "फेरी संम्वत्सर बेवहार चलाइ सक्याको ३ वर्षपछि शान्त भै गया" भनिएको कुरा (ऐजन: १७)

पनि मानदेव प्रथमसँग सम्बद्ध नभई मानदेव द्वितीयसंग सम्बन्धित विवरण हो भन्ने पनि अड्कल गर्न सकिन्छ । वंशावलीकारले अन्यौल पारेको मात्र हो ।

भाषावंशावलीमा मानदेव प्रथम राजाले विक्रमसंवत् चलाएको भन्ने निम्न उद्धृत भनाईलाई पनि संवत् प्रवर्तक मानदेव द्वितीयसँग सम्बद्ध गर्न सकिन्छ जस्तो लाग्दछ–

> "नेपालमा पनि विक्रमनाम सम्वत्सर फिराऊ । सब प्रजाहरुकन अऋणी गर भन्न्या आज्ञा पाया ... उनै विक्रमका हुकूमले मानदेव नाम राजाले नेपालमा फिराया... "(पौडेल, २०२०: ७६) ।

यी सदर्भहरुबाट मानदेव द्वितीयको ऐतिहासिकता र तिनले संवत् चलाएको तथ्यबारेमा बुझ्न सकिने देखिन्छ । स्वयम् मानदेव द्वितीयकै कुनै अभिलेख आजसम्म नपाइनु, उनले चलाएको भनिने संवत्को बारेमा अन्य अभिलेखहरुमा पनि कुनै स्पष्ट विवरण नपाइने स्थिति आदि समस्या भए पनि अंशुवर्मादेखिका अभिलेखहरुमा यो नयाँ संवत्को प्रयोग हुन थालेकोले यो संवत्को ऐतिहासिकतालाई अस्वीकार गर्न सकिँदैन ।

अंशुवर्माले शिवदेव प्रथमबाट स्वतन्त्र भई थापेको पहिलो अभिलेख, बुङ्मती अभिलेखमा संवत् २९ राखिएको छ (वज्राचार्य, २०३०: २९१) । यसपछि अंशुवर्माले प्रसारित गरेका सबैजसो अभिलेखमा यही संवत्को क्रमिक प्रयोग भएको छ । यसका एक दुइ अपवाद नभएका होइनन् जसको विशेष चर्चा संवत् समस्याबारे तथा अंशुवर्माबारे विचार गर्दा गरिने छ ।

एकथरी इतिहासकारहरुले शक संवत् ४९८ (ई.५७६) मा यो संवत्को स्थापनाकाल मानेका छन् भने शंकरमान राजवंशीले यो संवत्को स्थापना शक संवत् ४७४ (ई.५५२) मा भएको भन्ने विचार प्रस्तावित गर्नुभएको छ जसमा २४ वर्षको अन्तर परेको छ (राजवंशी, २०४७क: २३) । राजवंशीको विचार मानेमा मानदेव द्वितीयको ऐतिहासिक अस्तित्व र तिनले संवत् चलाए भन्ने कुरा पनि विवादमा पर्न जान्छ । यसै गरी एक जापानी विद्वान्ले तिब्बती स्रोतबाट ई. ५७२ देखि नेपालमा नयाँ संवत् थालिएको सन्दर्भतिर औंल्याएको कुरा पनि विचारणीय छ (मल्ल, १९८५: ६४) । यो पछिल्लो मत मान्य हुन सके चार वर्षको अन्तर पर्न जाने हुन्छ र सारा तिथिमितिका गणनामा पनि चार वर्षको अन्तर पर्न जान्छ ।[५२]

## आभीर गुप्तहरुको राजनीति क्रम-१ई.सं.५०६-५३२

लिच्छविकालको इतिहासमा राजा मानदेव प्रथमको अवसान र वसन्तदेवको शासन आरम्भ हुनासाथै गुप्तवंशी व्यक्तिहरु प्रशासनमा सक्रिय भएको देख्दा त्यस्तो क्रमलाई आभीरगुप्तको राजनीति शीर्षक राखी यहाँ अध्ययन गरिएको छ ।



आभीरगुप्तको वंशबारे माथि विचार गरिसकिएको छ र यो वंशको राजनीतिलाई निम्न किसिमले तीन क्रममा बाँडी विचार गरिन्छ–

१. ई. ५०६-५३२
२. ई. ५५७-५९०
३. ई. ६२४-६४१

यहाँ पहिलो क्रमबारे विचार गरिन्छ ।

ऐतिहासिक प्रमाणहरुमा चर्चित पहिला शक्तिशाली आभीर विरोचनगुप्त देखिएका छन् । राजा वसन्तदेवको थानकोटको ई.५०६ को अभिलेखमा विशिष्ट पद दूतकका रुपमा यिनी देखापरेका छन् । त्यहाँ यिनीलाई 'याज्ञिक' उपाधि दिइएको कुरा पनि महत्वपूर्ण छ । वैदिक यज्ञ गर्ने मानिसलाई याज्ञिक भनिने गरेको देख्दा विरोचनगुप्तलाई पनि याज्ञिक होलान् भन्ने अनुमान गर्न सकिन्छ। सरकारी सनदमा दूतकका रुपमा राखिएका व्यक्तिलाई सरकारी पद लेखिनु पर्नेमा यस्तो धार्मिक पदवी लेखाइनाको खास तात्पर्य स्पष्ट छैन । विरोचनगुप्त राजदरबारका 'याज्ञिक' रहेको हुन सक्दछन् । गुप्त परिवारको यज्ञादि कार्यमा विशेष अभिरुचिलाई पनि यो सन्दर्भलेसमेत संकेत गरेको हुन सक्दछ ।

आर्को महत्वपूर्ण तथ्य के छ भने वसन्तदेवको उक्त अभिलेखबाट नै ती राजाकी बहिनी जयसुन्दरीको विवाह गुप्त वंशका कुनै व्यक्तिसँग भएको र ती राजकुमारीलाई दाइजो रुपमा थानकोट भेकको एउटा गाउँ दिइएको थाहा पाइएको छ । यस विषयमा माथि चर्चा गरिसकिएको छ । सो दाइजोसम्बन्धी सनदमा गुप्तवंशकै विरोचनगुप्तलाई दूतकका रुपमा राखिएको देखिन्छ ।

थालनीमा विरोचनगुप्तको राजनीतिक महत्व थिएन तर लिछवि र आभीर गुप्त परिवारबीच भएको वैवाहिक सम्बन्धबाट नै आभीर-गुप्तवंशीहरुले तात्कालिक प्रशासनमा हर्ताकर्ता हुन पाएका हुन् भन्ने अनुमान गरिएको छ ।

### रविगुप्त (ई.५१२-५३२)

राजा वसन्तदेवका अभिलेखहरुमा रविगुप्तको दुइ किसिमको प्रशासनिक तह देखिन्छ । राजाले प्रसारित गरेका अभिलेखहरुमध्ये पाँच ओटामा रविगुप्त 'सर्वदण्डनायकमहाप्रतिहार' उपाधिसाथ दूतकका रुपमा रहेका देखिन्छन् । अभिलेखमा मिति हेर्दा संवत् ४३४ देखि ४४९ सम्म अर्थात् ई.५१२ देखि ५२७ सम्म १५ वर्ष जति रविगुप्त यही स्थितिमा चर्चिएका छन् (वज्राचार्य, २०३०: ११०, ११२-११३, १२२-१२३, १३२-१३३, १३५-१३६) ।

उक्त अवस्थामा पशुपति आर्यघाटको संवत् ४५२ (ई.५३२) को संक्षिप्त अभिलेखले रविगुप्तको शक्ति बढेको तथ्यतिर संकेत गरेको छ । यो अभिलेख केही खण्डित छ तर यस अभिलेखका कर्ता ब्राह्मण पुण्यगोमीले आफूलाई 'सर्वदण्डनायकपादानुध्यातः' विशेषण लेखेका छन् (ऐजनः १४१) । "सर्वदण्डनायकका पाउको अनुग्रह पाएका" भनेर पुण्यगोमीले रविगुप्तप्रति विशेष

भक्ति देखाएकाले यस बेला रविगुप्तकै हातमा शासनको बागडोर रहेको अनुमान धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजन: १४२) ।

यसपछि सवत् ४५४ (ई.५३२) का दुइ अभिलेख चौकीटार र पासिंख्यबाट पाइएका छन् जसले त्यस बेलाको राजनीतिक स्थिति विचित्र हुन पुगेको देखाएका छन् । ती दुई अभिलेखमा राजा वसन्तदेवले "सर्वदण्डनायकमहाप्रतिहार रविगुप्तले हाम्रा हजुरमा विन्ति चढाएका हुँदा सो ठीक छ भनी ..." र "सर्वदण्डनायकमहाप्रतिहार रविगुप्त र महाराजमहासामन्त श्रीक्रमलीलसँग मिली यो निगाहा गरिएको छ" भनी बोलेका छन् र दूतकका रुपमा फेरि रविगुप्तको नामोल्लेख गरिएको छ (ऐजन:१४५-१४६,१४७-१४८) । अभिलेखमा उद्धृत वक्तव्यबाट "क्रमलीलको मद्दतले रविगुप्त (वसन्तदेवका) सहायक शासक हुन पुगेका" भन्ने अर्थ लगाइएको छ (ऐजन: १४९) । अभिलेखको पूरा वक्तव्यबाट वसन्तदेव उक्त मितिमा रविगुप्त र क्रमलील दुइजना सहायक (सह?) शासकसंग मिलेर शासन चलाउँथे भन्ने देखिन्छ । क्रमलीललाई रविगुप्तका सहयोगी पनि मान्न अप्ठेरो छ किनभने रविगुप्तले उपभोग गरिरहेको शासनाधिकारमा आफ्नो 'भाग' लिन उनी केन्द्रमा आइपुगेका देखिन्छन् । क्रमलीलबारे अन्यत्र फेरि विचार गरिने छ ।

यसरी तात्कालिक प्रमाणहरु केलाएर हेर्दा रविगुप्त ई.५१२ देखि ५२३ तिरसम्म शक्तिशाली र हर्ताकर्ता भारदारका रुपमा देखिन्छन् भने उक्त मितिपछि ई. ५३०-५३१ तिरसम्म "सहायक शासक" को स्तरमा (?) पुगेका देखिन्छन् । ई.५३२ मा उनी अझ शक्तिशाली हुन्छन् तर त्यस अवस्थामा क्रमलील पनि "सहायक शासक" का दावेदार रहेका देखिन्छन् ।

ई.५३२ को उक्त प्रमाणपछि रविगुप्त इतिहासका पानाबाट लुप्त हुन्छन् । एक व्याख्याअनुसार ई.५३३ को राजनीतिक काण्डमा उनको मृत्यु भएको थियो । सो काण्डबारे तल विचार गरिएको छ ।

लिच्छविकालको इतिहासमा "आभीर राजनीति" को आरम्भ गर्ने व्यक्तिका रुपमा रविगुप्तको महत्वपूर्ण स्थान रहेको देखिन्छ । ई.५३३ को 'काण्ड' मा उनको मृत्यु भएको मान्ने हो भने उनले स्थापित गरेको राजनीति तात्कालिक रुपले असफल हुन गएको देखिन्छ तर उनकै राजनीतिक पृष्ठभूमिलाई आधार मानेर भौमगुप्तले "आभीर राजनीति" को आर्को सशक्त वेग चलाएको देख्दा उनी असफल भए पनि उनको राजनीति सफलै देखिन आउँछ । हुन त रविगुप्त र भौमगुप्तको नाता स्पष्ट हुन सकेको छैन तर उनीहरु एउटै कुलका हुनाले उक्त अनुमान गर्न सकिएको हो ।

## आभीर गुप्तको राजनीति

### परिप्रेक्ष्य: वंश परिचय

राजा वसन्तदेवको पहिलो अभिलेखमै दूतकको रुपमा 'याज्ञिक' विरोचनगुप्त देखिएका र पछिका अभिलेखहरुबाट पनि धेरै गुप्तान्तनामधारी



व्यक्तिहरु देखिने हुँदा लिच्छविकालको इतिहासमा यिनीहरुको पनि आफ्नै किसिमको स्थान रहेको छ अत: यस पक्षमा पनि अध्ययन हुनु आवश्यक भएको हो ।

यहाँ सर्वप्रथम परिप्रेक्ष्यको रुपमा यो वंशबारे विद्वान्हरुका विचार र ऐतिहासिक साक्षयहरुमा उल्लिखित यस वंशसम्बन्धी विवरण प्रस्तुत गरिन्छ ।

डा. हितनारायण झाले यी आभीर गुप्तहरुलाई आर्कै रुपमा लिनुभएको छ । मानदेवले गुप्तक्षेत्रको मल्लपुरी वा गोरखपुर भेकमा विजय गरेपछि त्यहाँ रहेका गुप्तवंशीहरुलाई आफ्ना नोकर बनाएर ल्याएका हुन् भन्ने उहाँको विचार छ (झा, १९७०: ११०-१११) ।

शंकरमान राजवंशीले यी गुप्तहरुलाई भारतका सम्राट् गुप्तहरुसँग सम्बद्ध गर्नु भएको छ । वसन्तदेवको ई.५०६ को अभिलेखमा दूतकका रुपमा देखिएका याज्ञिक विरोचनगुप्तको परिचय दिँदा हुणहरुको आक्रमणबाट पराजित सम्राटगुप्तका परिवारहरु नेपाल पसेका हुन् र याज्ञिक विरोचनगुप्त पनि त्यस्तै व्यक्ति हुन् भन्ने उहाँको विचार छ । समुद्रगुप्तले अश्वमेध यज्ञ गरेका हुनाले उनी याज्ञिक जजमान थिए त्यसैले विरोचनगुप्तले पनि आफूलाई याज्ञिक भन्नुमा गौरव ठानेका हुन् भन्ने शंकरमान राजवंशीको विचार छ (राजवंशी, २०३६: २) । उहाँले जिष्णुगुप्तको सन्दर्भमा पनि यस्तै विचार व्यक्त गर्नु भएको छ । जिष्णुगुप्तको टकमा अंकित घोडाको चित्रलाई उहाँले अश्वमेध यज्ञसँग जोडेर समुद्रगुप्तले गरेको अश्वमेध यज्ञसँग तुलना गरेर याज्ञिक विरोचनगुप्तबारे व्याख्या गरेजस्तै अर्थ गर्ने प्रयत्न गर्नु भएको छ । (राजवंशी, २०३६:४) । तर उहाँले आर्को ठाउँमा यो वंशलाई 'पुण्ड्' राजवंश मान्नु भएको छ जसको उल्लेख लिच्छविकालको एक अभिलेखमा भएको छ (वज्राचार्य, २०३०: २३३) ।

यो 'पुण्डीराजकुल' लाई शंकरमान राजंशीले भौमगुप्तहरुको वंशलाई अर्थ्याएको मान्नु भएको छ (राजवंशी, २०३७: १-३) । उहाँको भनाईमा भारतका स्कन्दगुप्तको पालामा हूणको आक्रमणले गुप्त साम्राज्य खल्बलिएर केही गुप्तहरु नेपाल पसेका थिए भन्ने कुरा वसन्तदेवको अभिलेखदेखि गुप्त देखापरेबाट थाहा हुन्छ । महाभारतकालमा काशीको आसपासमा चुनार भन्ने ठाउँमा पुण्ड्क भन्ने राजा थिए तिनको घमण्ड श्रीकृष्णले तोडेको कुरा महाभारतमा उल्लिखित छ । गुप्त साम्राज्यताका बंगालको उत्तरीभेकमा पुण्ड्वर्धन भन्ने राजवंश थियो । यसैले भौमगुप्तका खलक पुण्ड्वर्धनको वंशज हो कि भन्ने अनुमान शंकरमान राजवंशीले गर्नु भएको छ ।

संवत् ४६२ (ई.५४०) को पशुपति शिवलिंग अभिलेखमा "परमाभिमानीका छोराकी पत्नी आभीरी गोभिनी" नामकी महिलाले 'अनुपरमेश्वर' शिवलिंग थापेको वर्णन गरिएको छ । त्यसै अभिलेखमा आभीरीले भौमगुप्तलाई छोरा भनेकी छन् (वज्राचार्य, २०३०: १७०-१७१) । यस अभिलेखको आधारमा हाँडीगाउँको स्तम्भलेखको द्वैपायनस्तोत्रका रचयिता अनुपरम यिनै आभीरीका पति रहेछन् र तिनका छोरा भौमगुप्त रहेछन् भन्ने बुझिन्छ । आमाको नाम वंशको

आधारमा आभीरी भनिएको र छोराको नाममा गुप्त थर जोडिएको देखेर यो वंशलाई "आभीरवंशी गुप्त" नामकरण धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजनः १७३) ।

संस्कृत कोशहरुमा आभीरीलाई महाशूद्री, ग्वाला (गोपाल) की स्त्री वा छोरीको नामको रुपमा बताइएको पाइनाले आभीरी ग्वालाकी छोरी वा पत्नी हुन सक्ने बुझिन्छ । द्वैपायनस्तोत्र लेख्ने अनुपरम वैदिक वेदान्तीजस्ता देखिनाले ब्राह्मण हुन सक्ने र उनले गोपालकी छोरीसँग अनुलोम विवाह गरेको पनि हुन सक्दछ भन्ने ज्ञानमणि नेपालको विचार छ (नेपाल, २०४०ः ७८-७९) । माथि चर्चित आभीरीको अभिलेखमा आभीरीलाई गोमिनी पनि भनिएको छ । यसैले त्यो गोमिनी थर उनका पतिवंशको थर हुन सक्ने कुरा पनि उहाँ मान्नुहुन्छ ।

विरोचनगुप्तलाई याज्ञिक भनिएको पाइनु र अनुपरम वैदिक वेदान्ती देखिँदा यो वंशलाई अरु विद्वान्‌हरुले पनि ब्राह्मण हुन सक्ने अनुमान गरेका छन् (गोपाल, वर्मा, १९७७ः ५१) ।

माथिको छोटकरी चर्चाबाट यो वंशको नाम र उत्पत्तिबारे विभिन्न विचार प्रचलित रहेको देखिन्छ । कुनै इतिहासकारले त यी गुप्तहरुलाई भारतका सम्राट गुप्तहरुको परिवारसंग सम्बद्ध गर्न खोजेको पनि देखियो । तर ज्ञानमणि नेपालले यिनीहरुलाई "नेपालमा पहिलो शासन गर्ने गोपाल (आभीर) वंशकै उत्तराधिकारी होलान्" भन्ने अनुमान गर्नु भएको छ (नेपाल, २०४०ः ७७।

गोपालवंशावलीमा भौमगुप्त, जिष्णुगुप्त र विष्णुगुप्तलाई 'गोपालवंश' र 'गोपाल' भनिएको छ (वज्राचार्य, मल्ल, १९८५ः २९-३०) । भाषावंशावलीमा यिनैलाई 'गुप्त' भनिएको छ (पौडेल, २०२०ः ८१) । आर्केथरी भाषावंशावलीमा यिनै राजाहरुलाई "गोपाल वैश्य गुप्त वंशका राजा" भनिएको पाइन्छ (प्राचीन नेपाल, २०२६ः १९) ।

यो चर्चाबाट भौमगुप्त, जिष्णुगुप्तहरु आदिमकालका गोपालवंशकै वंशज हुन् भन्ने वंशावलीहरुको भाव रहेको देखिन्छ । गोपालवंशावलीमा शुरुका आठ राजालाई 'गोपाल', 'गोलक', 'गोपालराजा' भनिएको छ (वज्राचार्य, मल्ल, १९८५ः २५) ।

भाषावंशावलीको सन्दर्भमा वैश्यको रुपमा गोपालवंशलाई लिइएको तथ्य विचारणीय छ । यो स्रोत ज्यादै पछिको हो तर त्यसले औंल्याएको यो तथ्यबारे सोधखोज गर्नु आवश्यक छ ।

यी गुप्तहरु सम्बन्धी प्राप्य सबै अभिलेखहरुमा यिनको वंशबारे कुनै स्पष्ट विवरण पाइँदैन । जिष्णुगुप्तका दुइ अभिलेखमा भने उनले आफ्नो वंशलाई 'शुद्धकुलक्रम' (पुण्यान्वय) भन्दै (वज्राचार्य, २०३०ः ४०१) 'चन्द्रवंशी' (सोमान्वयः) हुने दावा गरेका छन् (ऐजन ४३४) ।



## आभीर-गुप्तको अन्तरिम अवस्था ई.५३२-५५६

### भौमगुप्तको पारिवारिक पृष्ठभूमि

रविगुप्तको पतन भएपछि ई. ५५७ मा भौमगुप्तको राजनीतिक उदय हुनुअघिको अवधिमा आभीरगुप्त परिवारसम्बन्धी केही सन्दर्भ पाइने हुनाले त्यस अवस्थालाई आभीर गुप्त परिवारको अन्तरिम अवस्थाको रुपमा अध्ययन गर्नु आवश्यक भएको हो ।

### अनुपरमगुप्तः

हाँडीगाउँ सत्यनारायणस्थानसामु गरुडस्तम्भमा लेखिएको माथि चर्चित अभिलेखबाट गुप्तवंशी अनुपरमगुप्तको अस्तित्व थाहा पाइन्छ । सो अभिलेखको अन्त्यमा "अनुपरमले बनाएको भगवान् द्वैपायनको स्तोत्र" (भगवत द्वैपायनस्य स्तोत्रङ०कृतमनुपरमेण) भनिएको छ (वज्राचार्य, २०३०ः १६२) । यो अभिलेखमा तिथिमिति नलेखिएको र तात्कालिक राजाको नाम पनि नलेखिएकोले अनुपरम कहिले भएका हुन् बुझ्न अप्ठेरो परेको छ तर पशुपतिमा रहेको संवत् ४६२ (ई. ५४०) को शिवलिंग अभिलेखमा आभीरी गोमिनी नामकी महिलाले लेखाएको निम्न विवरणबाट यी अनुपरमको बारेमा बढी कुरा थाहा पाउन सकिएको छ–

> "परमाभिमानीका छोराकी पत्नी आभीरीले यहाँबाट देवता हुन पुगेका (स्वर्गे भएका)पतिको पुण्य बढोस् भनेर छोराको अनुमति लिई ...महादेवको स्थापना गरिन् ... महादेवको अनुपरमेश्वर भन्ने नामकरण गरिन् ।"[४३]

उक्त विवरणमा आभीरीले आफ्ना पतिको नामोल्लेख नगराएको भए पनि पतिकै पुण्यको लागि थापेको महादेव मन्दिरलाई अनुपरमेश्वर भनिदिएकीले उनका पति अनुपरम रहेछन् भन्ने बुझिन्छ । सो अभिलेखमा उनी आभीरी गोमिनीले "चिरञ्जीवी छोरा भौमगुप्त आदि सन्तानहरुको सुखभोग आरोग्य आयु धेरै होओस्" (आयुष्मतानाञ्चापत्यानां भौमगुप्तादीनां भोगारोग्यायुरान्त्यावाप्तये) भन्ने पनि लेखाएको देख्दा अनुपरम र आभीरीको थर गुप्त रहेछ भन्ने कुरा स्पष्ट हुन आएको छ । यसरी हाँडीगाउंको अभिलेख र पशुपतिको उक्त अभिलेखबाट अनुपरम गुप्त र आभीरी गोमिनीका छोरा भौमगुप्त रहेछन् भन्ने थाहा पाइयो । यिनी भौमगुप्तले ई.५५७-५९० मा तत्कालीन राजनीतिमा उच्च स्थान प्राप्त गरेका थिए भन्ने कुरा उक्त अवधिका प्रमाणहरुले बताएका छन् ।

पशुपतिको उक्त अभिलेखबाट ई. ५४० तिर अनुपरमगुप्तको स्वर्गवास भइसकेको देख्दा उनको हाँडीगाउं सत्यनारायणस्थानको स्तम्भलेख सो मितिभन्दा केही अघिको हुनुपर्ने पनि देखिन्छ ।

आभीरी गोमिनीले आफूलाई "परमाभिमानीका छोराकी पत्नी" भनेर परिचय दिएकीले हिन्दू महिलाले आफ्ना पतिको नाउँ बोल्न नहुने परम्परा कायम गरेको मानिन्छ । यो कुरा त्यति स्पष्ट छैन किनभने बुहारीले ससुराको नाउँ पनि बोल्न नहुने चलन देखिन्छ तर उनले ससुराको नाउँ त लेखाएकी छन्– परमाभिमानी भनेर । खास कुरा त के देखिन्छ भने परमाभिमानी विशेष प्रसिद्ध र प्रख्यात थिए, अनुपरम त्यति प्रसिद्ध थिएनन् र परमाभिमानीका छोराका रुपमै ज्यादा परिचित थिए । यसैले आभीरी गोमिनीले त्यस रुपमा आफ्नो श्रीमान्को र आफ्नो परिचय लेखाएको हुनुपर्ने बुझिन्छ ।

उक्त विवरणबाट अनुपरमगुप्त परमाभिमानी नामका व्यक्तिका छोरा थिए भन्ने बुझियो । तर सो व्यक्तिनाम भन्दा उपाधि बढी देखिन्छ किनभने सो नामको अर्थ "असाध्ये घमण्डी" हुन्छ । आभीरी गोमिनीले ससुराको नाम बोल्नुको सट्टा उनको उपाधि वा उपनामको उल्लेख गरेर काम चलाएको पनि मान्न सकिन्छ ।

उक्त नामबारे बाबुराम आचार्यले आफ्नै किसिमबाट अनुमान गर्नु भएको छ । उहाँको विचारमा आभीरीका ससुराको नाम वास्तवमा परमगुप्त हुनुपर्दछ (आचार्य, २०३७: ७) ।[५४] परमगुप्तको सट्टा परमाभिमानी लेखिएको हुनु धेरै सम्भव लाग्दछ किनभने उनका छोराको नामको स्वरुपसंग पनि यो मिल्दछ (परमपछि हुने अनुपरम यसरी नामकरणमा साम्य देखिन्छ) वास्तविक स्थिति जे भए पनि उनको नाममा 'अभिमानी' शब्द जोडेको देख्दा गुप्त परिवारको शक्ति वा महत्वाकाङ्क्षाको झलक पाइन्छ । तर यी परमाभिमानीले कुनै सरकारी पदको उपभोग गरेको कुनै प्रमाण पाइएको छैन ।[५५]

अनुपरमले आफूले रची गरुडस्तम्भमा लेखाएको द्वैपायनस्तोत्रको अत्यमा आफ्ना पिताको मंगलकामना गरेको पाइन्छ । त्यहाँ उनले भगवान्सँग "मेरा पिताको बढिबढाउ गर"[५६] भनी प्रार्थना गरेका छन् । अनुपरमले सो प्रार्थनामा आफ्ना पिताको नामको उल्लेख गर्नु आवश्यक नठानेको देखिन्छ तर आफ्ना पिताप्रति उनको उदात्त भावना भने यसबाट स्पष्ट हुन्छ ।

परमाभिमानीजस्तै अनुपरमले पनि कुनै सरकारी पद पाएको देखिएको छैन । धनवज्र वज्राचार्यले यिनीलाई "शासकवर्ग" भित्रै राख्नु भएको छ (वज्राचार्य, २०३०: १६३) यद्यपि यो कुरा स्पष्ट छैन । तर यो गुप्तवंश आर्थिक दृष्टिले सम्पन्न उच्च वर्गमा पर्दथ्यो भन्ने कुरा अनुपरमले भव्य गरुडस्तम्भ थापेको र उनकी पत्नीले भव्य व्यवस्थासहित शिवमन्दिर बनाएको कुराबाट स्पष्ट हुन्छ।

अनुपरम इतिहासमा आफ्नै रुपमा प्रसिद्ध र अमर हुन पुगेका छन्, उनले रचेको "भगवान द्वैपायनस्तोत्र" को साहित्यिक, बौद्धिक र धार्मिक महत्व छ । संस्कृत भाषामा अनुपरमको जुन किसिमको अधिकार देखिन्छ त्यसबाट यो स्तरका विद्वान् साहित्यकार तथा सिद्धान्तवादी व्यक्तित्व इतिहासमा फेरि भएनन् भन्न सकिन्छ । लिच्छविकालको इतिहासमा आभीर गुप्तवंशको राजनीति जे जस्तो भए पनि अनुपरमको यो स्वरुप विशेष रुपले चिरस्मरणीय छ ।



पछिको एउटा सन्दर्भबाट अनुपरमगुप्तका दाजु मानगुप्त गोमीको नाम थाहा पाइएको छ । भीमार्जुनदेव र जिष्णुगुप्तको संवत् ५७ (ई. ६३३) को थानकोटको अभिलेखबाट मानगुप्त गोमीबारे थाहा पाइन्छ । त्यस अभिलेखको सम्वद्ध अंश यस किसिमको छ :

> "हाम्रा जेठा बराजु मानगुप्त गोमीले बनाउनुभएको पोखरीको निमित्त गाउँको नजीकै उत्तरतिर रहेको 'चोखपरा' भन्ने डाँडो चैलकर (कपडाको उत्पादनमा लाग्ने कर) माफी गराएर दिइएको थियो । तर त्यो जग्गा कालान्तरमा सरकार लाग्यो । त्यो कुरा थाहा पाएर हामीले आफ्ना बराजुको कृति संभेर धेरै कालसम्म रहिरहोस् भन्ने विचारले यो सनद शिलालेखमा कुँदाएर राखियो"(वज्राचार्य, २०३०:४३५)।

उक्त उद्धरणबाट मानगुप्त गोमीले पोखरी बनाएर त्यसको हेरचाहाको लागि सो पोखरी रहेको डाँडो चैलकर माफी गरी घेन्चो गाउँका बासिन्दाहरुलाई सुम्पिएको थियो । पछि सो डाँडो सरकार लागेकोले सो पोखरीको हेरचाहा हुन नसकेको र जिष्णुगुप्त राजनीतिमा हर्ताकर्ता भएकाले उनले आफ्ना बराजुको कीर्तिको सुरक्षाको लागि पुरानै बन्दोवस्त कायम गरी स्थानीय जनतालाई प्रोत्साहन गर्न अरु करहरुमा पनि मिनाहा गरिदिएको देखिन्छ ।

मानगुप्तले बनाएको पोखरीलाई सोही अभिलेखमा 'गोमिखानक' भनिएको छ र सो पोखरी दहचोक डाँडोको प्रसिद्ध इन्द्रदह हो भन्ने धनवज्र वज्राचार्यको विचार रहेको छ (ऐजन: ४३६) । कालान्तरमा सो पोखरी पवित्र तीर्थको रुपमा मानिन गई असोज महीनामा त्यहाँ मेला पनि लाग्ने गरेको छ । यस रुपमा मानगुप्तको देन हालसम्म कायम रहेको देखिन्छ ।

मानगुप्तसम्बन्धी एकमात्र सन्दर्भ यही भएकोले यिनको राजनीतिक स्वरुप थाहा पाउन सकिँदैन । जिष्णुगुप्तले यिनलाई आफ्ना जेठा बराजु (ज्येष्ठप्रपितामह) भनेर नाता देखाएकोले यिनी अनुपरमगुप्तका दाजु रहेछन् भन्ने बुझिन्छ । उक्त सन्दर्भमा मानगुप्तलाई कुनै सरकारी पदवी नलेखिएकोले प्रशासनमा उनको कुन स्थान थियो भन्न सकिँदैन तर ज्ञानमणि नेपालले "रविगुप्तपछि सो पद (सर्वदण्डनायकमहाप्रतिहार) प्राप्त गरेका मानगुप्तले आफ्नो राजशक्ति निकै बढाएका थिए" र "शासक मानगुप्त" भनेर लेख्नुभएको छ (नेपाल, २०४०: ७५-७६) । परिस्थितिजन्य साक्ष्यलाई आधार मान्ने हो भने सो विचार मान्य हुन सक्दछ तर निश्चित रुपले सो मान्न गाहारो छ ।

मानगुप्तको नाममा प्रतापी राजा मानदेवको नामको मान जोडिएको देख्दा गुप्त खलकले लिच्छवि राजवंशसँग सामाजिक राजनीतिक समकक्षताको दावा गर्न थालेको अनुमान पनि गर्न सकिन्छ ।

## आभीर गुप्तको राजनीति: क्रम-२

**भौमगुप्त (ई.५५७-५९०)**

आभीरी गोमिनीको पशुपति शिवलिंग अभिलेखबाट अनुपरमगुप्त र यिनै आभीरी गोमिनीका जेठा छोराका रुपमा चिनिने भौमगुप्तले दोस्रो क्रमको आभीर-गुप्त राजनीतिको सञ्चालन गरेको थाहा पाइन्छ ।

फर्पिङ्मा पाइएको संवत् (ई.५५७) को खण्डित अभिलेखमा दुइपल्ट 'महाप्रतिहार-सर्वदण्डनायक' को उपाधिसाथ भौमगुप्तको उल्लेख भएको छ (वज्राचार्य २०३०: १८२-१८३) । भौमगुप्तको राजनीतिक जीवनको आरम्भ बताउने यो पहिलो प्रमाण हो । यो अभिलेख खण्डित हुनाले यस बेला गद्दीमा कुन राजा थिए भन्न गाहारो छ तर गणदेवले नै यो अभिलेख प्रसारित गरेको अनुमान गरिएको छ ।

यो पहिलो अभिलेखमैं भौमगुप्तले राजालाई फर्पिङ् भेकमा सरकारको तर्फबाट कुनै किसिमको सुविधा (अभिलेख खण्डित हुनाले प्रष्ट नहुने) दिलाउन विन्ती गरेको र सो कुरा सदर गरी यो अभिलेख प्रसारित गरिएको देखिन्छ ।

उक्त अभिलेख प्रसारित भएको तीन वर्षपछि संवत् ४८२ (ई.५६०) मा प्रसारित छ ओटा एकै भाकाका शिलालेखहरु थानकोट बलम्बुभेकबाट पाइएका छन् (ऐजन:१८७-१९३) । पहिलेका राजाबाट कुथेर र शुली नामका अधिकरण (अड्डा) ले पस्न नपाउने गरी निगाहा गरिएकोमा 'सर्वदण्डनायकमहाप्रतिहार' श्री भौमगुप्तले 'लिङ्ग्वल' र 'माप्चोक' समेत चारै अधिकरणहरुले पन्चापराध (पाँच ठूला मुद्दा) सम्बन्धी मुद्दामा पनि पस्न नपाउने" गर्न विन्ति गरेकोमा सोही बमोजिम आज्ञा प्रसारित गरिएको कुरा ती अभिलेखहरुमा लेखिएको छ ।[५८]

उक्त प्रमाणहरुपछि नुवाकोटको सं. ४८५ (ई.५६३) को अभिलेख पाइन्छ जसमा राजालाई कुनै सरकारी कामबारे सिफारिश गर्ने भारदारको रुपमा एकपल्ट र आर्कोपल्ट दूतकको रुपमा श्री र आफ्नो पारम्परिक सरकारी उपाधिसाथ भौमगुप्तको उल्लेख पाइन्छ (वज्राचार्य, श्रेष्ठ, २०३१८ ३) । दूतकका रुपमा उनको नाम लेख्दा सम्मान जनाउन 'वरीवर्त्ति' शब्दको प्रयोग गरिएको छ । यो शब्दको अर्थ "विराजमान हुनुहुन्छ" भन्ने हुन्छ र भौमगुप्तको शक्तिको प्रतीकको रुपमा यस अभिव्यक्तिलाई लिन सकिन्छ ।

उक्त क्रमपछि संवत् ४८७ (ई. ५६५) को देउपाटन गचाननीको हरिहर मूर्तिसम्बन्धी अभिलेखमा भौमगुप्तको अझ उत्कर्ष भएको झझल्को पाइन्छ । धार्मिक खालको यो व्यक्तिगत अभिलेखमा भौमगुप्तका अनुयायी स्वामिवार्त्त नामका धार्मिक व्यक्तिले आफूलाई "परमदैवत श्रीभौमगुप्तपादानुध्यात: (परमदैवत श्रीभौमगुप्तका पाउको अनुग्रह पाएको) भनेका छन् (वज्राचार्य, २०३०: १९८-१९९) । यो भनाईबाट स्वामिवार्त्त भौमगुप्तका पक्षपाती रहेछन् भन्ने र हरिहरको मूर्त्ति मन्दिर थाप्दा भौमगुप्तको विशेष प्रेरणा पनि रहेको हुन सक्ने अन्दाजी गर्न सकिन्छ ।



यो अभिलेखमा भौमगुप्तको साबिकको पदवी सर्वदण्डनायकमहाप्रतिहार नलेखिई 'परमदैवत' उपाधि मात्र लेखिएको कारण त्यति स्पष्ट छैन । यो उपाधिको राजनीतिक भन्दा धार्मिक महत्व भएको कुराको चर्चा माथि महीदेवलाई पनि यही उपाधि प्रयोग गरिएको सन्दर्भमा गरिसकिएको छ । भौमगुप्तकै प्रोत्साहनमा स्वामिवार्त्तले हरिहरको मूर्त्ति थापेको उपलक्ष्यमा लेखाइएको अभिलेखमा भौमगुप्तलाई उच्चपदस्थ सरकारी अधिकारीका रुपमा हैन एक धार्मिक व्यक्तित्वका रुपमा देखाउन स्वामिवार्त्तले सो उपाधि लेखाएको बुझ्न सकिन्छ ।

उक्त प्रमाणपछि २३ वर्षको अन्धकारमय अन्तरालपछि ई. ५९० (संवत् ५१२) को विष्णुपादुकाफेदीको अभिलेख पाइन्छ जसमा राजाका रुपमा शिवदेव छन् भने आफ्नो पुरानै थान्कामा भौमगुप्त कायम छन् (ऐजन: २१४-२१५) ।

भौमगुप्तसम्बन्धी उपर्युक्त मोटामोटी विवरणपछि उनको इतिहासबारे यहाँ विचार गरिन्छ ।

**भौमगुप्तको राजनीतिमा प्रवेश**

भौमगुप्तको राजनीतिमा प्रवेशको घटनाको सम्बन्ध ई.५२२-५३२ को अवधिमा हर्ताकर्ता रहेका रविगुप्तले बनाएको राजनीतिक पृष्ठभूमिसँग रहेको स्पष्ट छ । ती दुवैको सरकारी पद एउटै देखिएकोले यो तथ्य अझ स्पष्ट हुन्छ । तर रविगुप्तसंग भौमगुप्तको नाता स्पष्ट नभएको र ती दुइको बीच २५ वर्षको व्यवधान रहेकोले पनि भौमगुप्तले सजिलैसँग रविगुप्तले स्थापित गरेको राजनीति उत्तराधिकारमा पाउन सकेको देखिँदैन । आर्को महत्वपूर्ण तथ्य त के हो भने रविगुप्त र भौमगुप्तबीच क्रमलीलको अस्तित्व पनि छ । यति चर्चा गर्नाका तात्पर्य भौमगुप्तले क्रमलीलसंग अथवा उनीद्वारा स्थापित साजनीतिक स्थितिसँग टक्कर लिनुपरेको थियो भन्ने हो ।

क्रमलीलको राजनीतिको अवधिबारे निश्चित तथ्य पाउन सकिएको छैन तर उनी ई.५३२ मा एकपल्ट चर्चित भएर १३ वर्षपछि ई. ५४५ मा फेरि उत्तिकै वा अझ शक्तिशाली भएका देखिन्छन् भने ई.५५७ तिरसम्म पनि कायमै रहेको हुन सक्दछन् । नत्र ई.५४० मा आफ्नी आमाको अभिलेखमा चर्चित भैसकेका भौमगुप्तलाई पहिले रविगुप्तले उपभोग गरेको स्थानमा पुग्न १७ वर्ष लाग्ने थिएन । जे-जस्तो भए पनि भौमगुप्तले राजनीतिमा लाग्दा परिस्थिति कठिन थियो भन्ने स्पष्ट छ ।

रविगुप्तसँग भौमगुप्तको के नाता पर्दथ्यो भन्ने कुरा स्पष्ट गर्न सकिएको छैन तर एउटै कुलका हुनाले भौमगुप्तले रविगुप्तको राजनीति कायम गर्नु आवश्यक भएको अनुमान गर्न सकिन्छ । यिनको परिवार पनि महत्वपूर्ण रहेको थाहा पाइन्छ । आभीरीको अभिलेखमा भौमगुप्तका बाजेको नाम 'परमाभिमानी' लेखिएको देख्दा यो परिवारको स्वभाव नै घमण्डी हुनु थियो भन्न सकिन्छ । साथै हामीले माथि अनुमान गरेअनुसार लिच्छवि राजवंशका ज्वाईं

खलक हुनाले पनि आभीर गुप्तहरु लिच्छवि राजाहरुको समकक्षमा रहिरहने महत्वकाङ्क्षा राख्दथे भन्ने पनि बुझ्न सकिन्छ ।

भौमगुप्तको राजनीतिक उपलब्धिमा सहयोग गर्ने पक्षहरु को थिए भन्ने आर्को महत्वपूर्ण प्रश्न हाम्रा सामुने छ । तात्कालिक अभिलेखहरुमा यस कुराको स्पष्ट विवरण पाईँदैन तर भौमगुप्तको प्रशासनकालमा प्रसारित्त अभिलेखहरुमा चर्चित व्यक्तिहरुलाई उनका पक्षपाती र सहयोगीका रुपमा मान्ने हो भने यो प्रश्नको आंशिक जवाफ दिन सकिएला जस्तो लाग्दछ ।

गणदेवसमेतका नाममा प्रसारित्त भौमगुप्तका ई. ५६० का छ ओटा अभिलेखमा 'दूतक' का रुपमा बभ्रुवर्माको नाम लेखिएको छ (ऐजन: १८८-१९३) । ई. ५७३ को पाटन शंखमूल सिकुवहीको अभिलेखमा पनि बभ्रुवर्माको उल्लेख भएको छ र त्यसमा परेको विवरणबाट उनी 'राजपुत्र' वंशी रहेको अनुमान गरिएको छ (ऐजन: २११-२१२) । यस रुपमा हेर्दा बभ्रुवर्माको सहयोग भौमगुप्तलाई निकै महत्वपूर्ण रहेको हुनुपर्ने अन्दाजी गर्न सकिन्छ ।

यसैगरी नुवाकोटमा पाइएको ई.५६३ को अभिलेखमा अदालतको कारवाई हेर्ने अधिकारी (न्यायाधीश) को रुपमा राजपुत्र बन्धुजीवको उल्लेख भएको छ (वज्राचार्य, श्रेष्ठ, २०३८ ३) । वर्मावंशी राजपुत्र बभ्रुवर्मा जस्तै जीववंशी राजपुत्र बन्धुजीवले पनि भौमगुप्तलाई सहयोग दिएको बुझ्न सकिन्छ । यी सन्दर्भबाट कम्तीमा दुइटा 'राजपुत्र' परिवारको सहयोग भौमगुप्तलाई प्राप्त भएको देखिनु महत्वपूर्ण छ । 'राजपुत्र' वा 'राजपूत' क्षत्रिय परिवार समाजको उच्च वर्गमा पर्दथ्यो र समकालिक राजनीतिमा उनीहरुको पनि महत्वपूर्ण स्थान रहन्थ्यो भन्ने अनुमान गरिएको छ ।

आफ्नै गुप्त परिवारका कुन कुन व्यक्ति भौमगुप्तका सहयोगी थिए भन्ने कुरा स्पष्ट छैन । उनका भाईहरु र छोराको अस्तित्वबारे संकेत पाइन्छ तर तिनका नाम अज्ञात रहन गएका छन् ।

आभीरी गोमिनीको पशुपति शिवलिंग अभिलेखमा उनी गोमिनीले "चिरञ्जीवी छोरा भौमगुप्त आदि सन्तानहरुको सुखभोग आरोग्य आयु धेरै होओस्" भन्ने मंगलकामना गरेको देख्दा[९] भौमगुप्तका भाइहरु पनि रहेछन् भन्ने बुझ्न सकिन्छ । तात्कालिक अभिलेखहरुमा अनेक गुप्तान्तनामधारी सरकारी कर्मचारीहरु देखिएका छन् तर तीमध्ये कुनचाहिं भौमगुप्तका भाइ होलान् भन्ने ठेगान गर्न सकिंदैन ।[१०]

उदयदेवपछि राजनीतिमा हर्ताकर्ता देखिने जिष्णुगुप्तका पिता अथवा भौमगुप्तका छोरा इतिहासका पानामा लुप्त हुन पुगेका छन् । तर उसबेला आफ्ना भाइहरु र छोराबाट पनि भौमगुप्तले सहयोग पाएको अन्दाजी गर्न सकिन्छ ।



**राजनीतिक उपलब्धि**

भौमगुप्तको ३३ वर्ष जतिको राजनीतिक कार्यकालभित्र पाइने शिलालेखहरुमा उनको सरकारी उपाधि एउटै छ 'सर्वदण्डनायकमहाप्रतिहार' । यस रुपमा हेर्ने हो भने रविगुप्त र भौमगुप्तको स्थितिमा फरक देखिंदैन तर भौमगुप्तलाई उक्त उपाधि साथै श्रीको पनि प्रयोग गरिएको पाइने हुनाले रविगुप्तभन्दा भौमगुप्तको स्थितिमा निकै अन्तर हुन आएको देखिन्छ । धनवज्र वज्राचार्यको विचारमा श्री-ले भौमगुप्तको राजोचित्त स्तरलाई संकेत गरेको छ (ऐजन: १८४) । यस दृष्टिले हेर्ने हो भने रविगुप्तभन्दा भौमगुप्तको राजनीतिक शक्ति बढेको बुझिन्छ ।

हालसम्म प्राप्त शिलालेखहरुको क्रमको विचार गर्दा भौमगुप्तको इतिहास पनि अस्पष्ट रहन गएको देखिएको छ । आफ्नो राजनीतिक जीवनको आरम्भमा उनी ई. ५५७ देखि ५६५ सम्म करीब आठ वर्ष राजा गणदेवसँग सम्बन्धित भएर देखापर्दछन् भने ई.५६७ मा राजा गंगादेवसँगै देखापर्दछन् । त्यो मितिको २३ वर्षपछि उनी फेरि ई.५९० को अभिलेखमा राजा शिवदेवसँगै देखापर्दछन् । यसरी ई. ५६७ र ५९० को बीचको २३ वर्षको अवधिका प्रशासनिक शिलालेखप्रमाण नपाइएका हुनाले तात्कालिक राजनीतिसाथै भौमगुप्तको स्थानबारे हामी अज्ञानको स्थितिमा रहन बाध्य भएका छौं ।

उक्त २३ वर्षको अवधिमै गुणकामदेव र मानदेव द्वितीय राजा भएको थाहा पाइएको छ । तर यी दुई राजासँग भौमगुप्तको कस्तो सम्बन्ध थियो भन्ने बारेमा केही भन्न सकिने आधार पाइएको छैन । आफ्नो नाममा टक निकाल्ने गुणकामदेव अवश्यनै महत्वाकाङ्क्षी देखिन्छन् । यसै गरी नयाँ संवत् स्थापना गर्ने मानदेव द्वितीय पनि महत्वाकाङ्क्षी देखिन्छन् । ती राजाहरुको विवरण अन्यत्र विचार गरिएको छ ।

उक्त २३ वर्षको अवधिमा महत्वाकाङ्क्षी लिच्छवि राजाहरु र भौमगुप्तको बीचमा तानातानको स्थिति रहेको र भौमगुप्त आफ्नो राजनीतिक उच्चताबाट बिस्तारै खस्किंदै जान थालेको पनि मान्न सकिन्छ । तर उनी आफ्नो हैकम कायम राख्न सफलै छन् भन्ने कुरा ई. ५९० मा राजा शिवदेव प्रथमसाथ देखिनाले स्पष्ट हुन्छ । तर यस बेला उनको राजोचित्त 'श्री' को उपाधि कायम नरहेकोले[११] शिवदेवको महत्वाकाङ्क्षाले भौमगुप्तलाई शक्तिविहीन पार्ने उद्योग सफल हुने स्थिति आइपुगेको बुझिन्छ । हुन पनि उक्त मितिपछि भौमगुप्तको उल्लेख नपाइनाले अब आभीर गुप्तको राजनीतिको दोस्रो क्रम समाप्त भयो भन्ने बुझिन्छ ।

भौमगुप्तको पतन गराउने तत्व के के थिए भन्ने विषयमा विचार गर्दा मुख्य दुई पक्ष देखिन्छन् । एक पक्ष त स्वयं लिच्छविवंशी थिए भने आर्को चाहिं वर्मावंशी अंशुवर्मा । यस विषयमा थप चर्चा शिवदेव प्रथम र अंशुवर्माबारे विचार गर्दा गरिने छ ।

गोपालवंशावलीमा जुन किसिमको विवरण पाइन्छ त्यसबाट रविगुप्त र भौमगुप्तको रजानीतिक शक्तिमा निकै अन्तर रहेको बुझिन्छ । सो वंशावलीमा भौमगुप्त, जिष्णुगुप्तको वर्णनको आरम्भमा – "त्यसपछि सूर्यवंशीलाई जिती फेरि गोपालवंशको प्रभावले राज्य गरे"[६२] भनिएको र अन्त्यमा "यी तीन गोपाल राजाहरुले राज्य गरे"[६३] भनिएकोले भौमगुप्तहरुको विशेष राजनीतिक स्थिति रहेको अनुमान गर्नुपर्ने हुन्छ ।

गोपालवंशावलीले भनेका कुराको अक्षरशः अर्थ लगाउने हो भने भौमगुप्तले लिच्छवि राजाहरुलाई जितेर राजा भई राज्य गरेको कुरा मान्नुपर्ने हुन्छ । तर तात्कालिक शिलालेखहरुले भौमगुप्तलाई स्वतन्त्र शासकको रुपमा देखाएका छैनन, कुनै न कुनै राजासँग उनी सम्बद्ध भएका देखिनाले गोपालवंशावलीको भनाई अतिशयोक्तिपूर्ण देखिन्छ । तैपनि भौमगुप्तलाई राजा मान्ने परम्परा सो वंशावलीले सुरक्षित गरेकोले उनी राजा सरहको तहमा पुगेका रहेछन् भन्न सकिन्छ । रविगुप्तको यस्तो कुनै उल्लेख सो वंशावलीमा नभएकोले रविगुप्त र भौमगुप्तको राजनीतिक शक्ति र तहमा निकै अन्तर रहेको मान्न सकिन्छ । आफ्नो राजनीतिक उच्च अवस्थामा उनी "अघोषित राजा" जस्ता थिए र आफूले मनपराएका व्यक्तिलाई राजा थाप्ने स्थितिसम्म पुगेका थिए भन्ने मूल्यांकन धनवज्र वज्राचार्यको छ (ऐजनः २०१) । यो मूल्यांकन सत्यको निकै सन्निकट रहेको मान्न सकिन्छ ।

## देन

भौमगुप्तको स्वतन्त्र परिचय दिँदै गोपालवंशावलीमा भनिएको छ– राजा श्री भूमिगुप्त वर्ष ४५ । तिनले नेपालमा गोली नाम भएको अक्षर (लिपि) चलाए । धरणीवराह विष्णुको प्रतिष्ठा गरे (वज्राचार्य, मल्ल १९८५: ७८) ।[६४] भाषावंशावलीमा पनि भनिएको छ – "श्री राजा भूमिगुप्त भोगवर्ष ४५ दिन राजाले नेपालमा गौडाक्षर प्रवर्त गराया । धरणिवराह विष्णुमूर्ति बनाई स्थापना गऱ्या (पौडेल, २०२०: ८२) ।

वंशावलीको यो भनाईबाट भौमगुप्तले आफ्नो शासनकालमा नयाँ लिपि चलाएको भन्ने बुझिन्छ । यो कुराको सत्यताको परीक्षा गर्न उनका पालाको अभिलेखका लिपिको तुलनात्मक अध्ययन गर्नु आवश्यक छ ।[६५]

वंशावलीको उक्त भनाईबाट चण्डोलको प्रख्यात वराहमूर्ति भौमगुप्तले स्थापना गरेको बुझ्न सकिन्छ । भौमगुप्तले वराहमूर्ति थापेको उक्त सन्दर्भबाट उनी आफ्ना पिता अनुपरमको वैष्णव परम्पराका अनुयायी नै रहेछन् भन्ने बुझ्न सकिन्छ । जिष्णुगुप्तको केवलपुर अभिलेखबाट भौमगुप्तले नुप्पुन्नद्रंगका "भगवान् नारायणस्वामि" को मन्दिरमा पूजाआजाको व्यवस्था गरिदिएको कुरा थाहा पाइन्छ (वज्राचार्य, २०३०: ४१४) ।

भौमगुप्तको समयमा धार्मिक क्षेत्रमा एउटा नौलो प्रयोग भएको पाइनु महत्वपूर्ण छ । संवत् ४८७ (ई. ५६५) मितिको पशुपति देउपाटनको अभिलेखमा



स्वामि नामका एकजना सरकारी कर्मचारी (वार्त्त) ले हरिहरको मूर्ति थापेको वर्णन गरिएको छ (ऐजनः १९८-१९९) । यस अभिलेखमा उनी स्वामिले आफूलाई "परमदैवत श्रीभौमगुप्तका पाउको अनुग्रह पाएको" (परमदैवतश्री भौमगुप्तपादानुध्यातः) भनेकाले हरिहरको संयुक्त मूर्ति थाप्ने सो काम भौमगुप्तको विशेष प्रेरणाले भएको भन्ने पनि बुझ्न सकिन्छ । ज्ञानमणि नेपालको विचारमा एकातिर यो कामले त्यसकालमा विशेष प्रचलित शैव र वैष्णव धर्ममा टक्करको स्थिति नआओस् सामन्जस्य समन्वय होओस् भन्ने धारणा सो अभिलेखबाट बुझिन्छ र आर्कोतिर "शिव र विष्णुमा केही फरक छैन त्यस्तै लिच्छवि र गुप्त शासकमा पनि केही भेद छैन" भन्ने कुराको साङ्केतिक रुपले प्रचार भएको बुझिन्छ (नेपाल, २०४०: ८०-८१) । यो रुपले हेर्ने हो भने हरिहरको संयुक्त मूर्तिको स्थापना गराउने काम भौमगुप्तको राजनीतिक स्वार्थको विधिवत् प्रयोगको रुपमा लिन सकिन्छ ।

'हरिहर' सिद्धान्त मान्ने यो परम्परा भौमगुप्तको अन्तिम अभिलेख ई. ५९० को विष्णुपादुका फेदीको अभिलेखमा पनि कायम भएको पाइन्छ । शिवदेव प्रथमसँग मिली प्रसारित सो अभिलेखको शुरुमा एक एक श्लोकमा वासुदेव र महादेवको स्तुति लेखिएको छ (वज्राचार्य, २०३०: २१४) ।

माथिको चर्चाबाट भौमगुप्त राजनीतिसाथै धार्मिक विषयमा पनि विशिष्ट खालका व्यक्तित्व देखिन आउँछन् । अनुपरमजस्ता वैष्णव, वेदान्ती र उच्च तहका विद्वान्का छोराका रुपमा भौमगुप्तले धार्मिक विषयमा ध्यान दिनु स्वाभाविकै छ । उनको यस्तै धार्मिक व्यक्तित्वलाई स्वामि वार्त्तले 'परमदैवत' को यथोचित उपाधि दिएर सम्मान गरेका छन् ।

अनुपरम र भौमगुप्तले कयम गरेको यो वैष्णव परम्परा पछि उनका सन्तति जिष्णगुप्त र विष्णुगुप्तले अझ विस्तार गरेको थाहा पाइन्छ ।

वैष्णव धर्मपट्टि मात्र हैन शैव धर्मको क्षेत्रमा पनि आभीर-गुप्त परिवारको केही देन रहेको देखिन्छ । अनुपरमगुप्तकी पत्नी आभीरीले ई.५४० मा पशुपति क्षेत्रमा अनुपरमेश्वर शिव मन्दिर बनाई त्यसको राम्रो बन्दोबस्त गरिदिएको सन्दर्भबाट यो कुरो स्पष्ट हुन्छ ।

## लिच्छवि राजाहरुको स्थान

यस अवधिमा नेपालमा कति लिच्छवि राजा भए भन्ने कुरा स्पष्ट छैन तर यस युगमा भएका केही राजाहरुसम्बन्धी अभिलेखहरु पाइनाले तिनको राजनीतिक स्थितिबारे केही अनुमान गर्न सकिन्छ ।

यी आभीरहरुको समयमा लिच्छवि राजाहरुको वास्तविक स्थिति कस्तो थियो भन्ने बारेमा इतिहासकारहरुमा विभिन्न विचार प्रचलित रहेका छन् । आभीर प्रशासकहरुले (रविगुप्तले) वसन्तदेवलाई पदच्युत गरी (आर्के पट्टिका?) "लिच्छवि राजकुमार" लाई गद्दीमा स्थापना गरेर आफ्नो 'अधिनायकवाद' आरम्भ गरेको कुरा बाबुराम आचार्य मान्नुहुन्छ (आचार्य, २०२२ १४९) । यो व्याख्याबाट

आभीर प्रशासकहरु राजतन्त्रको प्रचलित एक राजापछि उनका जेठा छोरानै राजा हुने भन्ने सिद्धान्त नमानी राजा छान्न सक्ने स्थितिमा पुगेका थिए भन्ने बुझ्नुपर्दछ । धनवज्र वज्राचार्य पनि भौमगुप्तलाई "अघोषित राजा" र "आफूले मनपराएका (लिच्छविवंशी) व्यक्तिलाई राजा थाप्ने स्थितिसम्म पुगेका" भनी मान्नुहुन्छ (वज्राचार्य, २०३०: २०१) ।

दुई प्रसिद्ध इतिहासकारहरुको यो भनाईलाई सिद्ध गर्न केही अस्पष्ट खालका प्रमाण त पाइन्छन् । जस्तो जयदेव द्वितीयको पशुपति वंशावली अभिलेखमा वसन्तदेवपछि उदयदेवअघि भएका १२ जना राजाको नामावली छोडिएकोमा यही कालमा "गुप्त आभीरहरुको हातमा शासनको बागडोर रहेको" र लिच्छवि राजाहरु 'नाममात्रका' भएका भन्ने अर्थ गरिएको छ (ऐजन: ५५८) ।

तर उक्त अवधिमा भएका गणदेव, गंगादेव र शिवदेव प्रथमका सरकारी अभिलेखहरुमा 'वप्पपादानुध्यात:' को उपाधि उनीहरुलाई प्रयोग गरिएको देख्दा यस कालमा पनि लिच्छवि राजवंशको उत्तराधिकार परम्परा कायमै रहेको बुझ्न सकिन्छ । यही अवधिमा भएका एक राजा मानदेव द्वितीयको नाम पहिलेका प्रतापी राजा मानदेव प्रथमकै अनुकरणमा रहेको देख्दा पनि उक्त उत्तराधिकार परम्परामा अन्तर नआएको अनुमान गर्न सकिन्छ जस्तो लाग्दछ ।

राजाको पजनी गर्न सक्ने स्थितिमा आभीरहरु पुगेका थिए भन्ने मान्दा त्यस स्थितिमा पुगेर पनि आफैं किन गद्दीमा बस्न सकेनन् भन्ने प्रश्न पनि उठ्दछ । यस 'आभीरवाद' का सबभन्दा बढी ज्ञाता भौमगुप्त गणदेव, गंगादेव र शिवदेव प्रथमलाई गद्दीमा राखी हर्ताकर्ता भएका देखिनु यस सन्दर्भमा विचारणीय छ । आफैं शक्तिले परिपूर्ण भएका भए एक न एक लिच्छवि राजालाई साथै लिएर मात्रै भौमगुप्त किन हिँडिरहेका छन् त? यो एउटा महत्वपूर्ण प्रश्न हो । आफ्नो कार्यकालका तीन दशकभन्दा बढी समयमा पनि भौमगुप्तको प्राय: एकनासको रुप देखिंदा यस्तो अनुमान गर्नु परेको हो ।

यस कालमा भएका लिच्छवि राजाहरु महत्वाकाङ्क्षाविहीन रहेका पनि देखिन्छन्, जस्तो लाग्दछ । यसको मुख्य कारण उनीहरुको सोखीन जीवन शैली हुन सक्दछ ।

शंकरमान राजवंशीको विचारमा पनि रविगुप्त भौमगुप्तहरुले लिच्छवि राजालाई विलासमा भुलाई अल्छी बनाएका थिए (राजवंशी, २०३४-३५: २२) । यो अनुमानसँग समानता राख्ने एक सन्दर्भ भाषावंशावलीमा पाइन्छ । त्यो सन्दर्भमा राजा वसन्तदेव पछि उदयदेव, मं (मनु) देव र गुणकामदेवहरु राजा भएका र गुणकामदेवको वर्णनमा "यिन राजाले राज्याभिषेक पाया उप्रान्त यौवनावस्था प्राप्त भै सुन्दरी स्त्रीहरुकन बोलाई प्रसंग गरी भुलिरहयाका थिया र अन्याय अकीर्ति हुन गयाको थियो । धनै मात्र उपार्जन गरी नीतिको विचार गर्दैनथ्या र यिनका पालामा नीति विध्न भै दुर्भिक्ष भै प्रजाले दुख पाउँदा पछिबाट राजाले अनर्थ भैगएछ भनी विचार ग-या" भनिएको पाइन्छ (पौडेल,



२०२०: ७९) । राजनीतिमा संकट आउने अनेक कारणमध्ये राजाहरु सोखिन हुन जाने तथ्य पनि एक हुनाले उक्त विचार मिल्ने नै देखिन्छ ।

## आभीरगुप्त राजनीतिको स्वरुप

ई. ५१२ तिर रविगुप्तको राजनीतिमा प्रवेश भएदेखि ई ५९० तिर भौमगुप्तको राजनीतिक पतन भएसम्मको ७८ वर्षको अवधि आभीरहरुको जगजगीको कालको रुपमा देखिएको कुरा माथिका विवरणबाट स्पष्ट भएको छ ।

उक्त ७८ वर्षको अवधिसम्बन्धी ऐतिहासिक सामाग्रीहरुको अपर्याप्तताले गर्दा सबै कुरा स्पष्ट छैन । रविगुप्तको ई. ५३३ तिर राजनीतिक अवसान भएपछि उनको राजनीति कसले कायम ग-यो भन्ने बुझ्ने कुनै साधन उपलब्ध छैन । रविगुप्तको ई. ५३३ मा अवसान भएपछि ई. ५५७ मा भौमगुप्तको उदय हुन्जेलको बीचको २४ वर्षको अवधि पनि अन्धकारमय छ । भौमगुप्तकै जीवनसम्बन्धी कालमा पनि ई. ५५७ देखि ई. ५६७ सम्मको उनको प्रशासनिक कार्यकाल र उनको नाम उल्लेख गर्ने ई.५९० को अन्तिम अभिलेखको बीचको २३ वर्ष पनि अन्धकारमय रहन गएकोले वास्तविक स्थिति बुझ्न गाहारो छ । तर हाल उपलब्ध सामाग्रीको आधारमा यहाँ तात्कालिक राजनीतिक स्थितिबारे केही विचार गरिन्छ ।

यी आभीर गुप्तहरु (रविगुप्त, भौमगुप्त) को प्रशासन कालमा अघिका लिच्छवि राजाहरुले बनाएको नेपाल राज्य छिन्न भिन्न हुन लागेको कुरा बाबुराम आचार्यले मान्नुभएको छ (आचार्य, २०३७क: ७) । आभीर गुप्तहरुको कुन नीतिले गर्दा तत्कालीन नेपाल राज्य छिन्न भिन्न हुन लागेको थियो भन्ने कुरा स्पष्ट छैन । शिवदेव प्रथमका पालामा प्रसारित अनेक अभिलेखहरुमा अंशुवर्माले धेरै शत्रुको विनाश गरेको र सामन्तहरुलाई कज्याएको भन्ने माहात्म्य बताइएको हुनाले आचार्यज्यूले त्यस्तो अनुमान गर्नु भएको हुनसक्दछ । अंशुवर्माको व्यक्तित्वको महिमा बताउन यस्ता विशेषणको प्रयोग गरिएको पनि हुनसक्दछ । कुन कुन शत्रुको विनाश गरेको र कुन कुन सामन्तलाई कज्याएको भन्ने सन्दर्भ कुनै अभिलेखमा नपाइने हुनाले उक्त घुमाउरो सन्दर्भको आधारमा आभीरगुप्तहरुमाथि त्यस्तो आरोप लगाइहाल्नु अतिशयोक्ति हुन्छ जस्तो लाग्दछ ।

धार्मिक क्षेत्रमा पनि आभीरगुप्तहरुको नीतिको आलोचना इतिहासकारहरुले गरेका छन् । धनवज्र वज्राचार्य अनुपरमगुप्तको द्वैपायन स्तोत्रमा गरिएको बुद्धमार्गीहरुको निन्दाबारे भन्नुहुन्छ– "लिच्छविकालमा नेपालमा बौद्धधर्मको प्रभाव र प्रचार बढी थियो । यसैले वैदिक परम्पराका भक्त अनुपरमले बौद्धहरुको निन्दा गरेका छन् । उदार धार्मिक भावनाले प्रश्रय पाएको नेपालमा अनुपरमको यस कार्यको समर्थन गर्न सकिँदैन किनभने यसले गर्दा एक धार्मिक सम्प्रदायले आर्को सम्प्रदायको निन्दा गर्ने नराम्रो भावना पैदा भएको थियो । शास्त्रार्थको रुपमा खण्डन मण्डन गर्ने परम्परको रुपमा मात्र यो भावना

सीमित थियो (वज्राचार्य, २०३०: ६३-६४) । आर्को ठाउँमा उहाँले "आमीर गुप्त शासकहरुको धार्मिक नीतिले गर्दा धार्मिक क्षेत्रमा केही वैमनस्य देखापरेको थियो" (ऐजन: ३६९) भन्दै आर्को प्रसंगमा उल्लेख गर्नु भएको छ –"गुप्त आभीरको हातमा शासनाधिकार गएताका धार्मिक क्षेत्रमा एक सम्प्रदायले आर्को सम्प्रदायलाई होच्याउने भावना अलि देखापरेको थियो" (ऐजन: ३२२) ।

यस सन्दर्भमा ज्ञानमणि नेपालको विचार के छ भने लिच्छविकालमा अरु धर्मप्रति अनास्था र तिरस्कार गर्ने प्रवृत्ति पाईंदैन । अनुपरमले बौद्धहरुप्रति जो भाव देखाएका छन् त्यो उनको दार्शनिक विचारबाट प्रेरित थियो । उनी विद्वान् हुनाले विद्वत्ताले विपक्षको मतलाई खण्डन गर्ने उनको लक्ष्य थियो । बौद्ध मत नास्तिक मतको रुपले चिनिएको र ब्रह्मसूत्रमा बौद्ध दर्शनको खण्डन पनि परेकोले ब्रह्मसूत्रका आधारमा बौद्धमतलाई तिरस्कार र बौद्धहरुलाई आक्षेप गर्न अनुपरम अघिसरेका हुन् (नेपाल, २०४०: ८१) । यो व्याख्या मानिएमा आभीर गुप्तहरुले बुद्धमार्गीहरुमाथि अन्याय गरेको वा पक्षपात गरेको भन्ने कुरा अमिल्दो हुन जान्छ जस्तो लाग्दछ । साथै आभीर गुप्तहरुले बौद्धहरुमाथि कुनै किसिमको थिचोमिचो गरेको स्पष्ट प्रमाण नपाइने हुनाले उक्त व्याख्या मिल्दो देखिन्छ ।

## आभीरगुप्तको स्थान

यस युगका ज्ञात दुई गुप्त व्यक्तित्व रविगुप्त र भौमगुप्तको सरकारी पदवी 'सर्वदण्डनायकमहाप्रतिहार' छ । कुनै इतिहासकारले सर्वदण्डनायकको अर्थ सेनापति गरेको भए पनि (सरकार, १९६६: ८०) यो पद अहिलेको प्रहरीको "महानिरीक्षक" समान रहेको मानिएको (वज्राचार्य, २०३०: ११५) ठीक लाग्दछ । राजदरबारको सुरक्षा, राजाको अंगरक्षा र राजाका हजुरियाका काम महाप्रतिहारले गर्दथे तथा ठाउँ ठाउँबाट जनताले राजामा गरेका उजुरीहरु जाहेर गरी निर्णय गराउने काम पनि महाप्रतिहारले गर्दथे भन्ने बुझिन्छ (ऐजन: ११५-११९) । यो अर्थगराइबाट रविगुप्त र भौमगुप्त एकातिर "प्रहरी महानिरीक्षक" तहका राज्यको शान्ति-सुरक्षासम्बन्धी सर्वोच्च कर्मचारी रहेका र आर्कोतिर प्रशासनमा राजाका दाहिने हातजस्तै रहन पुगेका देखिन्छन् । साधारण अवस्थामा ती पदवीधारी व्यक्तिहरु अरु कर्मचारीहरुसँग समन्वय मिलाएर आ-आफ्नो तहमा रही काम गर्दथे भने रविगुप्त र भौमगुप्त विशेष रुपले हर्ताकर्ता देखिन्छन् र यो अवस्थालाई कसैले 'उपराज' (वज्राचार्य, २०३७क: ७) र कसैले 'संयुक्त' वा 'सहायक' शासक मानेका छन् ।

## आभीरगुप्तहरुको देन?

लिच्छविकालमा (बीचको केही व्यवधानलाई छोडेर) ई.५०६ देखि ई.५९० सम्म र ई. ६२४ देखि ई. ६४१ सम्मको राजनीतिमा आभीरगुप्तहरु एक राजनीतिक शक्ति (political force) को रुपमा देखा परेका हुन् । यहां ई. ५०६ देखि ई.५९० सम्मको अवधिमा भएका आभीर गुप्त प्रशासकहरुको नीतिले नेपाललाई कुन किसिमको देन दिएको छ भन्ने कुराको छोटकरी विचार गरिन्छ।



### (क) बौद्धिक क्षेत्र

अनुपरमगुप्त राजनीतिमा संलग्न थिए थिएनन् भन्ने तथ्य स्पष्ट नभए पनि उनको विद्वत् व्यक्तित्व भने उनको हाँडीगाउँ सत्यनारायणस्थानको 'द्वैपायनस्तोत्र' ले स्पष्ट पारेको छ । सो स्तोत्रको रचनाशैली र आन्तरिक विषयवस्तुबाट अनुपरम उच्चकोटिका विद्वान् रहेका र उनी आफ्नो समयका वैदिक सनातनी आस्तिक परम्पराका एक शक्ति-स्तम्भ रहेका देखिन आउँछन् । यस किसिमको बौद्धिकता लिच्छवि राजाहरुमा देखिँदैन । उनको यो बौद्धिकता उनका सन्ततिहरुले कतिसम्म कायम गर्न सके भन्ने कुरा स्पष्ट छैन तर अनुपरमको सो शक्ति भौमगुप्त, जिष्णुगुप्त र विष्णुगुप्तहरुमा धार्मिकताको रुपमा कायम भएको भने पाइन्छ ।

### (ख) वैष्णव धार्मिक परम्परा

अनुपरमको द्वैपायनस्तोत्रबाट आभीरगुप्त परिवारको वैष्णव धर्मसँग घनिष्टता रहेको थाहा पाइने र सो परम्पराको विस्तार भौमगुप्त, जिष्णुगुप्त र विष्णुगुप्तहरुले गरेको देख्दा नेपालको इतिहासमा वैष्णव धर्मको प्रचार प्रसार गर्ने काममा यो आभीरगुप्त वंशको ठूलो देन रहेको बुझिन्छ । हुन त लिच्छवि राजाहरु पनि वैष्णव धर्मावलम्बी नै थिए र उनीहरुले पनि आफ्नो किसिमले वैष्णव धर्मको विकासमा देन दिएका हुन् तर ज्ञात ऐतिहासिक कालमा उनीहरुको सक्रियता आभीर गुप्तहरुको जति स्पष्ट छैन ।

### (ग) स्थानीय स्वायत शासनलाई प्रोत्साहन

रविगुप्तले सर्वप्रथम गाउँहरुलाई स्वशासनसम्बन्धी केही अधिकार सुम्पिँदै जाने नीतिको आरम्भ गरेको थाहा पाइन्छ । यो नीति किन लिइएको हो भन्ने कुराबारे धनवज्र वज्राचार्यको के भनाई छ भने गद्दीनशीन लिच्छवि राजालाई अँठ्याई राजकाज गर्दा प्रजाहरुमा असन्तोषको भावना फैलिएला भन्ने शंका गरी रविगुप्तले सो नीति लिनुपरेको हो (वज्राचार्य, २०३०: १११, वज्राचार्य र श्रेष्ठ, २०३२ १६) ।

रविगुप्तको यही नीति भौमगुप्तले पनि कायम गरेका थिए र यस कारणले रविगुप्त र भौमगुप्तको प्रशासनकालमा प्रसारित अधिकांश अभिलेखहरु यही नीति कार्यान्वियन गर्न प्रसारित भएका देखिन्छन् ।

यो नीतिको आरम्भ भएपछि अंशुवर्मासमेतले यसलाई अनुसरण गर्नु परेको थियो । यो नीति लागूगर्ने कुराले तत्कालीन राजनीतिमा के प्रभाव पऱ्यो भन्ने कुरा त्यति स्पष्ट छैन ।

**शिवदेव प्रथम**

संवत् ५१२ अथवा ई. ५९० को विष्णुपादुका फेदीको अभिलेखसाथ राजा शिवदेव इतिहासमा देखापर्न आउँछन् । योसमेत उनका १६ शिलालेख पाइन्छन् । यी अभिलेखहरु र अन्य सन्दर्भहरुबाट यिनको राजनीतिक स्थिति विशेष चाखलाग्दो र नौलो देखिन आएको छ ।

विष्णुपादुकाफेदीको संवत् ५१२ वा ई. ५९० को अभिलेख शिवदेव प्रथमको पहिलो अभिलेख हो । यसमा उनको उपाधिको रुपमा 'लिच्छविकुलकेतु' "लिच्छविकुलको झण्डा स्वरुप भएका" जस्तो प्रभावशाली विशेषणको रुपमा र माहात्म्यको रुपमा "बढ्दै गइरहेको (शुक्लपक्षको) चन्द्रमाको जून जस्तो सफा कीर्ति फैलिएका (सततसमुपचीयमान (शाशांक) किरणामलयशःप्रतानो) पनि लेखिएको छ (वज्राचार्य, २०३०: २१४-२१५) । तर यो अभिलेखमा सर्वदण्डनायकमहाप्रतिहारको उपाधिसाथ भौमगुप्त राजाका सल्लाहकारका रुपमा कायमै रहेका छन् । उनको यो उपस्थितिले तात्कालिक राजनीतिक स्थिति विचित्रको देखिन आएको छ ।

ई. ५५७ मा राजा गणदेवसाथ राजनीतिमा संलग्न देखिन थालेका यी भौमगुप्त ई. ५६७ मा राजा गंगादेवसाथ पनि देखिई बीचका २३ वर्षको "अन्धकार युग" बाट पनि गुज्रिएर ई. ५९० मा शिवदेवसाथ फेरि देखिन आउनु महत्वपूर्ण छ । यस कुराको विशेष व्याख्या माथि भौमगुप्तको वर्णनमा गरिसकिएको छ । यसरी ३३ वर्षसम्म राजनीतिमा संलग्न भौमगुप्त फेरि इतिहासका पानाबाट लुप्त हुन जान्छन् । शिवदेवका अरु अभिलेखमा फेरि यिनको उल्लेख भएको पाइदैन ।

यस परिस्थितिमा हामीलाई गोपालवंशावलीको सन्दर्भले तात्कालिक इतिहासको गति बुझ्न ठूलो मद्दत दिएको छ । त्यसमा भूमिगुप्तको वर्णन गरेपछि –"अनि फेरि पनि प्रभाव जमाई सूर्यवंशी राजा भए । राजा शिवदेव भए, वर्ष ४१" यस्तो विवरण लेखिएको छ (वज्राचार्य, मल्ल, १९८५: ७८) ।[६६] गोपालवंशावलीको यो संक्षिप्त विवरणबाट शिवदेवले गोपाल - गुप्तवंशी भूम - भौमगुप्तलाई हटाई आफ्नो सूर्यवंशी लिच्छविको प्रभाव स्थापित गरी शासन गर्न थालेका हुन् भन्ने तथ्य बुझ्न सकिन्छ । यस्तै कारणले माथि चर्चित विष्णुपादुकाफेदीको अभिलेखमा शिवदेवको लागि प्रभावशाली विशेषणहरु र विरुदावलीको प्रयोग गरिएको हो भन्ने बुझ्न सकिन्छ ।

आफ्नो पहिलो अभिलेखमा शिवदेवले आफ्नो व्यक्तित्वको प्रभाव देखाउने प्रयास गरे पनि उनी भौमगुप्तलाई उपेक्षा गर्ने स्थितिमा पनि पुगिसकेका देखिँदैनन् । यस अभिलेखको वक्तव्यका निहित अर्थबाट भौमगुप्त ज्यादै होच्चिइसकेका छन् भन्ने पनि बुझ्न सकिएको छ ।

उक्त अभिलेखपछि तीन ओटा उल्लेखनीय अभिलेख पाइएका छन् जुनलाई शिवदेवले प्रसारित गरेको देखिन्छ । यी तीन अभिलेखमध्ये एउटा चापागाउँमा पाइएको अभिलेख हो जुन खण्डित हुनाले मिति सबुत छैन (वज्राचार्य, २०३०:



२२४-२२५) । तर यसमा राजा शिवदेवको नाउँ साबुत छ । उनलाई 'लिच्छविकुलकेतु' उपाधि सार्थ 'अपरिमितयश' (ठूलो यश फैलिएका) भन्ने विशेषण लगाइएको छ । यसपछि ललितपुर च्यासलटोलको अभिलेख पाइन्छ जुन खण्डित हुनाले यसको मिति संवत् ५१५ (ई.५९३) बाट मात्र यो शिवदेवको हो भन्ने बुझ्न सकिन्छ (ऐजन: २२९-२३०) । यसपछि आर्को अभिलेख भक्तपुर कुम्हालेटोलबाट पाइएको छ जुन ज्यादै खण्डित भए पनि यसमा 'लिच्छविकुलकेतु' को उल्लेख भएकोले यसलाई शिवदेवकै मान्न सकिन्छ । संवत् ५१६ (ई. ५९४) देखिएका अभिलेखमा अंशुवर्माको उल्लेख हुन थालेकोले उक्त तीन अभिलेख राजा शिवदेवले स्वतन्त्र रुपमा प्रसारित गरेको बुझिन्छ । उक्त तीनै अभिलेखहरुमा भौमगुप्तको नामोल्लेख नभएकोले उनको राजनीतिक अस्तित्व समाप्त भएको बुझ्न सकिन्छ ।

उक्त संक्षिप्त विवरणबाट गोपालवंशावलीले लक्ष्य गरेको राजनीतिक अवस्था स्पष्ट हुन आउंछ– गोपाल– गुप्त वंशलाई शिवदेवले परास्त गरेर आफ्नै हातमा सम्पूर्ण शासनाधिकार लिएर स्वतन्त्र रुपमा राजकाज गर्न थाले । संवत् ५१२ पछि संवत् ५१५ सम्मका अभिलेखहरु खण्डित भएकाले स्थिति स्पष्ट गर्न गाहारो भएको छ । तर संवत् ५१२ र ५१५ (ई. ५९३) को बीचमा भौमगुप्तलाई पन्छाउन शिवदेव सफल भए भन्ने अनुमान गर्न सकिने देखिन्छ ।

शिवदेवको संवत् ५१६ (ई. ५९४) देखिका अभिलेखहरुमा सामन्त र महासामन्तका रुपमा प्रभावशाली व्यक्तित्वका रुपमा राजाका सल्लाहाकारको काम गर्ने अंशुवर्मा अनिवार्य रुपले उपस्थित रहने गरेका छन् । यो स्थितिमा ई. ५९० तिर भौमगुप्तलाई हटाउने काम पृष्ठभूमिमा बसेर अंशुवर्माले गरेको भन्ने अर्थ इतिहासकारहरुले गरेका छन् । शिवदेवका संवत् ५२६ सम्मका अभिलेखहरुमा अंशुवर्माको स्थिति यस्तै रहेको र नयाँ क्रमको संवत्को थालनी गरी स्वतन्त्र अभिलेख प्रसारित्त गर्ने स्थितिमा अंशुवर्मा पुगेका देखिन्छन् । अंशुवर्माले स्वतन्त्र अभिलेखहरुमा संवत् २९ देखि ४४ सम्मको मितिको उपयोग गरेका छन् । साधारणतया विचार गर्दा संवत् ५२६ शक संवत् मानिएमा ई. ६०४ हुन्छ, नयाँ संवत् ई. ५७६ मा शुरु भएको मानी गणना गर्दा अंशुवर्माको पहिलो स्वतन्त्र अभिलेखको संवत् २९ ई. ६०५ हुन्छ । यो गणनाअनुसार ई. ६०४ सम्म शिवदेव र अंशुवर्मा साथ साथ राजनीतिमा रहेका देखिन्छन् भने ई. ६०५ देखि अंशुवर्मा स्वतन्त्र शासक देखिन्छन् ।

अंशुवर्माले आफूले प्रसारित गरेका अभिलेखहरुमध्ये संवत् ३७ वा ई. ६१३ देखिका अभिलेखहरुमा दूतकका रुपमा युवराज उदयदेवलाई राख्न थालेका छन् । उदयदेव शिवदेवकै छोरा थिए भन्ने अन्य स्रोतबाट थाहा पाइन्छ ।

यहाँनिर एउटा समस्या उठेको छ । काठमाडौं ज्याबहालमा एउटा खण्डित अभिलेख रहेको छ जसमा संवत् ५२५ वा ई. ६१३ को मिति लेखिएको छ । संवत् ५२६ पछि शिवदेवले अंशुवर्मालाई राजकाज सुम्पेर आफू निष्क्रिय भएर मानगृहमा बसिरहेका थिए । त्यस्तै अवस्थामा उनले केही धार्मिक कीर्ति गरी

जग्गा गुठी राखी यो अभिलेख प्रसारित गरेका हुन् भन्ने अर्थ धनवज्र वज्राचार्यले गर्नु भएको छ (वज्राचार्य, २०३०: ३४४) । यस घटनाको लगत्तै पछि नै शिवदेव मानगृह छोडी भिक्षु भएर हिँडे र यसपछि नै अंशुवर्माले शिवदेवका छोरा उदयदेवलाई युवराज भएको घोषणा गरेका हुन् भन्ने पनि उहाँको विचार छ (ऐजन: ३४४) । अंशुवर्माका संवत् ३७ ई. ६१३ देखिका अभिलेखमा उदयदेव युवराजका रुपमा देखिनाले उक्त व्याख्या मिल्न गएको जस्तो लाग्दछ । तर हालै गोकर्णबाट पाइएको अंशुवर्माले एक्लै प्रसारित गरेको अभिलेखमा शिवदेवले प्रयोग गर्ने गरेको संवत्कै प्रयोग गरेको देख्दा एक नयाँ समस्या उत्पन्न भएको मानिएको छ । गोकर्णबाट पाइएको सो अभिलेखमा संवत् ५३६ लेखिएको देख्दा माथि चर्चित ज्यावहालको संवत् ५३५ को अभिलेख पनि अंशुवर्माले नै प्रसारित गरेको देखिन्छ भन्ने शंकरमान राजवंशीको विचार छ (राजवंशी, २०४७क: २३)। यो अभिलेखको बारेमा शंका उठाइए पनि शिवदेवले राजनीतिको सूत्रसँग सम्पर्क छोडेपछि नै उनका छोरा उदयदेवलाई आफ्ना युवराज घोषित गरेको हुनु असम्भव लाग्दैन ।

धनवज्र वज्राचार्यले ई. ६१३ तिर शिवदेवले दरबार छोडी भिक्षु भए भन्ने विचार प्रस्तावित गर्नु भएको छ र सो कुरा वंशावलीमा वर्णित छ भनेर भन्नुभएको छ (वज्राचार्य, २०३०: २९२) । गोपालवंशावलीमा शिवदेवले "विहारगर्भ बनाई प्रतिष्ठा गरेको र ठूलो खासौ चैत्य" बनाएको मात्र भनिएको छ (वज्राचार्य, मल्ल, १९८५: ७७) ।[६७] राजा नरेन्द्रदेवको ई. ६७९ का दुइटा अभिलेखमा वर्णन भएको श्रीशिवदेवविहारलाई (वज्राचार्य, २०३०: ४९६-४९७, ४९९) शिवदेवले भिक्षु भई बनाएको मानिएको छ (ऐजन: ५०३) । शिवदेवविहार नै अहिलेको बौद्ध वा खास्तीचैत्य मानिएको छ ।

शिवदेव बौद्ध भिक्षु भएको कुरा विचारणीय छ । गोपालवंशावलीमा शिवदेवले बौद्धविहारको निर्माण गरेको उल्लेख त गरिएको छ तर उनी भिक्षु भएको बताइएको छैन तर एकथरी भाषावंशावलीमा शिवदेव भिक्षु भएको बयान गरिएको नपाइने त होइन (राइट, १९६६: ८६-८७) । जे होस्, शिवदेवले स्वेच्छाले वा करले राज्यत्याग गरेपछि अंशुवर्माले एकलौटी शासनसूत्र सम्हाल्न थालेको थाहा पाइन्छ । तर अंशुवर्माले ई. ६१३ तिर शिवदेवकै छोरा उदयदेवलाई आफ्ना उत्तराधिकारी घोषणा गरेको देख्दा अंशुवर्माको नीति विशेष खालको देखिन आउँछ । यस्तो विशेष खालको परिस्थिति आउनाको कारण शिवदेव र अंशुवर्माको आत्मीय नाता भएको र अंशुवर्माको आदर्श नीति पनि रहेको अनुमान गर्न सकिन्छ ।

गोपालवंशावलीमा जुन किसिमले शिवदेव र अंशुवर्मासम्बन्धी विवरण दिइएको छ त्यसबाट तात्कालिक स्थिति बुझ्न सजिलो परेको छ । त्यहाँ भनिएको कुरा निम्न उद्धृत बमोजिम छ–



"अनि फेरि पनि प्रभाव जमाई सूर्यवंशी राजा भए । राजा शिवदेव भए वर्ष ४१ । तिनका भानिज राजा श्री अंशुवर्मा भए । (वज्राचार्य, मल्ल, १९८५: ७८) ।[६८]

गोपालवंशावलीमा वंशपरिवर्तनको घटना स्पष्टसँग लेखिएको पाइने हुनाले र अंशुवर्माको सन्दर्भमा त्यस्तो टिप्पणी नलेखिएको देख्दा अंशुवर्माको शासनकाललाई पनि वंशपरिवर्तनको घटना नमानिएको बुझिन्छ । उनले उदयदेवलाई युवराज बनाएको हुनाले पनि उक्त कुराको पुष्टि हुन आएको छ। गोपालवंशावलीमा अंशुवर्मालाई शिवदेवकी बहिनीका छोरा भनिएको हुनाले पारिवारिक नाताको आधारमा शिवदेव र अंशुवर्माको समयको राजनीति निर्धारित भएको हो कि जस्तो लाग्दछ । यसबारे अंशुवर्माबारे अध्ययन गर्दा विशेष विचार गरिने छ ।

शिवदेव प्रथमको शासनकाल संवत् ५१२ (ई. ५९०) देखि संवत् ५२६ (ई. ६०४) सम्म जम्मा १४ वर्ष रहेको कुरा उनका अभिलेखहरुले बताएका छन्। उनले शासनभार अंशुवर्मालाई बुझाई संवत् ५३५ (ई. ६१३) सम्म मानगृहमा बसेको विचार मान्ने हो भने उनको यस्तो जीवनको अवधि संवत् ५२६ देखि संवत् ५३५ सम्म जम्मा ९ वर्ष रहेको अनुमान गर्न सकिन्छ । ती दुबै कालावधिलाई जोडेर हेर्ने हो भने उनको समय जम्मा २३ वर्ष रहेको देखिन्छ ।

गोपालवंशावलीमा शिवदेव प्रथमको वर्णन गरेपछि –"त्यसपछि भोटान्त देशले चढाइ ग-यो" (तत्पश्चाद् भोतान्तदेशेनमागतम्) भनिएको छ (वज्राचार्य, मल्ल, १९८५: २९, ७७) ।

गोपालवंशावलीले टिपेको यो सूत्रात्मक टिप्पणीको ठीक व्याख्या गर्न सकिएको छैन ।[६९]

### अंशुवर्मा

लिच्छविकालको इतिहासमा अंशुवर्माको विशिष्ट स्थान रहेको देखिएको छ। यसको एक प्रमुख कारण त अंशुवर्मासिंग सम्बद्ध ऐतिहासिक सामग्री र सन्दर्भहरुको अपेक्षाकृत प्रचुरता पनि हो जसको सहयोगबाट हामी उनीबारेमा धेरै कुरा थाहा पाउन सक्ने स्थितिमा आइपुगेका छौं ।

अंशुवर्माबारे जान्ने स्रोतहरुमध्ये शिलालेख प्रमाणहरु मुख्य छन् र यिनको स्वरुपगत भेद पनि निकै छन् । शिवदेव प्रथमले प्रसारित गरेका १६ शिलालेखहरुबाट यिनको आरम्भिक इतिहास थाहा पाइन्छ भने स्वयम् उनले प्रसारित गरेका सग्ला र खण्डित गरी २० शिलालेखहरुले उनको इतिहासको आर्को रुप प्रस्तुत गरेको पाइन्छ । जनताले लेखाई राखेको उनका पालाका अरु तीन अभिलेखहरु पनि उपलब्ध भएका छन् । लिपिको आधारमा उनको पालाका मान्न सकिने ९ ओटा खण्डित अभिलेखहरुको गणना पनि यहाँ गर्न सकिन्छ । उनको नाउँ लेखिएका दुइटा ईंट पाइनु पनि एक सुरम्य संजोग भएको छ ।

साथै उनले छपाएका टकहरु, उनीपछिका शासकहरुले उनको नामोल्लेख गरेका सन्दर्भ र विदेशी यात्रीको टिपोटले पनि उनको इतिहासको निर्माण गर्न सहयोग दिएका छन् । इतिहासकारहरुका निरन्तर सहचर वंशावलीहरुको उपादेयता पनि अंशुवर्माको सन्दर्भमा कायमै रहेको छ ।

अंशुवर्माको इतिहासको दुइ रुप देखिन्छन्, राजा शिवदेव प्रथमका सहायकका रुपमा र स्वतन्त्र राजनीतिक व्यक्तित्वका रुपमा । यहाँ उक्त दुइ खण्डका हिसावले अंशुवर्मासिम्वन्धी विवरण प्रस्तुत गरिन्छ ।

**शिवदेव प्रथमका सहायक अंशुवर्मा**

शिवदेव प्रथमका संवत् ५१६ देखिका अभिलेखहरुमा अंशुवर्माको अनिवार्य र निरन्तर उपस्थितिबाट लिच्छविकालको इतिहासको आर्को मोड शुरु हुन्छ । शिवदेव प्रथमका सहायकका रुपमा अंशुवर्माका उपलब्धिका पनि दुइ रुप देखिन्छन् – श्री सामन्त तथा श्री महासामन्त ।

**श्रीसामन्त अंशुवर्मा**

शिवदेव प्रथमका संवत् ५१६ का केही अभिलेखहरुमा 'श्रीसामन्त' उपाधिसाथ अंशुवर्मा देखिन थाल्दछन् । पाटन भीमसेनस्थानको अभिलेखमा संवत् ५१६ (ई. ५९४) लेखिएको छ र यसमा श्रीसामन्त उपाधिसाथ अंशुवर्माको उल्लेख राजाका सल्लाहकारका रुपमा भएको छ (वज्राचार्य, २०३०: २४४-२४५) मिति खण्डित भएको चाँगुको अभिलेखमा पनि अंशुवर्माको यही उपाधि छ (ऐजन: २३३)। बनेपाको खण्डित अभिलेखमा पनि अंशुवर्माको उल्लेख भएको छ । तर यसमा उनको जस्तो उपाधि लेखिएको छ त्यसबारेमा ठीक ठीक व्याख्या गर्न अप्ठेरो परेको छ । यसमा अंशुवर्माको नामको अगाडि "महा... धिराज श्रीसामन्त" उपाधि दिइएको छ (ऐजन: २४०) । उक्त खण्डित भागमा के लेखिएको थियो भन्ने बारेमा धनवज्र वज्राचार्यले 'महामात्याधिराज' वा 'महामन्त्राधिराज' रहेको हुन सक्ने अनुमान गरी त्यस समयमा अंशुवर्माले अमात्य परिषदको नेतृत्व गरेको अनुमान गर्नु भएको छ (ऐजन: २४२) । शंकरमान राजवंशीले यस्तै विचार गर्नु भई त्यस सन्दर्भले त्यति खेर अंशुवर्मा प्रधानमन्त्री भएको अनुमान गर्नु भएको छ (राजवंशी, २०३४-३५: २३) ।

माथि चर्चित सबै अभिलेखहरुमा अंशुवर्मालाई प्रभावशाली विशेषणहरु लेखिएको हुनु खास महत्वपूर्ण छ । पाटन भीमसेनस्थानको अभिलेखमा "(सामन्त राजाहरुले), ... दुवै पाउ ढोगिएका, सफा ठूलो कीर्ति फैलिएका" (... प्रणत ... चरणयुगलेन प्रख्यातामलविपुलयशसा) भनेर अंशुवर्माको विशेषण लेखिएको छ (वज्राचार्य, २०३०: २४४-२४५) । यसैगरी चाँगुको अभिलेखमा अंशुवर्मालाई "दिशाको छेउ-छेउसम्म कीर्ति फैलिएका, ढोग्न आएका सामन्त राजाका शिरपेचका मणिको चहकले पाउ झलमल्ल सुहाएका"



(स्वयशोमरीचिविस्तारव्याप्ताशेषदिङ्मण्डलेनप्रणतसामन्तशिरोमणिमयूखविक्षुरितचरणारविन्दद्युतिना) भनेर अंशुवर्माको तारीफ गरिएको छ (ऐजन: २३३) । बनेपाको खण्डित अभिलेखमा पनि "विद्याद्वारा भएको ज्ञानले ... विशेषवाद भएका, दिशाको छेउ-सम्म कीर्ति फैलिएका ... सारा सामन्तहरुले ढोगिएका ..."(अनेकविद्यामयपरिज्ञान...विशेषवादेनदिगन्तरविसारियश:समूह प्रणताशेषसामन्तमण्डलेन...)भनी उनको विशेषण लेखिएको पाइन्छ (ऐजन: २४०)।

राजा शिवदेवको भाकाबाट प्रसारित अभिलेखमा राजाले सामन्त स्वरुपका अंशुवर्मालाई यस्ता यस्ता विशेषण लेखाएको देख्दा अंशुवर्माको स्थिति विशेष खालको रहेछ भन्नुपर्ने देखिन्छ ।

**श्रीमहासामन्त अंशुवर्मा**

आश्चर्यको कुरो छ संवत् ५१६ मैं श्रीसामन्त उपाधि र विशेष खालका विरुदावलि साथ राजाका प्रभावशाली सहायकका रुपमा देखिने अंशुवर्मा शिवदेवका संवत् ५१६ कै अरु अभिलेखमा श्रीमहासामन्तको तहमा उक्लिसकेका देखिन्छन् । संवत् ५१६ का दुई अभिलेखहरुमा अंशुवर्मा श्रीमहासामन्त उपाधिसाथ देखिएका छन् (ऐजन: २४९, २५३) । यी दुवै अभिलेखमा अंशुवर्मालाई "सफा र ठूलो कीर्ति फैलिएका, आफ्नै पराक्रमले शत्रुको दवदवालाई खतम पारेका" (प्रख्यातामलविपुलयशसा स्वपराक्रमोपरामितामित्रपक्षप्रभावेन) भन्ने एकै भाकाका विशेषण लेखिएको छ ।

एकै वर्षको अवधिमा श्रीसामन्तबाट श्रीमहासामन्तको तहमा पदोन्नति भएको यो घटना उल्लेखनीय छ । शंकरमान राजवंशीको भनाईमा अंशुवर्माको बढ्दो उन्नति उत्कर्षमा डाहा गर्ने गुप्तहरुले अंशुवर्मालाई खतम गरी शिवदेवको गद्दी खोस्ने षडयन्त्र गरेकोमा सो अंशुवर्माले विफल पारेकाले उनको पदोन्नति भएको हो (राजवंशी, २०३४-३५: २३) । संवत् ५१७ देखि ५२६ सम्मका सबै अभिलेखहरुमा अंशुवर्माको उपाधि श्रीमहासामन्त कायमै रहेको पाइन्छ । तर यस अवधिका अभिलेखहरुमा अंशुवर्माको विशेषणमा अभिवृद्धि हुँदै गएको पाइन्छ । त्यस्ता विशेषणहरुको सूची यस प्रकारको छ–

१. **संवत् ५१७ (ई. ५९५ ) को धर्मस्थली अभिलेख (वज्राचार्य, २०३०: २५७-२५८)**

ढोग्न नुहेका अनेक (सामन्त) राजाका शिरपेचका मणिका चहकले दुवै पाउ झलमल्ल सुहाएका, परिश्रमपूर्वक राम्ररी प्रजाको पालन गर्नाले दिशाको छेउ छेउसम्म प्रभाव फैलिएका श्रीमहासामन्त अंशुवर्मा(...पनमितानेकक्षितिपतिशिरोविभूषणमणिरुचावभासितचरणयुगलेन सम्यकप्रजापालनपरिश्रमोपार्जितदिगन्तव्याप्तपराक्रमश्रीमहासामन्तांशुवर्मा) ।

२. **संवत ५१७ (ई.५९५) को बूढानीलकण्ठको अभिलेख:**

ठूलो लडाईंको मैदानमा बाजी मार्दा भएको शु-याईको प्रभावले सारा शत्रुहरुको दबदबालाई सखाप पारेका, परिश्रमपूर्वक राम्ररी प्रजाको हेरचाहा गर्नाले आर्जेको सफा कीर्तिले दिशाका छेउछाउ ढाकेका श्रीमहासामन्त अंशुवर्मा (पृथुसभासम्पातनिर्जयाधिगतशौर्यप्रतापोपहत सकलशत्रुपक्षप्रभावेनसम्यक्प्रजापालनपरिश्रमोपार्ज्जितशुभ्रयशोभिव्याप्तदिङ्मण्डलेनश्रीमहासामन्तांशुवर्म्मणा) ।

३. **संवत ५१९ (ई.५९७) को सतुंगलको अभिलेख:**

शरद ऋतुका बादल नभएका चन्द्रमा जस्ता (उज्यालो) मुख भएका, शत्रुहरुले बल पराक्रम थाहा पाइएका श्रीमहासामन्त अंशुवर्मा (शरद्धनशशांकमुखेनशत्रुसंख्याप्रमितबलपराक्रमेण श्रीमहासामन्तांशुवर्मणा) (ऐजन: २६३-२६४) ।

४. **संवत् ५२० (ई. ५९८) को खोपासीको अभिलेख:**

आफ्ना गुणरुपी मणिका किरणको उज्यालोले अज्ञानरुपी अन्धकार हटाएका, भगवान् पशुपतिनाथका चरणकमललाई प्रणाम गर्न तत्पर रहेका हुनाले पछिका हित कल्याण गरेका, आफ्ना दुइ बाहुका बलले सारा शत्रुको जरो खनेका श्रीमहासामन्त अंशुवर्मा (स्वगुणमणिमयूखालोकध्वस्ताज्ञानतिमिरेण भगवद्भवपादपंकजप्रणामानुष्ठानतात्पर्योपायात्तायतिहितश्रेयसा स्वभुजयुगबलोत्खाताखिलवैरिवर्गेण, (ऐजन: २७४-२७५)।

५. **संवत् ५२६ (ई.६०४) को धापासीको अभिलेख:**

ठूलो लडाई हुँदा जितबाजीबाट भएको पराक्रमले नुहाइएका अरु राजाहरुका शिरपेचका मणिका किरणले दुबै पाउ सुहाएका, जम्मै सामन्तहरुलाई हेर्दा ... आँखा भएका श्रीमहासामन्त अंशुवर्मा (पृथुसमरसम्पातानिर्जयाधिगतपराक्रमोपनमितान्यक्षितिपतिशिरोमणि प्रभाभासितचरणारविन्दयुगलेनाशेषसामन्तावगाहनि ... कृत ... न्दच्चक्षुषा श्रीमहासामन्तांशुवर्म्मणा) (ऐजन: २७९-२८०) ।

६. **लेलेको संवत् ५२६ (ई. ६०४) को अभिलेख:**

सधै पुण्यको कामको ताँतीले बढ्दै गएको सफा कीर्तिको फैलावटले दिशा ढाकेका श्रीमहासामन्त अंशुवर्मा (अनुपरतपुण्यसन्तानोपचीयमानविशदकीर्तिमालामोदितदिगन्तर: श्रीमहासामन्तांशुवर्मा) (ऐजन: २८२-२८३) ।

यसरी ई. ५९४ देखि ६०४ सम्मका शिवदेवका शिलालेखहरुमा अंशुवर्मा प्रभावशाली व्यक्तिका रुपमा देखिनु इतिहासको दृष्टिले महत्वपूर्ण छ ।



ई. ५९० मा भौमगुप्तसाथ फुर्तिला राजाका रुपमा देखिएका शिवदेव त्यसपछि ई.५९३ सम्म भौमगुप्तको चंगुलबाट पूरा मुक्त भई एक्लै राजाज्ञा प्रसारित गर्ने अवस्थामा पुगेका देखिन्छन् । तर यो स्वतन्त्रताको उपभोग उनले धेरै गर्न सकेनन् र ई. ५९४ देखि भौमगुप्तको ठाउँमा अंशुवर्मा देखापर्न थाल्दछन् । यो स्थितिमा ई. ५९० तिरदेखिनै अंशुवर्मा भौमगुप्तलाई राजनीतिक क्षेत्रबाट पन्छाउने काममा शिवदेवका सल्लाहकारका रुपमा पृष्ठभूमिमा रहँदै आएका थिए भन्ने इतिहासकारहरुको अर्थ गराई निकै सम्भव लागेर आउँछ (ऐजन: २३५-२३६) ।

**अंशुवर्मा संयुक्त शासक?**

उपर्युक्त संक्षिप्त विवरणबाट तात्कालिक राजनीतिमा अंशुवर्माको विशेष खालको स्थान थियो भन्ने त स्पष्टै भएको छ । शिवदेवको नाउँमा प्रसारित गरेका सबै अभिलेखहरुमा अंशुवर्माका लामा लामा विशेषण र "श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाएर हाम्रो आज्ञा लिई ... यस्तो यस्तो निगाहा गरिएको छ भन्ने लेखाइएको पाइन्छ (ऐजन: २७९) ।[७०] शिवदेव र अंशुवर्माको यस्तो राजनीतिक सम्बन्धलाई इतिहासकारहरुले 'संयुक्तशासन' को अवस्था मानेका छन् र अंशुवर्मालाई शिवदेवका संयुक्त शासक (ऐजन: २३७) ।

शिवदेवका नाममा प्रसारित भएका शिलालेखहरुमा अंशुवर्माको राजनीतिक स्तर दुई किसिमको देखिन्छ – ई. ५९४ देखि ५९७ सम्मको एक किसिमको स्थिति र ई. ५९८ देखि ई. ६०४ सम्मको आर्को स्थिति ।

अघिल्लो अवस्थामा शिवदेवले आफ्नै नाममा शिलालेख प्रसारित गरेको देखिन्छ भने दोस्रो अवस्थामा शिवदेवको आज्ञा लिएर अंशुवर्माले आफैले शिलालेख प्रसारित गरेका छन् । संवत् ५२० (ई. ५९८) को खोपासी अभिलेख र संवत् ५२६ (ई. ६०४) का धापासी र लेलेका अभिलेख दोस्रो राजनीतिक अवस्थाका परिचायक देखिएका छन् । यस आधारमा धनवज्र वज्राचार्यले अंशुवर्माको स्वतन्त्र शासनको भूमिका ई. ५९८ देखिने बन्न थालेको मान्नु भएको छ (ऐजन: २८१, २८२, २८४, २९२) ।

**स्वतन्त्र शासक अंशुवर्मा: ई ६०५-६२०**

राजा शिवदेव प्रथमका सहायकका रुपमा अंशुवर्माको राजनीतिक शक्ति कसरी बढ्दै गएको थियो भन्ने कुराको चर्चा माथि गरिसकिएको छ । ई.५९४ देखि ५९८ सम्मको गतिविधिपछि ई. ५९८ देखि ६०४ सम्म अंशुवर्मा स्वतन्त्रप्राय भइसकेको तथ्यको चर्चा पनि गैसकेको छ । ई. ६०५ देखि त अब अंशुवर्मा स्वतन्त्रताको आर्को तहमा उक्लिसकेका देखिएका छन् ।

अंशुवर्माले शिवदेवबाट स्वतन्त्रता पाएर शासन गरेपछि प्रसारित गरेका अभिलेखहरुमा जुन किसिमका विवरण परेका छन् तिनबाट उनको तीन किसिमको स्थिति रहेको देखिएको छ :–

| | | | |
|---|---|---|---|
| (क) | श्रीमहासामन्त | - | ई. ६०५ - ६१४ |
| (ख) | श्री | - | ई. ६१५ |
| (ग) | श्रीमहाराजाधिराज | - | - |

यसरी शिवदेवका साथमा भैं स्वतन्त्र रुपमा पनि अंशुवर्माले आफ्नो राजनीतिक स्थितिमा निरन्तर परिवर्तन गरिरहेको थाहा पाइन्छ । उनको राजनीतिको यो पक्ष ज्यादै रहस्यमय लाग्दछ ।

स्वतन्त्र भएपछि पनि अंशुवर्माको राजनीतिक स्थितिमा मुख्य दुइ स्वरुप रहेको मान्न सकिन्छ – ई. ६०५ देखि ६१२ सम्म एक स्वरुप र ई. ६१३ देखि ६२० सम्म आर्को स्वरुप । ई. ६१३ मा उदयदेवलाई युवराज घोषित गरेको आधारमा यसरी दुइ स्वरुपको परिकल्पना गर्नु परेको छ । ई. ६१३ सम्म शिवदेवको अस्तित्व रहेकोबारे ज्यावहाल अभिलेखले संकेत गरेको मानिनु र त्यसै वर्षदेखि उनले भिक्षुचर्या लिएको अनुमान गरिनु आदि तथ्यको आधारमा यस्तो स्थितिको अनुमान गर्नु परेको हो ।

उक्त स्थितिबाट एउटा विशेषता पनि प्रकट हुन्छ त्यो के भने अंशुवर्माको राजनीतिक गतिविधिमा सधैंभरि भनेजस्तो लिच्छविवंशी शिवदेव प्रथम र उदयदेवले कुनै रुपले नियन्त्रण गर्ने काम गरिरहेको पनि अनुमान गर्न सकिन्छ ।

हालै गोकर्ण बालुवागाउँ महांकाल स्थानबाट पाइएको अभिलेखको वक्तव्यबाट अंशुवर्माको राजनीतिको रहस्यमयताको आर्को उदाहरण पनि पाइन्छ। आफ्नो स्वतन्त्र शासनको आरम्भदेखि प्रयोग गर्न थालेको नयाँ संवत्‌को साटो यो अभिलेखमा अंशुवर्माले पहिलेकै क्रमको संवत् ५३६ लेखाएको कारण के हो भन्ने बुझ्न गाह्रारो छ । उक्त संवत्‌लाई शक संवत् मान्ने चलनअनुसार सो अभिलेख ई. ६१४ मा प्रसारित भएको र ई. ६१३ मैं अंशुवर्माले उदयदेवलाई युवराज घोषित गरी आफूले प्रसार गरेका अभिलेखमा सो कामको जिम्मा महासामन्त श्री भोगवर्मालाई दिइएको छ (राजवंशी, १९९०: ३४) । यो अन्तरमा पनि कुनै राजनीतिक रहस्य हुन सक्दछ? भन्ने हाम्रो मनमा प्रश्न उठ्दछ तर यसको ठीक ठीक व्याख्या गर्न गाह्रारो छ ।

### श्रीमहासामन्त

बुङमतीको संवत् २९ (ई. ६०५) को अभिलेखमा सर्वप्रथम स्वतन्त्र शासकका रुपमा अंशुवर्मा देखिन्छन् (वज्राचार्य, २०३०: २९०-२९१) ।

यो अभिलेख 'कैलासकूटभवन' बाट प्रसारित गरिएको छ, अंशुवर्मालाई "भगवत्पशुपतिभट्टारकपादानुगृहीत:", 'बप्पपादानुध्यात:' र 'कुशली' विशेषण लगाइएको देख्दा उनको स्वतन्त्रताको विशेषता स्पष्ट हुन्छ । शिवदेवको शासनकालसंग फरक देखाउन नयाँ खालको संवत्‌को प्रयोग गरिएको हुनुपनि महत्वपूर्ण छ ।



उक्त अभिलेख प्रसारित गरेको करीव एक वर्षपछि संवत् ३० अथवा ई. ६०६ मा प्रसारित हाँडीगाउँको अभिलेखबाट अंशुवर्माको राज्याभिषेक भएको बुझिएको छ (ऐजन: ३०१-३०२) । उक्त "अभिषेक हस्ती" र 'अभिषेकाश्व' को उल्लेख भएकोले यसमा राज्याभिषेकसम्बन्धी विवरण परेको कुरा विद्वानहरुले मानेका छन् (ऐजन: ३०५, नेपाल,२०४०: ६६, राजवंशी, २०३४।३५: २५) ।

उक्त अभिलेखमा अंशुवर्माको राज्याभिषेकको स्पष्ट उल्लेख त गरिएको छैन तर शिवदेवले शासनाधिकार सुम्पिसकेका बुझिने हुनाले वैधानिकता पूरा गर्न त्यो विधान पूरा गरिएको हुनुसम्भव लाग्दछ ।

यसरी राज्याभिषेक गरिसकेपछि पनि अंशुवर्माको उपाधिमा अन्तर भने नआएको देखिन्छ । उक्त मितिपछि उनले प्रसारित गरेका संवत् ३९ अघिका अभिलेखहरुमा उनको पुरानै उपाधि श्रीमहासामन्तनै लेखिएको पाइन्छ (वज्राचार्य, २०३०:३०१, ३०९, ३११, ३२०, ३३७, ३३९, ३४५, ३४८, ३५१, ३५४) । परम्पराअनुसार महासामन्त लेखिए पनि उक्त अवधिभित्र संवत् ३१ (ई. ६०७) मा लेखाइ राखिएको पद्यमय अभिलेखमा उनलाई 'नरपति' (राजा) भनिएको छ । यस उदाहरणबाट अंशुवर्मा राजा सरहनै भए पनि 'श्रीमहासामन्त' किन लेखिरहेको पाइन्छ यो एउटा रहस्यमय तथ्य भएको छ ।

राजा शिवदेवका अभिलेखहरुमा र स्वतन्त्र शासकका रुपमा पनि अंशुवर्माले श्रीमहासामन्त उपाधि कायम गरेको कुरामा वैधानिक तत्वमा अन्तर रहेको बुझ्न सकिन्छ । यस बेलासम्म र यसपछि पनि शिवदेव जीवित रहुन्जेल अंशुवर्माले लिच्छविवंश र राजा शिवदेवको धक मानेका हुन् कि भन्ने पनि लाग्न सक्दछ ।

### श्री अंशुवर्मा

संवत् ३९ (ई. ६१५) को देउपाटन अभिलेखमा अंशुवर्मालाई उनको पारम्परिक पद महासामन्त लेखिएको छैन 'श्र्यंशुवर्मा' मात्र भनिएको छ (ऐजन: ३५७) । किसिपिंडीको खण्डित अभिलेखमा पनि यही रुप भएको अनुमान गरिएको छ (ऐजन: ३६४) । गोकर्णको खण्डित अभिलेखमा पनि यही रुप लेखिएको अनुमान गरिएको छ (ऐजन: ३७०) । तर यसको ठीक ठीक कारण के हो भन्न गाह्रारो छ ।

यसै अवधिमा अंशुवर्माले 'श्र्यंशुवर्मा' अभिलेख लेखाई टक चलाएको देखिन्छ (जोशी, २०३३: ७२-७८) ।

अंशुवर्माले स्वतन्त्र हैसियतले राजकाज गर्न थालेपछि पहिलेजस्तो युद्धमा विजय गरेको र शत्रुसमूहलाई परास्त गरेको भन्ने भावना विरुदावलीको सट्टा राज्यव्यवस्था सम्बन्धी विशेषण देखाउन लगाएको पाइन्छ । यो कुरो उनले स्वतन्त्र भएर शासन गरेको बेलामा प्रसारित गरेका अभिलेखहरुमा उनको नामसाथ प्रयोग भएका विशेषणहरुको निम्न सूचीबाट स्पष्ट हुन्छ :–

१. ई. ६०६ को हांडीगाउंको अभिलेख:
अर्काको हित गर्ने बानी परेको हुनाले सत्ययुग ... अनुसरण गर्ने (परहितनिरतप्रवृत्तितया कृतयुग ... रानुकारी (वज्राचार्य, २०३०, ३०१-३०२) ।

२. ई. ६०७को भट्टवालको र टिष्टुङ्को अभिलेख:
"सारा संसारमा कीर्ति फैलिएका, आर्यमर्यादा (वर्णाश्रमव्यवस्था)का बन्देजलाई ननाघेका" (सकलजगद्विसारिकीर्तिरनतिवृत्तार्य्यमर्य्यादासेतु:) (ऐजन: ३०९-३११) ।

३. ई. ६०८ को साङगाको अभिलेख:
"जनताको हित हुने काममा लागेका" (प्रजाहित-समाधानतत्परो) ऐजन:३३६-३३७) ।

४. ई. ६१३ को टौखेलको अभिलेख:
"हरवखत सारा प्राणीलाई सुखहरु गरिदिनामा मन लगाएका" (अनिशमशेषसत्वसुखसमुदयोपपादनाहितचित्तसन्तति:) (ऐजन: ३४८-३४९)।

५. ई. ६१३ तिरको नक्साल भन्सारहिटी अभिलेख:
"अरु राजालाई हात जोडी प्रणाम गर्न अघि नसर्ने, न्याय निसाफको स्थितिबन्देज बांध्नाले (ऐन तर्जुमा गर्नाले) सुधिंदै गएको मनको अठेट भएका"
(अनन्यनरपतिसकरानतिपरपुण्याधिकारस्थितिनिबन्धनोन्नीयमानमनस्समाधानो) (ऐजन: ३५४-३५५) ।

६. ई. ६१५ को देउपाटन अभिलेख:
"रातोदिन अनेकन् शास्त्रकै अर्थ विषयमा छलफल गर्दा गर्दा खराब विचार हटिसकेको हुंदा धर्म (न्याय निसाफ) का कामको बरबन्दोबस्त बांध्नुनै ठूलो उत्सव सम्भिने"
(अनिशिनिशिचानेकशास्त्रार्थविमर्शावसादितासद्दर्शनतया धर्माधिकारस्थितिकारणमेवोत्सवमनतिशयम्मन्यमानो) (ऐजन: ३५७-३५८) ।

## महाराजाधिराज श्र्यंशु

अंशुवर्माका एक किसिमका टकमा "महाराजाधिराजस्य श्र्यंशो:" लेखिएको देखिनाले (जोशी, २०३३: ७९) धनवज्र वज्राचार्यले अंशुवर्माले महाराजाधिराज पद लिएपछि आफ्नो वर्मा थर पनि लेख्न छोडे भन्ने अनुमान गर्नु भएको छ (वज्राचार्य, २०३०: २९५,३३५) ।

आफ्नो टकमा अंशुवर्माले 'महाराजाधिराज' जस्तो विशेष खालको र नेपालको इतिहासमा अपूर्व राजकीय उपधि लेखाएका भए पनि यो उपाधि प्रयुग भएको उनको कुनै शिलालेख पाइएको छैन । यस कारणले उनले यो उपाधि कहिले लिएका हुन् भन्ने बुझ्न गाहारो छ । तर संवत् ३९ (ई. ६१५) पछि



अंशुवर्माले प्रसारित गरेको कुनै अभिलेख आजसम्म नपाइनाले ई. ६१५ पछिनै यो घटना भएको हुनुपर्दछ भन्ने लाग्दछ । तर अंशुवर्माका अन्तिम समयताका जनतातर्फबाट राख्न लगाएका अभिलेखहरुमा पनि उनको नामोल्लेख गरिए पनि सो उपाधिको उल्लेख भएको छैन । अंशुवर्माकै रानीले राखेको वनकालीको संक्षिप्त पद्यात्मक (र खण्डित, मितिरहित) अभिलेखमा अंशुवर्माको सट्टा "श्रीकलहाभिमानी नृपति" को रुपमा मात्र उल्लेख गरिएको छ (ऐजन: ३६६) । संवत् ४४ (ई. ६२०) को टुँडिखेलको संक्षिप्त अभिलेखमा पनि 'श्र्यंशुवर्मा' मात्र उल्लेख भएको पाइन्छ (ऐजन: ३७८) । आफ्नो अन्तिम अवस्थामा अंशुवर्मा श्रीकलहाभिनीका रुपमा विशेष प्रसिद्ध भएका थिए भन्ने पनि देखिन्छ ।

## श्रीकलहाभिमानी

अंशुवर्माको संवत् ३२ (ई. ६०८) को हाँडिगाउंको अभिलेखमा अन्तिम भागमा ती राजाको उक्त उपनाम वा 'उपाधि' को उल्लेख यसरी भएको छ (वज्राचार्य, २०३०: ३२१) ।

> "प्रजाहितार्थोचितशुद्धचेतसां (शुव) र्मणा श्रीकलहाभिमानिना ।
> कथम्प्रजा म सुखितां भवेदिति (प्रियव्य) वस्थेयमकारि धीमता ॥"
>
> "सच्च मन लगाएर दुनिआको भलाई गर्न उद्योग गरिरहेका, बुद्धिमान् श्रीकलहाभिमानी अंशुवर्माले कसरी मेरा प्रजा सुखी होलान्" भनेर यो प्यारो व्यवस्था बाँधिएको हो ।

अंशुवर्माको यो उपाधिको पहिलो प्रयोग उक्त अभिलेखमै लेखिएको देखिँदा ई.६०८ मा ती राजाले सोको प्रयोग गर्न थालेको बुझिन्छ । तर सो मितिपछिका धेरै अभिलेखहरुमा अंशुवर्माले सो उपाधिको प्रयोग गराएको पाइँदैन दुम्जाको सरकारी सनद रुपमा एकमात्र अभिलेखमा सोही उपाधि लेखाइएको पाइन्छ । त्यो बाहेक अन्य कुनै अभिलेखमा फेरि त्यो उपाधिको प्रयोग भएको पाइदैन । तर उनका पालामा अरुले राख्न लगाएका अभिलेखमा उनको मूल नामको प्रयोग नगरी यही उपाधिको प्रयोग गरिएको पाइनु महत्वपूर्ण छ जसबाट यो उपाधि जनतामा पनि लोकप्रिय भएको बुझ्न सकिन्छ ।

वनकालीमा रहेको अंशुवर्माकी रानीको छोटकरी अभिलेखमा उनले आफूलाई "श्रीकलहाभिमानी राजाकी पत्नी" (भार्य्या श्रीकलहाभिमानिनृपते:) भनेकी छन् (वज्राचार्य, २०३०: ३६६) । अंशुवर्माका गोतियारकै आर्को अभिलेखमा पनि यस उपाधिको मात्र प्रयोग गरिएको पाइएको छ । अंशुवर्मा बितेको करीब एघार वर्षपछिको मान्न सकिने भक्तपुर बोडे नीलवाराही स्थानको अभिलेखमा "श्रीकलहाभिमानी राजाका भाइकी बुहारीले(भार्य्या श्रीकलहाभिमानिनृपतिभ्रातृस्नुषा)" भन्ने उल्लेख पाइन्छ (वज्राचार्य, २०३०: ४३१) । अभिलेख खण्डित छ तर

तत्कालीन राजाको रुपमा जिष्णुगुप्तको नाम लेखिएकोले यसलाई ई. ६३१ तिरको मान्न सकिन्छ ।

अंशुवर्माको परिवार र गोतियारका दुइ अभिलेखमा चर्चिएको उक्त उपाधिको सन्दर्भ बाहेक जनतातर्फबाट राख्न लगाइएको फर्पिङको अभिलेखमा बौद्ध भिक्षुहरुले अंशुवर्माको अभिनन्दन गर्दा नको मूल नामको उल्लेख नगरी श्रीकलहाभिमानी राजाका रुपमै दुइपल्ट उल्लेख गरेका छन् (वज्राचार्य, २०३०: ३६८) ।

अन्तिम समयमा अंशुवर्मा राजगद्दीमा बसेका र महाराजाधिराज कहलाएका थिए तर सो घटना टुण्डिखेलको संवत् ४५ जेठको अभिलेख राखिएपछि मात्र भएको हो संवत् ४५ जेठसम्म उनी श्र्यंशुवर्माका रुपमा शासन गर्दै थिए भन्ने विचार धनवज्र वज्राचार्यले व्यक्त गर्नु भएको छ (वज्राचार्य, २०३०: ३७९) ।

उक्त टुँडिखेलको अभिलेखको मिति संवत् ४५ हैन संवत् ४४ हो भन्ने विद्वानहरुले हाल विचार गरेका छन् (राजवंशी २०४९ १-२, पन्त, २०४३: ५४१) । अंशुवर्माको सात अन्तिम मिति पनि यही देखिनाले यसपछि अंशुवर्माको महाराजाधिराजको कार्यकालको कल्पना गर्न गाहारै छ । टुँडीखेल अभिलेखमा श्र्यंशुवर्मा लेखिनाको कारण अभिलेख संक्षिप्त र पद्यात्मक भएकोले हो भन्ने देख्न सकिन्छ ।

संवत् ३९ (ई. ६१५) तिर श्री अंशुवर्मा लेख्न थालेका अंशुवर्माले यसपछि नै महाराजाधिराज उपाधि लिन थालेको र यस अवधिमा उनले प्रसारित गरेका अभिलेख नपाइएको हुनाले हामीलाई स्थिति बुझ्न गाहारो परेको हो । यसै अवधिमा उनी आफ्ना जनतामा 'श्रीकलहाभिमानी' उपनामले विशेष प्रसिद्ध भएका थिए भन्ने पनि अनुमान गर्न सकिन्छ ।

'श्रीकलहाभिमानी' यो उपाधिको अर्थ लक्ष्मीसंग कलह गर्न गर्व गर्ने (संपत्ति संचय गर्न अनिच्छुक) अर्थात् विपरीत अर्थमा "सरस्वतीका भक्त" भन्ने पनि अर्थ हुन्छ भन्ने धनवज्र वज्राचार्यको विचार छ (ऐजन: ३३३) । शंकरमान राजवंशीको विचारमा "श्रीकलहाभिमानीको वास्तविक अर्थ राजनीति(क) क्रान्ति गर्नमा गर्व भएका भन्ने हो किनभने 'श्री' को अर्थ लक्ष्मी पनि हुन्छ, राजोचित सम्मानलाई बुझाउने राज्यश्री पनि हुन्छ" (राजवंशी, २०३४।३५: २५) ।

अंशुवर्माको श्रीकलहाभिमानी उपाधिले उनको विद्याप्रियता र विद्वत्तालाई संकेत गरेको तथ्यसाथ आर्को सन्दर्भ पनि गासिएको छ । वंशावलीहरुमा अंशुवर्माको समयमा व्याकरणशास्त्रको अध्ययन-अध्यापनको वृद्धि भएको र स्वयं अंशुवर्माले व्याकरणशास्त्र सम्बन्धी एक ग्रन्थनै लेखेको भन्ने चर्चा गरिएको पाइन्छ ।

गोपालवंशावलीमा अंशुवर्माको वर्णनमा "व्याकरण आदि शास्त्रहरुको चर्चा (अध्ययन अध्यापन) चल्यो" (व्याकरणादिशास्त्रचर्चता प्रवर्त्तते) भनिएको पाइन्छ (वज्राचार्य, मल्ल, १९८५: ३०) । संक्षिप्तगोपालवंशावलीहरुमा भने अंशुवर्माले



"व्याकरण आदि शास्त्र बनाए", "व्याकरणशास्त्र बनाए" भनिएको पाइन्छ (वज्राचार्य, १९७७: १२४, रेग्मी, २०४६: ५) । भाषावंशावलीमा पनि अंशुवर्माले "नेपालमा व्याकरण शास्त्र पढन्या पढाउन्या रीत चलाया" भनिएको पाइन्छ (पौडेल, २०२०: ८५) ।

ह्वेनसांगले नेपालसम्बन्धी संक्षिप्त टिपोटमा अंशुवर्माबारे पनि एक दुइ हरप शामिल गरेका छन् । त्यस वर्णनमा अंशुवर्माले शब्दविद्या सम्बन्धी एक ग्रन्थको रचना गरेको कुरा पनि परेको छ (बील, १९०६: २, ८१) ।[७१]

अंशुवर्माले 'शब्दविद्या' सम्बन्धी ग्रन्थ लेखेको भन्ने ह्वेनसाङ्गको उल्लेख भएकोमा विद्वान्हरुले त्यो कुन विषयको ग्रन्थ होला भन्नेबारेमा तर्कना पनि निकालेका छन् ।[७२]

मेरी स्लसरले सो ग्रन्थ व्याकरण वा अलंकारशास्त्रसम्बन्धी होला भन्ने अनुमान गर्नु भएको छ (स्लसर, १९८२ १,२६, ११८) भने महेशराज पन्तले त्यो व्याकरणसम्बन्धी ग्रन्थनै हुनुपर्दछ भन्ने ठेकुवा गर्नु भएको छ(पन्त, १९८५: २२) ।[७३]

अंशुवर्माको एक खण्डित अभिलेखमा "सामन्त चन्द्रवर्मा गोमी" को उल्लेख भएको सन्दर्भलाई धनवज्र वज्राचार्यले उनलाई चान्द्रव्याकरणका रचयिता चन्द्रवर्मानै मान्नु भएको छ (वज्राचार्य, २०३०: ३९६-३९७) । उहांको यो कुरा अहिले प्रमाणित गर्न सकिंदैन ।

**अंशुवर्माको वास्तविक राजनीतिक स्थिति**

ई. ५९४ देखि ६२० सम्मको २६ वर्षको इतिहासमा अंशुवर्माको स्थानबारे माथि विचार गरिएको छ । सो अध्ययनबाट अंशुवर्माको राजनीतिक स्तरका निम्न बमोजिमका चार समयक्रम रहेको देखिएको छ :–

| | क्रम | | समय |
|---|---|---|---|
| १. | पहिलो | - | ई. ५९४-५९८[७४] |
| २. | दोस्रो | - | ई. ५९८-६०४ |
| ३. | तेस्रो | - | ई. ६०४-६१३ |
| ४. | चौथो | - | ई. ६१३-६२०[७५] |

यी क्रमहरुको व्याख्या माथि गरिसकिएको छ ।

आफ्नो जम्माजम्मी २६ वर्षको कार्यकालमा अंशुवर्माले यसरी चार राजनीतिक अवस्था पार गरेको देख्दा तात्कालिक राजनीतिको स्थिति अचम्म लाग्दो देखिन्छ । भौमगुप्तको पतनका मुख्य सुत्रधार रहेका मानिने र त्यसै कारणबाट हर्त्ताकर्त्ता हुन पुगेका अंशुवर्माले आफ्नो राजनीतिक प्रशासनिक जीवनमा त्यतिका क्रमिक विकसित प्रशासनिक रुप लिएको देख्दा तात्कालिक राजनीतिक स्थितिमा उनको प्रतिद्वन्द्वी तत्वको पनि सम्भावना देख्न सकिन्छ जसको कारणबाट उनीलाई सतर्क रहनु आवश्यक भएको थियो । यस्तो तत्व

लिच्छविवंशका मुकुटधारी शिवदेवसाथै त्यस वंशका अन्य राजकुमार रहेका र आर्का चाहिँ तात्कालिक समाज नै थियो जस्तो लाग्दछ ।

परम्परागत रुपमा शासनाधिकारी रहेको लिच्छविवंश वा शिवदेवलाई कठपुतली बनाई आफू शक्तिसम्पन्न भएर शासन चलाउनु भनेको एउटा ठूलो काम थियो यसैले अंशुवर्माले कूटनीतिका विभिन्न स्तरको प्रयोग गरेको बुझ्न सकिन्छ। तर यतिका कूटनीतिक प्रयोग गरिसके पनि अंशुवर्माको राजनीतिक स्थितिको पनि एउटा सीमा देखिन्छ । यस कुराका दुइटा उदाहरणको चर्चा यहाँ गरिन्छ।

शिवदेव जीवित छउन्जेल अंशुवर्माले आफूलाई सोझै राजा घोषित गरेनन् भन्ने धनवज्र वज्राचार्यको विचार छ (वज्राचार्य, २०३०: २९३) । ज्यावहालको ई. ६१३ को अभिलेखको आधारमा शिवदेवले अंशुवर्मालाई ई. ६०४ तिरै सम्पूर्ण शासनाधिकार सुम्पिसकेपछि पनि उनी मानगृहमा विराजमान छन् भन्ने कुरा मान्दा (ऐजन: ३४४) यस्तो अवस्थामा पनि शिवदेवको वैधानिकता कायमै रहेको र त्यसको केही असर अंशुवर्माको राजनीतिक स्थितिमा परेको देख्न सकिन्छ । शिवदेवले ई. ६१३ मै मानगृह छोडी भिक्षु भएर आफ्नो वैधानिकताको त्याग गरे पनि त्यसै वर्षदेखि अंशुवर्माका युवाराजका रुपमा उदयदेवको वैधानिक स्वरुपको आरम्भ हुन्छ । यसरी हेर्दा अंशुवर्मामाथि लिच्छविवंशको पारम्परिक वैधानिकता सधैंभरि कायम रहिरहेको देखिनु महत्वपूर्ण छ । यद्यपि उनको 'राज्याभिषेक' ई. ६०६ मैं गरिसकिएको थियो ।

अंशुवर्मा प्राचीन नेपालको इतिहासमा सर्वप्रथम 'महाराजाधिराज' जस्तो शानदार पदवी ग्रहण गर्ने राजाका रुपमा पनि प्रसिद्ध छन् तर सो पदवीधारी राजनीतिक व्यक्तित्वमा पनि शक्ति र पारम्परिक वैधानिकताको केही अभाव रहेको अनुभव गरिन्छ किनभने अंशुवर्माले लिच्छवि राजाहरुले जस्तो आफ्नो नाउँमा 'देव' जोड्ने साहस गर्न सकेका थिएनन् (ऐजन: ४३६) ।

यति चर्चाबाट अंशुवर्माको प्रचुर राजनीतिक सफलता देखिए पनि उनले लिच्छवि राजवंशको वैधानिकता पाउन सकेका थिएनन् भन्ने अनुमान गर्न सकिन्छ । आफ्नो सम्पूर्ण कार्यकालमा उनले गरेका सबै किसिमका कूटनीतिक प्रयोगहरु (Diplomatic Experiments) को व्याख्या पनि यसै सूत्रबाट गर्न सकिन्छ जस्तो लाग्दछ ।

अंशुवर्माको उदयले वैधानिक रुपले राजवंश परिवर्तन पनि भएको थिएन ।[७६] उनले राजसत्ता आफ्ना सन्तानमा चल्ने नियम लागू गर्न नसकेको देख्दा यो कुरा स्पष्ट हुन्छ ।

### अंशुवर्माको वंश र परिवार

अंशुवर्माको राजनीतिक गतिविधि र उपलब्धिबारे माथि विचार गरिसकिएको छ तर उनको वंश र परिवारबारे तात्कालिक ऐतिहासिक सामग्रीहरुले जुन किसिमको मौन साधना गरेको पाइन्छ त्यो रहस्यमय हुन



पुगेको छ । यसै कारणले यस कुरामा इतिहासकारहरुमा मतभेद पनि उत्पन्न भएको छ ।

बाबुराम आचार्यले अंशुवर्मालाई लिच्छविवंशी नै मान्नुभएको छ । नेपालका लिच्छविहरु वर्मान्त र देवान्त दुइ वर्गमा बाँडिएका र अंशुवर्मा वर्मान्ति लिच्छविकुलका भएका अनुमान गर्नु भएको छ ।[७७] तर अंशुवर्माको वर्मविंशसंग लिच्छविवंशको विवाह सम्बन्ध भएको देख्दा आचार्यज्यूको यो विचारले मान्यता पाउनुसम्भव देखिंदैन ।

कुनै इतिहासकारले अंशुवर्मालाई गुप्तवंशीय सामन्त क्रमलीलका वंशज पनि हुन सक्ने अनुमान गरेको पाइन्छ (गोपाल, वर्मा, १९७७: ५५) । कुनै सामन्त क्षेत्रसंग सम्बद्ध देखिएका र "महाराज महासामन्तश्री" तहका क्रमलीलले पनि ई. ५३२ र ५४५ को अवधिमा केन्द्रीय राजनीतिमा हस्तक्षेप गरेका थिए र अंशुवर्माले पनि त्यस्ते गरेको देख्दा ती दुइमा समानता देख्न सकिन्छ तर ती दुइको बीचमा थरमा समानता नदेखिएको हुनाले पनि तिनको सम्बन्ध जोड्न अप्ठेरो देखिन्छ ।

धनवज्र वज्राचार्यले अंशुवर्माका टकमा चद्रमाको चित्र अंकित गरिएको र बौद्ध भिक्षुहरुले लेखाएको अभिलेखमा "पृथ्वीतलका चन्द्रमा जस्ता" (क्षितितलशार्शन:) भनी चन्द्रमाको उपमा दिएको आधारमा अंशुवर्मालाई चद्रवंशी क्षत्रिय मान्नुभएको छ (वज्राचार्य, २०३०: २९६, ३६९) ।

ऐतिहासिक सामग्रीहरुको पुनरावलोकन गरेर हेर्दा दुइटा तत्व महत्वपूर्ण देखापर्दछ । शिवदेव प्रथमले आफ्ना त्यतिका अभिलेखमा अंशुवर्माको शौर्य, वीरता, धार्मिकता र विद्वत्ताको तारीफ गरेको भए पनि उनलाई क्षत्रियंसम्म पनि नभनिएको हुँदा इतिहासकारहरुलाई यस कुरामा रहस्य लाग्नु स्वाभाविक छ । आफैले प्रसारित्त गरेका थुप्रै अभिलेखमा पनि उनले आफ्नो वंशको उल्लेख गर्न उचित नठानेको देखिन्छ ।

अब वंशावली साहित्यको अवलोकन गरेर यस कुराको विचार गरेर हेरौं । गोपाल वंशावलीमा शिवदेव प्रथमका बहिनीका छोराका रुपमा अंशुवर्माको परिचय दिएको देखिन्छ र यस तथ्यलाई इतिहासकारहरुले स्वीकार पनि गरेका छन् । यस तथ्यको आधारमा अंशुवर्माको वंशलाई लिच्छविवंशको समकक्ष स्तरको मान्यता प्राप्त भएको मान्न सकिन्छ । एकथरी भाषावंशावलीमा पनि अंशुवर्मालाई क्षत्रिय भनिएको पाइन्छ (पौडेल, २०२०: ८४) । आर्कोथरी भाषावंशावलीमा त उनलाई "सूर्यवंशको एक शाखाका वंशज (A collateral branch of the solar race of Amsuvarma) भनिएको छ (राइट १९६६: १०८-१०९) । यो पछिल्लो सन्दर्भमा त अंशुवर्मालाई सूर्यवंशी भनेको पाइनु महत्वपूर्ण छ ।

अंशुवर्माले स्वतन्त्र भएर शासन गर्न थालेदेखि आफ्नो विरुदावलीमा 'वप्पपादानुध्यान:' (बुवाको पाउको निगाहा पाएका ) भन्ने विशेषण लगाएकाले उनले आफ्नो कुल ठूलो रहेको दावा गरेको भन्ने अर्थ इतिहासकारहरुले मानेकाले (वज्राचार्य, २०३०: २९५, गोपाल, वर्मा, १९७७: ५५) पनि उनको

कुलीनताबारे अनुमान गर्न सकिन्छ । किनभने उनी आफ्नो राजनीतिक जीवनको आरम्भदेखि नै 'सामन्त' तहका देखिन्छन्, स्वतन्त्र राज्यका स्वाधीन क्षत्रियवंशी देखिएका छैनन् । यस्तै वंशगत कारणले गर्दा अंशुवर्मालाई लिच्छवि राजवंशको तुलनामा आफ्नो राजनीति संचालन गर्न अत्यन्त सतर्क रहनुपरेको देखिन्छ । राज्यका पूरापूर सर्वेसर्वा जस्तै भएर पनि उनले लिच्छविहरुको वैधानिकताको उपेक्षा गर्न नसक्नु र त्यति शक्तिमा पुगेर पनि उनले आफ्नो वंशलाई लिच्छविको स्थानापन्न गराउन नसक्नुबाट यो कुरा स्पष्ट हुन्छ जस्तो लाग्दछ।

अंशुवर्माको वंशबारे थाहापाउन हामीलाई जति धामा गर्नुपर्दछ त्यस्तै धामा उनको परिवारबारे थाहापाउन पनि पर्न आउँछ ।

अंशुवर्माको राजनीतिक गतिविधिबारे जति विस्तृत विवरण उपलब्ध छ त्यसको तुलनामा उनको परिवारबारे जान्ने साधन शून्यको स्थितिमा रहेको छ । उनका पिता माता र पुत्र-पुत्रीको नाम कतै उल्लेख भएको पाईदैन । जम्मा दुइटा अभिलेख यस्ता पाइन्छन् जसबाट उनकी रानी र भाईको परिवारको अस्तित्वसम्म थाहा पाउन सकिन्छ ।

वनकालीको छोटकरी र जीर्ण अभिलेखबाट अंशुवर्माको परिवारबारे अस्पष्ट विवरण पाइन्छ । सो अभिलेखमा:– "...अमृतवर्माले ... मन्दिरको इलाकालाई राम्रो पर्खालिले ... शिलापत्र (राखिया) । श्रीकलहाभिमानी राजाकी पत्नीले उहाँबाट निगाहा पाएर पतिको पुण्य बढोस तथा आफ्नो मोक्ष होओस भनी ... (देवताको स्थापना गर्नु भयो) ..." (वज्राचार्य, २०३०: ३६६) ।[७८]

यो अभिलेखबाट अंशुवर्माका रानीले कुनै देवताको स्थापना गरेको थाहा पाइन्छ तर यहाँ उनको नाम नलेखी अंशुवर्माको रानीको रुपमा उनको परिचय दिइएको छ । यही अभिलेखमा मन्दिरको इलाकालाई राम्रो पर्खाल बनाउने रुपमा चर्चिएका अमृतवर्मा को हुन् बुझ्न सकिँदैन ।

अंशुवर्मा बितेको करीब ११ वर्षपछिको भक्तपुर बोडे नीलबाराहीको खण्डित अभिलेखमा अंशुवर्माको भाईकी बुहारीको उल्लेख पाइन्छ (वज्राचार्य, २०३०: ४३१) ।

यो अभिलेखको सूचनाबाट अंशुवर्माका भाई पनि रहेछन् भन्ने बुझिन्छ तर तिनको नाउं थाहा पाउन सकिएको छैन । साथै उनको तत्कालीन राजनीतिमा स्थानबारे कुनै कुरा पनि थाहा पाउने साधन हामीलाई उपलब्ध छैन। उक्त अभिलेखको सन्दर्भबाट अंशुवर्माका भाईको परिवार पनि समृद्ध सम्पन्नै रहेछ यसैले हिटीधारा बनाएर त्यसको लागि जग्गा गुठी राखिदिन समर्थ रहेछ भन्ने देखिन्छ ।

अंशुवर्माका सन्ततिबारे कुनै सूचना नपाइने हुनाले उनी नि:सन्तान थिए कि भन्ने अनुमान पनि गर्न सकिन्छ । यही कारणले उनले लिच्छविवंशी उदयदेवलाई आफ्नो युवराज घोषित गरेको पनि हुन सक्दछ । तर गोपालवंशावलीले भने अंशुवर्माका सन्ततिको विवरण प्रस्तुत गरेको छ । यस रुपमा–



"ती (अंशुवर्मा) राजाका पुत्र मानवर्मा वर्ष ६५ ॥
राजा श्री कृतवर्मा लर्ष ७६। यी आर्के वंशका राजा हुन् ..."
(वज्राचार्य, मल्ल, १९८५: ७८।)[७९]

यो विवरणमा अंशुवर्माका छोरा नाति पनि राजा भएको बताइएको छ तर यिनको अस्तित्व प्रमाणित गर्न सकिएको छैन ।

एकथरी भाषावंशावलीमा अंशुवर्माका वंशजले मध्यकालको राजनीतिमा महत्वपूर्ण काम गरेको कुरा लेखिएको छ ।

मध्यकालमा भएका वामदेवलाई एकथरी वंशावलीले अंशुवर्माका वंशज भनेको पाइन्छ । ती वामदेवले नुवाकोटे वैश्य ठकुरी राजाहरुलाई हटाई "नयाँ राजपूत राजवंश" को स्थापना गरेको र त्यस वंशमा वामदेव, हर्षदेव र सदाशिवदेव भएको वर्णन गरिएको पाइन्छ (राइट, १९६६: १०८-१०९) ।[८०]

## अंशुवर्माका उपलब्धि

अपेक्षाकृत प्रचुर सामग्रीहरुसंग सम्बन्धित अंशुवर्माबारे माथि एकसरो विवरण प्रस्तुत गरिएको छ । तिनै सामग्रीहरुबाट विभिन्न क्षेत्रमा उनीले गरेका उपलब्धिबारे पनि थाहा पाइने हुनाले यहाँ त्यो पक्षबारे छोटकरी विचार गरिन्छ ।

## राजनीतिक उपलब्धि

ऐतिहासिक सामग्रीहरुको विश्लेषण गरेर हेर्दा अंशुवर्माले राजनीतिका दुई मुख्य समस्यासित एकैपल्ट जुधेर दुवै पक्षमा सफलता हासिल गर्नु महत्वपूर्ण रहेको देखिएको छ । पहिलो समस्या त राजनीतिमा आफूलाई स्थापित गराउनु थियो भने आर्कोतिर तात्कालिक नेपालको स्थितिलाई मजबूत पार्नु पनि थियो ।

भौमगुप्तलाई हटाउने काममा अंशुवर्माको हात रहेको मान्ने हो भने ई. ५९० देखि ५९३ सम्म उनी पृष्ठभूमिमा रहेर ई. ५९४ देखि अगाडि देखा पर्दछन् । शुरुकै अभिलेखहरुमा शिवदेवले अंशुवर्माको महिमा गाउन थालेका छन् । त्यस्तो महिमामा अंशुवर्माले शत्रुहरुलाई जितेको, सामन्तहरुले उनीलाई ढोगेका कुरा पनि परेको छ । यस्ता सन्दर्भका आधारमा आभीर-गुप्तहरुको कार्यकालमा लिच्छवि राज्यका सामन्तहरु अटेर हुन थालेकाले राज्य छिन्न-भिन्न हुन थालेकोमा अंशुवर्माले तिनीहरुलाई जितेर काबूमा राखेर नेपाल राज्यलाई सम्हालेर मजबूत पारेको कुरा बाबुराम आचार्यले मान्नुभएको छ (आचार्य, २०३७: ७) । यस विचारको चर्चा भौमगुप्तको सन्दर्भमा पनि गरिसकिएको छ ।

रविगुप्त र भौमगुप्तका कार्यकालमा कुन नीतिले गर्दा कुन कुन सामन्त अटेरी भएका थिए र राज्य खण्डित हुन थालेको थियो भन्ने कुनै प्रमाण पाईदैन । त्यसैगरी अंशुवर्माले कुन कुन क्षेत्रका के के नामका सामन्तलाई

कावूमा राखेका हुन् त्यस्तो विवरण नपाइने हुनाले उनको महिमामा लेखिएको कुरालाई त्यत्तिकै मान्न अप्ठेरै छ । शिवदेव अंशुवर्माका शासनकालमा प्रसारित शिलालेखहरुको भू-क्षेत्र पनि विस्तृत भएको देखिएको छैन र आन्तरिक वक्तव्यमा पनि ठूलो राजनीतिक गतिविधिको प्रतिनिधित्व भएको पाईदैन । यी तथ्यको आधारमा अंशुवर्माले नेपाल राज्यलाई राजनीतिक रुपले बलियो पारे भन्ने विचार अपुष्ट वक्तव्यहरुमा आधारित देखिन्छ । भविष्यमा गरिने अनुसन्धानबाट यस पक्षमा बढी प्रकाश पर्ने आशा लिन सकिन्छ ।

तर, राज्यको प्रशासन-व्यवस्थामा भने अंशुवर्माको राम्रो देन रहेको पाइन्छ । यस पक्षको विस्तृत अध्ययन गर्न सकिने तथ्यहरु उनका पालाका अभिलेखहरुमा उल्लिखित भएको पाइन्छ । आफ्ना प्रजाको हित हुने काम, कानूनी व्यवस्था र गाउं-गाउंमा 'स्वायत्तशासन' दिंदै जाने काम उनले गरेको उल्लेख अभिलेखहरुमा भएको छ । हाल यो पक्षबारे विशेष विश्लेषण यहां गरिएन । राजनीतिको यो पक्षमा भने अंशुवर्माको सफलता उल्लेखनीय लाग्दछ ।

अन्तर्राष्ट्रिय राजनीतिमा अंशुवर्माले नेपाललाई कुन स्थानमा पु-याएका थिए भन्ने विषयमा पनि स्पष्ट विवरण पाइंदैन । आफ्नो नक्साल भन्सारहिटीको अभिलखेमा उनले "अरु राजालाई हात जोडी प्रणाम गर्न अधिनसर्ने" (अनन्यनरपतिसकरानतिपर) भन्ने उपाधि लिएर (वज्राचार्य, २०३०: ३५४) उनले आफ्नो अन्तराष्ट्रिय राजनीति तर्फ संकेत गरेको बुझ्न सकिन्छ । यो उपाधि लेखाएर उनले "नेपाललाई स्वतन्त्र राखेको छु" भन्ने घोषणा गरेको मानिएको छ (ऐजन: ३५५-३५६) । नेपालको स्वतन्त्रता त पहिले देखिनै कायमै थियो त्यस्तो परिप्रेक्ष्यमा अंशुवर्माले उक्त किसिमको घोषणा किन गरेका हुन् त्यति स्पष्ट छैन।

समकालिक अन्तरराष्ट्रिय राजनीतिमा अंशुवर्माको के स्थिति थियो भन्ने विषयमा स्पष्ट विवरण पाईंदैन । नेपालको भौगोलिक अवस्थितिबाट नेपालको सीमानामा भारतका विभिन्न क्षेत्र र तिव्वतका भू-भागसंग जोडिने हुनाले ती दुई पक्षतर्फ, अंशुवर्माले के कस्तो स्थितिको सामना गर्नु परेको थियो भन्नेबारे यहाँ विचार गरिन्छ ।

अंशुवर्माको तिव्वत सम्बन्धबारे इतिहास स्पष्ट छैन । ई. ६१८ मा नेपाल-तिव्वत मार्गबाट व्यापारिक सम्पर्क शुरु भएको चिनियाँ सन्दर्भ पाइने हुनाले र ई. ६१८ अंशुवर्माको काल हुनाले त्यस मितितिर तिव्वत तर्फ आर्थिक सम्पर्क बढ्न थालेको अनुमान गरिएको छ । तर भृकुटीको विवाह स्रोङ्ग चन गम्पोसँग गरिएको भन्ने घटनाको सत्यता र ऐतिहासिकता एवं त्यसको सम्बन्ध अंशुवर्मासँग रहेको वा अन्य कुनै नेपाली राजासँग रहेको विषयमा मत मतान्तर पाइने हुनाले यो पक्ष अस्पष्ट हुन गएको छ । गोपालवंशावलीमा त राजा शिवदेव प्रथमको विवरण दिँदा "भोटान्त देशको आक्रमण" सम्बन्धी टिपोट पनि परेको हुनाले त्यस समयमा नेपालको तिव्वत सम्बन्धको स्वरुपबारे



पुनर्मूल्याङ्कन गर्नुपर्ने भएको छ । भृकुटी समस्या र तिव्वत सम्बन्धबारे अन्यत्र विचार गरिएको छ ।

अंशुवर्माको भारतसम्बन्धी नीतिबारे पनि त्यति स्पष्ट विवरण उपलब्ध छैन । नेपालको सीमाना जोडिने भारतीय क्षेत्रहरुमा केही पहिले त गुप्त-सम्राट्का उत्तराधिकारीहरुको शासन रहेको र पछि विभिन्न क्षेत्रमा विभिन्न राजवंशको उदय भएको पाइन्छ । ई. ६१२ तिरदेखि ६४८ सम्म थानेश्वरको राजवंशका हर्षवर्धनले उत्तरी भारतमा क्रमश: एकच्छत्र साम्राज्य खडा गरेका थिए। सो साम्राज्यमा उनले कन्नौजको मौखरि राज्य पनि गाभेका थिए । सो मौखरि राजवंश हर्षका नातेदार पनि थिए पछि त्यहाँ गन्जागोल हुंदा उनले त्यो राज्य पनि अधिग्रहण गरेको थाहा पाइन्छ । त्यही मौखरि राजवंशका एक राजपुत्र शूरसेनसँग अंशुवर्माको दिदी वा बहिनीको विवाह भएको र तिनका छोरा भोगवर्मा अंशुवर्माका सहयोगीका रुपमा शिलालेखहरुमा उल्लिखित छन् । उनी राजपुत्र शूरसेनको नाउँमा उनकी पत्नी भोगदेवी (अंशुवर्माकी दिदी वा बहिनी) ले पशुपतिक्षेत्रमा शिवमन्दिर बनाएको उल्लेख पाइनाले यो परिवार यहीं बस्न आएको बुझिन्छ । एक त यो तथ्यले मौखरि राजवंशसंग अंशुवर्माकी दिदी वा बहिनीको विवाह भएको महत्वपूर्ण घटनाको संकेत गरेको बुझिन्छ भने आर्कोतिर हर्षले कनौजमा अवैधानिक किसिमले(?) कब्जा गरेको कारणले त्यहांको गद्दीका दावेदार भएका हुन सक्ने राजपुत्र शूरसेन नेपाल आई बसेको देख्दा हर्षका विरोधी वर्गलाई अंशुवर्माले आश्रय दिएको हुन सक्ने तथ्य स्पष्ट हुन आउंछ । यस घटनाको राजनीतिक क्षेत्रमा के कस्तो प्रभाव प-यो अर्थात् अंशुवर्माको हर्षवर्धनसँग कस्तो स्तरको सम्बन्ध रहेको हुन सक्दछ भने बारेमा केही भन्न सक्ने स्थिति छैन । राजपुत्र शूरसेन र उनका छोरा भोगवर्माबारे तल भिन्नै विचार गरिएको छ ।

तर, हर्षसँग अंशुवर्माको सम्बन्धबारे विचार गर्दा ती दुइको समयबारे पनि हेक्का राख्नुपर्ने हुनाले अंशुवर्माको कार्यकाल ई. ६२० सम्म रहेको र हर्षको कार्यकाल ई. ६४८ सम्म रहेको देख्दा अंशुवर्माको काल हर्षवर्धनको कार्यकालको आरम्भिक अवस्थासँग मात्र साम्य राख्ने देखिन्छ । हर्षवर्धनको महत्वाकाङ्क्षाको युगपछि मात्र आरम्भ हुने हुँदा ती दुइको बीचमा टक्करको स्थिति नआएको देखिन्छ ।[८१] मौखरि राजपुत्र शूरसेन र उनको परिवारलाई अंशुवर्माले आश्रय दिएको घटनामा पनि हर्षवर्धनले उपेक्षाको नीति लिएको देखिन्छ । अंशुवर्माका उत्तराधिकारीहरुप्रति पनि उनले यस्तै नीति लिएको देखिएको छ ।

अंशुवर्माको राजनीतिक उपलब्धिको रुपमा राजाको उपाधिमा भएको परिवर्तनलाई पनि लिन सकिन्छ । मानदेवदेखि शिवदेव प्रथमसम्मका लिच्छवि राजाहरु साधारण स्वतन्त्र राजाले लिने 'भट्टारकमहाराजश्री' को उपाधिको प्रयोग गर्दथे भने अंशुवर्माले त्यस राजकीय उपाधिमा 'अधिराज'- को थप गरी

शान बढाएको देखिएको छ । यो थेगो पछिका सबै राजाहरुले सकारेको देख्दा यो कुरामा अंशुवर्माको देन मान्न सकिन्छ ।

**अंशुवर्माका मुद्रा**

अंशुवर्माको राजनीतिक उपलब्धिकै एक अंगको रुपमा उनले प्रसारित गरेका मुद्राहरुको पनि अध्ययन गर्न सकिन्छ ।

अंशुवर्माको नाम लेखिएका दुइटा टक पाइछन् । एकथरी टकमा 'श्र्यंशुवर्मा' र 'कामदोही' लेखिएको पाइन्छ । यस मुद्राका पनि पाँच भेद रहेको चर्चा इतिहासकारले गरेका छन् (जोशी, २०३३: ७२-७८) ।

आर्को थरि मुद्रामा 'महाराजाधिराजस्य' र 'श्र्यंशोः' अभिलेख लेखिएको छ (ऐजन: ७९) ।

एकापट्टि 'वैश्रवणः' र आर्कोपट्टि 'कामदोही' र त्यसमुन्तिर बाच्छोले दूध चुसिरहेको गाईको चित्र अंकित तामाको टक (ऐजन: ६१-६३) कसले चलाएको हो भन्ने कुरामा केही मतभेद पाइन्छ । शंकरमान राजवंशीले यसलाई शिवदेव प्रथमको मान्नु भएको छ (राजवंशी २०३४।३५: २५) । धनवज्र वज्राचार्यले यसैलाई अंशुवर्माले छपाएको मान्नुभएको छ (वज्राचार्य, १९९०: ११-१२) । यो 'वैश्रवण' मुद्राबारे बाबुराम आचार्यले यस्तो व्याख्या गर्नु भएको छ – "अंशुवर्माका अनेक थरि टकमध्ये एक थरि टकमा एकापट्टी बाछासहितको गाईको मूर्तिका साथ 'कामदोही' र अर्कापट्टी बसेका राजाका मूर्तिका साथ 'वैश्रवण' लेखेर आफूलाई एकैसाथ 'कुबेरसमान सम्पन्न' र बाछारुपी प्रजालाई कामधेनुझैं पालन गर्ने भन्ने भाव प्रकट गरेका छन्" (आचार्य, २०२८ १५३) ।

श्र्यंशुवर्मा खालका मुद्रामा कामदोही लेखिएको र कामधेनुको चित्र अंकित गरिएको र सोही चित्र यो वैश्रवण मुद्रामा पनि रहेकोले यसको प्रसारण अंशुवर्माले गरेको भन्ने तथ्य निकै स्पष्ट हुन्छ । यसरी दुइथरी टकमा कामदोही अभिलेख र कामधेनुको चित्र अंकित गराएको कारणले बाबुराम आचार्यले उपर्युक्त किसिमको व्याख्या गर्नु भएको भए पनि तिनको आर्को किसिमले पनि व्याख्या गर्न सकिने देखिन्छ । वैश्रवण अथवा कुबेर भगवान् शिवका मित्र (मीत) मानिन्छन् र शिवका भक्त अंशुवर्माले आफ्नो धार्मिक धारणाअनुसार कुबेर देवताको नाममा टक चलाएको अर्थ पनि गर्न सकिन्छ । साथै कामधेनुको पनि शैवहरुले पूजन गर्ने चलन पाइने हुनाले शैव परम्पराअनुसार अंशुवर्माले उक्त टकहरुमा कामधेनुलाई स्थान दिएको मान्न सकिन्छ ।[८२]

कामदोही– कामधेनुको जे अर्थ गरे पनि बाच्छाले तल्लीन भएर गाईको दूध चुसिरहेको सो चित्रकलाको दृष्टिले पनि अत्यन्त आल्हादकारी लाग्दछ । यो चित्र अंकित भएका माटाका भांडा पनि निकै पाइने हुनाले अंशुवर्माले चलाएको यो चलन पछि पनि विभिन्न रुपमा प्रयुक्त भएको अनुमान गर्न सकिन्छ ।



'पशुपति' अभिलेख भएका तामाका टक छाप्ने चलन पनि अंशुवर्माले शुरु गरेको देखिनाले अंशुवर्माले कम्तीमा चारथरी तामाका पैसा चलाएको थाहा पाइन्छ । यतिका टक चलाउने लिच्छविकालका एक मात्र शासक अंशुवर्मा देखिएका छन् ।

यसरी हेर्दा अंशुवर्माले विभिन्न कारणबाट उक्त टकहरु प्रसारित गरेको अनुमान गर्न सकिन्छ । यी टकहरु चलाउनुपर्ने आवश्यकता पनि परेको थियो किनभने अंशुवर्माले आर्थिक गतिविधिमा निकै सक्रियता ल्याएकोले व्यापारको माध्यमको रुपमा टकहरुको खाँचो पनि परेको थियो ।

## धार्मिक उपलब्धि

**शैवधर्मसम्बन्धी नीतिः**

अंशुवर्माभन्दाअघि नेपालमा शैवधर्म लोकप्रिय रहिसकेको थियो तर त्यसले त्यति विशेष महत्व पाइसकेको भने थाहा पाइँदैन । अंशुवर्माले भने शैवधर्म र पशुपतिनाथलाई विशेष महत्व दिएर धार्मिक क्षेत्रमा महत्वपूर्ण काम गरेको देखिन्छ ।

ई. ५९८ को खोपासीको अभिलेखमा शिवदेव प्रथमले अंशुवर्माको प्रशंसा गर्दै उनी भगवान् शिवका भक्त छन् भनेर –

"भगवान् पशुपतिनाथका चरणकमललाई प्रणाम गर्न तत्पर रहेका हुनाले पछिका हित कल्याण गरेका ...... श्री महासामन्त अंशुवर्मा ......" ।[८३] लेखाएको हुनाले अंशुवर्माको धार्मिक व्यक्तित्व स्पष्ट हुन्छ । त्यही पृष्ठभूमिमा ई. ६०५ देखि स्वतन्त्र रुपमा राजकाज गर्न थालेपछि उनीले पशुपतिनाथको भक्ति दर्शाउने "भगवत्पशुपतिभट्टारकपादानुगृहीतः" (भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका) भन्ने धार्मिक उपाधि लिन थालेको थाहा पाइन्छ । यसरी राजाले पशुपतिनाथसम्बन्धी धार्मिक उपाधि लिन थालेको हुनाले शैवधर्म र पशुपतिनाथलाई राजकीय धर्म र राजकीय राष्ट्रिय देवता मान्न थालिएको तथ्य स्पष्ट हुन आउँछ ।

अंशुवर्माको यो धार्मिक नीति उनीपछि ई. ७३३ सम्म भएका उदयदेव, जिष्णुगुप्त, विष्णुगुप्त, नरेन्द्रदेव, शिवदेव द्वितीय र जयदेव द्वितीयहरुले कायम गरेको देखिन्छ । यसरी आफ्नो समय र आफूपछि एक शताब्दीभन्दा बढी (११३ वर्ष) समयसम्म प्रभाव पार्ने धार्मिक नीतिको सफल आरम्भ गर्ने श्रेय अंशुवर्मालाई दिन सकिन्छ । लिच्छविकालमा स्थापित सो परम्परा क्रमशः मध्य वा मल्ल र आधुनिककालसम्म कायम रहिरहेको देख्दा अंशुवर्माको सो नीतिले नेपालको इतिहासलाई नै प्रभावित गर्ने काम गरेको बुझ्न सकिन्छ ।

अंशुवर्माको शैवधर्मसम्बन्धी नीतिमा अरु महत्वपूर्ण कुरा पनि समावेश भएको पाइन्छ । मानदेव द्वितीयले पशुपतिनाथसंग सम्बद्ध गरी चलाएको नयाँ संवत्नै अंशुवर्माले प्रयोग गरेको देखिनु यहाँ उल्लेखनीय छ ।

अंशुवर्मलि आफ्नो शैवधर्मसम्बन्धी नीतिलाई लोकप्रिय पार्न प्रसारित गर्ने राजाको नाम नराखी 'पशुपति' अभिलेख मात्र राखी पैसा चलाउन शुरु गरेको पनि थाहा पाइन्छ । अंशुवर्मलि थालनी गरेको यो नीति पनि पछिका राजाहरुले पनि कायम गरेको कुरा समय समयमा निकालिएका २० थरी त्यस्ता पैसा पाइएकोले स्पष्ट हुन्छ । त्यस्ता टकहरुमा साँढे र चन्द्रमा तथा कलश आदिको चित्र अंकन गरिएको पाइन्छ ।

अंशुवर्मलि स्वतन्त्र रुपले प्रसारित्त गरेका कति अभिलेखका सिरानमा सढिको चित्र लेखाउने गरेको चलनलाई पनि शैव धर्मसँग सम्बद्ध गरेर हेर्न सकिन्छ । यो चलन पनि पछिका कति राजाहरुले कायमै गरेको पाइन्छ ।

हाँडीगाउँको ई. ६०८ को अभिलेखमा अंशुवर्मलि देवीदेवताका भेटी तोकेको सूचीमा निम्न शैव मन्दिरहरुको उल्लेख भएको छ–

| | मन्दिर | | भेटी |
|---|---|---|---|
| १. | भगवान् पशुपति | - | पुराण ६पण २ |
| २. | रामेश्वर | - | पुराण ३ पण १ |
| ३. | मानेश्वर | - | ,, |
| ४. | साम्बुपुर | - | ,, |
| ५. | धारामानेश्वर | - | ,, |
| ६.. | पर्वतेश्वरदेव | - | ,, |
| ७. | कैलासेश्वर | - | ,, |

साँगाको ई. ६०८ को अभिलेखमा मंगलाचरणको रुपमा मुण्डमाला धारी शिवको स्तुति एक श्लोकमा लेखिएको देख्दा पाशुपत सम्प्रदाय अन्तर्गतको कापालिक सम्प्रदायको सम्झना हुन्छ । अंशुवर्मलि जुन पशुपतिनाथको भक्तिसम्बन्धी उपाधि लिएका थिए त्यसको आधारमा उनीलाई पाशुपत सम्प्रदायका अनुयायी मान्न सकिने देखिन्छ । त्यही तथ्यको व्याख्या साँगाको यो अभिलेखले गरेको बुझ्न सकिन्छ ।

उपर्युक्त साँगा अभिलेखको मंगलाचरणबाट कापालिक सम्प्रदायको अस्तित्वबारे संकेत पाइएको आधारमा अंशुवर्माको समयमा पाशुपत-कापालिक जोगीका मठ-मण्डलीहरुको यहां स्थापना हुन थालेको पनि अनुमान गर्न सकिन्छ। जिष्णुगुप्तको पालाका पशुपतिमा पाइएका पाशुपत्त आचार्य प्रणर्द्दनप्राणकौशिकका दुई अभिलेख त्यस समयमा (अर्थात् ई. ६३० तिर) पाशुपत्त सम्प्रदायका जोगी र आचार्यका संख्या र समाजमा तिनको प्रभाव निकै बढिसकेको र तिनका संगठन पनि व्यवस्थित भइसकेको देख्दा त्यसको पृष्ठभूमि अंशुवर्माकै समय वा त्यसभन्दा पनि अघिदेखि बनिसकेको बुझ्न सकिन्छ । यसरी हेर्ने हो भने पाशुपत संगठनको विकासमा पनि अंशुवर्माको देन रहेको अनुमान गर्न सकिन्छ । तर यसबारे अरु सामग्रीको उपलब्धिको प्रतीक्षा गर्नु परेको छ ।[८४]



अंशुवर्मलि आफ्ना कार्यकालका शैवधर्मसम्बन्धी अनेक गतिविधि साथै शैव मन्दिरहरुको जीर्णोद्धार र सुव्यवस्था गर्ने तर्फ विशेष विचार पु-याएको थाहा पाइन्छ । उनको यो नीति शिवदेव प्रथमको साथ रही शासन गरेको समयदेखिनै कायम रही आएको देखिन्छ । ई. ५९८ मा राजा शिवदेव प्रथमबाट आज्ञा लिई अंशुवर्मलि आफैले प्रसारित गरेको खोपासीको अभिलेखमा उल्लेख भएको 'द्वारोद्घाटनयात्रा' र "कैलास ... यात्रा" को सम्बन्ध पशुपतिनाथसँग रहेको हुनुपर्ने धनवज्र वज्राचार्यको अनुमान छ किनभने त्यसै अभिलेखमा अंशुवर्मालाई पशुपतिनाथका भक्तको रुपमा वर्णन पनि गरिएको छ (वज्राचार्य, २०३०: २७७) । यसरी हेर्दा 'द्वारोद्घाटनयात्रा' पशुपतिनाथको मन्दिरको द्वारको उद्घाटन र "कैलाश ...... यात्रा" को सम्बन्ध पशुपति क्षेत्रमा गरिने कुनै धार्मिक यात्रा हुन सक्ने देखिन आउंछ । 'द्वारोद्घाटनयात्रा' को सन्दर्भले अंशुवर्मलि पशुपतिनाथको मन्दिरको जीर्णोद्धार गरेको तथ्यलाई संकेत गरेको पनि मान्न सकिन्छ । "कैलाश ... यात्रा" भने पहिलेदेखि चली आएको यात्राको रुपमा मान्न सकिन्छ जसको व्यवस्था विषयमा अंशुवर्मलि ध्यान दिएको संकेत उक्त अभिलेखले गरेको छ ।

उपर्युक्त अवस्थामै ई. ६०४ मा अंशुवर्मलि 'लिम्वटीद्रंग' (वर्तमान लेले भेक) भित्र रहेको सामाजिक-सांस्कृतिक र विभिन्न धर्मसम्बन्धी संस्थाहरुको सुव्यवस्था गरेकोमा दुईटा शैव मन्दिरहरु विश्वेश्वर र चूडिकेश्वरका नाम पनि लेखिएको पाइन्छ (ऐजन: २८३) ।

स्वतन्त्र शासक भएपछि अंशुवर्मलि शैवधर्मसम्बन्धी गतिविधि गरेका उदाहरण मध्ये पहिलो ई. ६१५ को लेखमा पाइन्छ । सो मितिको देउपाटनको अभिलेखमा अंशुवर्माकी दिदी (बहिनी) भोगदेवीले पशुपतिमा थापेको शूरभोगेश्वर शिव मन्दिर, भोगदेवीकी छोरी (अंशुवर्माकी भान्जी) भाग्यदेवीले थापेको लडितमहेश्वर शिव मन्दिर तथा भाग्यदेवीका पुर्खाले थापेको दक्षिणेश्वर शिव मन्दिरको रेखदेखको जिम्मा स्थानीय पाञ्चालीलाई दिइएको कुरा लेखिएको छ ।[८५] यी मन्दिरहरुसम्बन्धी केही समस्या उठेमा राजाहरुले 'अन्तरासन' (तत्कालिक राजसभा) ले नै विचार गर्नु पर्ने प्रावधान पनि त्यही अभिलेखमा लेखिएको छ।[८६]

यो सन्दर्भबाट एकातिर शैवमन्दिरहरुको संचालनबारे अंशुवर्मलि विशेष व्यवस्था गरेको थाहा पाइन्छ भने आर्कोतिर अंशुवर्माका नातेदारहरु पनि शैव धर्मानुयायी रहेका र तिनले पशुपति क्षेत्रमा अनेक मन्दिर बनाएर शैव धार्मिक गतिविधिलाई अगाडि बढाएका रहेछन् भन्ने बुझिन्छ ।

स्वयं अंशुवर्मलि कुनै देवमन्दिर बनाएको थाहा पाइर्दैन[८७] तर उनले शिवसाथै अन्य धर्म सम्प्रदायका देवस्थानहरुको जीर्णोद्धार[८८] र व्यवस्थामा ध्यान पु-याउनु आवश्यक ठानेको बुझिन्छ । देवस्थलहरुको व्यवस्थासम्बन्धी समस्या हेर्ने 'पश्चिमाधिकरण' नामको सरकारी संस्थको उल्लेख पनि उनैका पालाका अभिलेखहरुमा सर्वप्रथम भएको देख्दा सो उद्देश्यको लागि उक्त अड्डाको स्थापना पनि अंशुवर्मलि गरेको अनुमान गर्न सकिन्छ ।

**वैष्णवधर्मसम्बन्धी नीति**

अंशुवर्माले वैष्णवधर्मसम्बन्धी अनेक महत्वपूर्ण काम गरेको विषयमा सन्दर्भहरु पाइनाले उनले यस धर्मप्रति पनि उत्साहजनक नीति लिएको थाहा पाइन्छ ।

शिवदेव प्रथमका सहायक शासकका रुपमैं अंशुवर्माले राज्यसम्बन्धी काम कर्तव्यहरु गराउने गरेको समयमा उनीले 'लिम्बटीद्रंग' (वर्तमान लेले) भित्रका सामाजिक धार्मिक संस्थाहरुको बन्दोबस्त गराउँदा "सिंहमण्डपमा रहेको भगवान् वासुदेव ब्राह्मणगोष्ठी" का गुठियारसम्बन्धी व्यवस्था मिलाएको कुरा लेखेको ई. ६०४ को अभिलेखबाट थाहा पाइन्छ (वज्राचार्य, २०३०: २८३) ।

वैष्णवसम्बन्धी अंशुवर्माको पहिलो अभिलेख चाँगुनारायणमा रहेको छ । चाँगुनारायणको मूर्तिको सुनको कवचमुन्तिर लेखिएको यो अभिलेखमा भनिएको छ—

> "भगवान् नारायणको पहिलेको कवच र गरुड कालक्रमले थोत्रो भएको देखेर राजा अंशुवर्माले ... सारा संसारको हित होओस् भनेर पुरानै नमूना बमोजिम सप्पैको जिर्णोद्वार गर्नु भयो ।"[८९]

संवत् ३१ वा ई. ६०७ को यो अभिलेखबाट चाँगुनारायणको प्रसिद्ध नारायणसम्बन्धी कार्यपछि हाँडीगाउँको संवत् ३२ (ई. ६०८) को अभिलेखमा मन्दिर विहारहरुको भेटीको बन्दोबस्त गरिएको सूचीमा निम्न वैष्णव मन्दिरहरु परेका छन् :-

| | वैष्णव मन्दिर | | भेटी |
|---|---|---|---|
| १. | दोलाशिखरस्वामि (चाँगुनारायण) | - | पुराण ६पण २ |
| २. | हंसगृहदेव | - | पुराण ३ पण १ |
| ३. | वाग्वतीपारदेव | - | " |
| ४. | नरसिंहदेव | - | " |
| ५. | भुम्भुक्किकाजलशयन | - | " |

लिपिको आधारमा अंशुवर्माको पालाको मानिएको ठिमीको अभिलेखमा वासुदेव भगवान्को मन्दिर र त्यसको पूजा आजाको लागि जग्गा गुठी राखिएको उल्लेख भएको छ तर अभिलेख ज्यादै खण्डित छ (ऐजन: ३९२) ।

पाटन नवहिलको मिति खण्डित अभिलेखमा अंशुवर्माले मीर्मेलीती भन्ने ठाउँमा रहेका शंकरनारायण अथवा हरिहरको मन्दिरको जीर्णोद्वार गरी त्यसको जिम्मा स्थानीय जनतालाई दिएको पश्चिमाधिकरण नामको अड्डाको अधिकार त्यहाँ छुटाई दिएको कुरा लेखिएको छ (ऐजन: ३४५) ।



**बौद्धधर्मसम्बन्धी नीति**

अंशुवर्मा शैवधर्मका अनुयायी थिए र उनीले पशुपतिनाथलाई विशेष मानेका थिए भन्ने कुरा त माथि चर्चिसकिएकै छ । तर उनीले अरु धर्म-सम्प्रदायलाई पनि मान्यता दिएर धार्मिक क्षेत्रमा राम्रो व्यवस्था कायम गरेको कुरा उनका अभिलेखहरुले बताएका छन् । उनको बौद्धधर्मसम्बन्धी नीतिबारे यहाँ छोटकरी विचार गरिन्छ ।

अंशुवर्माले स्वतन्त्र भएर प्रसारित्त गरेको पहिलो अभिलेख-बुङमतीको ई. ६०५ को अभिलेखको शिरोभागमा प्रख्यात बौद्ध चिन्ह- दुईतिर मृग र बीचमा रथचक्रको चित्र अंकित्त भएको हुनु महत्वपूर्ण छ (वज्राचार्य, २०३०: २९०) । राजकीयस्तरमा प्रसारित्त अभिलेखमा यसरी बौद्ध चिन्ह अंकित्त गराउने पहिला राजा अंशुवर्मा देखिएकोले उनले बौद्धधर्मलाई सम्मान गर्दथे भन्ने बुझिन्छ । तर यो अभिलेखको वक्तव्यबारे विद्वान्हरुमा मतभेद रहेको छ ।

बुङमती अभिलेखको वक्तव्यमा कुखुरा, सुंगुर, भेडा र माछाहरुको राम्ररी पालन गरेको सन्दर्भ परेको छ भन्ने धनवज्र वज्राचार्यले अर्थ गर्नु भएकोमा (ऐजन: २९१) ज्ञानमणि नेपालले उक्त पशुहरु नमार्ने भन्ने अर्थ गर्नु भएको छ (नेपाल, २०४०: १४३-१४४, १५२) । उहाँले बुगायूमी ग्राम लिच्छविकालमा बौद्धसंघ विहार भएर वा अवलोकितेश्वर देवताको स्थापना भएर बौद्ध धार्मिक क्षेत्र भएको हुनाले काटमार रोकिएको विशेष खालको क्षेत्र थियो भनेर अर्थ गर्नुभएको छ (ऐजन: १४३) । उक्त अभिलेखको शीर्ष भागमा बौद्ध चिन्ह अंकित्त हुनाको कारण पनि यही हुन सक्दछ भन्ने अनुभव हुन्छ ।

अंशुवर्माको हाँडीगाउँको संवत् ३२ (ई. ६०८) को प्रख्यात अभिलेखमा शैव र वैष्णव मन्दिरहरु साथै अनेक बौद्धविहारहरुलाई पनि भेटीको व्यवस्था गरिदिएको कुरा लेखिएको पाइन्छ (ऐजन: ३२०) । त्यस अभिलेखमा उल्लिखित बौद्धविहारहरुको सूची तल उद्धृत गरिन्छ :—

| | बौद्धविहार | | भेटी |
|---|---|---|---|
| १. | गुंविहार | - | पुराण ६पण २ |
| २. | श्रीमानविहार | - | " |
| ३. | श्रीराजविहार | - | " |
| ४. | खर्जूरिकाविहार | - | " |
| ५. | मध्यमविहार | - | " |
| ६. | सामान्य विहारहरु | - | पुराण ३ पण १ |

यस किसिमले भेटीको व्यवस्था पहिले पनि गर्ने गरिन्थ्यो कि अंशुवर्माले नै सर्वप्रथम यो नीति लिएका हुन् भन्ने विषयमा केही भन्न सकिएको छैन । तर यसअघिको कुनै यस्तो प्रमाण नपाइएको हुनाले यस्तो व्यवस्था गर्ने पहिला राजा अंशुवर्मानै हुन सक्ने अनुमान गर्न सकिन्छ ।

हालै गोकर्ण वालुवागाउँ, महांकाल थानबाट पाइएको अंशुवर्माको संवत् ५३६(ई. ६१४) को अभिलेखले एक महत्वपूर्ण तथ्य प्रस्तुत गरेको पाइन्छ (राजवंशी, १९९०: ३४) । अंशुवर्मालि आफूले स्थापना गरेको श्रीराजविहारलाई अहिदुंकोट्ट नामको गाउँ गुठी राखेको विवरण यसमा लेखिएको छ ।[१०] अभिलेखको प्रारम्भमा बौद्धधर्मसम्बन्धी एक श्लोक मंगलाचरणको रुपमा लेखिएको[११] र अभिलेखको शीर्षभागमा बौद्ध चिन्ह-दुइतिर मृग र बीचमा रथचक्रको अंकन पनि गरिएको छ ।

अंशुवर्माकै हाँडीगाउँको ई. ६०८ कै अभिलेखमा 'श्रीराजविहार' लाई भेटी छुट्याइसकिएको देख्दा सो विहार अंशुवर्मालि ई. ६०८ भन्दा पहिलेनै वनाइसकेको हुनुपर्ने देखिन्छ । उक्त गोकर्णको अभिलेखचाहिँ सो विहारलाई गुठीको बन्दोबस्त गरिदिन लेखाइएको देखिन्छ । गोपालवंशावलीमा पनि अंशुवर्माको वर्णनमा "तेन च राजविहारकृतम्" (उनले राजविहार पनि वनाए) भनिएको कुरा गोकर्णमा प्राप्त उक्त अभिलेखले अभ प्रामाणिक सिद्ध गरिदिएको छ । यो विहार पाटनमा थापिएको अनुमान गरिएको छ (वज्राचार्य, २०३०: ३२४) ।

अंशुवर्माकै गोकर्णेश्वर महादेवस्थाननिर पाइएको अभिलेख पनि उनी राजाले कुनै बौद्धचैत्यको पूजा आजा चलाउन जग्गा गुठी राखेर लेखाई राखेको जस्तो देखिन्छ (वज्राचार्य, २०३०: ३७०-३७१) । अभिलेख ज्यादै खिइएको हुँदा सबै विवरण थाहा पाउन असम्भव भएको छ । तर यसमा 'वज्रयान' शब्दको पनि उल्लेख भएकोले त्यसै बेला नेपालमा बौद्धधर्ममा वज्रयानको स्थिति आइसकेको मानिएको छ (ऐजन) । सो नयां सम्प्रदायसम्बन्धी गतिविधिलाई प्रोत्साहन दिने नीति लिएको कुरा यो अभिलेखले वताए जस्तो लाग्दछ तर यससम्बन्धी अन्य सामग्रीहरु पनि पाइने दिन पर्खिनु परेको छ ।

फर्पिङ्बाट पाइएको एउटा शिलालेखमा कुनै बौद्ध विहारमा अंशुवर्मालि धाराको बदोबस्त गरिदिएको उपलक्ष्यमा भिक्षुहरुबाट अंशुवर्माको ठूलो गुण गाइएको छ (ऐजन: ३६८) ।[१२] यो उदाहरणबाट अंशुवर्माको बौद्धधर्मसम्बन्धी नीतिको त्यस कालका बुद्धमार्गीहरुले मुक्त कण्ठले तारीफ गरेको तथ्य बुभ्न सकिन्छ ।

### सामाजिक-सांस्कृतिक उपलब्धि

कुनै नीतिवान् शासकको वास्तविक क्षमता राजनीतिभन्दा सामाजिक र सांस्कृतिक क्षेत्रसम्बन्धी नीतिमा देखिन्छ । यो दृष्टिले मूल्याङ्कन गर्दा अंशुवर्माको यो पक्षमा पनि राम्रो उपलब्धि रहेको देखिन्छ ।

सामाजिक व्यवस्थामा अंशुवर्मा कट्टर शास्त्रवादी देखिएका छन् । टिष्टुङ्बाट पाइएको उनको अभिलेखमा उनले "आर्यमर्यादाका वन्देजलाई ननाघेको" (अनतिव्रन्तार्यमर्यादासेतु:) भन्ने विशेषण आफूलाई लेखाएका छन् (वज्राचार्य, २०३०: ३११) । वर्णाश्रम व्यवस्थालाई नै आर्यमर्यादा भनिएको बुझिने र



अंशुवर्मालि वर्णाश्रमव्यवस्थालाई आफ्नो राज्यको सामाजिक संरचनाको आधार मानेको देखिन्छ । उनैको ई. ६०५ को बुङ्मती अभिलेखमा 'धर्मसंकर' को समस्या र 'भट्टाधिकरण' नामको अड्डाको उल्लेख भएको छ (ऐजन: २९०-२९१) । धर्मको एक अर्थ पेशा हो । जातअनुसार काम गर्नु नै धर्म हो भन्ने शास्त्रहरुको वचन पाइन्छ । त्यस्तो जातिगत पेशामा 'संकर' अथवा छ्यासमिस पर्न गयो भने समाजमा पेशा (आर्थिक आधार, जीविकाको साधन) सम्बन्धी अव्यवस्था उत्पन्न हुन्छ । यस्तो पेशासम्बन्धी छ्यासमिस पर्ने मुद्दा हेर्ने काम 'भट्टाधिकरण' नामको अड्डाको थियो भन्ने कुरा सोही अभिलेखबाट थाहा पाइन्छ । कुनै कुनै विशेष क्षेत्रमा यस्ता मुद्दा स्वयं राजाले हेरी छिन्ने गर्दथे भन्ने तथ्य पनि यही अभिलेखबाट प्रष्ट हुन्छ (ऐजन: २९७-२९९, नेपाल, २०४०: १४३) । विद्वान् ब्राह्मणलाई भट्ट भनिने हुनाले सो अड्डामा विद्वान् ब्राह्मण मात्रै नियुक्त हुन्थे र उनीहरु धर्मशास्त्रहरुका सिद्धान्तअनुसार उक्त 'धर्म' सम्बन्धी मुद्दा हेर्दथे भन्ने अनुमान गर्न सकिन्छ ।

वर्णाश्रमव्यवस्थासम्बन्धी यो नीति धेरथोर सबै लिच्छवि राजाहरु मान्दथे तर यस विषयमा अंशुवर्मालि विशेष रुपले ध्यान दिएको बुझिन्छ । भट्टाधिकरणको उल्लेख अंशुवर्माअघिका अभिलेखहरुमा नपाइने हुनाले यो नीति लागू गर्न एक अड्डा (अदालत) नै खडा गरिएको कुराबाट यो कुरा स्पष्ट हुन्छ ।

'आर्यमर्यादा' को यो नीति विविध खालका आर्येतर जनताहरुमा कसरी लागू गरिन्थ्यो भने कुरा अस्पष्ट छ । तर यो सिद्धान्त पछि भएका अरु राजाहरुले पनि उत्साहसाथ कायम गरेको देख्दा अंशुवर्माको यो नीति पछिका शासकहरुमा पनि आदर्श रहन गएको थाहा पाइन्छ ।

सामाजिक व्यवस्थासम्बन्धी उक्त नीतिपछि सामाजिक व्यवहार र गतिविधि सम्बन्धमा पनि अंशुवर्मालि अभिरुचि लिएको देखिन्छ । लेलेको, ई. ६०४ को अभिलेखमा दिइएको 'गौष्ठिक' र 'शाला' हरुको जुन लामो सूची दिइएको छ तिनलाई सामाजिक र सांस्कृतिक स्थानीय संगठन वा संस्थाका रुपमा लिन सकिन्छ । ती संगठन वा संस्थाहरुको स्थापना पहिलेका राजा र सज्जनहरुले गरेका थिए । तिनका आर्थिक आधार जग्गा जमीनमा कसैले हस्तक्षेप नगरुन् र ती संस्थाहरुको स्थायित्व रहिरहोस् भनेर अंशुवर्मालि शिवदेवमा जाहेर गरेको यो शिलालेख प्रसारित गरेका थिए (वज्राचार्य, २०३०: २८२-२८३) । यस अभिलेखमा दिइएको सूचीमा गौष्ठिकका रुपमा दिइएका संस्थाहरुको नाम सूची यहाँ उद्धृत गरिन्छ–

१. सिंहमण्डपे भगवद्वासुदेवब्राह्मणगौष्ठिक - (कुनै वैष्णव मन्दिरसँग सम्बन्धी वैष्णव ब्राह्मणहरुको गुठीका संचालक सदस्यहरु)
२. प्रदीपगौष्ठिक - बत्तीसम्बन्धी गुठी
३. पानीयगौष्ठिक - पानीको व्यवस्था गर्ने गुठी

४. ब्राह्मणगौष्ठिक - ब्राह्मणहरुको गुठी सम्बन्धी
५. पौलस्पानीय गौष्ठिक -पानी र अन्य कुनै (?) विषयसम्बन्धी
६. मल्लयुद्धगौष्ठिक - उत्सवको अवसरमा कुस्तीको प्रदर्शन गराउनेसम्बन्धी
७. धूपगौष्ठिक - धूपको व्यवस्थासम्बन्धी?
८. इन्द्रगौष्ठिक - इन्द्र भगवान्को पूजा आजासम्बन्धी?
९. वादित्त्रगौष्ठिक - बाजाको व्यवस्थासम्बन्धी
१०. अर्चागौष्ठिक - मूर्ति बनाउने शिल्पकारहरुसम्बन्धी
११. ध्वजगौष्ठिक - ध्वजासम्बन्धी[१३]
१२. प्रणालीगौष्ठिक - हिटी धाराहरुको व्यवस्थासम्बन्धी
१३. ब्राह्मणसानात्थ्यगौष्ठिक - नातागाता कोही नभएको अनाथ व्यक्तिलाई उसको मृत्युपछि सनाथ व्यक्तिको जस्तो अग्निसंस्कार गरिदिने आदि कामको अभिभारा लिएको गुठी (वज्राचार्य, २०३३: १४३) ।
१४. प्रवहणगौष्ठिक - यातायातका साधनसम्बन्धी
१५. अर्चनीयगौष्ठिक - देवमूर्तिका पूजाआजासम्बन्धी

'शाला' सम्बन्धी निम्न संस्थाहरुको उल्लेख उक्त अभिलेखमा गरिएको छ–

| | | | |
|---|---|---|---|
| १. | आरोग्यशाला | - | औषधालय |
| २. | माद्ध्यवशाला | - | विद्यालय |
| ३. | पश्चिमशाला | - | ? |
| ४. | उत्तरशाला | - | ? |
| ५. | हिद्भिमशाला | - | ? |
| ६. | पूर्वशाला | - | ? |

माथि चर्चित धेरै संस्थाहरुको ठीक परिचय पाउन सकिएको छैन तर परिचय पाउन सकिएकाहरुको अस्तित्वबाट मात्रै पनि लिच्छविकालमा सामाजिक सांस्कृतिक महत्वका काम व्यवस्थित रुपले संचालन गर्न संगठनहरुनै रहेको महत्वपूर्ण तथ्य थाहा पाइन्छ । यस्ता संस्थाहरुको सुव्यवस्थापूर्वक संचालन होओस् भनेर अंशुवर्मले ध्यान दिएको कुरा सो अभिलेखले स्पष्ट पारेको छ । सामाजिक सांस्कृतिक महत्वका 'गोष्ठी' वा गुठीका 'गौष्ठिक' वा गुठियारहरुलाई "सन्मानस्वरुप पाउने भाग" दिने व्यवस्था अंशुवर्मले हांडीगाउंको ई. ६०८ को अभिलेखमा गरेका छन् । जसमा "गौष्ठिकाणां पु. २ प. २" अर्थात गुठियारहरुलाई २ पुरण र २ पण भाग तोकिएको छ (वज्राचार्य, २०३०: ३२१) । यस सन्दर्भबाट गुठियारहरुलाई सरकारी मान्यता प्राप्त हुन्थ्यो भन्ने तथ्य स्पष्ट हुन्छ ।

सांस्कृतिक क्षेत्रमा अंशुवर्मले गरेको सुव्यवस्थासम्बन्धी तथ्यको एक महत्वपूर्ण पक्ष उनको धार्मिक नीतिसम्बन्धी विवरणमा पनि परेको छ ।



देवस्थलहरुको सुव्यवस्थाको देखरेख गर्ने 'पश्चिमाधिकरण' नामको सरकारी संस्थाको स्थापना पनि अंशुवर्मले गरेको देख्दा (ऐजन: ३४५- ३५७) यस क्षेत्रतर्फतर्फ उनको विशेष अभिरुचि स्पष्ट हुन्छ ।

कला र वास्तुकलाको क्षेत्रमा अंशुवर्माको उपलब्धि सम्बन्धमा कैलासकूटभवनको उदाहरणमात्र प्रस्तुत गरे पनि पर्याप्त हुन्छ भन्ने हामीलाई लाग्दछ । कैलासकूटभवनबारे अलग्गै अध्ययन गरिएको छ ।

शिक्षा क्षेत्रमा पनि अंशुवर्माको केही राम्रो योगदान रहेको देखिन्छ । माथि चर्चित लेलेको अभिलेखमा चर्चित केही 'शाला' हरुलाई तात्कालिक शिक्षालय वा विद्यालय मान्न सकिने हुनाले तिनको सुव्यवस्थाबारे अंशुवर्मले अभिरुचि लिएको एक तथ्य यस सम्बन्धमा उल्लेखनीय छ । उनको पालामा व्याकरणशास्त्रको रचना अध्ययन अध्यापन विशेष रुपले प्रचलित रहेको कुरा गोपालवंशावलीमा उल्लिखित हुनाले शिक्षाको स्थितिसम्बन्धी यो दोस्रो प्रमाण देखिएको छ । अंशुवर्मा स्वयं उच शिक्षा प्राप्त शासक थिए र शास्त्रहरुको अध्ययन मननमा लागिरहन्थे भन्ने उनकै अभिलेखहरुबाट थाहा पाइने र उनले त्यस्तै कारणले 'श्रीकलहाभिमानी' उपनाम पनि ग्रहण गरेर आदर्श कायम गरेका थिए । यसबारेमा अन्यत्र भिन्नै विचार गरिसकिएको छ ।

उस बेलाको परम्परामा उच्चवर्गले पुस्तकी शिक्षा लिने र अरु निम्न वर्गले शिल्प र व्यावसायिक पेशासम्बन्धी प्रायोगिक शिक्षा लिने गर्दथे । यस पक्षमा पनि संगठित प्रयास भएको कुरा 'अर्चागोष्ठी' वा मूर्तिकारको गोष्ठीको माथि गरिसकिएको उल्लेखबाट स्पष्ट हुन्छ । शिल्प शिक्षाको उच अवस्था कैलासकूटभवनको भव्यतासम्बन्धी विवरणबाट पनि स्पष्ट हुन्छ ।

### कैलासकूटभवन

राजा शिवदेवसँगबाट स्वतन्त्र भई शासन गर्न थालेको बेलादेखि अंशुवर्माको दरबार कैलासकूटभवनको उल्लेख हुन थालेको पाइछ । अंशुवर्मले स्वतन्त्र भई प्रसारित गरेको पहिलो अभिलेख ई. ६०५ को बुङ्मती अभिलेख कैलासकूटभवनबाट प्रसारित गरेको देखिएको छ (वज्राचार्य, २०३०: २९०) । त्यस मितिपछि अंशुवर्मले प्रसारित गरेको धेरैजसो अभिलेख कैलासकूटभवनबाटै प्रसारित भएका देखिएका छन् । तर ई. ६०८ को साङ्गाको अभिलेखमा मात्र सो दरबारको भव्यता बारे संक्षिप्त विवरण परेको पाइन्छ । त्यहाँ भनिएको छ–

> "पृथ्वीतलको टीका जस्तो भएको, कुरिकुरि लागेका
> दुनियाँहरुले आंखा झिम्म नगरी हेरिएको कैलासकूट-
> भवन" (ऐजन: ३३७) ।[१४]

यो विवरणबाट कैलासकूटभवनको भव्यताबारे अनुमान गर्न सकिन्छ ।

अंशुवर्मापछिका अभिलेखहरुमा पनि कैलासकूटभवनको महिमा र भव्यताको विवरण पाइन्छ । भीमार्जुनदेव र विष्णुगुप्तको ई. ६४० को

यंगालहिटीको अभिलेखमा कैलासकूटभवनलाई 'श्रीमत्' लेखेर सम्मान गरिएको पाइन्छ (ऐजन: ४४२) ।

लिच्छवि राजा नरेन्द्रदेवको ई. ६४३ को पाटन भन्सारचोकको पहिलो अभिलेखमा कैलासकूटभवनको भव्यताको वर्णन यसरी गरिएको छ-

"जूनले टल्केको हिमालयको टाकुराझैं फलफल
गर्ने, संसारमा प्रसिद्ध कैलासकूटभवन ।"[९५]

नरेन्द्रदेवकै अनन्तलिंगेश्वरको अभिलेखमा पनि भनिएको छ-

"कैलास जस्तो भएको, आँखालाई आनन्द
दिने, राम्रो, संसारमा प्रसिद्ध भएको
कैलासकूटभवन ....................।"[९६]

कैलासकूटभवनको अन्य विवरण पाइएको छैन । यति आन्तरिक विवरणबाट पनि त्यस दरवारको भव्यताको अनुमान गर्न सकिन्छ ।

ई. ६०५ को अभिलेखमा यो दरवारको उल्लेख पाइनाले उक्त वर्षसम्म यसको निर्माण सम्पन्न भइसकेको अनुमान गर्दा र यस्तो भव्य भवनको निर्माण गर्न निकै वर्ष लागेको अनुमान गर्दा उक्त मितिभन्दा निकै वर्षअघि यसको निर्माण आरम्भ भइसकेको अनुमान गर्न सकिन्छ यो दरवारको निर्माण कार्यले पनि परोक्ष रुपमा अंशुवर्माको राजनीतिक शक्ति निकै पहिलेदेखि मानिन थालेको अनुमान गर्न सकिन्छ ।

शंकरमान राजवंशीले खोपासीको संवत् ५२० (ई. ५९८) को अभिलेखमा चर्चित "द्वारोदघाटनयात्रा" र "कैलास ...... यात्रा" को आधारमा अंशुवर्माले शिवदेवको अनुमति लिएर कैलासकूटभवन बनाउन शुरु गरेको अनुमान गर्नु भएको छ (राजवंशी २०३४-३५: २४) । तर सो अभिलेखमा उल्लेख भएका "द्वारोदघाटनयात्रा" र "कैलासयात्रा" को सम्बन्ध कैलासकूटभवनको निर्माणसँग जोड्न नसकिने विचार धनवज्र वज्राचार्यले व्यक्त गर्नु भएको छ (वज्राचार्य, २०३०:२७७) ।

जे होस् यो भवनको निर्माणको घटना पनि रहस्यमा लुकेको छ भन्ने कुरा यसको निर्माणसम्बन्धी कुनै शिलालेख आजसम्म नपाइनाले स्पष्ट हुन्छ । वंशावली साहित्यमा यस्तो महत्वपूर्ण घटनावारे केही संकेत गरिएको पाइँदैन जसबाट हाम्रा पुराना इतिहासकार (वंशावलीकार) हरुको संकुचित धारणा स्पष्ट हुन्छ । [९७]

यो कैलासकूटभवनसम्बन्धी कुनै विवरण नपाइने हुनाले यो कहाँ थियो भन्नेवारेमा इतिहासकारहरुमा मतभेद रहेको पाइन्छ । यसै सन्दर्भमा गौतमवज्र वज्राचार्य र मेरी स्लसरले यो दरवार काठमाडौं शहर जैसीदेवल नजीकैको केलाच्छेचोक(केलायूचोक) मा थियो भन्ने प्रस्ताव गर्नु भएकोमा सो मतको खण्डन डा. कमलप्रकाश मल्लले गर्नु भएको छ (मल्ल, १९८३: १२८) ।



भाषावंशावलीमा अंशुवर्माको विवरणमा लेखिएको यो विवरण कैलासकूटभवनको हुनु सम्भव लाग्दछ- "......... वन फाँडी वामनगर बनाउन आरम्भ गऱ्या । बहुतै सुन्दर गरी दरवार समेतका शहर बनाई आफ्ना मन्त्री सरदार दुनियाँहरुलाई पनि दर्जाअनुसार घर बनाई सबैलाई वास गराया । आफूपनि सोही शहरमा वास गऱ्या । बाह्र हजार १२००० का शहर बनिगयो" (पौडेल, २०२०: ८४) ।

अरु इतिहासकारहरुले यस दरवारलाई हाँडीगाउँ भेकमा रहेको अनुमान गरेका छन् । धनवज्र वज्राचार्यले सो कुरा मान्नुभएको छ (वज्राचार्य, २०३०: २९४-९५) । ज्ञानमणि नेपाल पनि सोही विचार मान्नुहुन्छ (नेपाल, २०४०: ६५-६६) ।

ठकुरलाल मानन्धरले टंगाल मानेश्वरी मन्दिरनेर पाइएका पुराना ईटहरुमा "महासामन्ताशुवर्ण" र "श्रीमहासाम्तांशुवर्मण:" लेख लेखिएको देखिनाले सो ईटहरु कैलासकूटभवनको निर्माणमा प्रयोग भएका ईट नै हुन सक्ने अनुमान गरी टंगाल हाँडीगाउँ भेकमा सो कैलासकूटभवन बनेको कुरा मान्नभएको छ (मानन्धर, २०३०: १२-१३, मानन्धर १९७७: ८७, चित्र पनि) । यी ईटहरुकै आधारमा कैलासकूटभवनको अवस्थितिवारे निकै स्पष्टीकरण हुन पुगेको छ ।

अंशुवर्माका संवत् ३० (ई. ६०६) र संवत् ३२ (ई. ६०८) का दुई अभिलेख हाँडीगाउँ थटोल डवलीमा रहेका छन् र ती दुवै अभिलेखमा दूतक नराखिएका र 'स्वयमाज्ञा' किसिमका हुनाले पनि ती कैलासकूटभवनको प्रांगणमा राखिएका देख्दा पनि माथि चर्चित कुराको पुष्टि हुन्छ । संवत् ३० को अभिलेखमा त अंशुवर्माको राज्याभिषेक सम्बन्धमा राजदरवारको स्थिति वन्देजसम्बन्धी विवरण परेकोले पनि त्यही कुराको स्पष्टीकरण भएको बुझिएको छ ।

अंशुवर्माले बनाएको कैलासकूटभवनको नामाकरणमा भगवान् शिवको निवासस्थानको रुपमा प्रख्यात कैलास पर्वतको अनुकरण गरिएको हो कि भन्ने अनुमान गरिएको थियो । हुन पनि अंशुवर्मा पशुपतिनाथका भक्तका रुपमा प्रख्यात हुनाले यो अनुमान मिलेकै देखिन्छ । तर वास्तविक कुरा आर्कै रहेछ भन्ने पत्ता लागेको छ । प्राचीन वास्तुशास्त्रहरुमा दरवारका योजनाका भेदअनुसार नामकरण गर्ने गरिएकोमा एक थरिलाई 'कैलास' नामकरण गरेको देखिएको छ ।[९८] यस आधारमा यो दरवार वास्तुशास्त्रमा वर्णित योजनाअनुसार बनेको अनुमान गर्न सकिन्छ ।

राजा मानदेवले राजधानी राजदरवारको रुपमा मानगृह बनाउनुअघि राजाहरु कुन दरवारमा बस्दथे थाहा पाइएको छैन । मानगृह पनि मानदेवले कहिले बनाएका हुन् स्पष्ट छैन तर उनीपछि १०० वर्ष जति यसैमा बसेर लिच्छवि राजाहरुले राजकाज गरेको थाहा पाइन्छ । ई. ६०५ देखि अंशुवर्माले स्वतन्त्र शासक भई कैलासकूटभवनलाई राजधानी बनाई १५ वर्ष जति शासन गरेका थिए ।

अभिलेखमा संक्षिप्त विवरण तथा चिनियाँ दूतहरुको टिपोटबाट कैलासकूटभवन भव्य हुनाले यसमा कब्जा जमाउनु पनि तत्कालीन राजनीतिको लक्ष्य रहेको बुझिन्छ । अंशुवर्मापछि छोटकरी शासन गर्ने उदयदेव पनि अंशुवर्मा जस्तै कैलासकूटभवनमै बसेका थिए (यद्यपि उनका एकमात्र अभिलेखको शुरुको भाग खण्डित हुनाले कैलासकूटभवनको उल्लेख भए नभएको बुझ्न सकिँदैन) । उनीपछि ई.६४१ तिरसम्म चलेको लिच्छवि र गुप्तका संयुक्त शासनको अवधिमा हर्ताकर्ता भएका गुप्तवंशी जिष्णुगुप्त र विष्णुगुप्तले कैलासकूटभवनमा कब्जा जमाई पुरानो दरबार मानगृह लिच्छविवंशी ध्रुवदेव र भीमार्जुनदेवलाई बस्न दिएको देखिन्छ ।

ई. ६४३ तिर नरेन्द्रदेवले लिच्छवि - गुप्तको संयुक्त शासनलाई पराजित गरेर सानसाथ राजकाज फिर्ता लिएपछि लिच्छविहरुको पुख्यौंली दरबार मानगृहमा नबसी अंशुवर्माले बनाएको कैलासकूटभवनमा बस्न थाले । उनको शासनकालमा आएका चिनियाँ दूत वांग-हुयेन- शेले नेपालसम्बन्धी टिपोट लेखेकोमा नरेन्द्रदेवले बस्ने गरेको दरबारको वर्णन पनि परेको छ । त्यो वर्णनमा भनिएको छ[९९]:–

> "नेपालको राजधानीमा तले तला परेको एक भवन छ सो भवन ८० प्यू(४०० फीट?) को घेरामा बनेको छ । यसको माथिल्लो भागमामात्र दश हजार मानिस बस्न सक्ने ठाउँ छ । तीन खण्डमा विभक्त यो भवनमा प्रत्येक खण्डमा सातत‌ले बुर्जाहरु बनेका छन् । (बहुमूल्य) प्रस्तर तथा बहुमूल्य रत्नहरु त्यहाँ जडिएको छ ।"
>
> "बीचको सातत‌ले बुर्जा तामाको पाताले छाइएको छ । यसका बार्दली, आँखीझ्याल, लठ्ठा र भित्रपट्टिका हरेक भागमा राम्रा र बहुमूल्य पत्थर जडिएको छ । सो बुर्जाका चार कुनामा तामाको - पानी बगाउन नलीहरुको जडान गरिएको छ । तलतिर सुनको मकरको मुखबाट पानी निस्किन्छ । बुर्जाको टुप्पाबाट झरेको पानीको धारो तलको सुनको मकरको मुखबाट फोहरा झैं निस्किरहन्छ ।"[१००]

यस्तो चिनियाँ टिपोटबाट नरेन्द्रदेव बस्ने दरबारको भव्यता र व्यवस्थाबारे हामीलाई ज्ञान हुन आउँछ । नरेन्द्रदेव त्यतिखेर कैलासकूटभवनमा बस्दथे भन्ने थाहा पाइने हुनाले यो विवरण कैलासकूटभवनको नै हो भन्ने मान्न सकिन्छ । यो भव्यतासम्बन्धी विवरण बुझ्दा अंशुवर्माले कस्तो उत्साह र परिश्रमले यसको निर्माण गरेका रहेछन् भन्ने कुराको अनुमान गर्न सकिन्छ ।

नरेन्द्रदेवका ई. ६६५ देखिका अभिलेखबाट उनले प्रशासनको केन्द्र सार्न "भद्राधिवासभवन" नामको आर्को दरबार बनाइसकेको थाहा पाइन्छ । उक्त मितिपछि उनी जीवित रहेसम्म (ई.६७९ सम्म) का अभिलेखहरु त्यही नयाँ भवनबाट प्रसारित भए ।



स्वाभिमानको कारणले होला नरेन्द्रदेवले नयाँ दरबार बनाए पनि उनैका छोरा शिवदेव द्वितीयले उक्त भद्राधिवासभवनको उपेक्षा गरी कैलासकूटभवनलाई नै आफ्नो वासस्थल र प्रशासनको केन्द्र बनाएको देख्दा यसमा केही रहस्य पनि थियो कि भव्य दरबारमैं बस्ने स्वाभाविक लालसा मात्र थियो - यसको निर्णय गर्न गाहारो छ ।

जयदेव द्वितीयसाथै लिच्छविकालको इतिहासको एकक्रम सिद्धिए झैं कैलासकूटभवनको इतिहास पनि अन्धकारमा विलीन हुन्छ । ई. ६०५ देखि ई. ७३३ तिरसम्म करीव १२८ वर्षसम्म प्रशासनको महत्वपूर्ण केन्द्र र लिच्छवि कला र वास्तुकलाको नमूना रुपको कैलासकूटभवनको पतन कसरी भयो र कहिले भन्ने तथ्य स्पष्ट पार्न सकिएको छैन ।

अंशुवर्माले नयाँ दरबार कैलासकूटभवनको निर्माण गरेर नेपाली विस्तार शिल्पले आफ्नो उत्कर्ष रुप देखाउने अवसर पाए भने उनले एक पुरानो दरबारको जीर्णोद्धार पनि गरेको देखिन्छ ।

हनूमान्ढोका क्षेत्रमा पाइएको एक खण्डित अभिलेखको आधारमा उक्त भेकमा पहिलेदेखि रहेको एक दरबार बिग्रिएकोमा त्यसको जीर्णोद्धार अंशुवर्माले गराएको अनुमान गरिएको छ (वज्राचार्य, २०३०: ३७४-७५, वज्राचार्य, २०३३: ९, पन्त, २०४८: २२) । ज्ञानमणि नेपालको विचारमा उक्त दरबार मानगृह बन्नुभन्दा पहिले राजाहरुको वासस्थानको रुपमा रहेको हुनुपर्छ (नेपाल, २०४०: ७०) ।

उक्त दरबारको जीर्णोद्धार गराएर अंशुवर्माले त्यहाँ सरकारी कार्यालयहरु स्थापित गरेको थाहा पाइन्छ । यसरी अंशुवर्माले आफ्नो निर्माता व्यक्तित्वको परिचय एकातिर दिएको देखिन्छ भने त्यही पुनर्निर्मित भवनलाई प्रशासनिक केन्द्र बनाएर तात्कालिक प्रशासनिक व्यवस्थालाई सुदृढ पारेको देखिन्छ । अंशुवर्माका अभिलेखहरुमा उल्लेख हुनथालेको "दक्षिण राजकुल" (दक्षिणकोलीग्राम) मा रहेको दरबार र त्यहाँ रहेका विभिन्न अधिकरणहरुको उल्लेख पाइने आधारमा यस्तो अनुमान गरिएको हो ।

## आर्थिक उपलब्धि

आर्थिक क्षेत्रमा पनि अंशुवर्माको कार्यकालमा देशमा उल्लेखनीय उपलब्धि भएको देखिन्छ । आर्थिक क्षेत्रमा कृषि, पशुपालन र वाणिज्यको क्रमिक विकास पहिलेदेखिनै भइआएको स्थितिमा अंशुवर्माको व्यवस्था-प्रधान शासनकालमा त्यस क्षेत्रमा अझ विकास भएको थियो । गोपालवंशावलिमा 'प्यण्डकादिव्यवहारप्रवर्त्तितं' भनिएको (वज्राचार्य, मल्ल, १९८५: ३०) मा 'पिण्डक' अथवा कूतसम्बन्धी व्यवस्था अंशुवर्माले गरेको अनुमान गर्न सकिन्छ । यो सन्दर्भले जनताले सरकारलाई तिर्नु पर्ने कूतसम्बन्धी व्यवस्थाबारे संकेत गरेको हो कि भूस्वामी र भूकर्षक कृषक बीचको सम्बन्धबारेको व्यवस्था हो स्पष्ट

छैन । जुन रुपको व्यवस्था गरेको भए पनि यो सन्दर्भबाट अंशुवर्मालि भूमिव्यवस्थामा कुनै किसिमको सुधार गरेको तथ्य स्पष्ट हुन्छ ।[१०१]

आन्तरिक आर्थिक व्यवस्थाको सुदृढ अवस्थापछि बाह्य व्यापारमा अंशुवर्माको दृष्टि गएको देखिन्छ । किरातकालमै भारततर्फ नेपालका प्राकृतिक उव्जनी तथा उन र उनी काम्लाहरुको निकासी गर्ने चलन चलिसकेको थियो । लिच्छविकालका खानी खनेर धातुहरु निकाली तिनबाट भाँडाकुँडा बनाई निकासी गर्ने चलन थपियो । यो तथ्य अंशुवर्माका भट्टवाल र टिष्टुङबाट पाइएका एकै भाकाका दुई अभिलेखका वक्तव्यबाट स्पष्ट हुन्छ । त्यहाँ उक्त सम्बन्धमा भनिएको छ–

> "अनिर्हार्य (सरकारी स्वीकृतिविना निकासी गर्न नपाइने) फलाम, चमर, ऊन, कस्तूरी र तामाका भाँडाकुँडाहरुलाई छोडेर अरु वस्तुहरु लिई विक्रीको लागि यताबाट गएका र विक्री गरिसिध्याई फर्केका ... ग्रामका वासिन्दाहरुलाई साविक बमोजिम बुझाउनु पर्ने शुल्क तापन आदि दस्तूर हामीबाट माफ गरिएको छ" (वज्राचार्य, २०३०: ३०९, ३११) ।[१०२]

ई. ६०७ को यो सन्दर्भबाट टिष्टुङ० भेकतिरका ग्रामीणहरु निकै संख्यामा व्यापारमा संलग्न रहेछन् भन्ने पहिलो महत्वपूर्ण तथ्य थाहा हुन्छ । दोस्रो महत्वपूर्ण कुरा फलाम, चमर, ऊन, कस्तूरी र तामाका भाँडाकुँडाहरुको भारततर्फ निकासी हुन्थ्यो तर त्यसमा सरकारले नियन्त्रण गरेको थियो, तिनको निकासी गर्दा स्वीकृति लिनु पर्दथ्यो भन्ने तथ्य थाहा पाइन्छ । यो नियन्त्रण विभिन्न कारणले गरिएको हुनुपर्दछ । उक्त सामग्रीको भारतको बजारमा ठूलो भाग हुनाले असीमित रुपमा तिनको निकासी भएमा स्वदेशमै पनि अप्ठेरो स्थिति आउन सक्ने हुनाले सरकारले त्यस्तो नीति लिएको हुनुपर्दछ ।

उक्त सामग्रीमध्ये चमर र कस्तूरी प्राकृतिक वन्य जन्तुबाट प्राप्त हुने हुनाले तिनको निकासी धेरै पहिलेदेखि हुँदै आएको देखिन्छ भने ऊन चाहिँ कुटीर उद्योगबाट प्राप्त हुने वस्तु देखिन्छ । फलाम र तामाका भाँडाले चाहिँ तात्कालिक खनिज उद्योगको उच्च अवस्थालाई संकेत गरेको छ । विदेश व्यापारको अवस्था कहिलेदेखि आएको हो भन्न सकिँदैन तर अंशुवर्माको समयमा यो स्थिति देख्दा तत्कालीन आर्थिक स्थिति सन्तोषजनक रहेको अनुमान गर्न सकिन्छ ।

विदेश व्यापारमा विविधीकरण गर्ने नीति अंशुवर्मालि लिएको कुरा उक्त अभिलेखले बताएको छ । चर्चित वस्तुबाहेक सरकारबाट स्वीकृति नलिई निकासी गर्न पाइने वस्तुहरु विक्री गर्न जाँदा र आँदा व्यापारीहरुलाई शुल्क र तापन आदि दस्तूर तिर्न नपर्ने गरी अंशुवर्मालि माफी गरिदिएको कुरा उक्त अभिलेखमा लेखिएको छ । यसरी दस्तूर माफ गरिदिएमा उक्त खालका वस्तुहरुको



निकासीलाई प्रोत्साहन हुने र व्यापारिक वस्तुको विविधीकरण गराउन सकिने हुनाले नै यस्तो नीति अंशुवर्मालि लिएको देखिन्छ ।

यसरी पहिलेदेखि भारततर्फमात्र व्यापार चली आएकोमा राजनीतिक र सांस्कृतिकसाथै आर्थिक महत्वको कारणले पनि उत्तरतर्फ पनि व्यापारिक सम्बन्धको आरम्भ गर्नु आवश्यक भएकोमा महत्वाकाङ०क्षी शासक अंशुवर्मालि त्यसतर्फ पनि प्रयास गरेको देखिएको छ । चीनको तांकाल अथवा ई. ६१८-९०५ को युगमा तिब्बत र नेपालको बीचमा व्यापार सम्पर्क बढ्न जाँदा नेपालमा खेतीवालहरुभन्दा व्यापारीहरुको संख्या बढ्न थालेको चर्चा सो कालको इतिहास ग्रन्थमा उल्लेख भएको चर्चा सिल्वाँलिवीले गर्नु भएको छ (लेभी, १९०५-८, २ १८५) ।

यो सन्दर्भलाई कुन रुपमा लिन सकिन्छ यसै भन्न गाहारो छ । एकातिर एक प्रसिद्ध इतिहासकारले उल्लेख गरेको यो सन्दर्भको उपेक्षा पनि गर्न गाहारो छ भने आर्कोतिर त्यो भनाईको परिणामका प्रमाण खोज्न पनि गाहारो छ ।

### अंशुवर्माको अभिनन्दन

अंशुवर्माको कार्यकालका दुवै अवधि (ई. ५९४-६०४, ६०५-६२०) मा सरकारी अभिलेखहरुले नै बढी भएका र जनताका अभिलेखहरुको अभाव रहेकोले यस अवधिमा जनताको प्रतिक्रिया के कस्तो रह्यो भन्ने कुरा थाहा पाउन सकिएको छैन । अपवादको रुपमा अंशुवर्माको दोस्रो कार्यकालको अन्तिम समयतिर जनतातर्फबाट लेखाई राखिएका तीन अभिलेख पाइन्छन् । ती तीन अभिलेखमध्ये एउटामा अंशुवर्माको गुणगान गरिएको पाइन्छ ।

फर्पिङ०बाट पाइएको बौद्ध भिक्षुहरुको अभिलेखमा गुणीजनको सम्मान गर्ने र जनतालाई सुख दिने भनेर अंशुवर्माको गुण गाउँदै भनिएको छ–

> "गुणको द्वेष गर्ने कलिकालका राजाहरुले सधैं
> पिरोलिएको यस लोकलाई सुख दिने उहाँ
> श्री कलहाभिमानी राजा" ।[१०३]

त्यही अभिलेखमा अगाडि अंशुवर्माको कीर्ति फैलिएको कुरा अत्यन्त आलंकारिक भाषामा यसरी अभिव्यक्त गरिएको छ–

> "स्थिर बुद्धि भएका जसले कलिकालमा पनि
> एक्लै ......पृथ्वीभर आफ्नो सफा कीर्ति
> फैलिएको ...... उहाँ श्रीकलहाभिमानी राजा...
> पातालमा पसेर त्यताबाट वेगले फर्केर आई
> फैलिएको कीर्ति ............... ।"[१०४]

उक्त अभिलेख अलि खण्डित भएको हुनाले पूरा कुरा थाहा पाउन सकिएको छैन तर बाँकी भागबाट थाहा पाइने उपर्युक्त वक्तव्यबाट बौद्ध भिक्षुहरुले अंशुवर्माको त्यसरी उदात्त रुपले गुणगान गरेको देखिनु महत्वपूर्ण छ। सो भनाईमा अंशुवर्माको कीर्ति फैलिएको कुरामा विशेष जोड दिइएको कुरा महत्वपूर्ण छ । अंशुवर्माको कीर्ति सर्वत्र फैलिएको भन्ने कुराको समर्थन चिनियाँ यात्री बौद्ध भिक्षु हुयन्साङ०गको अंशुवर्मासम्बन्धी टिपोट तल उद्धृत गरिएको छ।

**अंशुवर्माबारे चिनियाँ यात्रु ह्वेन्साँगको टिप्पणी**

अंशुवर्माको स्वर्गवास भएको १७ वर्षपछि प्रसिद्ध चिनियाँ यात्रु ह्वेन्साँग नेपालको दक्षिणी सीमान्ततिर वैशालीसम्म आइपुगी त्यहाँ सोध खोज गरेर नेपालसम्बन्धी विवरण लेखेका थिए । सो विवरणमा अंशुवर्मासम्बन्धी अलिकति चर्चा भएको छ । सो तल उद्धृत गरिएको छ–

> "केही अघि त्यहाँ अन्चु-फा-मो (अंशुवर्मा) नामका राजा भएका थिए जो विद्वत्ता र सत्य-निष्ठामा विशिष्ट थिए । उनी आफैंले शव्दविद्या-सम्बन्धी एक ग्रन्थ लेखेका थिए । उनी विद्याको सम्मान तथा धर्मको आदर गर्दथे । उनको ख्याति सर्वत्र फैलिएको थियो ।" (बील, १९८५: ३१९) ।

**भोगवर्मा**

संवत् ३९ (ई. ५१५) को देउपाटन अभिलेखमा अंशुवर्माकी दिदी वा बहिनीको परिवारबारे विवरण पाइन्छ । त्यही उनकी दिदी वा बहिनी भोगदेवीले आफ्ना पति राजपुत्र शूरसेनको पुण्यको लागि पशुपतिमा स्थापना गरिएका शूरभोगेश्वर, भोगदेवीकी छोरी भाग्यदेवीले थापेको लडितमहेश्वर र उनै भाग्यदेवीका पुर्खाले थापेको दक्षिणेश्वर शिवमन्दिरहरुको सञ्चालनको व्यवस्था अंशुवर्माले गरिएको कुरा लेखिएको छ । त्यहीं भोगेदेवीलाई श्रीभोगवर्माकी मुमा भनिएको छ (वज्राचार्य, २०३०: ३५७-३५८) ।[१०५] उक्त विवरणबाट राजपुत्र शूरसेन अंशुवर्माका नातेदार रहेछन् भन्ने कुरा बुझिन्छ ।

भारतीय इतिहासकारहरु डा. राधागोविन्द बसाक र रमेशचन्द्र मजुमदारले जयदेव द्वितीयको पशुपति अभिलेखमा उल्लिखित 'मौखरिकुल' का भोगवर्मालाई अंशुवर्माका भानिजनै मानिदिनु भएकोले (मजुमदार १९६२ १३७) माथि चर्चित अंशुवर्माको अभिलेखका राजपुत्र परिवारको परिचय पाउन सकिने भएको छ । यो समीकरणबाट राजपुत्र शूरसेन मौखरिराजवंशी रहेछन् भन्ने तथ्य बुझ्न सकिने भएको छ ।

यो परिचयसूत्रको आधारमा विचार गर्दा राजपुत्र शूरसेनसित अंशुवर्माकी दिदी वा बहिनी (भगिनी) भोगदेवीको विवाह गरिदिएको रहेछ भन्ने बुझियो ।



राजपुत्र शूरसेन र भोगदेवीका छोरा भोगवर्मा र छोरी भाग्यदेवी रहेछन् र ती सबै ई. ६१५ तिर नेपालमा बसेका रहेछन् भन्ने पनि सोही सन्दर्भबाट स्पष्ट भएको छ । भोगदेवीले आफ्ना पतिको नाममा पशुपतिक्षेत्रमा शूरभोगेश्वर शिवमन्दिर थापेको, उनकी छोरी भाग्यदेवीले सोही क्षेत्रमा लडित (ललित) महेश्वर नामको शिवमन्दिर थापेको कुरा पनि सोही अभिलेखबाट थाहा पाइन्छ।

त्यही अभिलेखमा भोगदेवीकी छोरी भाग्यदेवीका पुर्खाहरुले थापेको दक्षिणेश्वर शिवमन्दिरको पनि उल्लेख भएको छ । भाग्यदेवीका पुर्खा भनेर उनको ससुरालीपट्टिका पुर्खाको संकेत गरिएको बुझिन्छ तर यो परिवारको कुनै परिचय पाउन सकिँदैन । तैपनि भाग्यदेवीको पतिकुलको सम्बन्ध पनि नेपालमै थियो भन्ने बुझिन्छ ।

यो विवरणबाट मौखरिवंशी राजपुत्र शूरसेन सपरिवार नेपाल आई बसेको देखिनु ऐतिहासिक दृष्टिले महत्वपूर्ण मान्न सकिन्छ ।

तात्कालिक अभिलेखहरुमा प्राप्त विक्रमसेनसम्बन्धी सन्दर्भहरुबाट यो मौखरिवंशी परिवारका एक अर्का सदस्यको अस्तित्व सिद्ध हुन गएको छ । विक्रमसेनसम्बन्धी तीन सन्दर्भ पाइन्छन् । पहिलो सन्दर्भ अंशुवर्माको ई. ६०५ को बुङ्मती अभिलखको हो जसमा दूतकका रुपमा महासर्वदण्डनायक विक्रमसेनको उल्लेख भएको छ (वज्राचार्य, २०३०: २९१) । अंशुवर्माकै ई. ६०८ को साँगा अभिलेखमा पनि विक्रमसेन दूतकका रुपमा राखिएका छन् तर त्यहाँ उनलाई "सर्वदण्डनायक" र "राजपुत्र" पनि भनिएको छ (ऐजन: ३३७) । यसै गरी ज्याबहालको ई. ६१३ को अभिलेखमा राजपुत्र उपाधिसाथ विक्रमसेन दूतकका रुपमा चर्चित छन् (ऐजन: ३४३) । उक्त तीन सन्दर्भमा सरकारी पद्वीको प्रयोगमा विभिन्नताको ठीक व्याख्या गर्न गाहारो परे पनि विक्रमसेनको अस्तित्व मात्रै हैन सरकारी सेवामा प्रवेशको तथ्य पनि सिद्ध भएको छ । राजपुत्र भनिएको र सेनान्त नाम देख्दा यी विक्रमसेन राजपुत्र शूरसेनका दाजु वा भाई होलान् भन्न सकिन्छ ।

यसरी मौखरिवंशी सूरसेन सपरिवार र दाजु वा भाई विक्रमसेनसमेत यहाँ आई बसेको देख्दा अंशुवर्मालि आफ्ना यी नातेदारहरुलाई ससम्मान आश्रय दिएको बुझ्न सकिन्छ । तलको तालिकाले उक्त विवरणलाई प्रष्ट पार्ने छ :-

भोगवर्मा र अंशुवर्मा

...... वर्मा
।
-----------------------------------------------------------
। ।
भोगदेवी + राजपुत्र शूरसेन अंशुवर्मा
------------------------------
।
------------------------------
। ।
भोगवर्मा भाग्यदेवी
--------
।
।
राजपुत्र जनार्दनवर्मा

राजपुत्र शूरसेन

माथिको चर्चाबाट राजपुत्र शूरसेन मौखरिवंशी रहेछन् भन्ने कुरा थाहा पाइयो । यिनको उल्लेख ई. ६१५ को अभिलेखमा भएको पाइनाले यिनको समय पनि त्यसै मितिको हाराहारी भएको विचार गर्न सकिन्छ ।

राजपुत्र शूरसेनको परिवार र उनकै दाजु वा भाई राजपुत्र विक्रमसेन पनि नेपालमै आई बसेको देख्दा यो राजपुत्र (राजपूत) परिवार आई नेपालमा बस्ने कारणवारे हामीलाई जिज्ञासा उठ्छन् । के उनीहरु राजनीतिक कारणले नेपाल पसेका हुन् ? भन्ने पहिलो प्रश्न हाम्रो सामु आउँछ । यस विषयमा इतिहासकारहरुले के कस्तो अर्थ गरेका छन् र वास्तविक स्थिति के हो यस वारेमा यहाँ विचार गरिन्छ ।

ई. ६१५ को आसपास उत्तरी भारतमा राजा हर्षवर्धनको राजनीतिक महत्वाकांक्षा बढिरहेको परिप्रेक्ष्यमा मौखरिवंशी शूरसेनहरु नेपालमा पसेको कारणमा उनै हर्षवर्धनको राजनीति रहेको स्वतः अनुमान गर्न सकिन्छ यसैले हर्षवर्धनकै समयमा मौखरिवंशीहरु नेपाल आई बसेको देख्दा हर्षवर्धनले कन्नौजलाई शान्तिपूर्ण तरीकाले अधिग्रहण गरेको कुरा मान्न सकिँदैन भन्ने मजुमदारज्यूको विचार छ (मजुमदार, १९६२ १०२) ।[१०६] त्यही विचारको आधारमा ग्रहवर्माको मृत्युपछि पनि मौखरिवंशमा उत्तराधिकारी थिए तथा त्यहाँको गद्दी खाली थिएन भन्ने कुरा उहाँ मान्नुहुन्छ (ऐजन) । उहाँको विचारमा ग्रहवर्माका उत्तराधिकारी शूरसेन थिए । तिनलाई हटाई हर्षवर्धनले कन्नौजमा आधिपत्य जमाएका थिए (ऐजन) ।[१०७]



हर्षवर्धनले मौखरिवँशको राजधानी कन्नौजमा कब्जा जमाएको समय ई. ६१२ तिर मानिएको छ । ई. ६१३ देखि भोगवर्माको उल्लेख पाइने हुनाले र ई. ६१५ को अभिलेखमा शूरसेनको पनि उल्लेख पाइनाले ई. ६१२ को उक्त घटनाकै कारणले यी राजपुत्रहरु नेपाल पसेको हुन सक्नु सम्भव लाग्दछ । तर शूरसेनका नातेदार मानिएका राजपुत्र विक्रमसेनको उल्लेख ई. ६०५ कै अभिलेखमा पाइने हुनाले कन्नौज काण्डभन्दा निकै पहिलेदेखि यी राजपुत्रहरु यहाँ देखिन थाल्ने हुनाले शान्तिको अवस्थामै उनीहरुको नेपालमा आवागमन भएको पनि मान्न सकिन्छ ।

राजनीतिक कारणले राजपुत्र शूरसेनहरु नेपाल आई बस्न थालेको मानेमा अंशुवर्माले हर्षवर्धनसँग टक्कर लिन खोजेको कुरा पनि मान्न सकिन्छ । यो पक्ष त्यति स्पष्ट नभए पनि एउटा तथ्य भने स्पष्ट छ त्यो के भने अंशुवर्माको राजनीतिक सफलतामा यी राजपुत्रहरुको देन थियो । राजपुत्र विक्रमसेन र भोगवर्माको अंशुवर्मासँग घनिष्ठता देख्दा यो कुरा स्पष्ट हुन्छ । पछि यिनै भोगवर्माले नरेन्द्रदेवलाई राजनीतिक सफलताको लागि दिएको सहायताको तथ्यले पनि यो राजपुत्र वंशको राजनीतिक महत्व बुझ्न सकिन्छ ।

जुनसुकै स्तरका भए पनि मौखरि राजवंशको त्यसबेला निकै प्रतिष्ठा रहेको पाइन्छ । यसको प्रभाव लिच्छवि राजवंशमा पनि परेको कुरा जयदेव द्वितीयले आफ्नो मावलिवंशको "राजपुत्र" पद्वीलाई सकारेको देख्दा स्पष्ट हुन्छ। जयदेव द्वितीयको सन्दर्भमा यस कुराको चर्चा गरिएको छ ।

सांस्कृतिक हिसाबले पनि यो राजपुत्र वंशको महत्व रहेको बुझिन्छ । यो परिवारले पशुपति क्षेत्रमा तीन ओटा शिवमन्दिर थापेको तथ्यवाट यो कुरा स्पष्ट हुन्छ । शैवधर्मको समकालिक वेगको नेपाल-प्रवेशको महत्ता यसले बताएको बुझ्न सकिन्छ ।

यो परिप्रेक्ष्यमा भोगवर्माको महत्ववारे यहाँ थप विचार गरिन्छ ।

जयदेव द्वितीयको पशुपति अभिलेखमा शिवदेव द्वितीयको वयान गर्दा भोगवर्माको यस्तो वर्णन परेको छ :-

"वाहुवलले युक्त भएका, मौखरिकुलका श्रीवर्मचूडामणि
भन्ने प्रशास्तिले प्रख्यात भई शत्रु राजाहरुलाई
लज्जित पारेका श्री भोगवर्माकी छोरी, मगधका
वडा राजा श्री आदित्यसेनकी दौहित्री
(छोरीकी छोरी),लक्ष्मीजस्ती श्री वत्सदेवीसँग
आदरपूर्वक विवाह गर्नुभयो" ।

यो श्लोकले तीन ऐतिहासिक महत्वका तथ्यहरुको संकेत गरेको छ-

क) भोगवर्माको परिचय

ख) मगधका राजा आदित्यसेनकी छोरीसँग भोगवर्माको विवाह सम्बन्ध तथा

ग) भोगवर्माकी छोरी वत्सदेवीको शिवदेव द्वितीयसँग भएको विवाह र यसको राजनीतिक महत्व

यी तथ्यहरुको विमर्श तल दिइन्छ ।

भारतमा मौखरिवंशको इतिहासमा भोगवर्मा नामका कुनै राजाको उल्लेख नपाइने हुनाले तिनको परिचय अंशुवर्माका भानिजकै रुपमा लिनुपर्ने भएको छ र यस विषयको केही विचार माथि शूरसेनबारे विचार गर्दा गरिसकिएको छ ।

माथि उद्धृत भोगवर्माको वर्णनमा उनीलाई मौखरिकुलका भनिएको छ तर उनको राज्य कहाँ थियो भन्ने विषयमा केही लेखिएको छैन यसैले उनी गद्दीधारी राजा हैनन् भन्ने स्पष्ट छ । तर उनी प्रभावशाली व्यक्ति हुनाले र जयदेवका मातामह हुनाले कुनै किसिमले प्रशँसा त गर्नै पर्‍यो यसैले बुद्धकीर्तिले भोगवर्मालाई "बाहुबलले युक्त भएका" (बाहुबलाढ्यः) र "शत्रु राजहरुलाई ख्यातिले लज्जित पारेका" भनी प्रभावशाली वर्णन लेखी दिएका छन् । हुँदा हुँदा उनले आफ्नो कल्पनाले उनीलाई "श्रीवर्मचूडामणि" भन्ने प्रशस्ति पनि भिराइदिएका छन्[१०८] र राजालाई जस्तै सिंगारिदिएका छन् तर ऐतिहासिक सत्यतालाई भने कायमै गरिदिएका छन् । उनीलाई गद्दीधारी राजा भनेर भनेका छैनन् । यसरी गरिएको वर्णनबाट यो परिचय अंशुवर्माका भानिज भोगवर्माकै हो, कुनै स्वतन्त्र राज्यको राजाको वर्णन यो होइन भन्ने कुरा स्पष्ट हुन्छ । तर त्यस स्थितिमा पनि भोगवर्माको राजनीतिक महत्व निकै रहेछ । उनको कारणबाट समकालिक र परवर्ती घटनाचक्रमा उनको नीतिको प्रभाव रहेको कुरा भने स्पष्ट थाहापाइन्छ ।

माथि उद्धृत श्लोकमा दोश्रो महत्वपूर्ण सूचना मगधका राजा आदित्यसेनकी छोरीसँग भोगवर्माको विवाह सम्बन्ध भएको घटना देखिन्छ ।

आदित्यसेन मगधका परवर्ती गुप्तवंश (Later Guptas) का प्रख्यात राजा हुन् । तिनीसँग भोगवर्माको वैवाहिक नाता जोडिने घटना अवश्य नै महत्वपूर्ण रहेको अनुमान गर्न सकिन्छ तर यति महत्वको घटना कहिले भयो भन्ने बारेमा कुनै सूचना पाइँदैन । भोगवर्मा प्रख्यात राजवंशका कुमार हुनाले तथन पृष्ठभूमिको रुपमा अंशुवर्माको ख्याति पनि रहेको हुनाले यो विवाह सम्बन्ध हुन सकेको देखिन्छ ।

भोगवर्माकी छोरी वत्सदेवीको विवाह शिवदेव द्वितीयसँग भएको घटना पनि महत्वपूर्ण देखिन्छ । रमेशचन्द्र मजुमदारले यो विवाह सम्बन्धको राजनीतिक महत्व रहेको तथ्यतिर संकेत गर्नु भएको छ (मजुमदार, १९६२ १३७) । नरेन्द्रदेवले गद्दी फिर्ता लिन गरेको प्रयासमा भोगवर्माले सहयोग गरेको अनुमान गर्दा यो घटनाको महत्व बुझ्न सकिन्छ । नरेद्रदेवको संवत् ८९ (ई. ६६५) को पाटन बटुकभैरव मन्दिरको अभिलेखमा दूतकका रुपमा चर्चित राजपूत्र जनार्दनवर्मा (वज्राचार्य, २०३०: ४९१) लाई भोगवर्माका छोराका रुपमा लिन सकिने हुनाले माथि चर्चित राजनीतिक महत्वकै कारणबाट उनी नरेन्द्रदेवको सन्निकट पुगेको अनुमान गर्न सकिन्छ । यति विवरणबाट अंशुवर्माको ई. ६१५ को पशुपति अभिलेख र जयदेव द्वितीयको पशुपति अभिलेखमा उल्लेख भएको भोगवर्माको परिचय पाउन सकिएको छ ।



अब यहाँ शिवदेव प्रथम र अंशुवर्माका अरु अभिलेखहरुमा चर्चित भोगवर्मा नामधारी व्यक्तिसँग मौखरिवंशी उक्त भोगवर्माको सामन्जस्य गर्न सकिन्छ सकिँदैन भन्ने विषयमा केही चर्चा गर्नु परेको छ ।

राजा शिवदेव प्रथमको संवत् ५१६ (ई. ५९४) को भक्तपुर गोलमाढीटोलको अभिलेखमा दूतकको रुपमा भोगवर्मा गोमीको उल्लेख भएको छ (वज्राचार्य, २०३०: २५०) । शिवदेवकै सोही मितिको भक्तपुर तुलाछेँटोलको अभिलेखमा पनि दूतकका रुपमा उनै भोगवर्मा गोमी राखिएका छन् (ऐजनः २५४) ।

अंशुवर्माको पाटन नवहिलको अभिलेखमा दूतकको रुपमा महासामन्त उपाधिसाथ भोगवर्माको उल्लेख भएको छ (ऐजनः ३४५) । अंशुवर्माकै ई. ६१४ को गोकर्णको अभिलेखमा दूतकको रुपमा 'महासामन्तश्री' को उपाधिसाथ भोगवर्माको फेरि उल्लेख पाइन्छ (राजवंशी, १९९०: ३४) । यसपछि अंशुवर्माको ई. ६१५ को पशुपति अभिलेखमा "श्री भोगवर्मा" को उल्लेख पाइन्छ र यहीं अभिलेखमा यी भोगवर्मालाई अंशुवर्माले आफ्ना भानिजका रुपमा परिचय दिएका छन् (वज्राचार्य, २०३०: ३५७) ।

पछि ई. ६४०-६४१ तिरको चाँगुनारायण अभिलेखमा तत्कालीन संयुक्तशासक विष्णुगुप्तले "भोगवर्माले उहिले बनाएको धारा बिग्रेको हुनाले जीर्णोद्धार गरेको" कुरा लेखिएको छ (ऐजनः ४५२) ।

यसरी ई. ५९४ देखि ई. ६४१ तिरसम्मका लिच्छविकालीन अभिलेखमा भोगवर्मा नामका व्यक्तिको उल्लेख भएको पाइएको छ । उक्त सबै सन्दर्भमा देखिएका भोगवर्मालाई इतिहासकारहरुले एउटै व्यक्ति मानी तिनलाई अंशुवर्माका भानिज मानिदिएका छन् (ऐजनः १४२, ४५३, नेपाल, २०४०: ७६) ।

भोगवर्मासम्बन्धी माथि चर्चित सन्दर्भहरुमा स्वरुपगत अन्तर देखिएको हुनाले ती सबै एकै व्यक्तिलाई अर्थ्याएको मान्न अप्ठेरो परेको छ । ई. ५९४ का सन्दर्भमा देखिने भोगवर्मालाई गोमी भनिएको र अंशुवर्माका दुई अभिलेखमा देखिने भोगवर्मालाई सो थर नलेखिएको हुनाले ती दुइ भिन्नाभिन्नै व्यक्ति हुन् भन्न सकिने देखिन्छ । ई. ६१५ को अभिलेखमा चर्चित अंशुवर्माका भानिज भोगवर्मालाई महासामन्त लेखिएको नहुनु र गोमी पनि नलेखिएको हुनाले आर्को समस्या खडा भएको छ । यसरी हेर्ने हो भने तीन जना भोगवर्मा नामधारी व्यक्तिको अस्तित्व मान्नु पर्ने हुन्छ । अंशुवर्माका भानिज भोगवर्मा. मौखरिराजवंशी देखिएका र सो राजवंशले गोमी भनेको सन्दर्भ नपाइने हुनाले[१०९] ई. ५९४ का सन्दर्भमा चर्चित भोगवर्मा गोमी अंशुवर्माका भानिज हुने सम्भावना

देखिँदैन। शायद यिनै भोगवर्मालि चाँगुनारायण स्थानमा धारा बनाएको हुनुपर्दछ । यसैले विष्णुगुप्तले उनलाई माहासामन्त अथवा श्री केही पनि लेखेका छैनन् । ती गोमी वंशका हुनाले र विष्णुगुप्तहरु पनि गोमी वंशकै हुनाले उनीहरुमा राम्रो सम्बन्ध रहनु स्वाभाविक छ । अंशुवर्माको भानिज भोगवर्मा आफ्नो मामाको राजनीतिका समर्थक हुनाले विरोधी गुटप्रति विष्णुगुप्तले सहानुभूति देखाएको कुरा अमिल्दो हुन जान्छ । भोगवर्मालि विष्णुगुप्तका विरोधी गुटका नरेन्द्रदेवलाई केही सहयोग गरेको सम्भावना देखिएको हुनाले यस्तो भन्नु परेको हो । किनभने उनै भोगवर्माको छोरीसँग नरेन्द्रदेवका छोरा शिवदेव द्वितीयको विवाह भएको कुराको चर्चा माथि गरिसकिएको छ । यो विचार मान्न सकिएमा भोगवर्मा गोमी र भोगवर्मा भिन्नै व्यक्ति हुन् भन्ने देखियो । यो स्थितिमा महासामन्त उपाधिधारी भोगवर्माको समस्या बाँकी नै रहन जान्छ । अंशुवर्मालि आफ्ना भानिजलाई पहिले महासामन्त र पछि महासामन्त श्री बनाएको हुन सक्दछ । माथि चर्चिसकिएको अंशुवर्माको पाटन नबहिलको अभिलेखमा अंशुवर्माको उपाधि पनि महासामन्त नै रहेको र भोगवर्मालाई पनि त्यही उपाधि लेखिएको देख्दा आफ्ना आत्मीय जनलाई बाहेक अरुलाई आफ्नो सरहको पदवी किन दिइन्थ्यो भन्ने स्पष्टै छ । यद्यपि त्यस प्रमाणमा श्रीको प्रयोगमा फरकचाहिँ छ । तर यो फरक पनि गोकर्णको ई. ६१४ को अभिलेखमा कायम नरही दुवैमा महासामन्त पदवीसाथै श्रीको पनि प्रयोग गरिएको छ (राजवंशी, १९९०: ३४) । पदवी वा स्तरमा यस्तै समानता अंशुवर्माको ई. ६१५ को पशुपति अभिलेखमा पनि देखिन्छ जसमा मामा भानिज दुवैलाई श्री मात्र लेखिएको छ । उक्त मितिदेखि नै अंशुवर्मालि आफ्नो पुरानो पदवी महासामन्तश्री छोडी 'श्री' मात्र लेखाउन थालेका थिए । यसरी हेरिएमा ई. ६१३ देखि नेपालको इतिहासमा देखिने भोगवर्मा केही अवधिको लागि अंशुवर्माकै समकक्ष देखिन आउनु पनि महत्वपूर्ण देखिन्छ । ई. ६१५ पछि भोगवर्मासम्बन्धी कुनै प्रमाण नपाइनु रहस्यमय छ तर जयदेव द्वितीयको अभिलेखले प्रस्तुत गरेको आर्को पक्षको इतिहास अझ महत्वपूर्ण छ । यस पक्षबारे ठीक ठीक विश्लेषण प्रस्तुत गर्न गाहारो छ । त्यो पक्षसँग सम्बन्धित महत्वपूर्ण तथ्य- आदित्यसेनको छोरीसँग उनको विाह भएको घटना विशेष उल्लेखनीय छ । भोगवर्मासम्बन्धी यो अध्ययनबाट अंशुवर्माको राजनीतिक सफलताको एक प्रमुख सहयोगी पक्षबारे हामीलाई ज्ञात हुन आएको छ ।

भोगवर्मासम्बन्धी उपर्युक्त अध्ययनमा अनेक शंका नउठ्ने हैन । खास गरी ई. ६१५ पछि उनको नामोल्लेख नपाइनु आदि कारणले गर्दा उनको आदित्यसेनसँग र शिवदेव द्वितीयसँग वैवाहिक सम्बन्ध हुने घटना तथा उनले नरेन्द्रदेवलाई सहयोग दिएको भन्ने कुराहरुलाई त्यति स्पष्ट पार्न सकिएको छैन । भविष्यमा हुने अध्ययन अन्वेषणबाट यस पक्षमा बढी प्रकाश पार्ने विश्वास लिन सकिन्छ ।



**भृकुटी**

नेपालको इतिहासको अध्ययनमा आई पर्ने महत्वपूर्ण समस्याको रुपमा भृकुटीसम्बन्धी आख्यान रहेको छ । तिब्बतका वंशावलीहरुको नेपालको लागि महत्वपूर्ण उपहारको रुपमा भृकुटीको स्थान रहिआएको छ । नेपाली इतिहासको अध्ययनको आरम्भदेखिनै भृकुटीको अन्तरराष्ट्रिय महत्वको व्यक्तित्वबारे उत्कण्ठा र उत्सुकतासाथ इतिहासकारहरुले यथोचित विचार गर्दै आएका हुन् । तर यस विषयमा इतिहासकारहरुमा ऐकमतक्य हुन सकेको छैन ।

माथि भनिसकिएको छ भृकुटीसम्बन्धी इतिहास तिब्बती वंशावलीहरुमा मात्र उल्लेख भएको छ, नेपाली स्रोतहरुमा कतै पनि यसको सूत्र पनि पाइएको छैन । यो स्थितिले गर्दा पनि भृकुटीको समस्याको समाधान हुन नसकेको हो ।

एकीकृत तिब्बतका पहिला प्रख्यात र प्रतापी राजा स्रोङ्ग-चन-गम्पोले नेपाल र चीनका राजाहरुकी छोरीहरुसँग विवाह गरी तिब्बतमा बौद्धधर्मको प्रवेश गराई तथा अन्य अनेक किसिमले तिब्बतको विकास गरेको भन्ने मुख्य कथ्य भृकुटीसम्बन्धी तिब्बती आख्यानहरुको रहेको छ । त्यस्ता आख्यानहरुमा पनि कथ्यवस्तुमा अनेकता पाइनाले सो घटनालाई पौराणिक आख्यानको माहात्म्य दिइएको पाइनु महत्वपूर्ण छ । वास्तविक तथ्य त के हो भने ती आख्यानहरुले स्रोङ्ग-चन-गम्पोलाई लोकेश्वर देवताको रुपमा प्रतिष्ठापित गर्ने र ती देवताका दुइ शक्ति श्वेततारा र हरिततारको आवश्यकता पूरा गर्नाको लागि ती दुई राजकुमारीहरुको माहात्म्य बताइएको बुझिन्छ । यसरी ऐतिहासिक आख्यानहरुमा भृकुटीको एक दैवी व्यक्तित्वको स्वरुप पाइन्छ र तिब्बतीहरुका लागि उनी एक ऐतिहासिक व्यक्तित्वका रुपमा मानिएकी छन् भन्ने इतिहासकार मेरी स्लसरको भनाई छ (स्लसर, १९९३, १ ३३-३४) ।[११०] उहाँकै विचारमा तिब्बतमा बौद्धधर्मको प्रचार गर्ने काममा नेपालले पनि योगदान पु-याएको थियो (ऐजन: ३५) र भृकुटीको आख्यानले त्यही इतिहासलाई संकेत गरेको मान्न सकिन्छ ।

भृकुटीका पिता भनिएका नेपाली राजा को हुन् भन्ने कुरामा मतमतान्तर पाइन्छन् । पहिले इतिहासकारहरु भृकुटी अंशुवर्माकी छोरी हुन् भन्ने कुरा मान्दथे तर सो विवाह सम्बन्धको तिथिबारे विचार गर्दा सो कुरा खण्डित हुन पुगेको छ । ई. ६४१ मा भृकुटी र स्रोङ्ग-चन-गम्पोको विवाह भएको मान्ने हो भने भृकुटी अंशुवर्माकी छोरी हुनु असम्भव छ किनभने त्यसबेला अंशुवर्माको स्वर्गवास भएको २० वर्ष बितिसकेको थियो । उक्त मितिमा नेपालमा लिच्छवि राजा भीमार्जुनदेव र सहायक शासक विष्णुगुप्त थिए यसैले भृकुटी ती दुई मध्ये कुनै एकको छोरी हुन सक्दछिन् अथवा उनी राजा नरेन्द्रदेवकै छोरी पनि हुनु सम्भव छ । भृकुटी कुनै रजौटाको छोरी पनि हुन सक्दछिन् भन्ने मेरी स्लसरको विचार रहेको छ (ऐजन: ३३) ।

स्रोङ्ग-चन-गम्पोको समय ई. ६२९-६५० को बीच मानिएको छ । ज्ञानमणि नेपाल भृकुटी र स्रोङ्ग-चन-गम्पोको विवाह भएको समय ई. ६२९ प्रामाणिक काल मानी त्यतिखेर तिब्बतमा निर्वासित जीवन बिताइरहेका

उदयदेवले सो विवाह गरिदिएको पनि हुन सक्ने मान्नुहुन्छ (नेपाल, २०४५: १९) । तर उहाँले तिब्बतमा प्रचलित अनेक आख्यानहरुमध्ये एउटामा भृकुटी अथवा ठिचुङ लाची (भृकुटीको तिब्बती नाम) का पिताको नाम देवल्हाको अर्थ शिवदेव हुन सक्दछ भन्ने आर्को विचार पनि प्रस्तुत गर्नु भएको छ (ऐजन: ६)। देवल्हा-शिवदेवसम्बन्धी यो आख्यान सबभन्दा प्रामाणिक छ भन्ने उहाँको विचार छ । नेपालज्यूको यो विचार मान्ने हो भने भृकुटी शिवदेव प्रथमकी छोरी हुन आउँछिन् ।[१११]

## ह्वेन्साङ्गको नेपाल विवरण

नेपाल र भारतको इतिहास बौद्धधर्मको इतिहास तथा अन्य थुप्रै विषयमा चिनियाँ बौद्ध भिक्षु ह्वेन्साङ्ग (Hiun Tsang/Yuan Chuwang) को यात्रा विवरण (Si-Yu-ki, Buddhist Records of the Western World) ग्रन्थको ज्यादै महत्व देखिएको छ । यिनले आफ्नो यात्रा विवरणमा नेपालसम्बन्धी अलिकति विवरण समावेश गरेकाले नेपालको इतिहासको लागि त्यसको निकै महत्व छ ।

ह्वेनसाङ्गको विवरण ई. ६३७ को मानिएको छ । यो मितिको आधारमा त्यस समयमा नेपालमा भीमार्जुनदेव र विष्णुगुप्तको संयुक्त शासन रहेको थियो ।

ह्वेन्साङ्गले नेपालसम्बन्धी विवरण आफ्नै आँखाले देखेजस्तो गरी लेखेको हुनाले धेरैलाई उनी नेपालभित्रै आएका भन्ने भान परेको छ । तर वास्तवमा उनी नेपालभित्र आएका थिएनन् उनले वैशालीतिरै बसेर सोधखोज गरी यो विवरण लेखेको कुरा उनको यात्रा विवरणको अंग्रेजी अनुवादक सेम्युयल बीलले मान्नुहुन्छ (बील, १९५८: ३१९, पाद टिप्पणी १०३) । मेरी स्लसर पनि यही कुरा मान्नुहुन्छ (स्लसर १९८३: ३६,[११२] पादटिप्पणी १३७) ।[११३]

ह्वेन्साङ्गको मूल चिनियां विवरणको अंग्रेजी अनुवादको नेपाली रुपान्तर तल प्रस्तुत गरिन्छ–

> "वैशालीबाट उत्तर पश्चिम तर्फ १४०० वा १५०० ली गएपछि केही डांडा र बेंसी पार गरे पछि नेपाल पुगिन्छ ।"

यस देशको घेरा ४००० ली (१३ २/३ शय मील वा ५८६ २/६ कोश) छ । यो देश हिमालय पर्वतमा पर्दछ । यसको राजधानीको घेरा ७ मील (३ कोश) छ ।

यस देशमा डाँडा र बेंसीको लहर अटूटसँग मिलेर रहेको छ । यहाँ फल, फूल र अनाजको राम्रो उब्जनी हुन सक्ने जमीन छ । साथै यहाँ ताँवो,



चमरी र च्याखुराको पैदाइस हुन्छ । व्यापारमा रातो ताँवाको पैसाको चलन गरिन्छ । यहाँको हावापानी भने बरफ जस्तै ठण्डा छ ।

यस देशका जनता विश्वासघाती र धूर्त छाँटका लाग्दछन् । सदाचार र ईमान्दारीको यिनीहरुमा अभाव छ । ती अशिक्षित छन् तर कलाकारीमा निपुण छन् । तिनको अनुहार भद्दा र नराम्रो देखिन्छ ।

धर्ममा श्रद्धा गर्ने (बौद्ध), धर्ममा श्रद्धा गर्ने (सनातनी) हरु दुबै छ्यासमिस भएर रहेका छन् । संघाराम (बौद्ध विहार) र देवालय परस्परमा जोरिएर बनेका पाइन्छन् ।

त्यहाँ दुई हजार जति बौद्ध भिक्षुहरु रहन्छन् । ती महायान र हीनयान दुबै थरि शास्त्र पढ्दछन् । सनातनी र अरु सम्प्रदायका अनुयायीहरुको संख्या यति छ भन्ने ठेगान छैन ।

यहाँका राजा क्षत्रिय छन् र उनी लिच्छविवंशी हुन् । उनको चित्त निस्कपट, चरित्र निर्मल र पवित्र छ । उनलाई बुद्धका सिद्धान्तमा पूरा विश्वास छ ।

केही अघि त्यहां अञ्चु-फा-मो (अंशुवर्मा) नामका राजा भएका थिए जो विद्वत्ता र सत्यनिष्ठामा विशिष्ट थिए । उनी आफैले शब्दविद्यासम्बन्धी एक ग्रन्थ लेखेका थिए । उनी विद्याको सम्मान गर्दथे तथा धर्मको आदर गर्दथे । उनको ख्याति सर्वत्र फैलिएको थियो ।

राजधानीदेखि दक्षिणपूर्वतिर एउटा सानो नाला र पोखरी छ । त्यहाँ आगो फालिदियो भने तुरुन्तै ज्वाला उठ्दछ । त्यहाँ अरु चीज फालिदियो भने त्यो बल्दछ र त्यसको ढाँचै बदलिन्छ ।

ह्वेनसाङ्गले गरेको यो वर्णन समष्टिमा तत्कालीन नेपाल (काठमाडौं उपत्यका लगायत) को वर्णन हुन सक्दैन । उनले गरेको जातीय विवरण बढी मंगोलमूलका मानिने आदिवासीको निकट देखिंन्छ भने संस्कृति-परम्परामा नेपालीलाई धूर्त, कपटीको रुपमा चित्रित गरिएको छ । सातौं शताव्दीको नेपाली समाज त्यत्ति असभ्य, हुनु कदापि संभव लाग्दैन । अतएव, उनको विवरण दि्वतीयक- तृतीयक स्रोतबाट र सीमित कुनै स्थानसित सम्बन्धित हुन सक्ने देखिन्छ । उनको विवरणले अन्य पक्ष जान्न मद्दत गरेको छ र समयक्रम निश्चित गर्न ता निकै महत्वको साबित भएको छ ।

## उदयदेव (ई. ६२१)

जयदेव दि्वतीयको पशुपतिको लिच्छवि राजवंशावली सहितको अभिलेखमा वसन्तदेवदेखि तेह्रौं राजा उदयदेव भए भन्ने सन्दर्भ परेकोले (वज्राचार्य, २०३०: ५४९)[११४] यी राजा लिच्छविवंशी रहेछन् भन्ने कुरा स्पष्ट हुन्छ ।

उदयदेवको आफ्नो अभिलेख पनि पाइएको छ । चित्लाङमा पाइएको यिनको अभिलेखमा संवत् ४५ अर्थात् ई ६२१ को मिति छ (ऐजन: ३९८-३९९) । यसमा उनको उपाधि 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत:' 'बप्पपादानुध्यात:' र

'भट्टारकमहाराजाधिराजश्री' छन् जुन अंशुवर्माका उपाधिकै अनुकरण हुन् भन्ने स्पष्ट छ ।

उक्त चित्लाङ अभिलेखअनुसार अंशुवर्माले स्थानीय पाञ्चालीलाई केही जग्गा विर्ता गरेर दिएकोमा सोसम्बन्धी प्रमाण स्वरुप यो अभिलेख उदयदेवले राख्न लगाएका थिए । अभिलेखको विषयवस्तुअनुसार त्यहाँ अंशुवर्माको नामको उल्लेख गरिएको छ सम्मानपूर्ण रुपमा 'भट्टारकमहाराजाधिराज' उपाधिसाथ । सम्मानको लागि अंशुवर्माको नाम पछाडि 'पाद' (पाउ, हजूर) शब्द जोडेर यहाँ उदयदेवले भक्ति पनि देखाएका छन् । अंशुवर्मा उदयदेवका पिता थिएनन् तर आफूलाई राज्यका उत्तराधिकारी युवराज बनाएको कारणले पितासरह थिए यसैले उनको दृष्टिमा अंशुवर्मा एक आदर्श राजा पनि थिए ।

उदयदेवको आफ्नै शिलालेख प्रमाण त माथि चर्चित चित्लाङको अभिलेख पनि हो तर अंशुवर्माका युवाराजका रुपमा उनको उल्लेख केही पहिले देखिनै पाइन्छ ।

सर्वप्रथम अंशुवर्माको टौखेलको संवत् ३७ (ई. ६१३) को अभिलेखमा युवराज उपाधिसाथ उदयदेवको नाम लेखिएको छ (वज्राचार्य, २०३०: ३४९) । उक्त मितिपछि प्रसारित भएका अंशुवर्माका सबै सरकारी खालका शिलालेखहरुमा दूतकका रुपमा उदयदेवकै नाउँ लेखिएको देखिन्छ (ऐजन: ३५२-३६४) । तीमध्ये किसिपींडीको अभिलेखमा मात्र उदयदेवको नाउँअघि आदरार्थी श्री जोडिएको छ (ऐजन: ३६४) । सो अभिलेखको मिति भाग खिइएको हुनाले उदयदेवलाई अंशवर्माको अन्तिम समयतिरको मान्न सकिएला जस्तो लाग्दछ । यस रुपमा हेर्दा अंशुवर्माका उत्तराधिकारीका रुपमा उदयदेवको राजनीतिक महत्त्वका पनि दुई तहको अनुमान गर्न सकिन्छ ।

माथिको चर्चाबाट अंशुवर्माले ई. ६१३ मा उदयदेवलाई आफ्ना युवराज उत्तराधिकारी घोषणा गरेको अनुमान गर्न सकिन्छ । तर हालै गोकर्णबाट पाइएको अंशुवर्माको अभिलेखमा शिवदेव प्रथमले चलन गरेको संवत्को ५३६ लेखिएको र यसमा दूतकको रुपमा आफ्ना भानिज 'महासामन्त श्री' भोगवर्मालाई राखिएको छ (राजवंशी, १९९०: ३४) । स्वतन्त्र शासक भएदेखि नयाँ संवत्को प्रयोग गर्ने चलनको उल्टो अंशुवर्माले यो अभिलेखमा पुरानो संवत् प्रयोग गरेको तथ्य महत्वपूर्ण छ । कालगणनाअनुसार उक्त संवत् ५३६ ई. ६१४ बराबर हुन्छ तर ई. ६१३ देखि नै उदयदेवलाई युवराज पारी अभिलेखहरुका दूतक पार्ने गरेको आफ्नो चलनमा अंशुवर्माले किन व्यवधान पारेका हुन बुझ्न सकिएको छैन । यो उदाहरणले उदयदेव र भोगवर्मामा टक्करको स्थितितिर संकेत गरेको त होइन? भन्ने प्रश्न उठ्न सक्छ । ई. ६०५ मैं स्वतन्त्र राजाको रुपमा पुगिसकेका अंशुवर्माले त्यसैबेला उत्तराधिकारीको घोषणा गर्नु पर्ने थियो तर त्यसो नभएको देखिन्छ ।

अंशुवर्माको हाँडीगाउँको ई. ६०६ को अभिलेखको विवरणबाट राज्याभिषेक भएको देख्दा त्यस वर्ष अंशुवर्माले आफ्नो राज्याभिषेक गराएको



कुराको चर्चा माथि परिसकेकोले आफ्नो राज्याभिषेकको समयमा नै प्रायः राजाहरु आफ्ना युवराजको पनि राज्याभिषेक गराई उत्तराधिकारको पनि ठेगान लगाउने काम गर्दथे भन्ने थाहा पाइने परिप्रेक्ष्यमा विचार गर्दा त्यसबेला पनि अंशुवर्माले उदयदेवलाई उत्तराधिकारी मानिसकेको बुझिँदैन । आफ्नो राज्याभिषेक भएको करीब ७ वर्षपछि उदयदेवलाई युवराज घोषित गरेको देख्दा यो काममा निकै अबेर भएको अनुमान गर्न सकिन्छ ।

ई. ६१३ को काठमाडौं ज्यावहालको खण्डित अभिलेखको आधारमा शिवदेव प्रथमले राजसत्ता अंशुवर्मालाई सुम्पेपछि पनि राजदरबारमैं रहिरहेका र त्यसै बेलातिर शिवदेवले भिक्षु भएर राजदरबार छोडेपछि मात्र अंशुवर्माले उदयदेवको उत्तराधिकारको घोषणा गरेको भन्ने इतिहासकारहरुको विचारको चर्चा माथि गरिसकिएको छ ।

शिवदेव प्रथमसँग उदयदेवको सम्बन्धबारे ठीक परिचय तात्कालिक अभिलेखहरुले नदिएको हुँदा यसबारे यहाँ विचार गरिन्छ ।

अंशुवर्माको संवत् ३७ (ई. ६१३) को अभिलेखमा सर्वप्रथम युवराज उपाधिसाथ उदयदेव देखा परेका छन् । वर्मावंशी अंशुवर्माले युवराज घोषित गरिएका देवान्त नामधारी उदयदेव लिच्छविवंशका थिए भने कुरा त जयदेव द्वितीयको पशुपति वंशावली अभिलेखबाट स्पष्ट भएकै छ । तर सो अभिलेखमा उदयदेवअघि भएका लिच्छवि राजा शिवदेवको उल्लेख नभएकोले ती दुईबीचको नाता बुझ्न सकिएको छैन ।

अंशुवर्माले शिवदेवबाट शासनाधिकार पाएकाले त्यो लिच्छवि शासनाधिकार लिच्छविवंशी उदयदेवलाईनै आफूपछि सुम्पिन भनेर उनलाई आफ्ना युवराज घोषित गरेका थिए । यस स्थितिमा उदयदेवलाई शिवदेव प्रथमका छोरा मान्न सकिने कुरा स्पष्टै छ । तर इतिहासकारहरुले यस तथ्यलाई रहस्यमय पारेर राखिदिएकाले (वज्राचार्य, २०३०: ३४४, ३५०, ४००, ५५९) यहाँ यो कुरा स्पष्ट गर्नु परेको हो ।

तात्कालिक परिस्थितिअनुसार उदयदेवलाई शिवदेवका छोरा भनिएको भए पनि अरु केही घुमाउरा सन्दर्भको आधारमा पनि यो अनुमान मिल्न आएको देखिएको छ ।

उदयदेवका छोरा नरेन्द्रदेवले आफ्ना पिताको समयमा खोसिएको गद्दी फिर्ता लिएपछि गरेका कामहरुमा आफ्ना पुर्खाहरुले राखेका कीर्तिहरुको बन्दोबस्त गर्ने महत्वाकाङ्क्षा राखेका थिए । सोही आकाङ्क्षाअनुसार उनले ई. ६७९ मा दुईटा शिलालेख प्रसारित गरी शिवदेव विहारलाई राम्रो आर्थिक आधार दिने काम गरेका थिए (वज्राचार्य, २०३०: ४९६-४९७, ४९९-५०१) । उनले आफ्ना एक छोराको नाम पनि शिवदेव राखेकाले उनको भावना स्पष्ट हुन्छ ।

चिनियाँ स्रोत ताँग वृत्तान्तमा जुन किसिमको सन्दर्भ परेको छ त्यसबाट उदयदेवलाई उनका भाइले गद्दीबाट हटाएको हुनाले उनी भागेका थिए । उक्त

सन्दर्भको मिहीन अर्थ गर्ने हो भने (ब्रुशेल, १८८०: ५२९)[११५] उदयदेव स्वयं तिब्बतमा शरण लिन गएका थिएनन् उनका छोरा नरेन्द्रदेव पनि केही समय लुकेर बसेका थिए र पछि मात्र यिनले तिब्बतमा शरण पाएका थिए ।

तांग वृत्तान्तमा त उदयदेवलाई गद्दीबाट हटाइएको तथ्यमात्र टिपिएको पाइन्छ । यस्तो छोटकरी टिपोटबाट उदयदेवको हत्या नै भएको पो थियो कि भन्नेतिर संकेत पाइएजस्तो लाग्दछ । यो कुरो मान्न सकिएमा विरोधी पक्षसँग जुध्ने काम नरेन्द्रदेवले गरेको अनुमान गर्न सकिन्छ । तर यस विषयमा स्पष्टसँग केही भन्न सकिँदैन । उदयदेवको शासनको एकमात्र ज्ञात मिति ई. ६२१ र ध्रुवदेव तथा जिष्णुगुप्तको पहिलो ज्ञात मिति ई. ६२४ को बीचको अन्धकारमय व्यवधान कालमा के के घटनाक्रम भए भन्ने कुरामा अनुमान मात्र गर्न सकिन्छ ।

माथि चर्चित चिनियाँ स्रोतले सूत्र रुपमा जे सूचना दिएको छ त्यसलाई विस्तारित गरेर हेर्ने हो भने यही तीन वर्षको अवधिमा उदयदेवको विरोधमा षड्यन्त्र रच्न थालिएको र सो सफल भएको, उदयदेव र उनका छोरा नरेन्द्रदेव गद्दी छोडी भागेको र दुई पक्षमा भिडन्तको स्थिति रहेको र अन्त्यमा तिब्बतमा शरणार्थी भएर रहन थालेको स्थितिको कालक्रम मिलाउन सकिने देखिन्छ ।

उदयदेवको विरोधमा षडयन्त्र हुनाको कारण त्यति स्पष्ट छैन । हुन त भौमगुप्तलाई शासनबाट हटाएको समयदेखि नै आभीर-गुप्त परिवार शिवदेव र अंशुवर्माका विरोधी हुन गएका हुनु पर्दछ । अंशुवर्माको कार्यकालमा भौमगुप्तका छोरा - नातीहरुको केही लागेन तर उनीहरुले उदयदेवको कार्यकालमा आफ्नो लक्ष्यको प्राप्तिमा सफलता पाइछाडे ।

शक्तिशाली शासक अंशुवर्माका उत्तराधिकारी उदयदेव आफ्नो गद्दी बचाउन सक्ने खालको शक्तिशाली रहेनछन् । हुन त उनले ई. ६१३ देखि नै युवराजका रुपमा राजनीतिको तालीम लिने अवसर पाएका थिए तर आभीरगुप्त राजनीतिका तात्कालिक उत्तराधिकारी जिष्णुगुप्त र विष्णुगुप्तको विद्रोहको अगाडि उनी टिक्न सकेनन् । यो स्थिति देख्दा अंशुवर्माले भौमगुप्त र उनका सन्तानहरुको समूल विनाश गरेका रहेनछन् राजनीतिबाट मात्रै हटाएको रहेछन् भन्ने कुरा स्पष्ट हुन्छ । आभीर गुप्तवंशप्रति अंशुवर्माले लिएको अथवा लिनु परेको उक्त नीति उदयदेवको पतनका अनेक कारण मध्ये एक रहेको अनुमान गर्न सकिन्छ ।

उदयदेवको पतनमा आर्को प्रमुख लिच्छवि परिवारमा फूट हुनु पनि देखिन्छ । ध्रुवदेव र भीमार्जुनदेव लिच्छविवंशीनै थिए तर उनीहरुलाई जिष्णुगुप्तहरुले आफ्नो पक्षमा मिलाउन सकेको देखिएकोले उनीहरुमा उदयदेव विरुद्ध भावना रहेको बुझ्न सकिन्छ । त्यस्तै भावनाको उपयोग गरेर जिष्णुगुप्त विष्णुगुप्तहरुले विद्रोही पक्षलाई च्यापी राजनीतिक फाइदा उठाउन सकेको थिए । जिष्णुगुप्तलाई समर्थन गर्नेमा अरु खालका लिच्छविवंशीहरु पनि



थिए भन्ने कुरा मीननारायण मन्दिरनिरको अभिलेखमा जिष्णुगुप्तले प्रभावशाली विरुदावलीसमेत प्रस्तुत गरिएका महासामन्त जीवदेवको उदाहरणले (वज्राचार्य, २०३०: ४०८) संकेत गरेका छन् ।

लिच्छवि राजपरिवारमा यस्तो फूटको परिस्थिति आउनाका अनेक कारण हुन सक्दछन् तर मुख्य कारणचाहिँ अंशुवर्माको नीति रहेको देखिन्छ । उनले लिच्छविवंशी शिवदेव प्रथम र उदयदेवलाई क्रमागत उत्तराधिकार र सम्मानबाट बञ्चित नगरे पनि नियन्त्रित गरेकाले त्यसको भावनात्मक प्रभाव लिच्छवि कुलका कुमारहरुमा परेको अनुमान गर्न सकिन्छ ।

उदयदेवको विरोधमा षडयन्त्र हुनाका कारणबारे यति छोटकरी चर्चापछि गद्दीबाट हटाइएपछि के अवस्था आयो भन्ने विषयमा विचार गरिन्छ ।

उदयदेव गद्दीबाट हटाइएपछि राजधानी छोडेर सपरिवार भाग्न बाध्य भए । तर उनले र उनका छोरा नरेन्द्रदेवले आफ्नो गद्दी फिर्ता लिने प्रयास जारी नै राखेको बुझिन्छ । शुरुमा उनीहरुले यो प्रयास नेपालभित्रै कतै रहेर गरिरहेका र पछि मात्र तिब्बततिर लागेको अनुमान गर्न सकिन्छ । तर तिब्बतमा शरण लिन जानेमा नरेन्द्रदेवको मात्र नाम लेखिएको पाइनाले हामीले माथि नै अनुमान गरेजस्तो उदयदेवको हत्या वा मृत्यु विद्रोहको आरम्भमैं वा प्रतिरोधका पछिका घटनाहरुमा भएको अनुमान गर्न सकिन्छ ।

गद्दीको दावेदारी कायम गर्दै नरेन्द्रदेवले तिब्बतमा शरण लिए । नेपालको निर्वासित सरकारको रुपमा उनलाई तिब्बती शासकबाट मान्यता प्राप्त भएको तथ्य पनि त्यस घटनाबाट स्पष्ट हुन्छ । नरेन्द्रदेवले कसरी गद्दी फिर्ता लिए भन्ने विषयमा तल यथास्थानमा वर्णन गरने छ ।

पादटिप्पणी:

१. "Generally when a dynasty establishes himself firmly in power he gives details of his predecessors, usually, of three generations. This rule is observed especially in the families who donot have very glorious records of their predecessors and uptill that time had been serving as dependent petty rulers or local chiefs."

२. राजा श्री धर्म्मदेव वर्ष वर्ष ५१ ... ततः अवंसज प्रतिपालितपुत्र ॥ राजा श्री मानदेव वर्ष ३९॥ तेन स्वयंभूचैत्र भट्टारकस्व हृष्ट ॥ सुसस्ततहितः ॥ मानविहारश्च ॥ राजा श्री घानिमानगृह सप्तपरमसमेतं दीर्घिकाद्वयसंयुक्तं चतुसावतमोदनधारवेष्टितं ॥ नेपालचुडामणिभूतं च । केशयुनादद्धत्य (?) हेममपि भगवते मानगृहे प्रतिष्ठित कृत देवलं च कृत्वा । तस्य राजा भोगिनीदग्ध राजाचिताग्नि संस्काराज्ञमकरोत् ॥ त्वया कृत ताम्रश्रृंखलीयुतसंछन्न ॥ अस्थानभूमिकं ॥ अति महान् श्रीमण्डपं मनिविहारश्च ... (रेग्मी २०४६ ४) ।

३. राजा श्री धर्म्मदेव ... तत अवंसज प्रतिपालितपुत्र ॥ राजा श्री मानदेव वर्ष ३९॥ सुसस्ततहिन ॥ मानविहाराश्व ॥ राजा श्रीधानि मानगृहं समपरमसमेत दिर्धिकाद्वयशंयूक्तं चतुसावतमोदनधारवेष्ठितं ॥ (वज्राचार्य, १९७७: ११९) ।

४. तस्य मृत्ती स्वपुत्रेंण रात्रे पनालिकास्थाने शिराश्छेत्वा पिताज्ञा कृतम् ।- यो वर्णन विश्व (वृषः देवको वर्णनमा गरिएको छ । तापनि त्यस वर्णनपछि तस्य पुत्र मानदेव भनिएकोले यो भनाइको सम्बन्ध धर्मदेवसँग छ भन्ने बुझ्न सकिन्छ ।

५. तस्य पुत्र श्रीमानदेव वर्ष ४१ तेनमज्ञातेन पिता वध कत्वा महाघोरपातककृतेन महारोदमान भ्रमित्वा गुविहारशिखरे तप कृतम् । तपः प्रभावान्महान्चेतमुतपद्यते प्रतिष्ठितश्च ।

६. पुत्रोप्यूर्जितसत्वविक्रमधृतिः क्षान्तः प्रजावत्सवलः कर्ता नैव विकत्थनः स्मितकथः पूर्व्वाभिभाषी सदा । तेजस्वी न च गर्व्वितो न च परां लोकज्ञतान्नाश्रितः दीनानाथसुहृत्प्रियातिथिजनः प्रत्यर्त्थिनाम्माननुत् ॥ (वज्राचार्य, २०३०: १२, १५) ।

७. अस्त्रापास्त्रविधानकौशलगुणैःप्रज्ञातसत्पौरुषःश्रीमच्चारुभुजः प्रमृष्टकनकशलक्षणावदातच्छविः । पीनांसोविकचासितोत्पलदलप्रस्पर्द्धनमानेक्षणः।साक्षात्कामइवाङगवान्नरपतिः कान्ताविलासोत्सवः (ऐजनः १२, १५) ।

८. ... ... शास्त्रविहिते यो निग्रहे (सं)रतः शुद्धात्मा प्रकृतेः पितेव दयते श्रीमानदेवो (नृपः) ... जितवत्ताक्ष्मां रक्षता सर्व्वदा (तेने) दं



श्रुतिधर्म्मशास्त्रविहितां धर्म्मक्रियाङ्कुर्वता लोकानां सुखकाम्यया सुविमलम्पानीयमानाय्य (ऐजनः ७१-७२) ।

९. कान्त्या कान्तिमतः सुरानिह महैर्विद्वत्तया पण्डितान् । शुराञ्शुरुतयार्थिनोपि वसुभिश्शुद्धैर्यशोभिर्नृपान् । दाक्षिण्येन च दाक्षिणानरमयत्सर्वोश्च सर्वैगुणैः । यः श्रीमान्स विशुद्धकाञ्चनवपुरश्रीमानदेवो नृपः ॥ (ऐजनः ३९-४०) ।

१०. सततसरलकान्तस्वाङ्गशोभासमृद्धः अनुपहतयशोधी विक्रमश्रीप्रभावः ॥ नृपतिरिह हतारिर्म्मान्विदेवो बभूव ॥ (ऐजनः ८२-८३) ।

११. महेन्द्रसमवीर्यस्य कन्दर्पसदृशद्युतेः राज्ञः श्री मानदेवस्य सम्म (क्या) लयतः प्रजाः । (ऐजनः ५०-५१) ।

१२. राज्ञः श्रीमानदेवस्य सम्मक्पालयतो महीम् (ऐजनः ५९-६०) ।

१३. दातार्यतीव विदुषि प्रथितप्रभाव
श्रीमानदेवनृपतौ जगतीं भुनक्ति
तस्यैव शुद्धयशस ......
(ऐजनः ७९-८०) ।

१४. पत्नी तस्याव्जपात्रमलशुभन्वयना श्याध्यसौभाग्यरुपा सन्चिन्त्य क्षेमसुदर्य्यनुपमगुणधीर्द्धर्म्मकार्य्यैककार्य्या ॥

१५. भर्त्तु श्रीमानदेवस्य प्रसादोपत्तितश्रिया
(भ)क्त्या स्थापितं लिंगङ्गुणवत्या शुभेच्छया ॥

१६. ... (भट्टा) रकवर्षवन्धन ... भट्टारकपूजायै......
... खर्कम्प्रिङ्ग्राम (प्रदेश) मानि ५४ ......
... २० दोम्मान मानि २० ... ।

१७. मातुः श्री राज्यवत्या हितकृतमनसः सर्वदा पुण्यवृद्ध्यै राजा श्रीमानदेवः शुभविमलमतिः पात्रदानाम्वुवर्षी । लक्ष्मीवत्कारयित्वा भवनमिह शुभं स्थापयामास सम्यक् विष्णुं विक्रान्तमूर्तिं सुरमुनिमहितं सर्वलोकैकनाथम् ॥ (ऐजनः ३४-३६) ।

१८. लिच्छविकालमा मानेश्वर भनी प्रसिद्ध देवता लिच्छविकालपछि मानेश्वरीको रुपमा देखिने कुरा गौतमवज्र वज्राचार्य मान्नुहुन्छ (वज्राचार्य, २०३३: १६२) । उहाँको यो विचारबाट मानेश्वरीको स्थापना मानदेवले गरेको हैन भन्ने बुझिन्छ । तर यसबारे बढी अनुसन्धान भएमा स्थिति स्पष्ट हुने विश्वास गर्न सकिन्छ ।

१९. देव्याः कर्तव्यताबुद्ध्या श्रीपादै ...... ग्रजं शैलस्तम्भ क्रियारम्भे केदुम्बाटो नियोजितः ॥

२०. सम्राड्गृहपतेस्पत्न्या विजयस्वामिन्या प्रतिष्ठापिता देवी भगवती विजयेश्वरी ।

सम्राट् उपाधि राजाहरुले लिने गरेको परिप्रेक्ष्यमा विजयस्वामिनीलाई मानदेवकी रानी भन्ठानेर मानदेवले सम्राट् उपाधि लिएको अनुमान गरिएको थियो । ज्ञानमणि नेपालले भने वैदिक याज्ञिक व्यक्तिलाई सम्राट् भनिने गरेका उदाहरण प्रस्तुत गर्नु भएकोले सो कुरा खण्डित भई स्थिति स्पष्ट हुन आएको छ ।

२१. श्रीमानदेवनृपतौ जगतीं भुनक्ति
तस्यैव शुद्धयशसश्चरणप्रसादात्
पित्रोः कृताकृतिरियन्निरपेक्षनाम्ना ।

२२. जित्वा मल्लपुरीन्ततस्तुशनकैरभ्याजगाम स्वकम्
देशम्प्रीतमनास्तदा खलु धनम्प्रादाद् द्विजभ्यो ऽ क्षयम् ।
राज्ञी राज्यवती च साधु मतिना प्रोक्ता दृढं सूनुना
भक्तयाम्ब त्वमपि प्रसन्नहृदया दानम्प्रयच्छ स्वतः ॥

२३. यूपैस्वारुभिरुच्छ्रितैर्वसुमती पित्रा ममालङ्कृता
क्षात्रेणाजिमखाश्रयेण विधिना दीक्षाश्रितोहं स्थितः ॥
यात्राम्प्रत्यरिसङ्क्षयाय तरसा गच्छामि पूर्वान्दिशम्
ये चाज्ञावशवर्तिनो मम नृपाः संस्थापयिष्यामि तान् ॥

२४. इत्येवञ्जननी मपेतकलुषां राजा प्रणम्योचिवान्
नाम्बानृण्यमहन्तपोभिरमलैः शक्नोमि यातुम्पितुः॥
किन्त्वाप्तेन यथावदस्त्रविधिना तत्पादसंसेवया
यास्यामीति ततोम्बयातिमुदया दत्ताभ्यनुज्ञो नृपः ॥
प्रायात्पूर्वपथेन तत्र च शठा ये पूर्वदेशाश्रयाः
सामन्ताः प्राणिपातवन्धुरादेशिरः प्रभ्रष्टमौलिस्रजः
तानाज्ञावशवार्त्रिनो नरपति? संस्थाप्य तस्मात्पुनः
निर्भीः सिंह इवाकुलोत्कटसटः पश्चाद्भुवञ्जग्मिवान् ॥

२५. सामन्तस्य च तत्र दुष्टचरित्रं श्रुत्वा शिरः कम्पयन्
वाहुं हस्तिकरोपमं स शनकैः स्पृष्ट्वा ब्रवीद् गर्वितम्
आहूतो यदि नैति विक्रमवशादेष्यत्यसौ मे वशम्
किं वाक्यैर्बहुभिर्पृथात्र गदितैः संक्षेपतः कथ्यते ॥
अद्यैव प्रियमातुलोरुविषमक्षोभार्ण्णवस्पर्द्धिनीम्
भीमावर्त्ततरङ्गचञ्चलजलान्त्वङ्गण्डकीमुत्तर
सन्नैद्धैर्वरवाजिकुञ्जरशतैरन्वेमि तीर्त्वानदीम्
त्वत्सेनामिति निश्चयान्नरपतिस्तीर्ण्णप्रतिज्ञस्तदा ॥

२६. जित्वा मल्लपुरीन्ततस्तुशनकैरभ्याजगाम स्वकम्
देशम्प्रीतमनास्तदा खलुधनम्प्रादाद् द्विजेभ्योक्षयम्
राज्ञी राज्यवती च साधुमतिना प्रोक्ता दृढं. सूनुना
भक्तयाम्ब त्वमपि प्रसन्नहृदया दानम्प्रयच्छ स्वतः ॥



२७. "It is also possible that there were more than one petty kingdoms in the Himalayan region. As it often happens in the Indian feudal system they could via with each other. The supreme power generally never interfered in their rivalry as long as they assume of their alliance to it. It appears that during the turbulent years of the reign of Skandagupta the Licchavis were watching carefully the attitude of the Guptas towards them. Taking advantage of their indifference Licchavis started increasing their power under the enthusiastic leadership of Manadeva by suppressing the neighbouring petty principalities.

२८. "वेदेष्वश्रद्दधाना धूर्ताः" भनी भट्ट यज्ञेश्वरले शठको अर्थ गरेका छन् (भट्ट १९४०: १२४)

२९. डा. कमलप्रकाश मल्लको विचारमा यो मल्लपुरी नुवाकोट पनि हुन सक्दछ । लिच्छविकालका अन्य अभिलेखहरुमा प्रयोग भएको 'मल्ल' को अर्थ भेडो अर्थ गरिन्छ भने भेडाका चरन भएका टारहरु भएको र त्रिशूल-गण्डकीको किनारामां रहेको नुवाकोट भेकलाई पनि मल्लपुरी मान्न सकिन्छ ।

३०. तर उहाँले अन्यत्र चाहिँ "पश्चिम गण्डकी प्रदेशमा भने लिच्छविकै धर्मावलम्बी मल्लहरुको रजाई चलेको थियो" भन्नुभएको छ (नेपाल, २०४०: १७२) ।

३१. कसै कसैले यो मानाङ्क मुद्रालाई अंशुवर्माको टकको तौल र त्यसमा अंकित सिंहको शैलीको समानताको आधारमा शिवदेव प्रथमले मानदेव प्रथमको नाउँमा चलाएको स्मारक मुद्रा पनि मानेका छन् (गोपाल, वर्मा १९७७: ३६, ४८, ५८-५९) ।

३२. कुनै इतिहासकारको विचारमा नरेन्द्रदेवले मानगृहलाई ध्वस्त पारिदिएका थिए किनभने त्यसै दरबारमा उनका विरोधी ध्रुवदेव र भीमार्जुनदेवले बसी शासन गरेका थिए (गोपाल, वर्मा, १९७७: ३४) ।

३३. श्री मानदेवो नृपतिस्ततो ऽ भूत्
ततो महीदेव इति प्रसिद्धः ॥

३४. मरेका मानिसलाई 'देउता भएको' वा "देउताकहाँ गएको" पनि भनिने हुनाले महीदेवको सन्दर्भमा 'स्वर्गवासी' को अर्थमा यो 'परमदैवत' विशेषण लेखिएको त हैन?

३५. (आयुष्म) त्या प्रियभगिन्या ... जयसुन्दर्यी ......
परमदैव (त) ... वप्पभ (ट्टारकपादा) नामात्मनश्चश्रे-
(यसे) ... (प्रणा) ल्याः खण्डफुट्ट ... प्रतिसंस्कार ...

३६. ... परमदैवतश्रीवप्प भट्टारकपा (दैः) ... युष्मदीय ग्रामः
पूर्व्वेण ... तशिखरात् दक्षिणपश्चिमदेश ... मार्ग्गात्

पश्चिमेन राजभूमे ... रमुत्तरेणापि हारागुङ्शिखर ... ।

३७. वसन्त इव लोकस्य कान्तः शान्तारिविग्रहः ।
आसीद् वसन्तदेवोस्माद् दान्तसामन्तवन्दितः ॥

३८. सर्वदण्डनायकमहाप्रतिहाररविगुप्तेन विज्ञापितेन ... त्रैव
सर्वदण्डनायकमहाप्रतिहाररविगुप्तेन महाराजमहासामन्त-
श्रीक्रमलीलेन च सार्क समवायय तथेति प्रसादः कृतः
... दूतकश्चात्र सर्वदण्डनायकमहाप्रतिहाररविगुप्त ... ।

३९. भट्टारकमहाराजश्रीवसन्तदेवे सम्यग्राज्यम्प्रशासति ।

४०. मयायुष्मत्यै प्रियभगिन्यैं जयसुन्दर्यै स्वसन्तानानुक्रमेणा
सुस्थितकोट्टमर्य्यादः अचाट्भट-प्रवश्योयं ग्रामोतिसृष्टोस्य ग्रामस्य
सीमा ... ।

४१. आर. जी. भण्डारकरले पनि पल्लीको अर्थ गोठ (the enclosure of cow herds) भन्ने अर्थ गर्नु भएको छ (भण्डारकर, १९६५: ३७) ।

४२. शंकरमान राजवंशीले ई. ५३३ को उक्त काण्डमा वर्मावंशीहरुको हात भएको अनुमान गर्नु भएको छ । उहाँको विचारमा राजदरबारमा रहेको आफ्नो प्रभुत्व गुप्तवंशीले ओगटेकोमा वर्माहरुले सहन नसकी यस्तो काण्ड गरेको हुन् (राजवंशी, २०३६: २) ।

४३. अस्यान्तरेप्युदयदेव इति क्षितीशा-
ज्जातस्त्रयोदश इतश्च नरेन्द्रदेवः ॥
(वज्राचार्य, २०३०: ५४९) ।

४४. गोपालवंशावलीमा यही अवधिको वर्णनमा नरेन्द्रदेव, चम्पादेव र भीमदेव नामका राजाहरुको उल्लेख पाइन्छ (वज्राचार्य, मल्ल, १९८५: २९) । यी नामहरुलाई हाल विचार गर्ने वा नगर्ने विषयमा केही भनिहाल्न अप्ठेरो परेको छ ।

४५. भट्टारकमहाराजश्रीमनुदेवे राज्यम्प्रशासति ......
राज्ये विशुद्धमनुजे मनुदेवनाम्नः ... ।

४६. सर्वदण्डनायकमहाप्रतिहाररविगुप्तेन विज्ञापितेन ......
सर्वदण्डनायकमहाप्रतिहाररविगुप्तेन महाराजमहासामन्त-
श्रीक्रमलीलेन च सार्क समवायय तथेति प्रसादः कृत ...
(वज्राचार्य, २०३०: १४५-१४८) ।

४७. गणदेवका शुरुदेखिका अभिलेखमा भौमगुप्त देखिन थालेका हुन् तर जिष्णुगुप्तको केवलपुर अभिलेखमा नुप्पुन्नका भगवान् नारायणस्वामी मन्दिरको पूजा आजाको बन्दोबस्त गर्नेहरुमा राजा गणदेव र भौमगुप्त दुवैको उल्लेख भएको (ऐजनः ४१४) मा गणदेवको पनि स्वतन्त्र अस्तित्व रहेजस्तो देखिन्छ?

४८. राजा श्रीगणदेव वर्ष ४५॥ तस्य राजे नेपालभूमि वर्षत्रयम् अनावृष्टि वारिषो वृष्टि आंकांक्षणाय कामेन श्रीपशुपतिभटारिकाय



महानागनिर्जित्यः तस्य मनियुक्ते गणदेव नाम कोष कृतम् प्रद्योक्तिम् तत्प्रभावात् महावृष्टि कृतम् प्रजा सुखी भवति (ऐजनः २९)।

महेशराजपन्तले उक्त मूलको अनुवाद यसरी गर्नु भएको छ- पानीको वर्षाको इच्छाको लागि चाहना गरेका (तिनी) द्वारा महानागलाई जितेर तिनको (नागको?) मणि भएको गणदेव नाउँ गरेको कोष बनाइयो, त्यसको प्रभावबाट ठूलो वर्षा गरियो, प्रजा सुखी भए (पन्त, २०४४: ३५) ।

४९. कुनै इतिहासकारले यो गुणाङ्क मुद्रा अंशुवर्मालि शिवदेव प्रथमका पिता गणदेवको नाममा स्मारक रुपमा प्रसारित गरेको पनि मानेका छन् (गोपाल, वर्मा, १९७७: ५९) ।

५०. Rising Nepal, Nov. 16, 1980 (मङ्सीर १, २०३७) ।

५१. "Man Deo (the 2nd), in whose reign Nepal, was afflicted during three years with a severe drought, which ceased on the Rajah's propitiating the god Pasputty an oblatioin of all his riches.

५२. कुनै इतिहासकारले मानदेव प्रथमको नाममा अंशुवर्मालि यो मानदेव संवत् चलाएका हुन् भन्ने विचार पनि व्यक्त गरेका छन् (गोपाल, वर्मा, १९७७: ५८-५९) ।

५३. आभीरी ख्यातगुणा भार्य्या परमाभिमानिनः सूनोः
पुण्यविवृद्ध्यै भर्त्तुर्दिवत्वमितः प्रयातस्य ।
पुत्रेणानुज्ञाता चकार संस्थापनं शम्भो :
अनुपरमेश्वरसंज्ञाञ्च शम्भोर्भुवनमहितस्यास्य ॥
(ऐजनः १७०) ।

५४-५५ परमगुप्त आभीरले वसन्तदेवलाई गद्दीबाट हटाएर शासनको बागडोर आफ्नो हातमा पिलएर रामदेव नामक एक लिच्छवि क्षत्रियलाई राजा थापेका थिए भन्ने जस्ता अनुमान बाबुराम आचार्यले गर्नु भएको छ (ऐजन) । उहाँका यी विचार मिल्ने देखिंदैन । तर उहाँको सो भनाईमा परमाभिमानीलाई परमगुप्तको रुपमा पिलइएको कुरा उल्लेखनीय छ ।

५६. तदिव्ह पितरि मे त्वं
सम्पदस्सविधत्स्व ।

५७. अस्मज्जयेष्ठप्रपितामहमानगुप्तगोमिकारितपुष्करिणीमुद्दिश्य ग्रामस्योत्तरेण पर्वतभूमिश्चोख्परानामधेय चैलकरम्प्रतिमुच्य दत्ता तस्याश्च कालान्तरेण शासनान्तर्भाविमभूत (द) वेत्य प्रपितामहकृतज्ञतयास्माभिरिदं शिलापट्टकशास-(नञ्चि) रतरकालस्थितये दत्तं ...... (ऐजनः४३४) ।

५८. पूर्वराजभिर्युष्माकं कुथेर शुल्यधिकरणाभ्यां न प्रवेष्टव्यमित्यनुग्रहः कृतोधुनामयासर्वदण्डनायकमहाप्रतिहारश्रीभौमगुप्तानुज्ञापितेन

लिङ्ग्वलभाप्चोकाधिकरणाभ्या पन्चापाराधद्वारेणचतुर्भिरप्यधिकरणैर्न प्रवेष्ठटव्यमिति स्थितिपट्टकेन प्रसादः कृतः ।

५९. आयुष्मतानाञ्चापत्यानां भौमगुप्तादीनां भोगारोग्यायुरानन्त्यावाप्तये ... ।

६०. गणदेव र भौमगुप्तका ई.५६० का ६ ओटा अभिलेखमा "प्रसादगुप्तवार्त्ते व्यवहरतीति" (वार्त प्रसादगुप्तले मुद्रामामिलासम्बन्धी काम गरिरहेका बेलामा) भनिएको पाइन्छ (वज्राचार्य, २०३०:१८८-१९३) । भौमगुप्तका एकजना भाइ यिनै प्रसादगुप्त हुनु सम्भव छ ।

६१. पछि राजा नरेन्द्रदेवले आफ्नो एक अभिलेखमा 'भूमगुप्त' को रुपमा भौमगुप्तको नाममा 'श्री' को पनि प्रयोग गरेको देख्दा (ऐजनः ४६४) ई. ५९० को पूर्वोक्त अभिलेखमा श्री को प्रयोग नभएको भए पनि भौमगुप्तको सम्मान पछिसम्म कायमै रहेको मान्न सकिएला?

६२. तत पश्चात्सूर्यवंशनिर्ज्जित्य पुन गोपालवंसेनः प्रभवाद्राजाकृतम् (वज्राचार्य, मल्ल, १९८५: २९, ७७) ।

६३. एते त्रय गोपाल राज्यं करोति (ऐजनः ३०, ७८) ।

६४. राजा श्रीभूमिगुप्त वर्ष ४५ तेन नेपाले गोली नाम अक्षर प्रवर्तते ॥ धरणीवाराहविष्णुप्रतिष्ठितम् ... ॥ (ऐजनः ३०) ।

६५. लिपि भनेको सरकारी लेखपढको भाका पनि हुन सक्दछ?

६६. अथ भूयोपि सूर्यवंसप्रभावात् कृतः । राजा श्रीशिवदेव वर्ष ४१ ... (ऐजनः ३०) ।

६७. राजा श्रीशिवदेव वर्ष ४१ मा ६ तेन प्रतिष्ठित विहाग्रभकृतम् खासौ चेत महाकूट्यम ...(ऐजनः २९) ।

६८. अथ भूयोपि सूर्यवंसप्रभावात् कृतः । राजा श्री शिवदेव वर्ष ४१ तस्य भग्नीय पुत्र राजा श्रीअंशुवर्मा (ऐजनः ३०) ।

६९. स्रोङ्ग चन गम्पोसँग राजकुमारी भृकुटीको विवाहको घटनाको सूत्र यसै तत्वसँग सम्बन्ध छ कि?

७०. श्रीमहासामतांशुवर्मणा मां विज्ञाप्य मदनुज्ञातेन सता ...... प्रसादः कृतः ... इत्यादि ।

७१. "Lately there was a king called Amsuvarman (An-chu-fa-mo) who was distinguished for his learning and ingenuity. He himself had composed a work an 'sounds'(savdavidya), he esteemed learning and respected virtue, and his reputation was spread everywhere" (Beal, 1906, II, 81).

७२. धनवज्र वज्राचार्यले यही तथ्यलाई "प्रसिद्ध चिनियाँ यात्री युआनच्वांगले पनि अंशुवर्मालि शब्दविद्या (व्याकरण) सम्बन्धी ग्रन्थ रचना गर्न लाएका थिए भन्ने वर्णन गरेका छन् । अंशुवर्मालि बनाउन लाएको व्याकरणको प्रसिद्धि भारतमा पनि फैलिसकेको थियो भन्ने यसबाट बुझिन्छ" भनी (वज्राचार्य, २०३०: ३९३) स्वयम् अंशुवर्मालि कुनै ग्रन्थ लेखेको तथ्यलाई अस्वीकार गर्नु भएको छ ।



७३. मेरी स्लसरले एक ठाउँमा अलंकारशास्त्र भन्ने अर्थ गरेकोमा सो होइन व्याकरण नै हो भन्ने कुरा साबित गर्न पन्तले ५८ पृष्ठको पुस्तकनै लेख्नुभएको छ ।

७४. यो अवधिमा पनि श्रीसामन्त र श्रीमहासामन्त पदवीमा अन्तर देख्दा दुई भागमा बाँड्न सकिने देखिन्छ ।

७५. यो क्रमलाई पनि दुइ भागमा बाँड्न सकिन्छ ई. ६१३ देखि ६१५ सम्म र ६१५ देखि ६२० सम्म । ६१५ देखि ६२० सम्म अंशुवर्मालि प्रसारित गरेको कुनै शिलालेख नपाइने स्थितिलाई एक क्रमको रुपमा मान्न सकिन्छ । ई. ६१३- ६२० को अवधिमा पनि श्रीमात्रै र श्रीमहाराजाधिराज उपाधिको प्रयोगमा पनि अन्तर हुने स्थितिलाई पनि भिन्ना भिन्नै क्रम मान्न सकिन्छ ।

७६. गोपालवंशावलीकारको दृष्टिमा शिवदेवपछि अंशुवर्मा राजा भएको घटना राजवंश परिवर्तनको घटना हैन भन्ने सो वंशावलीले लेखेको टिप्पणीबाट थाहा पाइन्छ । त्यसमा "राजा शिवदेव वर्ष ४१ तिनका भानिज राजा श्रीअंशुवर्मा" लेखिएको र गुप्त-गोपालहरुको सन्दर्भमाफैं वंशपरिवर्तनसम्बन्धी टिप्पणी जोडिएको छैन (वज्राचार्य, मल्ल, १९८५: ३०) ।

७७. गोपालवंशावलीमा जयवर्मादेखि ११ जना राजा सुपुष्पवर्मासम्म वर्मान्त नाम र वृषदेवदेखि देवान्त नाम लेखिएको हुनाले (वज्राचार्य, मल्ल, १९८५: २८) "ई ३८०-४१५ बीचमा नेपालमा राजवंशमा क्रान्ति भएर वसन्तवर्माका बदलामा वृषदेव राजा भए । यी पनि जयदेवका वंशका लिच्छविनै थिए । यिनले कर्तुपुरका राजाहरुले व्यवहार गर्ने गरेको देव भन्ने पदवी पनि धारण गरे" भन्ने अनुमान बाबुराम आचार्यले गर्नु भएको छ (वज्राचार्य, २०३७: ३) । वृषदेवदेखि वसन्तदेवसम्म ६ पुस्ताले शासन गरे । वसन्तदेव हटाइएपछि आर्को लिच्छवि खलकका राजकुमार राजा थापिएका हुन् भन्ने उहाँको विचार छ (ऐजनः ४, ७) ।

अंशुवर्मालाई आचार्यज्यूले "वृषदेवका वंशका शायद रुपवर्माका छोरा थिए" भन्नुभएको छ (ऐजनः ७, आचार्य, २०२२ १४९) । रुपवर्मासम्बन्धी एकमात्र अपुष्ट सन्दर्भ ई. ७८१ को पाइने हुनाले यिनी अंशुवर्माका पिता हुन सक्नु सम्भव छैन ।

७८. ... प्रासादपिण्डं स्थलं सद्भित्यामृतवर्मणा ... भर्तुः पुण्यविवृद्धये भवगतिक्लेश-क्षयायात्मनः भार्या श्रीकलहाभिमानिनृपतेर्लब्ध्वा प्रसादोदयम् ।

७९. राजा श्री अंशुवर्मा ... तस्य राजन पुत्र मानवर्मा वर्ष ६५ राजा श्रीकृत्तवर्मा वर्ष ७६ गते वंसान्तरे (ऐजन, १९८५: ३०)।

८०. "The dynasty of the Vais Thakuris of Noakot ends here. A descendant of a collateral branch of the solarrace of the former Raja Amsuvarma, by name Bama-deva, having gained over the noble of Lalitpur and Kantipur, succeeded in expelling the Vais Thakuri Rajas, and made himself king."

८१. भाषावंशावलीमा अंशुवर्माको बयानमा "यी राजा बडो चंचल तेजस्वी हुनाले प्रयागसम्म गै राजा राजासँग लडाईँ" गरेको बताइएको छ (पौडेल, २०२०: ८४) । गोपालवंशावलीमा यसको कुनै सूत्र परेको छैन। भाषावंशावलीको उक्त कथनको आधार र सत्यता स्पष्ट छैन ।

८२. स्वयम्भूपुराणमा यस्तो एउटा सन्दर्भ पाइछ–

शैवधर्मे यथा कामधेनु-
मुंनिभिः पूजितम् (शास्त्री, १९०५: ४८६) ।

शैवधर्ममा मुनिहरु कामधेनुको मान्यता गर्दछन् भन्ने स्वयम्भूपुराणको भनाई यस्तै कारणले रहन गएको अनुमान गर्न सकिन्छ ।

८३. भगवद्भवपादपंकजप्रणामानुष्ठानतात्पर्योपायात्तायतिहितश्रेयसा ......................श्रीमहासामन्तांशुवर्मणा .....................

८४. भाषावंशावलीमा अंशुवर्मा प्रयागसम्म पुगी त्यहाँका भैरवको सेवा गरी प्रसन्न गराई तन्त्रोक्त विधिबाट आव्हान गरेको र आफ्नो राज्य फर्केपछि आफ्नो दरवार नजीक वटुक भैरवको स्थापना गरेको कुरा बताइएको छ (पौडेल, २०२०: ८४) । कापालिक पाशुपतहरु भैरवको उपासना गर्ने हुँदा अंशुवर्माले प्रयागबाट भैरव ल्याई आफ्नो दरवार नजीक स्थापना गरेको अनुश्रुति वंशावलीले सुरक्षित गरेको हुनाले कापालिक पाशुपतहरुको संगठनको स्थापना अंशुवर्माले गरेको भन्ने अनुमानलाई समर्थन प्राप्त भए जस्तो लागेको छ ।

८५. पशुपतौ भगवाञ्छूरभोगेश्वरोस्मद्भगिन्या श्रीभोगवर्मजनन्या भोगदेव्या स्वभर्तृ राजपूत्रशूरसेनस्य पुण्योपचयाय प्रतिष्ठापितो यश्च तद्दुहित्रास्मद्भागिनेयया भाग्यदेव्या प्रतिष्ठापितो लडितमहेश्वरो यश्चैतत्पूर्वजैः प्रतिष्ठापितो दक्षिणेश्वरस्तेषामघः शालापाञ्चालिकेभ्यः प्रतिपालनायातिसृष्टानाम् ... (वज्राचार्य, २०३०: १५७-१५८) ।

८६. यदा च पाञ्चालिकानां यत्किञ्चनकार्यमितद्गतमुत्पत्स्यते यथाकालं नियमितं वस्तु परिहापयिय्यन्ति तथा स्वयमेव राजभिरन्तरासनन विचारः करणीयः

८७. अंशुवर्माकी रानीले वनकाली भेकमा कुनै देवमन्दिर थापेको कुरा त्यहीं रहेको अभिलेखले बताएको छ- (भर्तुः पुण्य) विवृद्धये भवगतिकलेशक्षयायात्मनः भार्य्या श्रीकलहाभिमानिनृपतेर्लब्ध्वा



प्रसादोदय (म) । (श्रीकलहाभिमानी राजाको पत्नीले उहाँबाट निगाहा पाएर पतिको पुण्य बढोस् तथा आफ्नो मोक्ष होओस् भनी (देवताको स्थापना गर्नुभयो) (वज्राचार्य, २०३०: ३६६) । यही अभिलेखमा शुरुमा अमृतवर्मा नामका व्यक्तिले "मन्दिरको इलाकालाई राम्रो पर्खाल" ले घेरेको (प्रासादपिण्डं स्थलं सद्भित्यामृतवर्मणा) उल्लेख पनि भएको छ ।

८८. अंशुवर्माले ई. ६१० मा पाटन भेकको माटिङग्राममा रहेको कुनै देवमन्दिर (माटिन्देवकुल) को राम्ररी जीर्णोद्धार गराई त्यसलाई स्थानीय पाञ्चालीको जिम्मा लगाई गुठीको पनि वन्दोवस्त गरिदिएको कुरा उनको पाटन सुनधाराको अभिलेखबाट थाहा पाइन्छ (ऐजनः ३३९-३४०) । यो कुन देवताको मन्दिर हो थाहा नपाइएकोले यहाँ यसको सन्दर्भ पार्नु परेको हो ।

८९. कालेन शीर्णमवलोक्य समस्तमार्चं
हैमं हरेर्भगवतः कवचं सताक्ष्र्यम्
सञ्चस्कृवान्नरपतिः पुनरंशुवर्मा ॥
(वज्राचार्य, २०३०: ३१७) ।

९०. अहिंदुकोट्टग्रामनिवासिनः कुटुम्बिनो यथाप्रधानङ्कुशलमाभाष्य समाज्ञापयति विदितमस्तु वोस्माभिरिमङ्ग्रामङ्कृतसीमनिर्णयः स्वकारितकश्रीराजविहारिचतुर्दिशार्यभिक्षुसङ्घाय प्रतिपाद्य .........।

९१. त्रैधातुकक्लेशतरुंस्परन्तञ्चतुर्विधानासृतधीभुजेन ।
समूलमुन्मूल्यादिदेशमार्गम्मोक्षस्य यस्तन्नमतादरेण ॥

९२. अन्यत्र यस सम्वन्धी उद्धरण दिइएको छ ।

९३. "जात्रामा लामो बाँसमा रंगीविरंगी कपडा र चमर गाँसी बनाइने धुजामुजा घुमाउने" (वज्राचार्य, २०३३: १४३) ।

९४. क्षितितलतिलकभूतात्कुतूहलिजनतानिमेषनयनावलोक्यमानात्कैलासकूटभवनात् ......... ।

९५. "कैलासकूटभवनाद् भुवनप्रकाशाज्
ज्योत्स्नावमृष्टहिमवच्छिखराग्रदीप्तेः" (ऐजनः ४५८) ।

९६. "कैलासश्रृंगाभान्नयनोत्सवकारिणः
कैलासकूटभवनात् रम्याज्जगति विश्रुतात्" (ऐजनः ४८५) ।

९७. गोपालवंशावलीहरुमा अंशुवर्माले 'राजविहार' बनाएको उल्लेख पाइनेमा राजाले विहार गर्ने ठाउँ - अर्थात् दरबार भन्ने अर्थ गर्दा कैलासकूटभवन बनाएको संकेत नपाइने होइन । तर उनले 'राजविहार' नामको बौद्ध विहारनै बनाएको थाहा पाइने हुनाले सो प्रस्ताव खण्डित हुन जान्छ ।

९८. पुराणहरुमा राजदरबारहरुका स्वरुप अथवा वास्तु भेदको रुपमा वैराज, पुष्यक, कैलास, मालक र त्रिपिष्टको वर्णन गरिएको पाइछ । गरुडपुराण अध्याय ४७ मा भनिएको छ :–

प्रासादानाञ्च वक्ष्यामि मानं योनिञ्च नामतः
वैराजः पुष्पकाख्यश्च कैलासो मालकाह्यः
त्रिपिष्टः पञ्च पञ्चैत्ते प्रासादाः सर्वयोनयः ।
प्रथमश्चतुरस्रोहि द्वितीयस्तु तदायतः
वृत्तो वृत्तायतश्चान्ङोष्टास्रश्चेह च पंचमः ।
वर्द्धनोऽयन्य उष्णीषं शंखश्च कलसस्तथा ।
खपूरवृक्षकाश्चान्यो वृत्ताः कैलाससंभवाः ॥
अग्निपुराण अध्याय १०४ मा पनि यस्तै वर्णन पनि पाइन्छ (भट्टाचार्य, १९६२ ३६७८) ।

९९. "In the capital of Nepal there is a construction in storeys which has more than 200 tchieu of height and 86 Peu (400 feet) of circumference. Ten thousand men can find place in its upper part. It is divided into three terraces and each terrace is divided in seven storeys. In the four pavilions there are sculptures to make you marvel, stones and pearls decorate them." (Levi, 1905-8, I: 157-159).

१००. "In the middle of the palace there is a tower of seven storeys roofed with copper tiles. Its balustrade, grills, columns, beams and everything therein are set with fine and even precious stones. At each of the four pipe of copper. At the base there are golden dragons which spout forth water. From the summit of the tower water is poured through tunnels which finds way down below, streaming like a fountain from the mouth of the golden makara." (Jaysawal, 1976: 86-87).

१०१. एकथरी संक्षिप्त गोपालवंशावलीमा "पिण्डकादिव्यहारे लिपिविशेषं च कूतं" भनिएको छ (रेग्मी, २०४६: ५) । यो भनाईबाट कूत सम्बन्धमा लिखतको व्यवस्था गरिएको अर्थ लाग्दछ । भूस्वामिले मोहीलाई कूतसम्बन्धी लिखत दिने भन्ने यो कुराबाट मोहीको मान्यतासम्बन्धी व्यवस्था गरेको अर्थ बुझ्न सकिन्छ जस्तो लाग्दछ ।

१०२. लोहचामरमृगरोमकस्तूरिकाकूतताम्रभाण्डान्यनिर्हार्यर्याण्यवास्य तदन्यद्रव्याण्यादायोपक्रयात्थीमितो निर्गच्छताम्प्रसाद्धयोपक्रमञ्चान्तः प्रविशतां शुल्कतापनादियथादेयम्प्रतिमुक्तम् ... ।

१०३. सन्तप्तस्य कलीश्वरैरतिशठैर्नित्यङ्गुणद्वेषिभिः
लोकस्यास्य सुखावहो ............श्रीमान् कलहाभिमानिनृपतिः

१०४. तेनेयं स्वयशोमरीचिविमलस्फीताम्भुवि स्यान्दिनीं
राज्ञा श्रीकलहाभिमानि ............प्रविष्टा पातालम्पुनरपि परावृत्य तरसा द्रवीभूता कीर्तिं ............ ।



१०५. पशुपतौ भगवाञ्चूभोगेश्वरोस्मद् भगिन्या श्रीभोगवर्मजनन्या भोगदेव्या स्वभर्तृ राजपुत्रशूरसेनस्य पुण्योपचयाय प्रतिष्ठापितो यश्च तद् दुहित्रास्मद्भागिनेय्या भाग्यदेव्या प्रतिष्ठापितो लडितमहेश्वरो यश्चैतत्पूर्वजैः प्रतिष्ठापि (तो)
दक्षिणेश्वरः ......... ।

१०६. "The fact that the distinguished Maukhari chiefs lived in Nepal even during the rule of Harshavardhana is not compatible with the view of his peaceful occupation of Kanouj."

१०७. नालन्दाबाट पाइएको सीलछापमा मौखरी राजाहरुको सूची दिइएकोमा अवन्तिवर्मापछि ग्रहवर्मा र त्यसपछि भएका राजाको नाम खण्डित भएकोमा सो नामको अघिल्लो भाग सुवाट उठेको देख्दा सो नामलाई शूरसेनसँग समीकरण पनि गरिएको छ (ऐजन) ।

१०८. उही आधारमा विचार गर्ने हो भने जयदेवलाई पनि बुद्धकीर्तिले आफ्नै कल्पनाले 'परचक्रकाम' को उपाधि भिराइदिएको अनुमान गर्न सकिन्छ ।

१०९. धनवज्र वज्राचार्यले "भोगवर्मा गोमी क्षत्रिय थिए भन्ने निश्चित छ" भन्नु भएको छ (वज्राचार्य, २०३०: १४२) ।

११०. "In any event, the tradition of the Nepali Princess is a fact in Tibet"

१११. भृकुटीसम्बन्धी आख्यानहरु चौधौं शताव्दीभन्दा पुराना छैनन् यस कारणले भृकुटीसम्बन्धी घटनामा शंका उठाउन सकिने विचार कति इतिहासकारको पाइन्छ । यस आधारमा हेर्ने हो भने सर्वप्रथम सम्बद्ध आख्यानहरुबारेमा विशेष अध्ययन हुनुपर्ने देखिन्छ ।

११२. "But the pilgrim does not appear himself to have gone into Nepal. He went to the capital of the Vrijjis, and there speaks from report."

११३. यसको मूल अंग्रेजी यस ग्रन्थको परिशिष्ट भागमा राखिएको छ ।

११४. आसीद् वसन्तदेवमोस्माद् दान्तसामन्तवन्दितः ।
अस्यातरेप्युदयदेव इति क्षितीशाज्जातस्त्रयोदश इतश्च नरेन्द्रदेवः ॥
(ऐजन: ५४९) ।

११५. "The father of Naling-ti- Po was deposed by his younger brother. Naling ti- po lay hidden to escape from his uncle. Tibet gave him refuge and afterwards established him on his throne."

# खण्ड - ४

## लिच्छवि-गुप्तको संयुक्त राजनीतिक ई . ६२४-६४१ को राजनीतिक हलचल
## लिच्छवि र गुप्तको सँयुक्त शासन?

### धुवदेव, भीमार्जुनदेव- जिष्णुगुप्त र विष्णुगुप्त

अंशुवर्माका उत्तराधिकारी उदयदेवको एकमात्र ज्ञात मिति ई . ६२१ पछि दुई-तीन वर्ष जतिको अन्धकारपूर्ण व्यवधानपछि ई . ६२४ देखि ई . ६४१ सम्मको १७ वर्षको अवधिको इतिहास विचित्रतापूर्ण देखिएको छ । उक्त अवधिमा प्रसारित्त शिलालेखहरुमा लिच्छविवंशी राजाहरु र गुप्तवंशी राजाहरुको स्पष्ट स्थान देखिनाले यस अवधिलाई विचित्रतापूर्ण भन्नु परेको हो । शिलालेख प्रमाणहरुले दर्शाउन खोजेको यस युगको इतिहासबारे तल विचार विश्लेषण गरिने छ तर यहाँ अर्को महत्वपूर्ण तथ्यबारे विचार गरिन्छ ।

गोपालवंशावलीमा यस युगको इतिहासम्बन्धी केही चर्चा भएको पाइन्छ । त्यहाँ "त्यसपछि सूर्यवंशलाई जितेर फेरि गोपालवंशले प्रभाव पारी (गोपालवंशको प्रभावले) राजा भए" (तत पश्चात् सूर्यवंशी निर्जित्य: पुन गोपालवंसने प्रभवाद्राजा कृतम्) भनिएपछि जिष्णुगुप्त र विष्णुगुप्तको वर्णन गरिएको छ (वज्राचार्य, मल्ल १९८५: २९-३०) । गोपालवंशावलीले जिष्णुगुप्त र विष्णुगुप्तको परिचय यसरी दिएर शिलालेख प्रमाणहरु लेखाएको इतिहासको सँक्षिप्त परिचय दिएको छ ।

आश्चर्यको कुरो त के छ भने गोपालवंशावलीले जिष्णुगुप्त र विष्णुगुप्तका समकालीन लिच्छवि राजाहरु धुवदेव र भीमार्जुनदेवको इतिहासलाई पनि बिर्सेको छैन र एक ठाउँमा भनिदिएको छ "त्यसपछि फेरि सूर्यवंशी नृप राजा श्री धुववर्मा वर्ष १०८" राजा भीमार्जुनदेव वर्ष ३५ "( तदनन्तरे पुन सूर्यवंशी नृप राजा श्रीधुववर्मा वर्ष १०८" राजा श्रीभीमार्जुनदेव वर्ष ३५") (ऐजन: ३०) ।

यसरी गोपालवंशावलीले गोपालवंश (गुप्तवंश) को विजयको कालावधिमा संयुक्त शासकका रुपमा रहेका लिच्छवि राजालाई पनि पूरा राजाको रुपमा इतिहासमा ध्यान दिएर उनीहरुको पनि ऐतिहासिक महत्वलाई सकारेको छ ।

गोपालवंशावलीले जुन रुपमा यस युगको इतिहासलाई सूत्रको रुपमा निवद्ध गरेको छ त्यहाँबाट गुप्तवंशीहरुको प्रभाव बढेको कालमा वैधानिक राजाका रुपमा धुवदेव र भीमार्जुनदेवको स्थान मानिएको रहेछ भन्ने तथ्य बुझ्न सकिन्छ । यसैले लिच्छविकालको ई . ६२४-६४१ को १७ वर्ष जतिको इतिहासलाई लिच्छवि र गुप्तवंशको संयुक्त राजनीतिक प्रशासनिक इतिहासको नौलो राजनीतिक प्रयोगको रुपमा लिन सकिन्छ जस्तो लाग्दछ ।



### धुवदेव र जिष्णुगुप्त

संवत् ४८ (ई. ६२४) कार्तिक महीनाको छिन्नमस्ता पाटनको अभिलेखमा धुवदेव र जिष्णुगुप्तको नाम शासकको रुपमा उल्लेख भएको छ । अभिलेखमा दूतकको रुपमा "युवराजश्री" उपाधिसाथ विष्णुगुप्तको नाम लेखिएको छ । सो अभिलेखमा जुन किसिमको विवरण छ त्यसबाट धुवदेव मानगृहमा बस्ने र जिष्णुगुप्त कैलासकूटभवनमा बस्दथे भन्ने देखिन्छ (वज्राचार्य, २०३०: ४०१-४०२)।

उदयदेवको संवत् ४५ असार महीनाको चित्लाङ अभिलेखपछि पाइएको यो पहिलो अभिलेख हो र यो अभिलेखमा दुई जना शासक देखिनु एउटा आश्चर्यको घटना देखिन्छ । यसरी सर्सर्ती हेर्दा संवत् ४५ असार र संवत् ४८ कार्तिकको बीचमा नेपालमा राजनीतिक संघर्ष भएको र सत्ता परिवर्तन भएको बुझिन्छ । यो सत्ता परिवर्तनको कारणबारे हाम्रो स्वदेशी स्रोतहरुमा कुनै संकेत नपाइए पनि चिनियाँ स्रोतबाट यसको रहस्य खुल्न आउँछ ।

चीनको इतिहास ताँग वृत्तान्तमा तात्कालिक नेपालको राजनीतिक स्थितिबारे छोटकरी टिपोट पाइन्छ । त्यसमा भनिएको छ-

> नलिंग-टि-पोका बाबुलाई उनको भाइले
> हटाएका थिए (मारिदिएका थिए) नलिंग-
> टि-पोलाई काकाको डरले भाग्नु परेको
> थियो । उनलाई तिब्बतले शरण दिएको थियो
> यसैले उनी तिब्बतको अधीनमा परेका थिए । [१]

ताँग वृत्तान्तको माथि उद्धृत विवरणमा नरेन्द्रदेवका बाबुलाई उनका भाइले गद्दीबाट हटाएको, नरेन्द्रदेव भागेको र तिब्बतमा शरण पाई बसेका र पछि तिब्बतको सहयोगले आफ्नो पैतृक राज्य फिर्ता पाएको कुरा बताइएको छ। नयाँ ताँग वृत्तान्तमा दुई ठाउँमा पाठ भेद पाइन्छ । सो पाठ भेदमा नरेन्द्रदेवका बाबुलाई मारिदिएको र भाईको ठाउँमा विद्रोही र शासन हत्याउने भनिएको छ ।

सो टिपोटमा नरेन्द्रदेवका बाबु मात्रै भनेर नाम नदिइए पनि जयदेवको पशुपति अभिलेखमा तिनको नाम उदयदेव लेखिएकोले संवत् ४५ को चित्लाङ अभिलेखमा देखिएका उदयदेवनै गद्दीबाट हटाईएको कुरा स्पष्ट हुन आएको छ ।

### विद्रोह कहिले भयो?

जयदेवको संवत् ४५ (ई . ६२१) को अभिलेख र संवत् ४८ (ई . ६२४) को अभिलेखको बीचको करीव तीन वर्षको अवधिबीच कुनै शिलालेख प्रमाण नपाइनाले यो अवधि विद्रोह र सत्ता परिवर्तनको संघर्षको समयको रुपमा रहेको मान्न सकिन्छ ।

हुन त नेपालको इतिहासमा बीच - बीचमा लामा लामा अवधि अन्धकारपूर्ण रहन गएको परिप्रेक्ष्यमा उपर्युक्त तीन वर्षको अज्ञात युग पनि नेपाली इतिहासको लागि एक स्वाभाविक पक्ष हुन सक्दछ । तर मानदेवदेखि शिलालेख प्रमाणहरु क्रम मिलेर आएको स्थितिमा यो तीन वर्षको अवधि निश्चय नै राजनीतिक अस्थिरताको युग थियो भनेर मान्नु पर्ने हुन्छ जब राजनीतिक संघर्षमा अनिर्णयको स्थिति रहन गएको थियो ।

चिनियाँ टिपोटमा नरेन्द्रदेवका बाबुलाई उनका भाईले गद्दीबाट हटाए भन्ने सन्दर्भमा जिष्णुगुप्तको स्थान लुप्त हुन गएको छ । विदेशी टिपोटमा नेपालको यथार्थ विवरण नपरेको हुनु स्वाभाविक छ तर सो विद्रोहको काममा ध्रुवदेवले सक्रियता देखाएको बुझ्न सकिने हुँदा यिनी जिष्णुगुप्तका मुठ्ठीका माखामात्रै थिए भनिहाल्न पनि गाहारो होला जस्तो लाग्दछ । नयाँ तांग वृत्तान्तको पाठ भेदमा "विद्रोही गद्दी खोस्ने" (rebellious usurper) को रुपमा जिष्णुगुप्तको अस्तित्वलाई संकेत गरेको पनि मान्न सकिन्छ ।

तांग वृत्तान्तको टिपोटबाट उदयदेवलाई उनका भाईले गद्दीबाट हटाई मारेको भन्ने कुराको आधार लिएर संवत् ४८ को अभिलेखको सन्दर्भ मिलाएर हेर्दा ध्रुवदेवको स्थिति वैधानिक राजाको रुपमा मात्र देखिन्छ । उनको तुलनामा जिष्णुगुप्त राजनीतिका सूत्रधार र सक्रिय देखिएको हुँदा उदयदेवको विरुद्ध विद्रोह गर्ने कार्यक्रममा जिष्णुगुप्तको विशेष भूमिका रहेको बुझ्न सकिन्छ ।

ध्रुवदेव र जिष्णुगुप्तको ठीक ठीक परिचय उनीहरुले प्रसारित गरेका अभिलेखहरुबाट पाउन सकिने हुनाले यहाँ त्यसै गरेर हेरिन्छ ।

### ध्रुवदेव

ध्रुवदेव र जिष्णुगुप्तले मिलेर प्रसारित गरेका जम्मा ५ ओटा शिलालेख पाइएका छन् जुनमध्ये तीन ओटा खण्डित हुनाले मिति थाहा पाइदैन र बाँकी दुइटामा संवत् ४८ र ४९ (ई ६२४-६२५) मिति रहेका छन् (वज्राचार्य, २०३०: ४०१- ४०२- ४०५ -४०६,४०७ -४०८, ४११ -४१२, ४१४-४१५) । यसरी अभिलेख प्रमाणहरुबाट ध्रुवदेवको शासन अवधिको ज्ञात मिति ई ६२४-६२५ मात्र देखिए पनि भीमार्जुनदेवको पहिलो ज्ञात मिति ई ६३१ देखिएकोले ध्रुवदेवलाई ई ६३० सम्मको समय दिन सकिन्छ । यसरी ध्रुवदेवको शासनकाल ६-७ वर्ष जति रहेको अनुमान गर्न सकिन्छ ।

अभिलेखमा शुरुमा "स्वस्ति मानगृहात् " भनेपछि "भट्टारकमहाराजश्री" उपाधि साथ ध्रुवदेवको नाम लेखिएको छ । अनि "सहित:" (सँगै) भनेर जिष्णुगुप्तको नाम लेखिएको छ । कुनैमा "तत्पुरस्सर:" (अधिसरा भई काम गर्ने) भन्ने भनाई पनि पाइन्छ ।

उदयदेवको अभिलेखमा ती राजाको राजकीय उपाधि "भट्टारकमहाराजाधिराज" देखिन्छ । तर सो उपाधि ध्रुवदेवलाई नलेखिएको हुनु उल्लेखनीय छ । अंशुवर्माको पदचिन्हमा चल्नु परेको उदयदेवले सो प्रभावशाली



उपाधि लिएका थिए तर ध्रुवदेवलाई पहिलेका लिच्छविराजाहरुले लिने गरेको राजकीय उपाधि प्रयोग गरिएको देख्दा यिनको राजनीतिक सम्बन्ध शिवदेव प्रथमसँग रहेको बुझ्न सकिन्छ । शिवदेव प्रथमको उपाधि पनि त्यही रहेको थियो, ध्रुवदेवलाई पहिलेका राजाहरुलाई प्रयोग गर्ने गरिएको "बप्पपादानुध्यात:" (बुबाको पाउको अनुग्रह पाएका) विशेषण नलगाइएको देख्दा यो तत्वमा रहस्य लुकेको देखिन्छ ।

राजकीय उपाधिको दृष्टिले ध्रुवदेव शिवदेवका छोरा देखिन आउँछन् । तांग वृत्तान्तमा पनि उदयदेवलाई उनका भाईले गद्दीबाट हटाई मारेको भन्ने सन्दर्भ पाइनाले पनि ध्रुवदेव उदयदेवका भाई देखिन आउँछन् तर राजसत्तामा पैतृक परम्पराको हकको दावा जनाउने सो "बप्पपादानुध्यात:" विशेषण उनलाई नदिइएकोले उनको सम्बन्ध शिवदेवसँग नरहेको पनि मान्न सकिन्छ । यस्तो देखिए पनि ध्रुवदेवलाई तीन अभिलेखहरुमा शिवदेवलाई झै "लिच्छविकुलकेतु" भन्ने उपाधि लेखिएको छ (वज्राचार्य, २०३०: ४०५, ४०७, ४१४) र एउटामा "लिच्छवीकलेकेतु" (लिच्छविकुलका झण्डा भएका) भन्ने उपाधि लेखिएको छ (ऐजन: ४११) ।

पाँच वटा अभिलेखहरुमध्ये तीन ओटामा सम्बद्ध भाग खिइएको छ तर दुइटामा भने ध्रुवदेवको विरुदावलि (वा महात्म्य) सम्बन्धी सूक्ति पनि लेखिएको पाइन्छ । एउटामा "दिशाको छेउ छेउसम्म फैलिएको पराक्रम भएका" (अनेकदिगन्तरप्रथितपराक्रम:) (ऐजन: ४११) र आर्कोमा "सारा प्राणीमाथि दया गर्नामा मन लगाएका, अभिमान नभएका, राम्रो चरित्र भएका" (सकलसत्वानुग्रहाहितमनोनिरभिमानरमणीयचरित:) (ऐजन: ४१४) भनिएको छ । उक्त विरुदावलिको आधारमा हेर्ने हो भने ध्रुवदेवको पनि आफ्नो किसिमको राजनीतिक व्यक्तित्व रहेको अनुमान गर्न सकिन्छ । तर बाबुबाट सोझै उत्तराधिकारीको रुपमा शक्ति नपाएकोले "बाबुको पाउको अनुग्रह पाएका" भनी लेख्नचाहिँ उनले चाहेनन् भन्ने देखिन्छ ।

### भीमार्जुनदेव

भीमार्जुनदेवको नामोल्लेख गर्ने पाँच ओटा शिलालेख पाइन्छन् जुनमा संवत् ५५ ( ई ६३१) देखि संवत् ६५ (ई ६४१) सम्मका मिति लेखिएका छन् (वज्राचार्य, २०३०: ४१९ - २०, ४२३-२४, ४३३-३४, ४४२-४३, ४४८-४९) ।

भीमार्जुनदेव पनि ध्रुवदेवकै थान्कामा थपना भएका हुनाले यी दुइमा समानता देखिन्छ । ध्रुवदेवलाई जस्तै वैधानिक राजाका रुपमा भीमार्जुनदेवलाई पनि तीन ओटा अभिलेखमा "लिच्छविकुलकेतु" उपाधि लेखिएको छ (ऐजन: ४१९,४४२,४४८) । एउटामा "लिच्छविकुलतिलक:" (लिच्छविकुलको टीका) (ऐजन: ४२३) र एउटामा "सिंघासनाध्यासिकुलकेतु:" (गद्दीनशीन कुलका झण्डा जस्ता ) ऐजन: ४३४) ।

भीमार्जुनदेवले जिष्णुगुप्तसंग मिलेर संवत् (ई ६३१) देखि संवत् ५७ (ई ६३३) तीन वर्षसम्म शासन गरेका र संवत् ५७ देखि संवत् ६५ (ई ६४१) सम्म विष्णुगुप्तसंग मिलेर शासन गरेका देखिन्छन् ।

थानकोटको संवत् ५७ (ई. ६३३) को अभिलेखका विषयवस्तुबाट भीमार्जुनदेवको स्थितिबारे शंका उठाउने ठाउँ रहन गएको छ । यो अभिलेखमा उनलाई "गद्दीनशीनकुलका भण्डाजस्ता" भनेर महात्म्य गराइएको छ तर उनको पुरानो राजकीय उपाधिलाई कटौती गरी "भट्टारक" मात्र प्रयोग गरिएको छ "महाराज" पद खोसिएको छ (ऐजन: ४३४)। यही अभिलेखमा उत्त जिष्णुगुप्तलाई लिच्छवि राजालाई प्रयोग गरिने "देव" पद जोडिएको र "सोमान्वयभूषण:" समेत जोडिएका तथ्यहरुको राजनीतिक महत्व रहेको कुरातिर धनवज्र वज्राचार्यले संकेत गर्नु भएको छ (ऐजन: ४३६) । भीमार्जुनदेव गद्दीका हक्दार होइनन् जिष्णुगुप्तले उनलाई बलैले गद्दीमा राखेका हुन् भन्ने खालको गाईंगुई त्यस वेला चलेको हुनाले यो अभिलेखमा भीमार्जुनदेवलाई "सिंघासनाध्यासिकुलकेतु" उपाधिको प्रयोग भएको हो भन्ने धनवज्र वज्राचार्यको विचार छ (ऐजन:) ।

उपर्युक्त थानकोटको अभिलेखमा भीमार्जुनदेवलाई "भट्टारक" मात्र भनिएको र "महाराज" पद खोसिएको भन्ने तथ्य महत्वपूर्ण देखिन्छ तर यसको ठीक ठीक व्याख्या गर्न गाहारो छ किनभने यो अभिलेखपछि प्रसारित भएका अभिलेखहरुमा फेरि "भट्टारकमहाराज" को पुरानै उपाधिको प्रयोग गरिएको पाइन्छ (ऐजन: ४४२) यद्यपि ती अभिलेख विष्णुगुप्तका पालाका हुन् । [२]

संवत् ५७ (ई. ६३३) को कार्तिक महीनाको थानकोट अभिलेख र संवत् ५७ फागुन महीनाको मालीगाउँ अभिलेखको बीचको अवधिमा जिष्णुगुप्तको स्वर्गवास भएपछि जिष्णुगुप्तको ठाउँ उनका छोरा विष्णुगुप्तले लिएको देखिन्छ। तर विष्णुगुप्तको कार्यकालमा पनि भीमार्जुनदेवको स्थिति झन् सन्दिग्ध रहन गएको अनुमान गरिएको छ । विष्णुगुप्तको पहिलो अभिलेख - मालीगाउँको अभिलेख विष्णुगुप्त एक्लैले प्रसारित गरेको कुरा वज्राचार्य मान्नुहुन्छ (ऐजन: ४४०) । भीमार्जुनदेवलाई जानाजान मिचेर यो अभिलेख विष्णुगुप्तले चलाएको कुरा मान्दा यो संयुक्त शासनकालको राजनीतिक अन्यौलबारे अनुमान गर्न सकिन्छ ।

विष्णुगुप्तसँग भीमार्जुनदेवको कार्यकाल जनाउने संवत् ६४ र ६५ (ई ६४०-४१) का अभिलेख पाइन्छन् । जिष्णुगुप्तसँगको कार्यकाल समेत जोड्दा भीमार्जुनदेव ई ६३१ देखि ६४१ सम्म १० वर्ष जति गद्दीमा बसेका देखिन्छन् । यसपछि नरेन्द्रदेवको विद्रोहको कारणबाट यस अवधिको लिच्छवि-गुप्तको संयुक्त शासन समाप्त भई इतिहासले अर्कै मोड लिएको थियो । सो विद्रोहमा विष्णुगुप्त मारिएको उल्लेख पाइन्छ तर भीमार्जुनदेवको स्थिति कस्तो रह्यो भन्ने बारेमा केही भन्न सकिँदैन ।



ध्रुवदेवसँग जिष्णुगुप्तले जुन किसिमले राजनीति संचालन गरेका थिए त्यही रुप अब भीमार्जुनदेवसँग कायम रहन गएको देखिँदैन । यस कुराका अनेक उदाहरण त्यस कालका अभिलेखहरुमा देखिन्छन् भन्ने व्याख्या इतिहासकारहरुले गरेका छन् । ध्रवदेवको शिवदेवसँग सम्बन्ध जोड्न नसकिए झैं भीमार्जुनदेवको सम्बन्ध ध्रुवदेवसँग जोड्न सकिने कुनै प्रमाण उपलब्ध हुँदैन। यिनलाई पनि "बप्पपादानुध्यात:" को उपाधि नलेखिएकोले यिनको स्थिति बुझ्न अप्ठेरो परेको हो ।

ध्रुवदेवलाई जस्तै भीमार्जुनदेवलाई पनि एक वैधानिक राजालाई जस्तै उचित सम्मान व्यक्त गरिएको पाइन्छ । यिनका नाम उल्लेख गर्ने अभिलेखहरुमा यिनलाई विभिन्न खालका विरुदावलिहरुको प्रयोग गरिएको छ । एउटा अभिलेखमा यिनलाई "भर्खर उदाएको सूर्यको किरण (घाम) भन्दा बढ्ता चहकिलो कीर्ति भएका" (अभिनवोदितदिवसकराधिकतरदीप्तयशोंशुमाली) भनिएको छ (ऐजन: ४२३- २४) । आर्कोमा यिनलाई "सारा जनताको दु:ख बाधा हटाउनमा सधै चित्त लगाएका" (सकलजननिरुपद्रवोपायसंविधानैकचित्तसन्तान:) भनिएको छ (ऐजन: ४४२-४३) । अझ आर्को अभिलेखमा "पवित्र, उत्तम कर्मले गर्दा सम्पत्ति पाएका" (अमलिनकुशलविपाकोपनतसम्पत्) जस्तो विरुदावलि लेखिएको छ (ऐजन: ४४८-४९)।

ई ६३७ मा नेपालको सीमान्ततिर बसेर प्रसिद्ध चिनियाँ यात्री ह्वेन्सांगले लेखेको नेपालसम्बन्धी विवरणमा परेको निम्न खण्डलाई राजा भीमार्जुनदेवको वर्णनको रुपमा लिन सकिन्छ-

> "त्यहाँ (नेपाल) का राजा क्षत्रिय छन् र उनी लिच्छविवंशी हुन । उनको चित्त निष्कपट, चरित्र निर्मल र पवित्र छ । उनलाई बुद्धका सिद्धान्तमा पूरा विश्वास छ" (बील १९५८: ३१८-१९) ।

तात्कालिक अभिलेखहरुमा भीमार्जुनदेवको व्यक्तित्वसम्बन्धी जस्ता टिप्पणी पाइएका छन् झण्डै त्यस्तै वर्णन ह्वेन्सांगले गरिदिएका छन् । ह्वेन्सांगले राजाको नाम त किटेका छैनन् तर समयको हिसाबबाट त्यो वर्णनबाट वैधानिक राजाका रुपमा भीमार्जुनदेवको राजनीतिक अस्तित्व स्पष्ट हुन आएको छ ।

### जिष्णुगुप्त

एघार ओटा शिलालेखहरु, एउटा टक र वंशावलीका विवरणहरुबाट जिष्णुगुप्तको इतिहास थाहा पाइन्छ । यी अभिलेखहरुमा संवत् ४८ (ई. ६२४) देखि संवत् ५७ (ई. ६३३) सम्मको मिति देखिने हुँदा जिष्णुगुप्तको कार्यकाल ९-१० वर्षको देखिन आउँछ । उक्त अभिलखहरुमध्ये ८ ओटामा लिच्छवि राजाहरु ध्रुवदेव र भीमार्जुनदेवको पनि नाम लेखिएको छ र बाँकी तीन अभिलेखहरुमा जिष्णुगुप्तको मात्रै नाम लेखिएको पाइन्छ । जनतातर्फबाट राख्न लगाइएका यी

तीन अभिलेखहरुलाई कुन क्रममा राख्न सकिन्छ भन्ने विषयमा केही भन्न नसकिने देखिन्छ ।[३]

लिच्छवि राजासँग संयुक्त भई जिष्णुगुप्तले प्रसारित गरेका अभिलेखहरुमा शुरुमा मानगृह दरवारको उल्लेख गरी "भट्टारकमहाराजश्री" को उपाधिसाथ लिच्छवि राजाहरु ध्रुवदेव र भीमार्जुनदेवको नाम तथा लेखी कैलासकूटभवनको नाम लेखी "भगवत्पशुपतिभट्टारकपादानुगृहीतः", "बप्पपादानुध्यातः" र "कुशली" विशेषणहरुसाथ श्रीजिष्णुगुप्तको नाम लेखिएको पाइँदा तात्कालिक राजनीतिको स्तर निर्धारण गर्न सकिन्छ । खासगरी युवराजका रुपमा मानगृहवासी लिच्छवि राजाको कुनै सम्बन्ध नहुने तत्व यी अभिलेखहरुबाट थाहा पाइने हुनाले उत्तराधिकारविहीन गद्दीधारी लिच्छवि राजाहरु (ध्रुवदेव र भीमार्जुनदेव) को स्थिति अर्ध-संवैधानिक रहेको बुझ्न सकिन्छ । यस्तो स्थिति भए पनि लिच्छवि राजाहरुलाई लिच्छवि राजाहरुको पुर्ख्यौली राजकीय उपाधि "भट्टारकमहाराजश्री" दिने गरिएको देख्दा सो उनीहरुको वैधानिक अधिकार मानिएको बुझिन्छ । यसको तुलनामा जिष्णुगुप्तलाई राजकीय स्तर अर्थ्याउने कुनै उपाधिको उपयोग भएको देखिँदैन । तर यहाँ अलिकति विचार गरेर हेर्ने हो भने जिष्णुगुप्तले अंशुवर्माको इतिहासलाई नवीन रुप दिन खोजेको बुझ्न सकिन्छ ।

शिवदेवबाट स्वतन्त्र भएपछि अंशुवर्माले कैलासकूटभवनलाई राजदरवार बनाएर त्यसैलाई केन्द्रीय प्रशासनको केन्द्र बनाएका हुनाले त्यस दरवारको इज्जत थियो । त्यस दरवारलाई हातलगाएर जिष्णुगुप्तले सम्पूर्ण प्रशासनको सूत्र हातमा लिन पाएका थिए ।

जिष्णुगुप्तको पुर्ख्यौली परम्परा वैष्णवधर्मसँग विशेष जोडिएको थियो तर उनले अंशुवर्माको अनुकरण गरी "भगवत्पशुपतिभट्टारकपादानुगृहीतः" उपाधि पनि स्वीकार गरेका थिए । यो उपाधिलाई अंशुवर्माले आफ्नो शक्तिको कारणले राजनीतिक महिमा पनि प्रदान गरेका थिए । यस्तै कारणले जिष्णुगुप्तले सो धार्मिक उपाधिलाई पनि राजनीतिक महत्वाकाङ्क्षाको प्रतीकको रुपमा स्वीकार गरेको बुझिन्छ ।

राजनीतिको सूत्र आफ्नो हातमा लिनुपर्ने कारणको व्याख्या वा जवाफको रुपमा जिष्णुगुप्तले "बप्पपादानुध्यातः" को उपाधि लिएका छन् । यो उपाधि लिएर जिष्णुगुप्तले आफ्नो महत्वाकाङ्क्षा व्यक्त गरेका छन् र आफ्नो वंशको इतिहासतिर सँकेत गरेका छन् । आफ्नो केवलपुर अभिलेखमा उनले "श्रीभूमगुप्त" लाई आफ्ना बाजे (अस्मत् पितामहः) भनेकोले (वज्राचार्य, २०३०: ४१४) जिष्णुगुप्तले राजनीतिमा सक्रिय हुनपर्नाको कारण गुप्तवंशको इतिहास नै रहेछ भन्नुपर्ने भएको छ । माथि हामीले यसबारे विचार भौमगुप्तसम्बन्धी चर्चामा गरिसकेका छौं ।

अंशुवर्माले भौमगुप्तलाई राजनीतिबाट पन्छाए (मारे?) पछि गुप्तवंश सक्रिय राजनीतिबाट पर पुगेको थियो । राजनीतिबाट अलग भएकै अवधिमा



जिष्णुगुप्तका अज्ञानतामा पिता भएका वा अंशुवर्मासँगको संघर्षमा उनी मारिएका हुनाले जिष्णुगुप्तको ईर्षा रहेको हुनुपर्दछ । यस्तै कारणले गर्दा उनले उदयदेवविरुद्ध विद्रोह गरेको पनि बुझ्न सकिन्छ । त्यही उपाधिको प्रयोग ध्रुवदेव र भीमार्जुनदेवलाई नगरिएको हुँदा उनीहरुले उदयदेवको विरुद्ध विद्रोह गर्ने कुनै कारण नरहेको अनुमान पनि गर्न सकिन्छ ।

आफ्ना अभिलेखहरुमा जिष्णुगुप्तले आफ्नो वंशको माहात्म्य पनि सूत्र रुपमा वर्णन गराएकाले उनमा आफ्ना कुलीनतामा गर्व गर्ने भाव पनि रहेको देखिन्छ । छिन्नमस्ताको अभिलेखमा जिष्णुगुप्तले आफूलाई "शुद्ध कुलक्रमले राज्य गर्ने अधिकार पाएको" (पण्यान्वयादागतराज्यसम्पत्) भन्ने विरुदावलि लगाएका छन् (ऐजनः ४०१-४०२) । यसै गरी आफ्नो शासनकालको अन्तिम अवस्थातिर उनी आफुलाई "सोमवंशको गहना" (सोमान्वयभूषणः ) भनी घोषणा पनि गर्दछन् (ऐजनः ४३४) । लिच्छविहरु सूर्यवंशी हुन् भने म पनि चन्द्रवंशी हुँ भनेर जिष्णुगुप्तले यस्तो घोषणा गरेको देखिन्छ । यही धारणालाई साकार रुप दिँदै यही अभिलेखमा उनले आफ्नो नामसाथ "देवः" पदवी पनि धारण गरेका छन् । लिच्छवि राजाहरुले मात्र देव पद जोड्ने परम्पराको पृष्ठभूमिमा जिष्णुगुप्तले सर्वप्रथम त्यसको विरुद्ध देव पद लिएको यो घटनालाई जिष्णुगुप्तको महत्वाकाङ्क्षाको पराकाष्ठाको रुपमा धनवज्र वज्राचार्यले लिनुभएको छ (ऐजनः४३६) ।[४] जिष्णुगुप्तको व्यक्तित्व महत्वाकांक्षा र लक्ष्य अभिलेखहरुमा उनले आफूलाई लेखाएका विरुदावलीबाट बुझ्न सकिन्छ । यहाँ उनका विरुदावलीको सूची प्रस्तुत गरिन्छ:

१) ई. ६२४ को छिन्नमस्ता अभिलेखः-

"मात्सर्य हटिसकेका हुनाले सफा बुद्धि भएका, प्रजाको हित चाहने, अनिन्दनीय चरित्र भएका, शुद्ध कुलक्रमले राज्य गर्ने अधिकार पाएका, सारा शहरियाहरुले हुकुम तामेल गरिएको"

निरस्तमात्सर्यविशुद्धबुद्धिः<br>प्रजाहितैषी निरवद्यवृत्तः<br>पुण्यान्वयादागतराज्यसम्पत्<br>समस्तपौरार्चितशासनो यः)<br>(वज्राचार्य, २०३०: ४०१-२) ।

२) ई. ६२५ तिरको मीननारायणनिरको अभिलेखः-

"सारा जनतालाई उपद्रव नभएको पार्ने उपाय गर्नामा मन लाएका"

(सकलजननिरुपद्रवोपायसंविधानार्पितमानसः) (ऐजनः ४०७-८) ।

३) आदेश्वरको मिति खण्डित अभिलेखः-

"राजामा हुनुपर्ने दुर्लभ गुणहरुले पृथ्वीलाई सिंगारेको

(असुलभनृपतिगुणावभासितसकलमहीमण्डलः) (ऐजनः ४११-१२) ।

४)  केवलपुरको मिति खण्डित अभिलेख:-

"प्रजाको हित गर्नामा लागेको शुद्ध मन भएका, प्रभाव (कोश र दण्डद्वारा भएको शक्ति) र शु-याईंले शत्रुहरुलाई नुहाएका, बेजोड गुणहरु भएका, आत्मवत्ता (आफ्नो हित चिन्ने हुनु) भएका, प्यारो ... चन्द्रमा जस्तै (दुनियाँलाई आनन्द दिने) यस्तो"

प्रजाहितोद्युक्तविशुद्धमानस:
प्रभाव (शौर्य) प्रणतारिमण्डल:
गुणैरुपेतोनुपमैरिहात्मवान्
प्रिय......मपि चन्द्रमा इव
(ऐजन: ४१४-१५) ।

५)  यंगालहिटीको मिति खण्डित अभिलेख:-

"राजामा हुनुपर्ने गुणहरुले सिँगारिएका ... चन्द्रमाको किरण (जून) जस्तो सफा कीर्ति भएका जनतालाई खुशी पारेका ... मान गर्न लायक ... शत्रुहरुलाई सखाप पारेका, देशलाई सुखी बनाउन एकचित भई लागेका"

(नरपतिगुणसम्पद्भूषितो भूरि......
... जागत... शशिशुभ्राङ्ककीर्तिमुच्चैर्दधान:
मुदितज(न)... नमान्य... राय
प्रमथितरिपुपक्षो देशसौख्यैकचित्तो )
(ऐजन: ४२३-२४) ।

जिष्णुगुप्तलाई सरकारी अभिलेखहरुमा `श्री` छोडेर स्पष्ट राजकीय उपाधि नदिइएको भए पनि ती अभिलेखका भाकाबाट जिष्णुगुप्तलाई राजाकै तहमा राखेको बुझिन्छ ।[५] तर जनतातर्फबाट राख्न लगाएका एक अभिलेखमा उनलाई `क्षमापति` (राजा) भनिएको छ (वज्राचार्य, २०३०: ४३१) । विष्णुगुप्तले लेखाई राखेको अभिलेखमा पनि उनलाई स्पष्ट रुपमा राजा नै भनिएको छ (ऐजन: ४५२) ।

यस परिप्रेक्ष्यमा जिष्णुगुप्तको नाममा निकालिएको टकको पनि विचार गर्नुपर्दछ जसमा अघिल्तिर `श्रीजिष्णुगुप्तस्य` अभिलेख भएको र यसमा पछिल्तिर घोडा र वज्रको चित्र अंकित छ (जोशी, २०२३: ७५-७६) तात्कालिक अभिलेखहरुबाट धुवदेव र भीमार्जुनदेवका संयुक्तशासकका रुपमा देखिने जिष्णुगुप्त एक्लैको नाममा निकालिएको यो टकको ठीक ठीक व्याख्या गर्न गाहारो छ । तर संयुक्त शासनमा पनि जिष्णुगुप्त नै अधिसरा भएका हुनाले सहमतिबाट नै एकजनाको मात्रै नाम राखेर यो टक प्रसारित गरिएको हुनुपर्दछ । अन्यथा ई. ६२१ पछि ६३३ को बीचमा कुनै समयमा जिष्णुगुप्तको मात्र हैंकम चलेको मान्नुपर्ने हुन्छ ।



यसै सन्दर्भमा जनतातर्फबाट लेखाई राख्न लगाएका तीन अभिलेखहरुको पनि चर्चा गर्नु पर्दछ जुनमा तात्कालिक शासकको रुपमा जिष्णुगुप्तको मात्र नाम लेखिएको छ । आचार्य भगवत्प्रनर्दनप्राणकौशिक नामका पाशुपत आचार्यले पशुपति आँगनमा लेखाई राखेका दुई अभिलेखमा जिष्णुगुप्तको मात्र नाम लेखिएको छ । एउटामा "जिष्णुगुप्तको उन्नति गर्दै गइरहेको विजयराज्यमा" (जिष्णुगुप्तस्य प्रवर्द्धमानविजयराज्ये) भनिएको छ (वज्राचार्य, २०३०: ४२६) भने आर्कोमा "गुणद्वारा जनताको रक्षा गरेका श्रीजिष्णुगुप्तले शासन गरिरहनु भएको बेलामा (.... पाति गुणानुरक्षितजने श्रीजिष्णुगुप्ते महीम्) (ऐजन: ४२९) । अंशुवर्माका भाइकी बुहारीले लेखाई राखेको जोडे नीलवाराहीको अभिलेखमा "शत्रुलाई सखाप पानलि मनसाय प्रकट भएका ... ठूला ठूला गुणहरु भएका जिष्णुगुप्तले शासन गरिरहनु भएको बेलामा" (रिपून्मूलनादीक्षिते ... भास्वद्गुणगणवति क्ष्मापतौ जिष्णुगुप्ते) (ऐजन: ४३१-३२) भनिएको छ ।

यसरी यी तीन प्रमाणहरुले जिष्णुगुप्तलाई मात्रै प्रमुखता दिएको कुरा महत्वपूर्ण छ तर यिनमा मिति नरहेकोले यिनको वक्तव्यलाई कालक्रममा मिलाएर हेर्न सकिएको छैन । सक्रिय र शक्तिशाली हुनाले जिष्णुगुप्तका अनुयायी धेरै हुनु स्वाभाविक छ र उक्त तीन अभिलेखहरु त्यस्तै पक्षपातीहरुले लेखाई राखेको पनि हुन सक्दछ ।

जिष्णुगुप्तको टकको अर्थ एक जना इतिहासकारले यस्तो गरेका छन् "यहाँ वज्रले शत्रुदमनलाई लक्ष्य गरेको छ । इन्द्रले वज्रद्वारा वृत्रासुर दमन गरेथे । त्यस्तै जिष्णु गुप्तले विरोधी शत्रुलाई बलजफतसँग दमन गरेथे । वज्र भनेको बलको प्रचुर मात्राको द्योतक हो । घोडाले समुद्रगुप्त जस्तै याज्ञिकलाई लक्ष्य गरेको छ । समुद्रगुप्तले अश्वमेध यज्ञ गरेको कुरामा गौरव मानी आफूलाई समुद्रगुप्तका वंशज याज्ञिक हूँ भन्ने यी गुप्तमा अभिमान छ" (राजवंशी, २०३६:४) । अश्वमेघ यज्ञ र समुद्रगुप्तसँग सम्बन्ध जोड्ने धारणा त्यति स्पष्ट छैन तर वज्र र घोडाको यो उचित व्याख्या हो जस्तो हामीलाई लाग्दछ ।

**जिष्णुगुप्तको विद्रोहको कारण**

ई. ५९० मा भौमगुप्तको पतन भएपछि शिवदेव र अंशुवर्माको राजनीतिक सक्रियताको युग थालिन्छ । यो क्रम ई. ६२१ मा उदयदेव शासक रहन्जेलसम्म कायम रहेको देखिन्छ । उक्त ३१ वर्षको अवधिमा आभीर गुप्त वंश राजनीतिक शक्तिबाट वन्चित रहेको देखिन्छ ।

शिवदेव प्रथम र अंशुवर्माको उदयसाथै भौमगुप्तको राजनीतिक अवसान भएको देखिए पनि यो त्यति ठूलो राजनीतिक काण्ड थियो वा थिएन बुझ्न गाहारो छ । भौमगुप्तका नाति जिष्णुगुप्त जीवितै रहेको देख्दा त भौमगुप्तलाई हटाउने काम शान्तिपूर्वक नै भएजस्तो अनुमान गर्नुपर्ने हुन्छ । हत्याकाण्डजस्तो घटना भएको भए जिष्णुगुप्तले ज्यान जोगाउन सक्ने पनि थिएनन् यद्यपि

जिष्णुगुप्तका पिता (भौमगुप्तका छोरा) भने इतिहासका गन्जागोलमा लुप्त हुन पुगेका छन् ।

शिवदेव प्रथम र अंशुवर्माको कार्यकालका कुनै अभिलेख आभीर गुप्तहरुको जातीय क्षेत्र थान्कोटबाट पाइएका छैनन् । अंशुवर्माको समयको एउटा मात्र अभिलेख किसिपिडिबाट पाइएको छ (वज्राचार्य, २०३०: ३६४) । यो तथ्यबाट निश्चित निष्कर्ष निकाल्न गाहारो छ तर जिष्णुगुप्तहरुको पुर्ख्यौली र जातीय थलो थानकोट क्षेत्रमा शिवदेव र अंशुवर्माका अभिलेखको अत्यन्त अभाव हुनु, भौमगुप्तको राजनीतिका उत्तराधिकारी जिष्णुगुप्तले पछि राजनीतिक सफलता पाउनु आदि तथ्य विचारणीय छन् ।

तात्कालिक दुई प्रमाणले अंशुवर्माप्रति जिष्णुगुप्तको कुनै दुर्भावना नरहेको जस्तो देख्दा पछिल्लाको विद्रोहको वास्तव कारण बुझ्न अप्ठेरो परेको छ ।

ध्रुवदेव र जिष्णुगुप्तको पहिलो अभिलेख, पाटन छिन्नमस्ताको अभिलेखमा जुन सन्दर्भ चर्चिएको पाइन्छ त्यसबाट ध्रुवदेव र जिष्णुगुप्तको अंशुवर्माबारे कस्तो धारणा थियो भन्ने विषयमा केही विचार गर्न सकिने आधार पाइन्छ । पहिले अंशुवर्माले पाटन भेकमा एउटा कुलो बनाएकोमा त्यसको मर्मतको बन्दोबस्त नहुनाले बिग्रेको हुनाले सो विषयमा सामन्त चन्द्रवर्माले जाहेर गरेका हुनाले सो कुलोको जीर्णोद्धार गर्न जग्गाको बन्दोबस्त गरिएको कुरा लेखिएको छ (वज्राचार्य, २०३०: ४०१-४०२) । यो सन्दर्भमा अंशुवर्माको नाम उच्चारण गर्दा "भट्टारकमहाराजाधिराजश्र्यंशुवर्मपाद" को रुपमा पूरा उपाधिसाथ "पाद" (पाउ) समेत प्रयोग गरी पूरापूर सम्मान व्यक्त गरिएको छ।

उक्त अभिलेखको पूरा सन्दर्भबाट ध्रुवदेव र जिष्णुगुप्त वा पछिल्लामात्रैको अंशुवर्माप्रति कुनै राजनीतिक विरोधको धारणा थिएन त भन्न सकिन्छ वा सकिँदैन केही भन्न गाहारो छ । हुन त हालसम्मको अध्ययनबाट अशंवर्माले भौमगुप्तको राजनीतिक पतन गराउन ठूलो भूमिका खेलेको मानिन्छ र जसको प्रभावस्वरुप भौमगुप्त र उनका अज्ञातनामा छोरा अर्थात् जिष्णुगुप्तका पिता राजनीतिबाट वन्चित गराइएका थिए । यसरी जिष्णुगुप्तको पनि राजनीतिक पृष्ठभूमि बिग्रिन गएको थियो ।

यो परिप्रेक्ष्यमा अंशुवर्माकी भाइबुहारीको अभिलेखको पनि चर्चा गर्नु आवश्यक छ । बोडेमा पाइएको यो अभिलेख खण्डित छ र मिति पनि अज्ञात छ तर यसमा तात्कालिक शासकको रुपमा जिष्णुगुप्तको मात्र नाम सम्मानसाथ लेखिएको देख्दा अंशुवर्माको भाइको परिवार तात्कालिक राजनीतिक परिस्थितिमा जिष्णुगुप्तका समर्थक रहेको अनुमान गर्न सकिने जस्तो लाग्दछ (वज्राचार्य, २०३०: ४३१) ।[६]

माथि चर्चित दुई सन्दर्भबाट अंशवर्माप्रति जिष्णुगुप्तको वैरभावना थिएन कि जस्तो घुमाउरो अर्थ बुझिन आउने लाग्दछ । यस्तो स्थितिमा गुप्तको विद्रोह



वा उनीले चलाएको राजनीतिक परिवर्तनको खास कारण बुझ्न अप्ठेरो परेको छ ।

जिष्णुगुप्तको राजनीतिबाट सबभन्दा बढी पीडित हुन पुगेका युवराज उदयदेव नै जिष्णुगुप्तका खास प्रतिपक्षी देखिनु स्वाभाविक छ । अंशुवर्मा जस्ता प्रतिभाशाली र अपेक्षाकृत शक्तिशाली शासकले राजा नियुक्त गरेका उदयदेवको विरुद्ध उनका भाइ ध्रुवदेवलाई उचाली जिष्णुगुप्तले विद्रोह गरेको देख्दा लिच्छविराजवंशमा आएको फूटले नयाँ राजनीतिक प्रयोगलाई मार्ग प्रशस्त गरेको अनुमान गर्न सकिन्छ ।

जिष्णुगुप्तको विद्रोह हुनामा अन्य अनेक कारणमध्ये एउटा त लिच्छविराजवंशले जस्तै हामी आभीरगुप्तवंशीको पनि राजकाज गर्ने अधिकार छ भन्ने दावा रहेको बुझ्न सकिन्छ । उनको वंशमा पहिले रविगुप्त र भौमगुप्तले शासनाधिकारको आंशिक उपभोग गरेकाले जिष्णुगुप्तले त्यस्तो दावा गर्न सकेको देखिन्छ ।

**जिष्णुगुप्तको सांस्कृतिक उपलब्धि**

गोपालवंशावलीमा जिष्णुगुप्तसम्बन्धी निम्न विवरण पाइन्छ-

> "राजा श्री जीवगुप्त भए । वर्ष ७४ । तिनले नन्दल (हाँडीगाउँ) को दवलकनिमम्मा तिलपाल विष्णु भट्टारकको सुनको छाना हाले । दुवैको शोभा भयो। थुप्रै खेतबारी घरसहितको सदावर्त राखे ।"७

गोपालवंशावलीले जिष्णुगुप्तलाई जीवगुप्तको रुपमा प्रस्तुत गरी तिनले गरेको धार्मिक कीर्तिको विवरण दिएको छ । ८

गोपालवंशावलीमा भनिएको तिलपाल विष्णुमन्दिर हाँडीगाउँको सत्यनारायणमन्दिर हो भन्ने अनुमान गर्न सकिन्छ । जिष्णुगुप्तका पुर्खा अनुपरम गुप्तले उक्त सत्यनारायणमन्दिरसामु वेदव्यासको लामो स्तुति लेखाएर राखेका थिए । त्यही मन्दिरमा, आफू शक्तिशाली भएपछि जिष्णुगुप्तले भव्य रुपले जीर्णोद्धार र सदावर्तको बन्दोबस्त गरेको हुनुपर्दछ भन्ने हामीलाई लाग्दछ।

उक्त सन्दर्भले एकातिर जिष्णुगुप्तले आफ्ना पुर्खासँग सम्बद्ध विष्णुमन्दिरको राम्रो बन्दोबस्त गरेको कुरातिर संकेत गरेको छ भने अर्कोतिर उनले आफ्नो परिवारका वैष्णव परम्परालाई प्रोत्साहन गरेको तथ्य बुझ्न सकिन्छ । उनका पालाका अभिलेखहरुमा पनि वैष्णवधर्मसम्बन्धी विवरण परेकोले उनले आफ्नो शासनकालमा वैष्णवधर्मको क्षेत्रमा राम्रो योगदान दिएको बुझ्न सकिएको छ ।

काठमाडौं मीननारायण मन्दिरनिरको मिति खण्डित अभिलेखमा जिष्णुगुप्तले मंगलाचरणको रुपमा लक्ष्मीनारायणको स्तुति लेखाएका छन् भने अभिलेखको मध्य भागमा कुनै विष्णुमन्दिरको पूजा आजाको बन्दोबस्त गरेको

कुरा लेखिएको छ (वज्राचार्य, २०३०: ४०८) । केवलपुरको अभिलेखबाट उनले नुप्पुन्न भन्ने ठाउँको नारायणमन्दिर (इचंगुनारायण?) को नैमितिक पूजाको बन्दोवस्त मिलाएको कुरा थाहा पाइन्छ (ऐजनः ४१५) । थानकोटको ई ६३३ को अभिलेखमा पनि जिष्णुगुप्तले मंगलाचरणको रुपमा शेषशायी विष्णुको स्तुति एक श्लोकमा लेखाएका छन् (ऐजनः ४३३) ।[९]

जिष्णुगुप्तले शेषशायी विष्णुको स्तुति गराएको यो उदाहरणसँग उनका छोरा विष्णुगुप्तले शेषशायी विष्णुका दुई मूर्ति (बालाज्यू र बुढानिलकण्ठ) थापेको र आफ्ना दुइटा अभिलेखमा मंगलाचरणमा शेषशायी विष्णुको स्तुति लेखाएको देख्दा [१०] यी बाबु - छोरा शेषशायी विष्णुका विशेष भक्त रहेछन् भन्ने बुझिन्छ ।

जिष्णुगुप्तको वैष्णवधर्ममा विशेष झुकाव रहेको कुरा माथिको विवरणबाट थाहा पाइन्छ भने उनले शैवधर्मावलम्वीप्रति पनि राम्रै व्यवहार गरेको बुझिन्छ । नेपालको पहिलो पाशुपत अभिलेख यिनैको पालाको पाइएको कुरा महत्वपूर्ण छ । पाशुपत आचार्य भगवत्प्रनर्दनप्राणकौशिकले पशुपति प्रांगणमा थापेको पापशुपतहरुको इतिहास बताउने महत्वपूर्ण अभिलेखमा जिष्णुगुप्तको नाम श्रद्धा - भक्तिसाथ उल्लेख गरेका छन् (वज्राचार्य, २०३०: ४२६ - २७, ४२९) । ती आचार्यलाई जिष्णुगुप्तले राजकीय संरक्षण दिएको हुन सक्दछ ।

## जिष्णुगुप्त र अंशुवर्मा

लिच्छविकालको ज्ञात इतिहासमा अंशुवर्मा र जिष्णुगुप्तको राजनीतिक गतिविधि र उपलब्धिमा केही समानता देखिने हुनाले ती दुइ व्यक्तित्वको तुलना गरेर हेर्नुपर्ने हुन्छ ।

इतिहासकारहरुमा जिष्णुगुप्त र अंशुवर्माको राजनीतिक शक्तिको तुलना गर्दा एउटा प्रमुख तत्वमा विशेष ध्यान गएको पाइन्छ त्यो हो तिनीहरुको सक्रियताको कालमा लिच्छवि राजाहरुको वास्तविक स्थान । यस सन्दर्भमा धनवज्र वज्राचार्यको के विचार छ भने रविगुप्त र भौमगुप्तको कार्यकालको तुलनामा अंशुवर्मा र जिष्णुगुप्तहरुको पालामा लिच्छवि राजाहरुको अवस्था बढी गिरेको थियो (वज्राचार्यः २०३०: ५५९) ।

यो ऐतिहासिक मूल्यांकन एक दृष्टिले ठीकै छ तर ती दुई व्यक्तित्वहरुले लिच्छविहरुको वैधानिकतालाई एक किसिमले प्रयोग गरेको भने देखिदैंन । अंशुवर्माको राजनीतिक विकासमा लिच्छविहरुको वैधानिकताको निरन्तर नियन्त्रण कायम रहिरहेको भन्ने तथ्यको चर्चा अंशुवर्माको सन्दर्भमा हामीले गरिसकेका छौं । अंशुवर्मालि लिच्छवि राजकुमार उदयदेवलाई आफ्ना उत्तराधिकारी घोषित गर्नुपरेको तथ्यबाट उनको राजनीतिक शक्तिको सीमानाको अनुमान गर्न सकिन्छ जस्तो लाग्दछ । उतातिर जिष्णुगुप्तले गद्दीमा लिच्छवि राजकुमारलाई राखेर उनको वैधानिकता मान्नुपरेको देखिएको छ भने



उत्तराधिकारीका रुपमा आफ्नै छोरा विष्णुगुप्तलाई राखेर राजनीतिको आर्को उदाहरण प्रस्तुत गरेको पाइन्छ । यो तथ्यको आधारमा विचार गर्दा अंशुवर्माभिन्दा जिष्णुगुप्तको शक्ति बढी रहेको बुझ्न सकिन्छ । यो विवरणलाई मान्यता दिन सकिन्छ भने "जिष्णुगुप्तहरु अंशुवर्माको स्थितिमा पुग्न सकेका थिएनन्" भन्ने धनवज्र वज्राचार्यको मूल्यांकन (ऐजनः २९६) अमिल्दो देखिन्छ । स्वयं उहाँलि जिष्णुगुप्तले अन्तिम अवस्थामा "देव" पद लिएको तथ्यलाई ज्यादै महत्व दिनुभएको छ र सो पद अंशुवर्मालि लिन नसकेको तथ्यतिर पनि इंगित गर्नुभएको छ (ऐजनः ४३६) । यो तथ्यको आधारमा पनि राजनीतिक शक्तिमा जिष्णुगुप्त अंशुवर्माभिन्दा अगाडि बढेका थिए भन्ने देखिन्छ, यद्यपि बाहिरबाट हेर्दा अंशुवर्मा महाराजाधिराजको तहमा उक्लिसकेका थिए । जिष्णुगुप्तले भने कुनै पनि राजकीय पदवी नलिएको देखिए पनि माथि गरिएको चर्चाको आधारमा उनको तह अंशुवर्माभिन्दा माथि पुगेको स्पष्ट हुन्छ ।

## विष्णुगुप्त

सँवत् ५७ कार्तिकशुक्ल द्वित्तीयाको थानकोटको अभिलेख जिष्णुगुप्तको अन्तिम अभिलेख देखिन्छ । यसपछि संवत् ५७ फाल्गुन शुक्ल सप्तमीको मालीगाउँको अभिलेख विष्णुगुप्तको मानिएकोले (वज्राचार्य, २०३० ४३८- ३९) सो बर्ष कार्तिक र फागुनको बीचका पाँच महिनाभित्र जिष्णुगुप्तको मृत्यु भई उनका छोरा विष्णुगुप्त तात्कालिक शासन व्यवस्थामा अधिसरा संयुक्तशासक बन्न पुगेका थिए भन्ने बुझ्न सकिन्छ ।

यो मालीगाउँ अभिलेखले इतिहासकारहरुलाई एउटा समस्या खडा गरिदिएको पनि छ ।

मालीगाउँको संवत् ५७ (ई ६३३) को यो अभिलेख शुरुको आधाभाग जति खिइसकेको हुनाले सो अभिलेखले बताउने समग्र कुरा बुझ्न असम्भव भएको छ । तर सो अभिलेखको पहिलो पङ्क्तिमा "स्वस्ति कैलासकूटभवनात्" भन्ने हरपसम्म पढ्न सकिएकोले यो अभिलेख विशेष महत्वपूर्ण हुन पुगेको छ । यस कालका अन्य अभिलेखहरु स्वस्ति मानगृहात्बाट शुरु भएको पाइने पृष्ठभूमिमा शुरुमै कैलासकूटभवनको उल्लेख पाइनाले विष्णुगुप्तको राजनीतिक महत्वाकाङ्क्षाको परिकल्पना इतिहासकारहरुले गरेका छन् । धनवज्र वज्राचार्यले गद्दीनशीन राजा भीमार्जुनदेवलाई मिची उनको नामसम्मको उल्लेख नगरी आफै विष्णुगुप्तले राजाको हैसियतले मालीगाउँको यो अभिलेख लेखाई राखेको मान्नुभएको छ (ऐजनः ४४०) । [११]

यसरी गरिएको व्याख्याले आफ्नो शासनको आरम्भमैं विष्णुगुप्तले आफ्ना सहयोगी भीमार्जुनदेवलाई अप्रसन्न पारेर आफ्नै गुटलाई कमजोर पार्ने खतरा उठाएको तथ्य पनि मान्नुपर्ने हुन्छ । यस मितिपछिका अरु अभिलेखहरुमा भीमार्जुनदेव आफ्नो थान्कामा रहेका देखिएकाले उक्त व्याख्या अलि असम्बद्ध पनि लाग्न सक्दछ ।[१२]

विष्णुगुप्त र भीमार्जुनदेवको संयुक्तशासनको अवधिका दुइटा मात्रै अभिलेख पाइएका छन् जुनमा संवत् ६४ र ६५ (ई ६४०- ४१) का मिति लेखिएका छन् । यसरी हेर्दा विष्णुगुप्तको शासनकाल ई ६३३ देखि ई ६४१ सम्म आठ वर्ष जति रहेको देखिन्छ । तर यी दुइ अभिलेख लेखाइनुअघि विष्णुगुप्तले आफ्ना दिवंगत पिता जिष्णुगुप्तको नाममा चाँगुनारायण स्थानमा रहेका दुइ धाराको जीर्णोद्धार गरेको स्मारक अभिलेख चाँगुनारायणस्थानमा राख्न लगाएका थिए । [१३] सो अभिलेखमा "विष्णुगुप्तले पृथ्वीतलको चन्द्रमा जस्ता आफ्ना बुबा राजा श्रीजिष्णुगुप्तको कल्याण होओस् भनेर .... दुइटा धारा बनाउन लाउनुभयो " (राज्ञे श्रीजिष्णुगुप्तक्षितितलशशिने कल्पयामास पित्रे) भनी लेखिएको छ (वज्राचार्य, २०३०: ४५२) । यो अभिलेखमा मिति पनि छैन र भीमार्जुनदेवको नाम पनि लेखिएको छैन । व्यक्तिगत अभिलेख हुनाले यसमा लिच्छवि राजाको उल्लेख नहुनु स्वाभाविक छ ।

अन्य दुइ अभिलेखमा बुढानीलकण्ठ नारायणको मूर्ति स्थापनासम्बन्धी कुरा परेको छ । संवत् ६४ (ई ६४०) को यंगालहिटी काठमाण्डूको अभिलेखमा "भगवान् विष्णुको जलशायी मूर्ति बनाउन लायकको ठूलो ढुंगा तानेर ल्याउने कामले खुशी भएर " विष्णुगुप्तले दक्षिणकोलीग्रामका बासिन्दाहरुलाई कल्ली, बाजू र पाउजेबहरुलाई छोडेर अरु गहना लगाउन पाउने निगाहा गरिएका कुरा लेखिएको छ (ऐजन: ४४२-४३) । [१४]

संवत् ६५ (ई ६४१) को भृंगारेश्वरको अभिलेखमा पनि " .... आश्चर्यको .... मूर्ति बनाउन लायकको ढुंगा तान्ने काममा लागेका भृंगारग्रामका पाञ्चालिकहरु " लाई प्रशासनसम्बन्धी केही सुविधा दिइएको कुरा लेखिएको छ (ऐजन: ४४८- ४९) । [१५] उक्त दुवै अभिलेखका आरम्भमा जलशायी विष्णुको स्तुति पनि गरिएको हुनाले उक्त दुई अभिलेखका सन्दर्भबाट बुढानीलकण्ठको प्रसिद्ध मूर्तिको निर्माण र स्थापनाको कुरा थाहा पाइएको मानिएको छ (ऐजन: ४४४-४६) । यो शेषशायी विष्णुमूर्तिको ध्यानबारे अलि गहिरिएर विचार गर्ने हो भने यो मूर्तिको थापना गरेर विष्णुगुप्तले राजनीतिक उद्देश्य पूरा गर्ने लक्ष्य राखेको अनुमान गर्न सकिन्छ ।

देवप्रतिमालक्ष्णशास्त्रमा शेषशायी मूर्ति बनाउँदा देवताका वरिपरि अरु देवी देवता र ऋषिहरु पनि बनाउनु पर्ने विधान बताइएको पाइन्छ र त्यस्ता देवीदेवता नबनाएमा सो "आभिचारिकशयनमूर्ति" हुन्छ (राव १-२ १९८५:२५) । यस दृष्टिले तुलना गरी हेर्दा विष्णुगुप्तले बुढानीलकण्ठको मूर्ति शत्रुनाश गर्न भनेर थापेको हो जस्तो लाग्दछ । यस मूर्तिको स्थापनाको सम्बन्ध नरेन्द्रदेवको विद्रोहका प्रयासहरुसँग रहेको हुन सक्ने पनि देखिन्छ ।[१६]

विष्णुगुप्तको विरुद्ध नरेन्द्रदेवले गरेको विद्रोहको इतिहास बताउने स्पष्ट साधनको अभाव छ । तर विष्णुगुप्त र नरेन्द्रदेवको टक्करका केही संकेत तात्कालिक अभिलेखहरु र वंशावलीमा पाइन्छ । यस विषयको चर्चा यहां गरिन्छ ।



नरेन्द्रदेवले नेपालको गद्दी हत्याउने काममा सफलता पाएपछि लगत्तै प्रसारित गरेका संवत् ६७ (ई ६४३) का दुइ अभिलेख पाटन दरबार र काठमाण्डू यंगालहिटीमा पाइएका छन् । यी दुवै अभिलेखमा राजा नरेन्द्रदेवले जनताले आफूलाई उपकार गरेको कुरा स्वीकार गरेका छन् । विष्णुगुप्तले पनि यंगालहिटी र पाटन भृंगारेश्वरमा संवत् ६४ र ६५ मा शिलालेख लेखाएर राखी बुढानीलकण्ठको मूर्ति बनाउन लायक ढुंगा तान्ने काम गरेको पुरस्कारको रुपमा केही सुविधा पनि दिएका छन् । भृंगारेश्वरको अभिलेखमा त उनले आफूलाई प्रजारंजक र प्रजा आफ्नो काबूमा रहेको दाबा गर्दै भनेका छन् - "प्रशस्त वस्तु पु-याइएका हुनाले उत्सव भएको हुँदा (प्रजाले) हर्षसाथ दुई पाउ ढोगिएका " ।

चर्चित कुराबाट ई ६४० तिर नरेन्द्रदेवको दबाब बढ्दै जान थालेको र त्यस समयका प्रमुख बस्ती (वा शहर) दक्षिणकोलीग्रामद्रंग र यूपग्रामद्रंग भेकका जनतालाई आफ्नो पक्षमा आवाज उठाउन लगाउन उनी समर्थ भैसकेका थिए भन्ने अनुमान गर्न सकिन्छ ।

नरेन्द्रदेवले ई ६४० तिर नै विद्रोहको बेग बढाएको चर्चा माथि गरिएको छ तर यस्तो बेग सफल भइरहेको थियो भन्ने बारेमा पनि शंका गर्न सकिने देखिन्छ । शुरुको क्रममा नरेन्द्रदेवलाई असफलता पनि भोग्नुप-यो कि भन्न सकिने एउटा घुमाउरो सन्दर्भ वंशावलीमा सुरक्षित भएको पाइन्छ । गोपालवंशावलीको नेवारी भागमा यस्तो लेखिएको पाइन्छ-

> "श्रीविष्णुगुप्त राजाले पहिलोपल्ट परचक्र (शत्रुहरुको राज्य) जितेको (वेला) मा स्थापना गरिएको श्रीविष्णुतीर्थनारायण ।" (वज्राचार्य, २०२८ ३३) ।[१७]

गोपालवंशावलीको यो टिप्पणीबाट विष्णुगुप्तले कुनै बेलामा शत्रुहरुको राज्यमाथि विजय प्राप्त गरेको तथ्य बुझ्न सकिन्छ । यो सूत्रलाई विस्तारित गरेर हेर्ने हो भने कुनै समयमा विष्णुगुप्तले शत्रुहरुको राज्यमाथि विजय गरेको र सो खुशीयालीमा कुनै ठाउँमा विष्णुमन्दिर बनाउका थिए भन्ने तथ्य बुझिन्छ। विष्णुगुप्तका मुख्य शत्रु नरेन्द्रदेव नै हुन सक्ने हुनाले सो घटनालाई सोही परिप्रेक्ष्यमा देख्न सकिन्छ ।

उपर्युक्त सन्दर्भले नरेन्द्रदेवको राज्यको अस्तित्वबारे संकेत पाइने हुनाले ऐतिहासिक मत्वको सूत्र पत्तालागेको छ । नरेन्द्रदेवले तिब्बतबाट त्यहाँका राजाको सहयोग लिई विष्णुगुप्तको राज्यमा आक्रमण गरेको नभई विष्णुगुप्तको राज्यभित्र कुनै क्षेत्रमा अधिकार जमाई त्यसलाई विस्तार गर्ने क्रममा विष्णुगुप्तले विजय प्राप्त गरेको तथ्य यो सूत्रले अर्थ्याएको बुझ्न सकिन्छ । तिब्बत भूमिलाई आधार बनाएर नरेन्द्रदेवले विष्णुगुप्तको राज्यमा आक्रमण गरेको भए उक्त सूत्रले तिब्बती क्षेत्रमा विष्णुगुप्तको विजय मान्नुपर्ने हुन्छ । काठमाडौं र पाटन भेकका जनतलाई आफ्नो पक्षमा लहस्याउने काम पनि तिब्बत भूमिमा

बसेर नरेन्द्रदेवले गर्नु सम्भव नदेखिएकोले यो तथ्यबारे विचार गर्नु आवश्यक छ जस्तो लाग्दछ ।

उस बेलाको चलनअनुसार विष्णुगुप्तलाई उनका दुइ अभिलेखहरुमा प्रभावशाली विरुदावली लेखिएको पाइन्छ । यंगालहिटीको अभिलेखमा उनलाई "राजामा हुनुपर्ने असंख्य असल गुणहरुले जीउ सुहाएका, उत्तम सफा ज्ञानरुपी किरणले सारा शत्रुरुपी अन्धकार हटाएका " (अपरिमितामिमतनृपतिगुणकलापाविष्कृतमूर्तिरनवदातज्ञानमयूखापसारित-सकलरिपुतिभिरसञ्चयो) भनिएको छ (वज्राचार्य, २०३०: ४४२-४३) । यसैगरी भृंगारेश्वरको अभिलेखमा पनि उनलाई "प्रशस्त वस्तु पु-याइएका हुनाले उत्सव भएको हुँदा (प्रजाले) हर्षसाथ दुइ पाउ ढोगिएका (अतिमात्रवस्तुपरिप्रापणोत्सवोपगतहर्षाभिनमस्या मानचरणयुगल:) भनिएको छ (ऐजन:४४८-४९) ।

विष्णुगुप्तको राजनीतिक गतिविधि ई ६२४ देखि नै शुरु भएको देखिन्छ। ध्रुवदेव र जिष्णुगुप्तको पहिलो (छिन्नमस्ता पाटनको ) अभिलेखमै "युवराजश्री" उपाधिसाथ देखिएका छन् । ई ६३३ सम्म ९ वर्ष जति युवराज पदमा रही उनले आफ्ना पिताको राजनीतिक गतिविधिमा सहयोग दिएको हुनुपर्दछ ।

राजा नरेन्द्रदेवको पहिलो अभिलेखको मिति ई ६४३ देखिनु र चिनियाँ स्रोतबाट ज्ञात भएअनुसार चीनका राजदूत लि -यी पियाओले नेपालको बाटो भएर भारत जाँदा ई ६४३ मा नेपालको गद्दीमा नरेन्द्रदेवलाई देखेको कुराबाट उक्त मितिसम्म नरेन्द्रदेव गद्दीमा बसेको पनि केही समय बितिसकेको कुरा बुझ्न सकिन्छ ।

तर हाल डा कमलप्रकाश मल्लले चीनको तुन ह्वाग वृत्तान्तमा यस समयको घटनाबारे उल्लेख भएको तथ्यतिर औंल्याउनु भएको छ । सो चिनियाँ स्रोतमा ई ६४१ मा "नेपालका विष्णुगुप्तलाई नरेन्द्रदेवले युद्धमा मारेपछि नरेन्द्रदेव राजा भए" भन्ने उल्लेख भएको छ ( मल्ल, १९८५: ६१) । [१८]

विष्णुगुप्तको अन्तिम ज्ञात मिति ई ६४१ को फागुन महिना देखिएको र नरेन्द्रदेवको पहिलो ज्ञान मिति संवत् ६७ (ई ६४३) को पुस महीना देखिएकोले ती दुइ मितिबीचका कुनै अभिलेख नपाइनाले उक्त साढे दुइ वर्ष जतिको युग हाल अन्धकारमय देखिएको छ । यस कारणले विष्णुगुप्तको शासनको अन्त्य र नरेन्द्रदेवको शासनको आरम्भ कहिले भयो भन्ने विषयमा इदमित्थम् गर्न अप्ठेरो परेको छ ।

चीनको तुन ह्वाङ्ग वृत्तान्तमा ई ६४१ मा विष्णुगुप्तलाई नरेन्द्रदेवले युद्धमा पराजित गरी मारेको चर्चा पाइन्छ यस कारणले विष्णुगुप्तको पतन ई ६४१ को भृंगारेश्वरको अभिलेख लेखाई राखेपछि नै भएको हो भन्ने कति इतिहासकारहरुको मत छ । यसबारे तल नरेन्द्रदेवको वर्णन सन्दर्भमा विशेष विचार गरिएको छ ।



तथाकथित मानदेव संवत्लाई शकसंवत् ४७४ देखि शुरु भएको संवत् मान्ने शंकरमान राजवंशीले विष्णुगुप्तको चाँगुनारायणको मिति खण्डित अभिलेखलाई संवत् ६६ वा ई ६१९ को मानी त्यसै वर्ष विष्णुगुप्तलाई नरेन्द्रदेवले हराउंदा विष्णुगुप्त भागेका र पछि ई ६४१ मा नरेन्द्रदेवले विष्णुगुप्तलाई फेलापारी पक्रेर मारिदिएका हुन् भन्ने अनुमान गर्नुभएको छ (राजवंशी, २०४६: ८०-८१) ।

### विष्णुगुप्तको सांस्कृतिक उपलब्धि

विष्णुगुप्तको शासनकालको उपलब्धि सांस्कृतिक क्षेत्रमा रहेको छ । उनका पालाका अभिलेखहरु र वंशावलीहरुका विवरणबाट विष्णुगुप्तको शासनकालमा वैष्णव गतिविधि विशेष बढेको कुरा थाहा पाइन्छ ।

विष्णुगुप्तले प्रसारित गरेका दुइटै अभिलेखबाट बुढानीलकण्ठ नामले हाल प्रसिद्ध विष्णुमूर्ति विष्णुगुप्तकै कृति हो भन्ने थाहा पाइएको छ । उनले चाँगुनारायणस्थानमा राखेका आर्को अभिलेखमा उनका पिता जिष्णुगुप्तको नाममा उक्त मन्दिर परिसरमा रहेका दुइटा धाराको जीर्णोद्धार गरिएको कुरा लेखिएको छ । सो अभिलेखमा शुरुमा एक सुललित श्लोकमा वैष्णवहरुको स्वर्ग "विष्णुपद" को स्तुति गरिएको छ (वज्राचार्य, २०३०: ४५२) ।

वंशावलीहरुमा त विष्णुगुप्तले गरेका धार्मिक गतिविधिको निकै लामो सूचीनै दिइएको पाइन्छ । गोपालवंशावलमा दुइ ठाउँमा विष्णुगुप्तको धार्मिक गतिविधिबारे विवरण दिइएको पाइन्छ । त्यस वर्णनअनुसार विष्णुगुप्तले बुढानीलकण्ठ मूर्तिको स्थापनासाथै पशुपतिमा बाग्मतीपारी हाल राममन्दिर भनिने विष्णुको भव्य मूर्ति पनि थापेका थिए (वजाचार्य, मल्ल, १९८५: ३०, ३८)। सो वंशावलीकै संकेतको आधारमा बालाज्युको जलशायी मूर्ति पनि विष्णुगुप्तले नै थापेका हुन् भन्ने देखिन्छ । जसलाई "जलशायी हरिहरमूर्ति" मानिएको छ (वज्राचार्य, २०३३: १२६) । उक्त स्रोतकै विवरणको आधारमा नारायणहिटीको प्रसिद्ध नारायण मन्दिर पनि विष्णुगुप्तले नै थापेको बुझ्न सकिन्छ । गोपालवंशावलीको टिपोटअनुसार विष्णुगुप्त एकादशीको व्रत बसी दिनदिनै (अथवा हरेक एकादशीको दिन) तांबो वा प्रस्तर विष्णुमूर्तिको स्थापना पनि गर्दथे । गोपालवंशावलीको नेवारी भागमा विष्णुगुप्तले विभिन्न उद्देश्यले अरु चार नारायणको स्थापना गरेको बताइएको छ (तर यो अंशको ठीक अर्थ बुझ्न सकिएको छैन) (वज्राचार्य, मल्ल, १९८५: ३८) । भाषावंशावलमा पनि यिनै कुरा व्याख्यासाथ वर्णन गरिएको पाइन्छ (पौडेल, २०२०:८१) ।

करीव ९ वर्षको सीमित शासनावधिमा पनि यति धार्मिक गतिविधि गरेका हुनाले नेपालको सांस्कृतिक इतिहासमा विष्णुगुप्तको योगदान विशिष्ट खालको रहेको बुझ्न सकिन्छ । तुलनात्मक दृष्टिले हेर्ने हो भने यतिविधि धार्मिक गतिविधि गर्न अन्य राजा प्राचीन र मध्यकालमा भएका देखिएका छैनन्।

यो रुपमा नेपालको इतिहासमा विष्णुगुप्तको विशिष्ट स्थान रहेको मान्न सकिन्छ ।

विष्णुगुप्तका तीन अभिलेखमा उनका युवराजका रुपमा श्रीधरगुप्तको नाम लेखिएको पाइन्छ । यिनी विष्णुगुप्तका छोरा थिए भन्ने बुझिन्छ । गोपालवंशावलीमा विष्णुगुप्तले पशुपतिमा बाग्मतीपारी थापेको "ठूलो ढुंगे विष्णु भगवान्" उनले आफ्नै शरीर प्रमाणको "र" अगलबगलमा दुइ छोरा राखिएको " भनिएको देख्दा (वज्राचार्य, मल्ल, १९८५: ३०) श्रीधरगुप्त र अर्का अज्ञातनामा छोरा विष्णुगुप्तका रहेछन् भन्ने अनुमान गर्न सकिन्छ ।

नरेन्द्रदेवको विद्रोहको क्रममा विष्णुगुप्त मारिएको सन्दर्भ पाइन्छ तर उनका दुइ छोराको के हाल भयो जान्ने साधन छैन ।

विष्णुगुप्तको वंश

परमाभिमानी गुप्त (परमगुप्त?)

।

---

मानगुप्त गोमी  अनुपरमगुप्त + आभीरी गोमिनी

।

भौमगुप्त

।

?

जिष्णुगुप्त

।

विष्णुगुप्त

।

श्रीधरगुप्त ?

**आभीरगुप्त राजनीतिको क्रम - ३**

हामीले माथिका पानामा आभीरगुप्त राजनीतिको पहिलो क्रममा रविगुप्त र दोस्रो क्रममा भौमगुप्तको राजनीतिबारे विचार गरिसकेका छौं । अब तेस्रो क्रममा जिष्णुगुप्त र विष्णुगुप्तको पालो आउँछ ।



राजनीतिक स्तरमा रविगुप्तभन्दा निकै माथि भौमगुप्त पुगेको चर्चा माथि गरि सकिएको छ र जिष्णुगुप्त र विष्णुगुप्तसम्बन्धी माथि गरिएको चर्चामा भौमगुप्त भन्दा माथि यिनीहरु पुगेका देखिएका छन् । यसरी आभीरगुप्त राजनीतिका तीनै क्रममा आफ् - आफ्ना विशेषता देखिएका छन् ।

रविगुप्त र भौमगुप्तको राजनीतिक जीवनका आरम्भ प्रशासकीय पदाधिकारीको रुपमा भएको कुरा उनका "सर्वदण्डनायकमहाप्रतिहार" पदबाट स्पष्ट हुन्छ तर जिष्णुगुप्तको नामसाथ त्यस्तो कुनै पदवी जोडिएको नदेख्दा उनको राजनीतिक जीवनको आरम्भ स्वतन्त्र स्तरबाट भएको अनुमान गर्न सकिने देखिन्छ ।

ई. ५९४ देखि ई. ६२० सम्म अंशुवर्माको प्रभावशाली कार्यकालमा पनि जिष्णुगुपतले आफ्नो ज्यान जोगाएर बस्न पाउनु र ई ६२१- ६२४ को बीचमा शासन हत्याउन सफलता पाएको देख्दा आभीरगुप्त राजनीतिको यो तेस्रो क्रमको आरम्भ पनि विशेष परिस्थितिमा भएको बुझ्न सकिन्छ ।

आभीरगुप्त राजनीतिको यो तेस्रो क्रमका विशेषता निम्न चार विषयमा रहेको देखिन्छ-

(क) राजनीतिक समर्थन प्राप्तिमा विस्तार
(ख) वैधानिकतामा वृद्धि
(ग) वंशको महिमामा वृद्धि एवं पूर्वजका कीर्तिको व्यवस्थाको लहर
(घ) सांस्कृतिक गतिविधिमा विशेष संलग्नता ।

यी विषयहरुको व्याख्या तल गरिन्छ ।

**(क) राजनीतिक समर्थन प्राप्तिमा विस्तार:**

आभीर-गुप्त राजनीतिका अघिल्ला दुइ क्रमहरुका विवरण त्यति स्पष्ट नभए पनि सामाजिक राजनीतिक क्षेत्रका उच्च वर्गहरुको त्यति सक्रिय समर्थनका प्रमाण पाइएका छैनन् । तर तेस्रो क्रममा भने त्यो स्थिति नरही अनेक समर्थक र अनुकूल रहेका उच्च वर्गसम्बन्धी सन्दर्भ उपलब्ध हुनु यस कालको विशेषता देखिएको छ ।

१. यो कालावधिको पहिलो प्रमाण ई ६२४ को पाटन छिन्नमस्ता मन्दिरनिरको अभिलेखमा ध्रुवदेव र जिष्णुगुप्तले अंशुवर्माको सम्मानसाथ नाम उल्लेख गरेका छन् (वज्राचार्य, २०३०: ४०१) । अंशुवर्माले बनाएको नहर बिग्रिन लागेकोले सामन्त चन्द्रवर्माले राजाहरुकहाँ उजुरी गरेकाले सो नहरको जीर्णोद्धारको लागि केही जग्गाको बन्दोवस्त गरिएको कुरा यो अभिलेखमा लेखिएको छ ।

अंशुवर्माका भाइकी बुहारी (श्रीकलहाभिमानिनृपतिभ्रातृस्नुषा) को भक्तपुर बोडे नीलवाराहीस्थानको अभिलेखमा शासकका रुपमा जिष्णुगुप्तको मात्र नाम लेखिएको हुनाले अंशुवर्माका नातादार वर्ग जिष्णुगुप्तका समर्थक हुन पुगेका देखिएका छन् ।

उपर्युक्त अभिलेखको सन्दर्भबाट पाटन भेकका सामन्त चन्द्रवर्मा पनि जिष्णुगुप्तहरुको अनुकूल भएका देख्दा सामन्त क्षेत्रहरुले पनि उक्त राजनीतिक क्रमको समर्थन गरेको बुझ्न सकिन्छ । सामन्त चन्द्रवर्मा अंशुवर्माकै समयदेखिका क्षेत्रीय शासक रहेका देख्दा र उनी पनि जिष्णुगुप्तहरुका समर्थक देखिने यो सन्दर्भ महत्वपूर्ण सिद्ध हुन्छ ।

२. आदेश्वरको अभिलेखमा राजपुत्र नन्दवर्माले आफ्ना आमाबाबु राजपुत्र जिष्णुवर्मा र वत्सदेवी तथा भाइ भीमवर्माहरुको पुण्यको लागि भगवान् नाथेश्वरको मन्दिरमा केही जग्गा गुठी राखेकोमा सो व्यवस्थालाई जिष्णुगुप्तहरुले कुनै किसिमको वैधानिक मान्यता दिइएको कुरा लेखिएको छ (ऐजन: ४११- १२) । यो सन्दर्भले समाजका उच्च वर्ग राजपुत्र (राजपूत) हरुबाट जिष्णुगुप्तले समर्थन पाएको झझल्को पाइन्छ ।

३. काठमाडौं मीननारायण स्थाननिरको ई ६२५ तिरको अभिलेखमा दक्षिणकोलीग्राम इलाकाका महासामन्तका रुपमा "श्रीजीवदेव" को जुन किसिमले उल्लेख भएको पाइन्छ त्यसबाट उनले "उदयदेवलाई धपाई ध्रुवदेवलाई गद्दीमा राख्ने काण्डमा .... जिष्णुगुप्तको साथ दिएको " अन्दाजी गरिएको छ (वज्राचार्य, २०३०: ४०९) । अभिलेखमा यी जीवदेवको तारीफमा लेखिएका अभिलेखका हरप खिइएका छन् तर बाँकी भागबाट "नीतिका कुरा थाहा पाइएका हुनाले भविष्य सपारेका, बजोड रुप भएका ...... नाउँ चलेका, खूब सम्मान पाएको, यसरी प्रसिद्ध भएर पनि जसले (आफ्नो ) प्यारो र हित हुने कुरालाई (वास्ता गरेनन्) ..... पृथ्वीमा ठूलठूला शत्रुहरुलाई आफैंले सिध्याए । यस किसिमका, वर्तमान र भविष्य ... सपार्नमा लागेका, जनताप्रति अनुग्रह गर्न मन लगाएका, महासामान्त श्री जीवदेव " (वज्राचार्य, २०३०: ४०८-९) । देवान्त नाम लेखिएको र श्री पनि जोडिएकोले यी जीवदेव लिच्छविवंशी देखिन्छन् ।

उक्त व्याख्या मान्ने हो भने माथि चर्चित शक्ति संघर्षमा लिच्छवि राजवंशका जीवदेव जस्ताले ध्रुवदेव वा जिष्णुगुप्तका विद्रोहको योजनामा सक्रिय रुपले सहयोग दिएको बुझ्न सकिन्छ ।

४. पाशुपत आपचार्य प्रणर्दनप्राणले आफ्ना दुइ अभिलेखमा तात्कालिक शासकका रुपमा जिष्णुगुप्तको नाम सम्मानसाथ लेखाएको देख्दा (ऐजन: ४२६, ४२९) ती आचार्यले नेतृत्व गरेको पाशुपत संगठनहरु पनि जिष्णुगुप्तका अनुकूल रहेका देखिन्छन् ।

माथि चर्चिएको विवरणबाट आभीर- गुप्तको राजनीतिको तेस्रो क्रमलाई अनेक महत्वपूर्ण पक्षहरुबाट समर्थन मिलेको हुन्छ ।



**(ख) वैधानिकतामा वृद्धि**

आभीरगुप्त राजनीतिको पहिलो क्रमको तुलनामा दोस्रो वैधानिकतामा केही वृद्धि भएको र तेस्रो क्रममा त स्पष्ट रुपमा जिष्णुगुप्त र विष्णुगुप्त सक्रिय संयुक्तशासक हुन पुगी अर्ध वैधानिकताको तहमा पुगेको कुराको चर्चा गरिसकिएको छ ।

**(ग) वंशको महिमामा वृद्धि एवं पूर्वजनका कीर्तिको व्यवस्थाको लहर**

आभीरगुप्त राजनीतिका अघिल्ला दुइ क्रममा सो वंशको माहात्म्यसम्बन्धी कुनै सन्दर्भ नपाइने तर तेस्रो क्रममा भने वंशको माहात्म्य गाउँन थालिएको देखिन्छ । विष्णुगुप्तले आफ्नो वंशलाई चन्द्रवंशी भनेर गर्व गरेको कुराको चर्चा माथि गरिसकिएको छ । यस तथ्यको सम्बन्धमा वैधानिकतामा वृद्धि हुने घटनासँग रहेको कुरा पनि स्पष्ट हुन्छ । यी दुवैको तथ्यको पृष्ठभूमिमा जिष्णुगुप्तले आफ्ना पूर्खाहरु अनुपरमगुप्त, मानगुप्त र भौमगुप्तका कीर्तिहरुको पुनर्व्यवस्था गरेर आफ्नो वंशको महिमाको प्रख्यापन पनि गराएको देखिन्छ ।

**(घ) सांस्कृतिक गतिविधिमा विशेष संलग्नता:**

आफ्नो पक्षका निमित्त समर्थन प्राप्ति, वैधानिकतामा वृद्धि, वंशको गौरववृद्धि जस्ता तथ्यको कारणले जिष्णुगुप्त र विष्णुगुप्तको शासनकालमा सांस्कृतिक गतिविधिमा विशेष उपलब्धि भएको देखिन्छ । त्यस क्रममा वैष्णव र पाशुपतहरुको गतिविधि बढेको कुराको विवरण माथि दिइसकिएको छ ।

यसरी आभीर-गुप्त राजनीतिको तेस्रो क्रम ज्यादा शक्तिशाली, प्रभावशाली एवं विधानसम्मत देखिन्छ । यस क्रममा धार्मिक- सांस्कृतिक गतिविधि पनि निकै राम्ररी चलिरहेको देख्दा शासन व्यवस्था पनि अपेक्षाकृत स्थिर रहेको देखिन्छ । यो राजनीतिक व्यवस्था निकै सुदृढ रहेको कुरा यस ऐतिहासिक तथ्यबाट स्पष्ट हुन्छ कि त्यसलाई विस्थापित गर्न तिब्बती शासकको सहयोग नै आवश्यक हुन गयो । यस दृष्टिबाट हेर्दा आभीर-गुप्त राजनीतिको यो तेस्रो क्रम लिच्छविकालीन इतिहासमा निकै महत्वपूर्ण देखिन्छ ।

पाद टिप्पणी

१. The father of Naling ti po was deposed (put to death- New Tang Annals) by his younger brother (rebellious usurper- New Tang Annals); Naling ti po had to escape from his uncle. Ti Jan (Tibet) gave him refuge and re-established him on his throne, he become in consequence its vassal"

२. अभिलेख कुँद्नेको भूलले "महाराज" पद छुट्न गएको हो कि भन्ने अनुमान पनि गर्न सकिन्छ कि?

३. उदयदेवको एक मात्र ज्ञात मिति ई ६२१ र धुवदेव र जिष्णुगुप्तका पहिलो ज्ञात मिति ई ६२४ को बीचको तीन वर्ष जतिको व्यवधानकालमै यी तीन अभिलेखहरु लेखाइएका हुन् कि भन्न पनि सकिएला जस्तो लाग्दछ । यो कुरा मानेमा उदयदेवको विरुद्धमा विद्रोह गर्ने काम शुरुमा जिष्णुगुप्तले मात्र शुरु गरेको र पछि वैधानिकताको लागि मात्र धुवदेव र भीमार्जुनदेवलाई खडा गरेको कुरा मान्नुपर्ने हुन्छ । यी तीन अभिलेखहरुमध्ये एउटामा जिष्णुगुप्तलाई "श्री" उपाधि नदिइएकोले (वज्राचार्य, २०३०: ४२४) उक्त अनुमान सत्य पनि साबित हुन सक्दछ ।

४. जिष्णुगुप्तले यो देव पद लिएको भए उनका छोरा विष्णुगुप्तले पनि सो पद लिएको हुनुपर्ने तर त्यस्तो नदेखिएकोले अभिलेख कुँद्नेको भ्रमवश देव पद पर्न गएको हो कि?

५. अभिलेखको अन्तिम भागतिर लेखिने गरिएको "भविष्यद्भिरपि भूपतिभिः पूर्वराजकृतप्रसादानुवर्तिभिरेव भवितव्यमिति" (पछि हुने राजाहरुले पनि अघिका राजाहरुले गरेको निगाहा थाम्नुपर्दछ ) भन्ने थेगोबाट (वज्राचार्य, २०३०: ४०२) पनि यो अर्थ बुझिन्छ ।

६. यो तथ्यको आधारमा भौमगुप्तलाई हटाउने काममा अंशुवर्माको विशेष संलग्नता नरहेको अनुमान गर्न सकिन्छ कि?

७. मूल संस्कृत भागमा यस्तो पाठ छ:
राजा श्री जीवगुप्त वर्ष ७४ तेनचनन्दलद्वलकानिमन्तिलपालविष्णु-भट्टारकस्य सुवर्ण्णसङ्खलीश्छादनं कृत । द्वयो विसोभितम् सत्र दत्त वहुतरक्षेत्र वाटिका गृहसहितम् (वज्राचार्य, मल्ल, १९८५: ९-७७) । यस्तै किसिमको उल्लेख एकथरी संक्षिप्त गोपालवंशावलीमा पनि भएको पाइन्छ (रेग्मी २०४६: ४-५) ।

८. दुईथरी संक्षिप्त गोपालवंशावली (वज्राचार्य, २०३४: ११९, रेग्मी, २०४६:४) र भाषावंशावली (पौडेल, २०२०: ८०) मा "गोपालवंश" को चर्चामा दुईपल्ट विष्णुगुप्तको उल्लेख भएको छ । पहिलो विष्णुगुप्त नाम जिष्णुगुप्तलाई अर्थ्याउन उल्लेख भएको कुरा स्पष्ट छ । जीवगुप्त नामले पनि जिष्णुगुप्त प्रसिद्ध रहेका हुन सक्दछन् ।



९. यो श्लोकको आधारमा बुढानीलकण्ठको मूर्ति बनाउने सुरसार जिष्णुगुप्तकै पालामा ई ६३३ तिरै शुरु भएको अनुमान गर्न सकिन्छ । त्यसलाई पूरा गराएपछि विष्णुगुप्तले सो स्थापना गरेको अनुमान गर्न सकिन्छ । विष्णुगुप्तको ९ वर्ष जतिको शासनकालभित्र त्यत्रो विशालकाय मूर्तिको निर्माण र स्थापना भएको हुनु अलि असम्भव देख्दा यो अनुमान गर्नुपरेको हो ।

१०. यस बारेमा विष्णुगुप्तको सन्दर्भमा चर्चा गरिने छ ।

११. "मालीगाउँको शिलालेखमा शिरमा ८।९ पङ्क्ति फुटेर गएकाले ..... यसमा मानगृहको उल्लेख छँदैछैन भन्न पनि सकिदैन ..... " भन्ने ज्ञानमणि नेपालको टिप्पणी छ (नेपाल, २०४०: ५३) ।

१२. मानगृह मालीगाउँमा रहेको कुराको चर्चा माथि मानगृहको सन्दर्भमा गरिसकिएको छ । मानगृह रहेको ठाउँमा यस्तो अभिलेख विष्णुगुप्तले राख्न लगाएको कुरा पनि सन्दिग्ध हुन जान सक्दछ ।

१३. यही अभिलेखलाई शंकरमान राजवंशीले संवत् ६५ र ६७ को बीच अथवा संवत् ६६ को मान्नु भएको छ (राजवंशी, २०४६:८०) ।

१४. भगवतोविष्णोर्ज्जलशयनरुपनिष्पादनयोग्यवृहच्छिलाकर्षणव्यापार-परितुष्टैरस्माभिर्दक्षिणकोलीग्रामस्य ...... पक्दकेयूरान् वर्जयित्वान्यैः प्रसादाभरणपरिभोगैः प्रसादः कृतः ।

१५. आश्चर्यभूत ...... रुपनिष्पादनयोग्यशिलाकर्षणम्प्रतिनियुक्ते-भृङ्गारग्रामपाञ्चालिकैः ... ।

१६. बुढानीलकण्ठ मूर्तिको स्थापनाको सुरसार ई ६३३ तिरै जिष्णुगुप्तले गरेको हो कि भन्ने अनुमान माथि गरिसकिएको छ । यो दृष्टिले भन्ने हो भने नरेन्द्रदेवको विद्रोहको क्रम ई ६३३ तिर देखिनै थालिसकेको पनि मान्न सकिन्छ ।

१७. श्रीविष्णुगुप्त राजासन प्रथमस प्रचक्र जयरपेस थाप्रपा श्रीविष्णुतीर्थ-नारायन ... । यही वाक्यको अर्थ धनवज्र वज्राचार्यले यस्तो गर्नुभएको छ - "श्री विष्णुगुप्त राजाले पहिले परचक्र (शत्रुको मुलुक) विजय गर्ने कामनाले स्थापना गरेको श्रीविष्णु तीर्थनारायण " (वज्राचार्य, मल्ल, १९८५: ८६)

१८. "Nepal's Visnugupta was killed (in the battle by) Narendradeva (who was) proclaimed/ chosen the king."
शंकरमान राजवंशीले सोही वृत्तान्तमा नरेन्द्रदेवलाई नरीवावा र विष्णुगुप्तलाई युस्नुकुति भनिएको कुरा लेख्नु भएको छ (राजवंशी, २०४६:८०) । ज्ञानमणि नेपालले सो नामहरुको उच्चारण नरिदेवा र युस्ना कुग्ते हुन्छ भन्नुभएको छ (पन्त, २०४७: ३२, पादटिप्पणी २८)।

## खण्ड - ५

### नरेन्द्रदेव

नरेन्द्रदेवको जीवनी लिच्छविकालको मध्यभागतिर घट्न गएको राजनीतिक उपलब्धिको लागि विभिन्न वर्गहरुबीच चलेको घात- प्रतिघातको एक महत्वपूर्ण अंगको रुपमा स्थापित रहेको देखिएको छ ।

इतिहासमा प्रत्यक्ष वा परोक्ष रुपमा उनको अस्तित्व करीब ५८ वर्षसम्म (ई. ६२१-६७९) रहेको देखिन्छ । तर सो लामो कालावधिलाई पनि दुइ फ्याकमा बाँडेर विचार गर्नुपर्दछ - निर्वासित जीवन र सत्ता प्राप्तिको उद्योग ई ६२१-६४२ र सत्तासीन अवस्था ई ६४३-६७९ । तल उक्त दुइ खण्डमा विभाजन गरेर नरेन्द्रदेवको इतिहासको विवरण प्रस्तुत गरिन्छ ।

### निर्वासित जीवन र सत्ता प्राप्तिको उद्योग (ई. ६२१- ६४२)

वसन्तदेवपछि एक शताब्दीभन्दा केही बढी समय (१११ वर्ष ) सम्म गुप्तवंशी र वर्मावंशीहरुले लिच्छवि राजाहरुलाई मिचेर जुन किसिमका राजनीतिक वातावरण बनाएका थिए त्यसको अन्त्य गर्न सफल भएर नरेन्द्रदेव इतिहासमा देखापर्दछन् । तर उनलाई यो सफलता पाउन धेरै प्रयास गर्नुपरेको र धेरै समय धैर्यसाथ प्रतीक्षा गर्नुपरेको पनि थाहा पाइन्छ ।

चीनको तांग वृत्तान्तमा नरेन्द्रदेवका पितालाई उनका भाइले गद्दीबाट हटाएको, नरेन्द्रदेव काकाबाट भागी लुकी बसेका, पछि तिब्बतमा उनले शरण पाएको र तिब्बतकै सहयोगबाट उनले पैतृक गद्दी फिर्ता लिएको उल्लेख पाइएको हुनाले यस्तो अनुमान गर्नुपरेको थाहा पाइन्छ जहाँ भनिएको छ -

> "यस बीचमा राजा (वसन्तदेव) देखि तेह्रौं उदयदेव भन्ने हुनुभयो ।उहाँबाट इज्जतको ख्याल गर्ने, निहुरिएका सारा राजाका शिरपेचका मालाबाट झरेका धूलाको रासले पाउदानी धुलौटा गराएका नरेन्द्रदेव हुनुभयो ।" १

यस सन्दर्भबाट उदयदेवका छोरा उत्तराधिकारी नरेन्द्रदेव रहेछन् भन्ने स्पष्ट हुन्छ ।

उदयदेवको एकमात्र ज्ञात मिति ई . ६२१ र नरेन्द्रदेवको पहिलो ज्ञात मिति ई . ६४३ को बीचमा २२ वर्षको अन्तर हुनाले यो अवधिमा नरेन्द्रदेवले निर्वासित जीवन बिताउनु परेको र आफ्नो उत्तराधिकार रहेको गद्दी फिर्ता लिन ठूलो प्रयास गर्नुपरेको पनि अनुमान गर्न सकिन्छ ।

सर्वप्रथम त हामीले नरेन्द्रदेव कहिले आफ्नो पुर्ख्यौली गद्दी फिर्ता पाउन सफल भए भन्ने विषयको चर्चा गरौं ।

भीमार्जुनदेव र विष्णुगुप्तको अन्तिम अभिलेख संवत् ६५ फागुन (ई. ६४१) को भृंगारेश्वर अभिलेख हो (वज्राचार्य, २०३०: ४४८-४९) । यसपछि



संवत् ६७ पुस (ई ६४३) को अभिलेखमा नरेन्द्रदेव देखापरेका हुनाले अन्दाजी साढे दुइ वर्ष जतिको इतिहास अस्पष्ट हुन गएको छ । यो प्रमाणबाट ई ६४३ मा नरेन्द्रदेव नेपालको एकच्छत्र राजा भैसकेका देखिन्छन् । चीनका राजदूत लि यि पियाओ ई ६४३ मा नेपाल भएर भारतमा हर्षवर्धनकहाँ जाँदा नेपालका राजाका रुपमा नरेन्द्रदेवलाई पाएको कुरा चिनियाँ स्रोतबाट थाहा पाइन्छ । यसरी ई ६४३ मा नरेन्द्रदेव राजा भैसकेको देख्दा विष्णुगुप्तको अन्तिम ज्ञात मिति ई ६४१ र ई ६४३ को बीचमा कुनै समयमा नेपालको राजनीतिमा राजवंश परिवर्तनको घटना भएको रहेछ भन्ने थाहा पाइन्छ । तर चीनको तुन ह्वांग वृत्तान्तमा ई ६४१ मा नरेन्द्रदेवले विष्णुगुप्तलाई मारी राजा भएको टिपोट पाइनाले सोही मितिमा विष्णुगप्तको अन्त्य भई नरेन्द्रदेव राजा भएका होलान् भन्ने डा कमलप्रकाश मल्लको विचार छ (मल्ल, १९८५: ६१) । लिच्छविकालको कालगणनामा फरक विचार राख्ने शंकरमान राजवंशीले ई ६१९ मा नरेन्द्रदेवले विष्णुगुप्तलाई हराउँदा विष्णुगुप्त भागेका र पछि, तुन ह्वांग वृत्तान्तले संकेत गरे बमोजिम, ई ६४१ मा विष्णुगुप्त मारिएकाले नरेन्द्रदेवको एकच्छत्र राज्य चल्न थालेको कुरा मान्नुभएको छ (राजवंशी, २०४६: ८०-८१)।

तुन ह्वांग वृत्तान्तले प्रस्तुत गरेको नेपालसम्बन्धी टिपोटको यथोचित मूल्यांकन र समीक्षा गर्ने काम बाँकी नै रहेकाले त्यसले बताएको ई ६४१ को मितिमैं वंशपरिवर्तनको घटना घटिसकेको कुरा मानिहाल्न गाहारो छ । खासगरी विष्णुगुप्तको त्यही वर्षको अभिलेख पनि पाइन्छ । आफ्नो अभिलेखमा विष्णुगुप्त नरेन्द्रदेवको तुलनामा त्यत्ति गलिसकेका पनि देखिएका छैनन् । फेरि त्यो मितिमैं विष्णुगुप्तको पतन भइसकेको भए आफ्ना अभिलेख लेखाउन नरेन्द्रदेवलाइए ई ६४३ सम्म किन पर्खिरहनु परेको थियो त भन्ने प्रश्न पनि उठिहाल्छ । यसैले तुन ह्वांग वृत्तान्तको यथोचित विश्लेषण हुन बाँकी नै देखिन्छ । तर परिस्थितिको तुलनात्मक विचार गर्दा ई ६४१ देखि ई ६४३ को बीचको अवधिमा विष्णुगुप्त र नरेन्द्रदेवको बलाबलको स्थिति रहन गई अनिर्णयात्मक अवस्था रहेको हुनुपर्दछ यसैले त्यो अवधिमा कुनै पक्षले पनि शिलालेख लेखाई राख्न मौका पाएका छैनन् । राजवंशपरिवर्तनको सन्धिकालमा यस्तो अनिर्णयात्मक अवस्था इतिहासमा स्वाभाविक रुपले रहने गरेको पाइन्छ । भविष्यमा गरिने अनुसन्धानबाट यस विषयमा बढी विवरण पाउन सकिने विश्वास गर्न सकिन्छ ।

उदयदेवको राजनीतिक उत्तराधिकार सम्हालेर नरेन्द्रदेवले ई ६२१ तिरदेखि ई ६४२-४३ सम्म करीब २१-२२ वर्षसम्म संघर्ष र निर्वासित जीवन विताएर आफ्नो अडान कायम गरेको देखिन्छ । हामीले अन्यत्र विचार गरिसके झै उदयदेव र नरेन्द्रदेवले सत्ताच्युत हुने बित्तिकै खुरुक्क तिब्बतमा शरणार्थी हुन गएका थिएनन बरु नेपालभित्रै कुनै क्षेत्रमा बसी प्रतिरोध गरेका थिए । यस्तै प्रतिरोधका क्रममा स्वाभाविक रुपले वा युद्धको स्थितिमा उदयदेवको मृत्यु भएपछि नरेन्द्रदेवको शक्ति कम हुन गएको र उनले सुरक्षाको लागि तिब्बतमा

शरण लिनुपर्‍यो । शरणार्थी भएर तिब्बतमा बसुन्जेल पनि उनले आफ्नो योजना बनाउँदै रहेको र तिब्बती शासकको सहयोग प्राप्त गरी आर्को उद्यम थालेको अनुमान गर्न सकिन्छ ।

नरेन्द्रदेवलाई तिब्बती शासकले के कस्तो सहयोग दिएका थिए भन्ने कुरा मूल चिनियाँ स्रोतमा स्पष्ट नलेखिएको हुनाले यस बारेमा स्पष्ट कुरा भन्न गाहारो छ । तिब्बती शासकले एक निर्वासित राजकुमारलाई आफ्नो भूमिमा आश्रय लिन दिनु र त्यसलाई आधार मानेर आफ्नो योजना सन्चालन गर्न दिनु नै ठूलो सहयोग थियो । तिब्बती शासकले त्यो भन्दा धेरै बढी सहयोग दिएको बुझिँदैन किनभने उनले यो काण्डमा विशेष अभिरुचि लिएका भए नरेन्द्रदेवलाई आफ्नो गद्दी फिर्ता गर्न २२ वर्षसम्म पर्खिरहनुपर्ने थिएन । यसबाट स्पष्ट हुन्छ नरेन्द्रदेवले आफ्नो योजना कार्यान्वित गर्न आफैंले साधन जुटाउनु परेको थियो । यसको लागि उनले तिब्बतबाट नेपालभित्रै पसी आधारभूमि खडा गरेको र त्यहीँबाट उनले विभिन्न क्षेत्रका बासिन्दाहरु र लिच्छविराजवंशप्रति सद्भावना राख्ने वर्गहरुसँग सम्पर्क राखेर वातावरण बनाउन थालेको हुनुपर्दछ । यसै अवस्थालाई संकेत गर्ने दुइटा सन्दर्भ नरेन्द्रदेवले सत्ता फिर्ता लिने बित्तिकै लेखाई राखेको दुई अभिलेखमा चर्चित भएको पाइन्छ ।

माथि चर्चितमध्ये एउटा सन्दर्भ नरेन्द्रदेवको ई ६४३ को पाटन भन्सार चोकको अभिलेखमा पाइन्छ । त्यसमा भनिएको छ-

> "कुनै कुरामा उपकार गरेको थाहा पाई त्यसको बदलामा उपकार गर्न चाहेर हामीबाट सबै तलसहितको यूपग्रामद्रंगमा भट्ट र माप्चोकको अधिकार लागू गरिराख्दा जनतालाई अवश्य पनि ठूलो मर्का परिरहेको छ भनेर यी दुइ अधिकार झिकिदिएर निगाहा गरिएको छ " (वज्राचार्य, २०३०: ४५९) । [२]

पाटनका जनतालाई ती दुई अड्डाको सम्बन्ध टुटाएर निगाहा गरेर पनि चित्त नबुझेर सोही अभिलेखको अन्तिम भागतिर अर्को अड्डाको सम्बन्ध पनि टुटाएर थप निगाहा नरेन्द्रदेवले गरेका छन्:-

> "फेरि यति उपकार गरेर चित्त नबुझेको हुनाले हामीबाट यिनीहरुलाई पीटल्जा अधिकार पनि झिकिदिई निगाहा गरिएको छ । यो थाहा पाई यसका कुनै अधिकारीहरुले पनि यस बारेमा दुःख नदिनू । जसले दुःख दिन्छ त्यसलाई हामी सहने छैनौं । त्यसै गरी राजाहरुले पनि यो थाम्नू । " [३]

माथि उद्धृत विवरणमा यूपग्रामद्रंग अथवा ललितपुर भेकका जनताले राजा नरेन्द्रदेवलाई केही कुराको उपकार गरेको कुरा लेखिएको हुनु महत्त्वपूर्ण छ । एउटा राजालाई जनताले कुन किसिमको उपकार गर्न सक्दछ भन्ने कुरा विचार गरिएमा भीमार्जुनदेव र विष्णुगुप्तले अँठ्याएको सत्ताको विरुद्ध



नरेन्द्रदेवले विद्रोह गर्दा ललितपुर भेकका जनताले नरेन्द्रदेवको पक्ष लिएको अनुमान इतिहासकारले गरेका छन् (ऐजन: ४६१) ।

माथि चर्चित अभिलेखकै जस्तो सन्दर्भ नरेन्द्रदेवकै काठमाडौं यँगालहिटीको संवत् ६७ (ई ६४३) को अभिलेखमा पनि पाइन्छ जसमा उहिले मानेश्वरअन्तर्गतको भुवनेश्वर मन्दिरको हेरचाहा गर्ने जिम्मा दक्षिणकोलीग्रामद्रंगलाई दिइएको थियो । सो मन्दिरका गुठी जग्गा पनि सोही द्रंगलाई सुम्पिइएको थियो । भौमगुप्तको पालामा सो भुवनेश्वर मन्दिरको गुठी खोसिएको हुनाले सोझै राजदरबारबाट त्यसको हेरचाहा गर्न थालिएको थियो । पछि जब नरेन्द्रदेवले सफल विद्रोह गरी सत्ता लिए तब उनले "पहिलेदेखि चलेर आएका रीतिथितिहरु साविक बमोजिम चलुन् भन्ने चाहेर" पहिले जस्तै भुवनेश्वर मन्दिरको गुठी जग्गा समेत मन्दिरको हेरचाहाको जिम्मा दक्षिणकोलीग्रामद्रंगलाई सुम्पेको र साथै तीन ओटा अरु गाउँ पनि सोही गुठीमा थप गरिदिएको कुरा उक्त अभिलेखमा लेखिएको छ (ऐजन: ४६५) । राजा नरेन्द्रदेवले पहिलेको गुठी फिर्ता गर्नासाथै तीन गाउँ थपेको साथै शीताटी भन्ने ठाउँमा रहेको "शिवगल" मन्दिरको गुठी जग्गाको जिम्मा लगाई मन्दिरको हेरचाहाको कामसमेत सोही दक्षिणकोलीग्रामद्रंगलाई सुम्पेको कुरा त्यही अभिलेखमा लेखिएको छ ।

यो अभिलेखको वक्तव्यबाट यूपग्रामद्रंगका जनताले जस्तै दक्षिणकोलीग्रामद्रंगका जनताले पनि नरेन्द्रदेवले उठाएको विद्रोहमा साथ दिएको हुनाले त्यस उपकारको बदलामा नरेन्द्रदेवले सत्ता पाएपछि दक्षिणकोलीग्रामद्रंगका बासिन्दालाई पनि उनीहरुको जिम्ममा रहेको गुठी फिर्ता मात्रै नगरी तीन गाउँ गुठी थपेर आर्को मन्दिरको जिम्मा पनि लगाएर खुशी पारेका थिए भन्ने अर्थ गरिएको छ । खासगरी आफ्नो अधीनमा रहेको गुठी खोसिएकोमा दक्षिणकोलीग्रामद्रंगले अपमान भएको जस्तो ठनेकोमा उसको सम्मानको पुनःस्थापना राजा नरेन्द्रदेवले गरिदिएका भन्ने अर्थ गरिएको छ (ऐजन: ४६६)।

हुन त माथि चर्चित दुइ प्रमाणहरुमा केही तथ्यहरुमा फरक देखिन्छ । ललितपुरसम्बन्धी अभिलेखमा स्पष्ट रुपमा जनताले गरेको उपकारको बोलीको उल्लेख भएको पाइन्छ भने कान्तिपुरसम्बन्धी अभिलेखमा त्यस्तो उपकार गरेको बोली परेको छैन । फेरि ती दुइ इलाकामा नरेन्द्रदेवले गरिदिएको निगाहाको स्वरुप पनि फरक छ । हिजोआजको ललितपुर वा उस बेलाको यूपग्रामद्रंगका जनतालाई भट्ट र माप्चोक अड्डाका अधिकारले कारवाई गर्न नपाउने निगाहा गरिएको छ । भट्ट अधिकरणले जातअनुसार काम गरे नगरेको हेर्ने र आवश्यक परेमा मुद्दा चलाई कारवाई गर्दथ्यो । माप्चोक अधिकरणले विवाहसम्बन्धी समस्याबारे त्यस्तै हेरविचार गर्ने गर्दथ्यो । माप्चोक अधिकरणले पनि यूपग्रामद्रंग भित्रकै सम्बद्ध पाञ्चाली (?) ले स्थानीय रुपमै हेर्न पाउने अधिकार पाउनु महत्वपूर्ण छ । उता कान्तिपुर वा दक्षिणकोलीग्रामद्रंगलाई मन्दिरहरुसम्बन्धी जिम्मेवारी दिइएको छ जसबाट त्यसलाई के फाइदा हुन्थ्यो

भन्ने बारेमा केही भन्न सकिँदैन । बरु दक्षिणकोलीग्रामद्रंगसम्बन्धी निगाहामा आभीरवंशी आफ्ना शत्रुहरु जिष्णुगुप्त र विष्णुगुप्तका पुर्खा भौमगुप्तलाई आक्षेप लगाउने वा उनीप्रति जनताको अनास्था जगाउने अवसर भने नरेन्द्रदेवले उपयोग गरेका छन् ।

उक्त दुइ प्रमाणका बोलीमा फरक देखिए पनि उसबेलाका प्रमुख दुइ बस्ती यूपग्रामद्रंग र दक्षिणकोलीग्रामद्रंगले भीमार्जुनदेव र विष्णुगुप्तको विरुद्ध नरेन्द्रदेवको साथ दिएर उनलाई सफल पार्न सहयोग गरेको अर्थ गर्न सकिन्छ तर यूपग्रामद्रंगले भने विशेष किसिमले नै सहयोग पु-याएको थियो भन्ने पनि बुझ्न सकिन्छ । उक्त दुइ सन्दर्भबाट नरेन्द्रदेवले तिब्बती सेना लिएर सोझै आक्रमण गरेको नभई पहिले ठउँ ठउँका जनतालाई आफूतिर मिल्न सन्देश पठाई पृष्ठभूमि तयार गरेर विरोधी शासकवर्गलाई जनताबाट अलग पार्न लगाएर शासकवर्गको विरोधमा मात्र सैनिक कार्वाई गरेको बुझ्न सकिन्छ ।

नरेन्द्रदेवले जनतालाई मात्रै हैन प्रभावशाली व्यक्तिहरुसँग पनि सहायता मागेको हुनुपर्दछ । हुन त यस किसिमको कुनै स्पष्ट सन्दर्भ पाइएको छैन । एउटा घुमाउरो सन्दर्भलाई यो रुपमा लिन सकिने जस्तो लागेकोले यस्तो प्रस्ताव गर्नुपरेको हो ।

नरेन्द्रदेवका नाति जयदेव द्वितीयको पशुपति अभिलेखबाट अंशुवर्माका भानिज भोगवर्माकी छोरी वत्सदेवीसँग नरेन्द्रदेवका छोरा शिवदेवी द्वितीयको विवाह भएको थाहा पाइएकोले यो विवाह सम्बन्धको राजनीतिक महत्व मान्न सकिने देखिएको छ । यो विवाह सम्बन्ध कहिले भएको हो थाहा नपाइए पनि भोगवर्मा नरेन्द्रदेवहरुप्रति सहानुभूति राख्ने वर्गमा पर्दा रहेछन् भन्ने बुझ्न सकिने हुनाले नरेन्द्रदेवको उद्योगमा सहयोग गर्नेमा भोगवर्मालाई पनि शामिल गर्न खोजिएको हो ।

यस समस्याबारे यहाँ यति विचार गर्नाको तात्पर्य नरेन्द्रदेवले सत्ता फिर्ता पाउन गरेको प्रयासमा तिब्बती शक्तिको आडमात्रै आधार थिएन बरु यसमा अरु तत्वहरु पनि थिए भन्ने तथ्य स्पष्ट पार्नु हो ।

नरेन्द्रदेवले सत्ता फिर्ता ल्याउन गरेको प्रयासको अन्त्यमा युद्ध नै गर्नुपरेको अनुमान गरिएको छ । किनभने उनले सत्ता फिर्ता गरेपछि प्रसारित गरेको पहिलो अभिलेख-पाटन भन्सारचोक अभिलेखमा युद्धको वर्णन र त्यसपछि पाएको सफलता र सुशासनको वर्णन गरिएको छः

> "जोशिएर अघि बढेका वीर पैदल सिपाहीहरुका भाला र वाणहरुले घाइते भएका हुँदा हात्ती घोडाहरु तर्सिएर छ्यान्न व्यान्न भएको लडाईको मोर्चामा अरुको लागि लोभ लाग्दो पराक्रमद्वारा शत्रुहरु लाई सखाप पारीकन दुनियाँको भलो गर्नुतिर लागेका, त्यताबाट भएको कीर्ति, दिशाको छेउछेउसम्म फैलिएका, दुनियाँमा धर्म अर्थ कामसम्बन्धी कुरालाई परस्परमा बाधा नपु-याउने पारीकन आनन्दसँग चलाउने भएका (नरेन्द्रदेव)"(वज्राचार्य, २०३०: ४५९) [४]



**सत्ताप्राप्ति (ई ६४३-६७९:)**

नरेन्द्रदेवले आभीरगुप्तहरुको हातमा गएको लिच्छवि राजवंशको राजकीय शक्तिलाई फिर्ता लिएपछि लिच्छविवंशको गौरव स्वाभाविक रुपले बढ्न गएको थियो । यही कारणले नरेन्द्रदेवका शुरुका केही अभिलेखमा लिच्छविवंशको गौरवगाथाको प्रख्याति गराएका साहित्यिक अभिव्यक्ति पाइएका छन् । नरेन्द्रदेवले आफ्नो पहिलो अभिलेख, संवत् ६७ (ई ६४३) को पाटन भन्सारचोक अभिलेखको आरम्भमा व्यक्त गराएका छन्:

> समुद्रसम्म सफा कीर्तिरुपी ध्वजा (झण्डा) फर्फराएको
> लिच्छवि राजाहरुको कुल । [५]

काठमाडौं यंगालहिटीको अभिलेखमा त नरेन्द्रदेवको महिमा-वर्णन विशेष रुपले गरिएको छ । शुरुमा नै एक हरपमा भनिएको छ - "शरद् ऋतुको पूर्ण चन्द्रमाका सफा किरणहरुले सुहाएको हिमालयको अग्लो टाकुरो जस्तो सफा कीर्तिद्वारा सारा दिशाहरु झलमल्ल पारेका ..... "(शरदाप्यानशशांकामलमयूखनिकरावभास्यमानहिमवदुत्तुंगशिखरावदातयशोमालावर्तसिताशेषदिङ्मण्डलः)(वज्राचार्य,२०३०: ४६३) । यो भूमिकापछि एक पद्यमा अज्ञातनामा राजकविले नरेन्द्रदेवको अद्भुत काव्यात्मक - आलंकारिक शैलीबाट अभिनन्दन गरेका छन्:-

> उहाँ (नरेन्द्रदेव) नीतिद्वारा शु-याईलाई सिँगार्नुहुन्छ, असंख्य उज्ज्वल गुणहरुद्वारा आफूलाई सिँगार्नुहुन्छ, शक्तिद्वारा बाहुबललाई सिंगार्नु हुन्छ, स्मरणशक्ति भएको बुद्धिलाई अनेक शास्त्र आगमहरुले सिँगार्नुहुन्छ, स्थिति बन्धेजद्वारा मर्यादा (रीतिस्थिति) लाई सिँगार्नुहुन्छ, कीर्तिद्वारा दिशाहरुलाई सिँगार्नुहुन्छ, राज्यलक्ष्मीद्वारा पृथ्वीलाई सिँगार्नुहुन्छ, जातिद्वारा, पवित्र ठूलो लिच्छविराजवंशलाई सिँगार्नुहुन्छ।[६]

अनन्तलिंगेश्वरको अभिलेखमा पनि नरेन्द्रदेवको माहात्म्य अझ मीठो भाकामा गाइएको छः

> जुन राजा अरु सबै मानिसहरुलाई माथ गर्ने गुणहरुद्वारा लिच्छविकुलका राजाहरुमा मणिजस्तै हुनुहुन्छ, प्रभुशक्ति, मन्त्रशक्ति, उत्साहशक्तिद्वारा मण्डलको लक्ष्मीलाई परिपूर्ण पारेका हुनाले चन्द्रमाझै राजाहरुको हेरिरहुँ जस्तो हुनुहुन्छ । [७] विनय (कर्तव्यको शिक्षा), नीति, पराक्रमले गर्दा जीउ सुहाएका (उहाँ नरेन्द्रदेव) । [८]

नरेन्द्रदेवको माहात्म्य उनका अभिलेखहरुले मात्रै हैन उनका पालामा जनतातर्फबाट राख्न लगाइएका अभिलेखले पनि गाएको पाइन्छ । नक्साल भगवती बहालको जलद्रोणीको ई ६५४ को अभिलेखमा नरेन्द्रदेवको महिमा गाउँदै भनिएको छः

> शु-याईं, उत्साह, पराक्रम, निडरपन, नीति, दान, प्रताप आदि मालिकमा हुनुपर्ने अन्त नपाइने प्रशंसनीय गुणहरु तँछाड-मछाड

गरे झैं गरी जहाँ रहन्छन्, आफ्ना सुखसयलको धन्दालाई छोडेर अरुको उपकारकै काममा दिलोज्यान लाउने उहाँ महाराजाधिराज नरेन्द्रदेवबाट कुलको क्रमैसँग आएको पृथ्वीलाई पालना गरिरहनु भएको समयमा ......" (वज्राचार्य, २०३०? ४७९- ८०) ।[९]

नरेन्द्रदेवको राजनीतिक उपलब्धिको प्रभाव उनको राजकीय उपाधिका प्रयोगमा पनि पर्न गएको देखिन्छ । ई ६४३ का दुइटा अभिलेखमा त उनीलाई उदयदेवलाई झैं भट्टारकमहाराजाधिकराज उपाधि नै लेखिएको छ । त्यत्रो राजनीतिक उपलब्धि पाएको हुनाले उनी अब ठूला राजा हुन पुगेका थिए यसैले ई ६४५ देखिका प्रमाणहरुमा उनको राजकीय विरुदमा "परम" (ठूला) शब्द जोड्न थालिएको देखिन्छ ।

आफ्नो अन्तिम कालमा उनले आफूलाई " बेरोकटोक शासन " (हुकुम) चलेका (अप्रतिहतशासनः) भन्ने विरुद लेखाएको पाइन्छ (ऐजनः ४९६, ९९) र यसै अवधिमा उनले "लिच्छविकुलकेतु" को उपाधि पनि लिएका छन् (ऐजन) । यो उपाधिको प्रयोग पहिले शिवदेव प्रथमले पनि गरेका थिए ।

## नरेन्द्रदेवका उपलब्धि

लिच्छविकालको इतिहासमा नरेन्द्रदेवको स्थान अप्रतिम रहेको देखिन्छ । ई ६२१ मा पिता उदयदेव सत्ताच्युत भएर भाग्नुपर्ने काण्ड मामूली थिएन । त्यो घटना भएदेखि के के घटनाक्रम भए भन्ने कुरा माथि बयानिसकिएको छ । करीब २२ वर्ष निर्वासित भएर पनि उद्यम गर्न नछोडी अनेक थरी उपाय गरी पुर्ख्यौली गद्दी फिर्ता लिन सफल भएर लिच्छविवंशको गौरव पुनः स्थापित गरिछाडे । लिच्छविवंशको गौरव ई ६२१ देखि ६४३ सम्म मात्र होचिएको थिएन ई ५१२ देखिने त्यस्तो अवस्था निरन्तर आइरहेको थियो । ई ५१२ मा रविगुप्तले हर्ताकर्ता हुन थालेदेखि क्रमलील, भौमगुप्त र अंशुवर्मा समेतले अनेक रुप लिएर राजनीतिक शक्ति अँठ्याई १३१ वर्षको (ई ५१२ - ६४३) अवधि विताइदिएका थिए । यस्तो पृष्ठभूमिमा नरेन्द्रदेवले लिच्छविवंशको एकलौटी शासनव्यवस्था स्थापित गरी नयाँ इतिहासको आरम्भ गरेको थिए । यसै कारणले उनका अभिलेखमा उनको र लिच्छविवंशको गुणगान गरिएको पाइन्छ । यस कुराको चर्चा माथि गरिसकिएको छ ।

नरेन्द्रदेवले ई ६४३ देखि ६७९ सम्म ३६ वर्ष जति शासन चलाए । यो अवधिमा उनले गरेका सामाजिक महत्वका कतिपय कुराको चर्चा माथि विभिन्न रुपमा भइसकेको छ र केही पक्षको चर्चा यसपछि गरिएको छ । यहाँ उनको राजनीतिक उपलब्धिबारे मात्रै विचार गरिएको छ ।

कतिपय इतिहासकारहरुले नरेन्द्रदेवले तिब्बती शासकबाट सहयोग लिएर राज्य फिर्ता लिएको हुनाले उनी तिब्बतका अधीन हुन पुगेको कुरालाई निकै महत्त्व दिएको पाइन्छ । तिब्बती शासकको सहयोग नरेन्द्रदेवलाई



महत्वपूर्ण भए पनि त्यही कारणले मात्र उनले राज्य फिर्ता गरेका थिएनन् यस काममा अरु तत्वले पनि सहयोग गरेका थिए भन्ने कुराको चर्चा माथि गरिसकिएको छ । नरेन्द्रदेवको तिब्बत सम्बन्धबारे तल भिन्नै शीर्षकमा अध्ययन गरिएको छ ।

## नरेन्द्रदेवको तिब्बत- चीन सम्बन्ध

अंशुवर्माको समयमा ई ६१८ मा तिब्बततर्फ सम्पर्क शुरु भएको पृष्ठभूमिमा नरेन्द्रदेवले तिब्बतमा राजनीतिक शरण पाएको र त्यहाँका राजा स्रोंगचनगम्पोको सहयोगबाट आफ्नो गद्दी फिर्ता लिन सकेका तथ्यहरुबाट लिच्छविकालको इतिहासमा तिब्बतसँगको सम्पर्क पनि महत्वपूर्ण हुँदै आएको थाहा पाइन्छ ।

यस्तै पृष्ठभूमिमा चीनदेखि तिब्बत र काठमाडौं हुदैं उत्तरी भारत निस्किने मार्ग लोकप्रिय हुंदा नेपालको चीनका शासकहरुसँग पनि हिमचिम बढ्न थालेको थियो । नरेन्द्रदेवले आफ्ना विरोधीहरुलाई पन्छाएर राज्य फिर्ता लिएको केही समय भित्रै ई ६४३ मै चीन सम्राट्का राजदूत ली-यी-पियाओ (Li-Yi-Pio) काठमाडौं भएर उत्तरभारततर्फ लाग्दा नरेन्द्रदेवले उनीप्रति आदरभाव व्यक्त गरेर तथा यथोचित स्वागत सत्कार गरेर चीनसँग सम्बन्ध स्थापनको राम्रो पृष्ठभूमि बनाए (लेभी १९०५: ८२, १६४) ।

उक्त पृष्ठभूमिमा ई ६४६ मा वांग हुएन शेको नेतृत्वमा आर्को चिनियाँ दूतमण्डली काठमाडौं भएर उत्तर भारतमा महाराज हर्षवर्धन कहां गएको थियो। यो दूतमण्डली आफ्नो ठेगानमा पुग्नुअघि नै हर्षको मृत्यु भैसकेको र उनका मन्त्री अथवा क्षेत्रीय सामन्त अरुणाश्वले उनीहरुमाथि दुर्व्यवहार गरेकाले भागा भाग मच्चिएको थियो । वाङ्गले तिब्बतमा पुगी त्यहाँका राजा स्रोंगचन् गम्पोसँग १२०० सिपाहीको सहयोग लिई नेपाल आई नरेन्द्रदेवसंग सैन्य सहयोग माग्दा उनले ७००० घोडचढी फौजको सहयोग गरे । यस्तो संयुक्त सेना लिएर वांगले अरुणाश्वमाथि आक्रमण गरे र उनलाई पक्रेर चीन पुऱ्याए । यसरी वांगले आफ्नो अपमानको बदला लिएको कुरा चिनियां वृत्तान्तबाट थाहा पाइन्छ (लेभी, १९००: २९७- ३४१)।

चिनियाँ स्रोतमा यो घटनाको अतिशयोक्तिपूर्ण विवरण भए पनि वास्तवमा वाङ्गको दूतमण्डलीमाथि तिरहुत भेकतिरका क्षेत्रीय सामन्त अरुणाश्वले कुनै कारणवश मारपीट गरेको र त्यसको बदलामा वाङ्गले सेना तयार गरी आक्रमणकारीमाथि आक्रमण गरेर पराजित गरी बदला लिएको कुरा इतिहासकारहरु मान्दछन् (मजुमदार, १९६२ १२४ - १२६) । यो घटना ई ६४८ मा भएको थियो ।

वाङ्ग हुयेन शेसँग सम्बन्धित यो राजनीतिक घटनाको विशेष महत्त्व मान्नुपर्छ । चीनमा सम्राटका राजदूतलाई नरेन्द्रदेवले यसरी महत्त्व दिई ७००० अश्वारोही सैनिकको सहयोग गर्नाले चीनको पक्ष लिएर एउटा राजनीतिक

सूझबूझको काम गरेको बुझिन्छ । आफ्ना सहयोगी शक्ति तिब्बती राजा स्रोंगचन गम्पोको मनोभावअनुकूल भएर पनि नरेन्द्रदेवले आफूले लिएको सहयोगको साटो तिर्न सफल भएका देखिन्छन् । यस्तो अन्तर्राष्ट्रिय महत्वको काण्डमा शामिल भएर उनले उत्तरी भारत, तिब्बत र चीनमा पनि सम्मान पाएको पनि बुझ्न सकिन्छ ।

उपर्युक्त उपलब्धिको पृष्ठभूमिमा स्वयं नरेन्द्रदेवले ई ६५१ मा एक दूतमण्डली चीन पठाएको कुरा चिनियां स्रोतबाट थाहा पाइन्छ । यो मण्डलीमा उनले आफ्ना युवराजलाई समेत शामिल गरेको थाहा पाइएकोले यस घटनालाई कति महत्व दिएका रहेछन् भन्ने कुरा स्पष्ट बुझ्न सकिन्छ (लेभि, १९०५: ८, ९, १५६ र पछि) । यद्यपि यो घटना त्यति महत्वपूर्ण थिएन साधारण दौत्य सम्बन्धको धारणा मात्र हो भन्ने पेटेकको भनाई छ (पेटेक, १९८४: २४) ।

नरेन्द्रदेवलाई तिब्बतका अधीन राजाको रुपमा चिनियाँ स्रोतहरुमा संकेत भएको चर्चा विद्वानहरुले गरेका छन् । पेटेकले चिनियाँ राजदूत वाङ्ग हुयेन त्सेको नेपालसम्बन्धी टिपोटमा नेपाललाई तिब्बतको अधीन रहेको वर्णन भएको कुरा मान्नुभएको छ (ऐजन) ।[१०] उहाँकै विचारमा नेपालमाथि तिब्बतको सम्प्रभुता ई ६५१ को केही दशाब्दीपछि घट्न थालेको थियो (ऐजन: २५) ।[११]

चिनियाँ ऐतिहासिक स्रोत नेपालको इतिहास निर्माणमा अत्यन्त आवश्यक छ भन्ने कुरा स्पष्ट छ । तर यो स्रोतको विधिसाथ तुलनात्मक अध्ययन हुन पाएको छैन । यसै कारणले पनि अनेक महत्वपूर्ण तथ्यबारे पनि हामीलाई अन्यौलमा बस्नुपरेको छ । अतिशयोक्ति चिनियां स्रोतको विशेषता देख्दा यो प्रश्न उठाउनु परेको छ ।

नरेन्द्रदेवले आफ्नो पुख्यौंली सत्ता फिर्ता गर्न तिब्बती शक्तिमा कति निर्भर थिए भन्ने कुराको छानबिन माथि गरिसकिएको छ जसबाट नेपालमाथि तिब्बतको सम्प्रभुत्तासम्बन्धी धारणा नेपालको इतिहासको सर्वाङ्गीण अध्ययन नभएको कारणले उब्जिएको हुन सक्दछ ।

तिब्बत र चीनसँग घनिष्ठ सम्पर्क बढाएर नरेन्द्रदेवले आफ्नो राजनीतिलाई नयाँ आयाम थपेको तथ्य भने महत्वपूर्ण छ । यो सम्पर्कले यसै बेलादेखि आर्थिक र सांस्कृतिक क्षेत्रमा ठूलो प्रभाव पार्न थालेको र नेपालको आर्थिक गतिविधिमा पनि व्यापक प्रभाव पार्न शुरु गरेको अति महत्वपूर्ण तथ्य स्पष्ट भएको छ ।

**वाङ्ग हुयेन शेको नेपाल विवरण तथा नरेन्द्रदेवको वर्णन**

राजा नरेन्द्रदेवको समयमा चीन सम्राटका अनेक दूतमण्डलीहरु नेपालको बाटो भएर भारततर्फ लागेका थिए । यी दूतमण्डलीमध्ये एकले तत्कालीन नेपाल र राजा नरेन्द्रदेवको विवरण टिपेर लगेको थाहा पाइन्छ ।



सर्वप्रथम त लि यि पियाओले चीन सम्राटको हर्षवर्धलाई पठाएको चिठी र सौगात लिएर ई ६४३ मा नेपालको बाटो भएर भारततिर लागेका थिए । त्यस बेला ती दूतले राजा नरेन्द्रदेवबाट स्वागत सत्कार पाएका थिए ।

ई ६४७ मा चीन सम्राटका आर्को दूतमण्डली वाङ्ग हुयेन शेको नेतृत्वमा नेपाल भएर हर्षवर्धन कहां गएको थियो । यसपालि यो मण्डलीलाई हर्षवर्धनका तिरहुततिरका सामन्त अरुणाश्वले दुर्व्यवहार गरेका र सम्राट हर्षवर्धनको स्वर्गवास भइसकेको हुनाले राजनीतिक काण्ड पर्न गएको थियो । ई ६४८ मा भएको यो काण्डमा वांग हुयेन शेले तिब्बतका शासक स्रोंगचोङ्ग गम्पोसँग सैनिक सहायता लिई नरेन्द्रदेवबाट ७००० घोडचढी सैनिक लिई अरुणाश्व विरुद्ध आक्रमण गरी तिनलाई पक्री चीन पु-याएका थिए । यो काण्डबारे माथि वर्णन गरिसकिएको छ । यो घटनापछि पनि वांग हुयेन शे तीर्थयात्राको लागि ई ६५७ मा फेरि नेपालको बाटो गरी भारततिर गएका थिए। वांग हुयेन शेले दुइपल्ट नेपाल आएको समयमा नेपालसम्बन्धी विवरण लेखेका थिए । त्यो विवरणको मूल नष्ट भएको छ तर त्यसको अन्यत्र गरिएका उद्धरणबाट केही कुरा थाहा पाइन्छ । त्यो विवरण तल उद्धृत बमोजिम छ-

> "नेपाल राज्य तिब्बतको पश्चिमपट्टि पर्दछ । त्यहाँका बासिन्दाहरु आँखीभौसम्म खौरन्छन् (कपाल पाल्दछन्?) । तिनीहर कान छेडेर त्यसमा पशुका सींग बाँसका टुक्रा लगाउँछन् । कानका लोती कांधसम्म लत्र्याउनु त्यहाँ सौन्दर्यको प्रतीक मानिन्छ ।
>
> नेपालका बासिन्दा चमचा वा सिन्काको प्रयोग नगरिकन हातले खान्छन् । उनीहरुका भाँडाकुँडा ताँबोका मात्रै हुन्छन् ।
>
> घुमफिर गरेर व्यापार गर्नेहरु र एकै ठाउँमा बसी व्यापार गर्ने व्यापारीहरु त्यहाँ थुप्रै छन् । बरु कृषकहरुको संख्या ज्यादै थोरै छ । उनीहरुको मुद्रा (टक) मा एकातिर मानिसको आर्कोतिर घोडाको चित्र भएका हुन्छन् र तिनमा (चीनमा जस्तैं )बीचमा प्वाल पारिएको हुँदैन ।
>
> उनीहरु आफ्ना गोरुको नाक छेड्दैनन् । जम्मै जीउ ढाक्ने गरी एउटै कपडा लगाउंछन् । दिनमा अनेक पटक नुहाउंछन् । तिनका घर काठै काठले बनेका हुन्छन् र भित्तामा मूर्ति अंकित भएका हुन्छन् र रंगरोगन (चित्रांकन) गरिएका हुन्छन् ।
>
> नेपालीहरु नाच (अभिनय) मा अभिरुचि राख्दछन् । उनीहरु मादल र कर्नाल बजाउँदा रमाउँछन् ।
>
> नेपालीहरु फलित ज्योतिष र भौतिक दर्शन (देहात्मवाद? दर्शन?) को अनुसन्धानमा संलग्न रहन्छन् । पात्रो बनाउने विद्यामा पनि उनीहरु उत्तिकै निपुण छन् ।

उनीहरु पाँच दिव्य आत्मा (पाँच देवता) हरुको पूजा गर्दछन् र तिनका ढुंगाका मूर्ति बनाउँछन् । प्रतिदिन ती देवतालाई पवित्र जलले स्नान गराई भेडाको पाठो बली गरी पोलेर चढाउंछन् ।"

यहाँ विचारणीय कुरा के छ भने आफू स्वयम् नेपाल नआई सुनेर विवरण लेख्ने व्हेन-त्साङ् र वाङ् व्हेन त्सेको विवरणमा अन्तर पाउन सकिन्छ, यद्यपि दुवैले यसलाई नेपालको विवरण भनेका छन् ।

## राजा नरेन्द्रदेव र उनको राजसभा

"नेपालका राजा नरेन्द्रदेव आफ्नो शरीरलाई सक्कली मोती, मणि, मुगा, सीपी र पन्नाले सिंगार्दछन् । उनी कानमा सुनको मुन्द्री र यूंको चौगेडी लगाँछन् । बुद्धको मूर्तिले सजिएको र फल्लर भएको कम्मरपेटी बाँध्दछन् र सिंहासनमा बस्दछन् ।

उनको राजसभामा असल फूल र अत्तर छर्किइन्छ । राज्यका भारादार, अधिकारी र अरु सभासद्‌हरु जमीनमा दायाँ बायाँ बस्दछन् । दाहिने देब्रेपट्टि सयौं सिपाहीहरु हतियार लिएर लाम लागेर रहन्छन् । "

राजा नरेन्द्रदेवको वासस्थान दरबारको वर्णन पनि त्यहाँ गरिएको छ जसको उद्धरण माथि कैलासकूटभवनको सन्दर्भमा प्रस्तुत गरिसकिएको छ ।

## नागपुष्करिणी तथा अग्निपुष्करिणी

ई ६५७ मा चीनका सम्राटको आज्ञाले वांग हुयेन त्से तथा अरु मानिस भगवान् बुद्धलाई काषायवस्त्र अर्पण गर्न पश्चिमतर्फ जान खटाइएका थिए । विवरणअनुसार उनीहरु दक्षिण-पश्चिमतर्फ रहेको नेपाल गए । त्यहाँ पो-लो-त्तो (Pouo-lo-tou) मा आइपुगेपछि गाउँको पूर्वतिरको खोंचमा आइपुगे । त्यहाँ आगो बलिरहेको सानो पोखरी छ । यहाँ कसैले हातमा बलेको आगो लिएर आगो बाल्न खोजेमा भित्रदेखि बलेर पानीको सतहमा आइपुग्छ । त्यो आगोलाई पानीले निभाउन खोजेमा पानी नै बल्न थाल्दछ । चिनियाँ दूत र उनका साथीहरुले त्यही पोखरीको आगोमा खाना पकाएर खाएका थिए ।

त्यो पोखरीबारे चिनियाँ दूतले नेपालका राजालाई सोध्दा उनले यस्तो जवाफ दिएका थिए - " पहिले यहाँ लट्ठीले खोतल्दा (हान्दा?) सुनको बाकस उत्रिन्थ्यो । एकजना मानिसलाई त्यो बाकस तान्न अह्राइएको थियो तर जतिपल्ट त्यसलाई तान्न खोजियो त्यतिपल्ट त्यो डुब्यो । परम्परागत विश्वासअनुसार त्यो मैत्रेय बोधिसत्वको मुकुटको सुन हो, ती देवताको कार्यकाल भविष्यमा हुनेछ । अग्नि नागले सो पोखरी र सुनको रखवारी गर्दछ । यो पोखरीको आगो अग्निनागको ज्वाला हो । "

"राजधानीदेखि दक्षिणपूर्वतर्फ केही पर आगो र पानीको पोखरी रहेको छ । सो अ-कि-पो-ली (अग्निपुरी वा अग्निपुष्करी-जायसवाल) एक ली जति



सुक्खा दुबै मौसममा यो गहिरो र भरिभराउ रहन्छ र यसबाट वाफ उडिरहन्छ । यहाँ बसेर कसैले हातमा बलेको आगो लिएमा पनि पूरा पोखरीभरि माथिसम्म आगो बल्दछ । पानीले त्यो आगो निभाउन खोजेमा आगो झन बढ्दछ तर धूलो छारो हालिदिएमा भने सो निभ्दछ । त्यो पोखरीमा केही वस्तु हालिएमा खरानी हुन्छ । यहाँ कसैले खाद्यवस्तु हाली भाँडो राखिदिएमा सो खाद्यवस्तु पाकेर तम्तयार हुन्छ ।

उहिले यो पोखरीमा सुनको पात्र देखिन्थ्यो । त्यस पात्रलाई एक राजाले झिक्ने आज्ञा दिएका थिए तर मानिस मात्रै हैन हात्तीद्वारा तान्न खोज्दा पनि सकिएको थिएन । राती यस्तो आकाशवाणी सुनिएको थियो - यस ठाउँमा मैत्रेय बुद्धको मुकुट रहेको छ । अग्नि नागले यसको रक्षा गरिरहने हुनाले कुनै जीवले त्यसलाई पाउन सक्दैन । "

## दिव्य देवस्थल

शहर (राजधानी ?) देखि १० ली जति दक्षिणतर्फ एकान्तमा एउटा पहाड छ जुन जंगलले ढाकिएको छ । त्यहाँ तलै तला परेका गगनचुम्बी मन्दिरहरु छन् । त्यहाँ सल्लाका रुख र बाँसका झाँगमुन्तिर पाल्तु माछा र नाग रहन्छन् । कसैले केही खानेकुरा दिएमा ती खान निस्कन्छन् । कसैले तिनलाई हानि नोक्सानी गर्न खोजेमा त्यस्ताको आफ्नै हानि हुन्छ । " १२

माथि उद्धृत वक्तव्यहरुमा जुन पोखरीहरु र देवस्थलको वर्णन परेको छ तिनको ठीक पहिचान गर्न सकिएको छैन । यसैले यस्ता विवरण रहस्यमय छन् ।

## नरेन्द्रदेवका उत्तराधिकारी

नरेन्द्रदेवका ई ६४३ देखिका अभिलेख पाइन्छन् तर उनका युवराजको उल्लेख ई ६५९ मितिको अभिलेखदेखि मात्र पाउन थालिन्छ । उक्त मितिको ललितपुर गैह्रीधाराको अभिलेखमा दूतकका रुपमा "भट्टारकश्रीयुवराज स्कन्ददेव" को स्थान रहेको पाइन्छ (वज्राचार्य, २०३०: ४८२) । यसपछि मिति खण्डित अनन्तलिंगेश्वरको अभिलेख (जसलाई अन्दजी ई ६६५ को मिति दिन सकिन्छ) को पुछार भाग खण्डित भए पनि "श्री युवराज ... देवेति" पाठ पढ्न सकिन्छ (ऐजन: ४८७) । यसपछि पाटन च्यासलटोलको ई ६७१ को अलिखमा दूतकका रुपमा "श्री युवराज शौर्यदेव" को नाम लेखिएको छ (ऐजन: ४९५) । यसपछि ई ६७९ को पशुपति वज्रघरको अभिलेखमा दूतकका रुपमा "भट्टारकश्री शिवदेव" को उल्लेख भएको छ (ऐजन: ५०१) ।

ई ६५९ को अभिलेखमा चर्चिएको युवराज स्कन्ददेवको मृत्यु केही कालपछि नै भएको कुरा धनवज्र वज्राचार्य मान्नुहुन्छ (ऐजन: ४८४) तर अनन्तलिंगेश्वरको अभिलेखमा पढिएको "श्रीयुवराज... देवेति" पाठमा अनुवादमा स्कन्ददेवको नाम उहाँले थप्नु भएको छ (ऐजन: ४८८) । ई ६७१ को

अभिलेखमा देखिएका शौर्यदेवलाई धनवज्र वज्राचार्यले नरेन्द्रदेवका माहिला छोरा मानी स्कन्ददेवको मृत्यु भएपछि उनी युवराज घोषित गरिएको कुरा मान्नुभएको छ (ऐजन: ४९५)। नरेन्द्रदेवको जीवनकालमै यो शौर्यदेवको पनि मृत्यु भएकोले अन्तिमकालमा शिवदेवलाई युवराज घोषित गरिएको हो भन्ने उहाँ मान्नुहुन्छ। शिवदेवलाई 'भट्टारक' लेखिएको कुरामा नरेन्द्रदेवले 'परमभट्टारक' उपाधि लिएपछि युवराजलाई 'भट्टारक' उपाधि दिन थालेका हुन् भन्ने पनि उहाँको विचार छ (ऐजन: ५०६)।

नरेन्द्रदेवका अभिलेखहरुमा युवराजलाई दिइएका उपाधिमा तीन भेद देखिएको कुरा उल्लेखनीय लाग्दछ। यस दृष्टिले हेर्ने हो भने एकपछि आर्को युवराजको मृत्यु भयो भन्ने कल्पना अमिल्दो हुन जान्छ। 'भट्टारकश्री युवराज' उपाधिसाथ देखिने स्कन्ददेवलाई आर्को अभिलखमा 'श्री युवराज...' मात्र लेखियो होला भन्ने मान्न सकिने देखिँदैन। शौर्यदेवलाई सो उपाधि लेखिएको हुँदा त्यो सन्दर्भले शौर्यदेवलाई संकेत गरेको बुझ्न सकिन्छ। नरेन्द्रदेवपछि लिच्छवि गद्दी सम्हाल्ने शिवदेवलाई पहिले स्कन्ददेवलाई दिइएको जस्तो 'भट्टारकश्रीयुवराज' उपाधि नदिई 'भट्टारकश्री' मात्र लेखिएको देख्दा नरेन्द्रदेवको जीवनमा युवराज पदको विषयमा अन्योल उठेको जस्तो पो लाग्दछ। सरकारी अभिलेखहरुमा युवराज जस्ताको पदवीको उपयोगमा विभिन्न स्वरुपको प्रयोग विना कारण नहुने भएकोले यस्तो कल्पना गर्नुपरेको हो।

उक्त विवरणको परिप्रेक्ष्यमा नरेन्द्रदेवको अन्तिम ज्ञात मिति ई ६७९ र शिवदेव द्वितीको पहिलो ज्ञात मिति ई ६८५ को वीचको ६ वर्ष जतिको समयभित्र प्रसारित्त कुनै शिलालेख प्रमाण नपाइने स्थितिले पनि तात्कालिक स्थितिलाई रहस्यमय पार्न सहयोग गरेको देखिन्छ।

### भद्राधिवासभवन

नरेन्द्रदेवको ललितपुर वटुकभैरव मन्दिरनिर रहेको ई ६६५ को खण्डित अभिलेखमा सर्वप्रथम 'भद्राधिवास' को उल्लेख पाइन्छ (बज्राचार्य, २०३०: ४९०)। नरेन्द्रदेवका ई ६७१ को एक र ई ६७९ का दुई अभिलेख 'भद्राधिवासभवन' बाट प्रसारित गरिएका छन् (ऐजन: ४९४, ४९६, ४९९)। यसअघि उनका सबै सरकारी अभिलखहरु कैलासकूट भवनबाटै प्रसारित भएका थिए।

यसरी नरेन्द्रदेवले ई ६६५ देखि ६७९ सम्म प्रशासनको केन्द्र कैलाशकुटभवनबाट भद्राधिवासभवनमा सारेको थाहापाइन्छ। भद्रासन शब्दले राजगद्दीलाई अर्थ्याउने हुनाले नरेन्द्रदेवले यो दरबार बनाएपछि यसै दरबारमा आफ्नो गद्दी पनि सारेका थिए भन्ने धनवज्र बज्राचार्यले अर्थ गर्नु भएको छ (ऐजन: ४९१)। यो विचार मान्ने हो भने नरेन्द्रदेवले आफूले कति परिश्रम गरेर फिर्ता पाएको गद्दीलाई महत्व दिएर त्यसैको नाममा दरबार पनि बनाएको कुरा बुझिन्छ। गद्दी फिर्ता लिएर राजा भएपछि उनले



कैलाशकुटभवनमै बस्न बाध्य हुनुपरेको थियो। एक त उनका पिता उदयदेव कैलासकूटभवनमै बसेका थिए यसैले उनको केही भावनात्मक सम्बन्ध त्यस दरबारसँग रहेको थियो। तर विद्रोही जिष्णुगुप्त र विष्णुगुप्तले त्यसै दरबारलाई कब्जामा पारेर आफ्नो वासस्थान बनाएकाले सो इतिहासप्रति नरेन्द्रदेवको रीस रहेको हुनु स्वाभाविक छ। यस्तै कारणले नरेन्द्रदेवले आर्कै दरबार बनाएको हुनुपर्दछ र आफ्नो जीवनको अन्तिम समय उनले यसै नयाँ दरबारमा बिताएको देखिन्छ।

यो दरबार कहाँ बनेको थियो यसबारेमा कुनै सूत्र पाइँदैन। शंकरमान राजवंशीले यो दरबार उपत्यकाको उत्तरपूर्वी भेकमा मनहराको किनारामा कतै (डुमाखाल भेकमा ?) रहेको अनुमान गर्नुभएको छ (राजवंशी, २०३७: ८-९)।

गोपालवंशावलीमा एक जना नरेन्द्रदेव नामका राजाले पशुपति भेकमा 'त्रिपुर' नामको 'पुर' वा दरबार बनाएको उल्लेख गरिएको छ (बज्राचार्य, मल्ल १९८५: २९)। भाषावंशावलीमा नरेन्द्रदेव नामका राजाले बानेश्वर भेकमा दरबार बनाएका कुरा लेखिएको छ (पौडेल, २०२०: ८०-८१)। यस विषयमा बढी अनुसन्धान हुनु जरुरी छ जस्तो लाग्दछ।

आफ्नो अन्तिम समयमा नरेन्द्रदेवले दरबार फेरेको घटनाको के ऐतिहासिक महत्व छ त्यसको ठीक व्याख्या गर्न नसकिए झैं उनका उत्तराधिकारी शिवदेव द्वितीयले फेरि कैलासकूटभवनलाई आफ्नो दरबार बनाएका कुरा उनका अभिलखहरुले बताएको कुराबाट के अर्थ लाग्न सक्दछ हाल केही भन्न सकिएको छैन।

यो भद्राधिवासभवनका निर्माताका रुपमा नरेन्द्रदेवको निर्माता व्यक्तित्वसाथै महत्वाकांक्षा पनि स्पष्ट हुन्छ।

### नरेन्द्रदेवको धार्मिक नीति

नरेन्द्रदेवसम्बन्धी अभिलेखहरुको संख्या त्यति धेरै छैन तर प्राप्त अभिलेखहरुबाट पनि उनको धार्मिक विश्वास, राजकीय नीति र व्यवहार आदि धेरै कुराहरु जान्न सकिन्छ। यहाँ यस विषयमा छोटकरी चर्चा गरिन्छ।

#### शैव-पाशुपत :

अंशुवर्माको समयदेखि राजाले पशुपतिनाथको भक्ति जनाउने विरुद्ध 'भगवत्पशुपति भट्टारकपादानुगृहीत:' लिन थालेदेखि उदयदेव, जिष्णुगुप्त र विष्णुगुप्तहरुले पनि सो चलन कायम गरेकोमा नरेन्द्रदेवले पनि सो चलन कायमै राख्नु उचित देखेको बुझिन्छ। उनले प्रसारित्त गरेका सबै अभिलेखहरुमा सो विरुदको प्रयोग भएको पाइन्छ।

आफ्नो पुरुषार्थको बलले राज्य फिर्ता लिएपछि पहिलेको चलन कायम गर्नु र नगर्नुमा नरेन्द्रदेवलाई स्वतन्त्रता थियो। त्यस्तो स्वतन्त्रताको अवस्थामा

पनि उनले सो उपाधि कायम गरेको देख्दा उनको पशुपतिनाथप्रति भक्तिभाव रहेको कुरा प्रमाणित हुन्छ । उनका ई ६७९ का दुई अभिलेखमा नरेन्द्रदेवले पशुपति क्षेत्रमा अनेक ठूलाठूला धारा बनाएको सन्दर्भको चर्चा माथि गरिसकिएको छ । गोपालवंशावलीमा नरेन्द्रदेवले पशुपतिमा सुनधारा बनाएको चर्चा माथि गर्नसाथै उनले पशुपतिनाथलाई अनेक रत्नसहितको विचित्र कोष बनाई चढाएको (राजा श्री नरेन्द्रदेव... तेन श्रीपशुपतिभट्टारकाय अनेकरत्नविधित्रकोषं कृतम प्रढोक्तिम् । तत्रैव सुवर्णपनालिका) उल्लेख पनि पाइनाले हिटी बनाएको समयमै सो 'कोष' पशुपतिनाथलाई चढाएको हुनु सम्भव छ ।

व्यवस्थाप्रेमी राजा हुनाले नरेन्द्रदेवले दक्षिणकोलीग्रामद्रंग भेकमा रहेको "मानेश्वर" अन्तर्गतको भुवनेश्वर मन्दिरको गुठी हरिएकोमा सो को फेरि बन्दोबस्त गरिदिएको कुरा उनको ई ६४३ को यंगालहिटीको अभिलेखबाट थाहा पाइन्छ (वज्राचार्य, २०३०: ४६४) ।

अंशुवर्मा -जिष्णुगुप्तको समयमा यहाँ पाशुपत सम्प्रदायहरुको गतिविधि बढ्दै जान थालेको पृष्ठभूमिमा नरेन्द्रदेवको समयमा पनि पाशुपातहरुको गतिविधि बढेको र त्यसमा पनि आवश्यक सहयोग दिएको थाहा पाइन्छ । ललितपुर गैह्रीधाराको ई ६५९ को अभिलेखमा महाप्रतिहार चन्द्रवर्मालि पशुपतिमा वाग्मतिको पूर्वतर्फ (मृगस्थली?) भगवान वज्रेश्वर मण्डली (मठ) लाई केही जग्गा गुठी राखी उक्त मण्डली र गुठी जग्गामा पनि अड्डाखानाले पस्न नपाउने व्यवस्था मिलाउन राजालाई विन्ति गरेकोमा सो व्यवस्था गरिदिएको कुरा सो अभिलेखबाट थाहा पाइन्छ (ऐजनः ४८१ -८२) । सो वज्रेश्वर मण्डली पाशुपतहरुकै मण्डली (मठ) रहेको बुझिन्छ ।

देउपाटनको ई ६४५ को एक अभिलेखमा सुवर्णगोभिनी नामकी ब्राह्मण महिलाले दानपाशुपात सम्प्रदायका आचार्य दक्षिणतिलडुकलाई केही जग्गा दान गरेको र ती आचार्यले सो जग्गा दानपाशुपत सम्प्रदायका जोगीहरुलाई बिरामी भएमा उपचार गर्ने बन्दोवस्तका लागि दान दिएको कुरा परेको छ (ऐजनः ४७२) । ती दातृ महिलाले राजा नरेन्द्रदेवको नाम आफ्नो अभिलेखमा सम्मानसाथ उल्लेख गरेकी छन् ।

नरेन्द्रदेवका अन्तिम कालका दुइ अभिलेखबाट उनले पशुपतिक्षेत्रमा अनेक हिटीधारा (महाप्रणाली) बनाएको वर्णन पाइन्छ । ई ६७९ मितिका पाटन यागबहाल र पशुपति वज्रघरको अभिलेखमा आफूले बनाएका ती हिटीधारासम्बन्धी बन्दोवस्तका लागि उनले दुइटा गाउँ शिवदेवविहारका आर्यभिक्षुसंघलाई दिएको कुरा लेखिएको छ (वज्राचार्य, २०३०: ४९६, ४९९) ।

गोपालवंशावलीमा पनि नरेन्द्रदेवले पशुपतिमा सुनधारा (सुवर्णपनालिका) बनाएको वर्णन पाइन्छ (वज्राचार्य, मल्ल १९८५: ७७) ।

माथि चर्चित अभिलेखमा प्रणाली वा प्रणालिका मात्रै नभनी "महाप्रणाली" भनिएकोले ती हिटीधारा ठूला ठूला बनेका थिए भन्ने बुझ्न सकिन्छ । ती हिटीधाराको रेखदेख र मरम्मत आदिको निरन्तर सुव्यवस्था होओस् भन्ने



उद्देश्यले नरेन्द्रदेवले शिवदेव विहारको भिक्षुसंघलाई दुइटा गाउँ नै जिम्मा लाइदिएको देख्दा उनको व्यवस्थाप्रियता पनि स्पष्टिन्छ ।

आफ्नो अन्तिम कालमा नरेन्द्रदेव शैवधर्मतिर विशेष रुपले लागेको कुरा उनको ई ६७९ का दुइ अभिलेखमा उनको नामसाथ पारम्परिक पाशुपत उपाधिसाथै "परममाहेश्वर" को थप धार्मिक उपाधि पनि लेखिएकोले बुझ्न सकिन्छ (ऐजनः ४९६, ४९९) यो थप धार्मिक उपाधिको के महत्व छ भन्ने कुरा स्पष्ट छैन । दार्शनिक ग्रन्थहरुमा माहेश्वर नामले प्रसिद्ध एक शैवसम्प्रदायको वर्णन पाइन्छ जसलाई रसेश्वर दर्शन पनि भनिएको छ । यो दर्शनमा पारोको शास्त्रोक्त विधिले संस्कार गरेपछि खानाले सिद्ध भइने सिद्धान्तको वर्णन गरिएको पाइन्छ । त्यस्तै सुसंस्कृत पारोमा फलाम छुवाएमा सुन हुन्छ भन्ने वर्णन पनि पाइन्छ (आपटे १८९४: ७८-८३) । यो रसेश्वर सम्प्रदायलाई कसैले नाथसम्प्रदायसँग तादात्म्य गरिएको देख्दा (भट्टराय २०३५: ८२) नरेन्द्रदेव नाथ सम्प्रदायतिर लागेको पनि मान्न सकिन्छ ।

**वैष्णव**

आफ्नो अनन्तलिंगेश्वर अभिलेखमा नरेन्द्रदेवले हंसगृहद्रंगक्षेत्रमा स्थापित भगवान लोकपालस्वामि नारायणस्थानको गुठी जग्गा राखिएको पहिलेको सनद हराएकोले आर्को सनद रुपकपो अभिलेख लेखाई राखेको कुरा लेखिएको छ (ऐजनः ४८५-८७) । अभिलेख खण्डित भए पनि बाँकी पढ्न सकिने विवरणबाट एक वैष्णवमन्दिरमा वर्षभरि आयोजना हुने नित्य नैमित्तिक पूजा र जात्रासम्बन्धी कुरा थाहा पाइन्छ । प्राचनि संस्कृतिको एक दुर्लभ उदाहरणको रुपमा यो अभिलेखलाई लिन सकिन्छ । हुन त यो व्यवस्था पहिलेका कुनै राजाले गरेका थिए तर त्यससम्बन्धी सनद हराएकोले आम्दानीमा प्रभाव परी पूरा व्यवस्था टुट्ने स्थिति आएकोमा यो अभिलेख प्रसारित गरी नरेन्द्रदेवले पुरानो व्यवस्थालाई सुदृढ पारेको बुझिन्छ । यस रुपमा प्राचीन वैष्णव परम्परालाई कायम राख्न नरेन्द्रदेवले राम्रो योगदान गरेको देखिन्छ ।

**बौद्ध**

नेपालका अधिकांश शासकहरुले आफू कट्टर सनातनी वा त्यसकै कुनै सम्प्दायका अनुयायी भए पनि आफ्नो राज्यका धेरै बासिन्दाको विश्वाससँग गाँसिएको बौद्धधर्मलाई व्यावहारिक रुपले पनि उपेक्षा गर्न सक्दैनथे । त्यसमाथि पनि बौद्धधर्मका सबै किसिमका शाखाहरुमा आकर्षण र प्रेरणाका कति महत्वपूर्ण तत्व हुनाले शासक र भारदार तथा उच्च र निम्न वर्ग सबैलाई कुनै न कुनै रुपमा भावनात्मक प्रभाव पर्न गएको अनुभव हुन्छ । यस्तो यथार्थता हुँदा धेरै व्यवस्था र प्रजाप्रेमी राजाहरुले नगद वा गुठी जग्गा थप्ने गरेको उदाहरण प्राचीन र मध्यकालको इतिहासमा थुप्रै पाइन्छन् । नरेन्द्रदेवले पनि शिवदेव विहारलाई आर्थिक आधार हुने बन्दोवस्त गरेको थाहा पाइएको छ । ई ६७९

का दुई अभिलेखमा आफूले पशुपतिक्षेत्रमा बनाएका हिटीधाराहरुको रेखदेख र बन्दोवस्तको जिम्मा शिवदेव विहारको आर्यभिक्षुसंघलाई दिएको र त्यस कामको लागि आर्थिक स्रोतको रुपमा दुइटा गाउँ दान दिएको कुरा लेखिएको छ (वज्राचार्य, २०३०: ४९६, ४९९) ।

यी उदाहरणबाट नरेन्द्रदेवले एकातिर आफूले बनाएका हिटीधाराहरुको सुव्यवस्था गरेको थाहा पाइन्छ भने त्यो उद्देश्य पूरा गर्न राजा शिवदेव (आफ्ना बाजे) ले स्थापना गरेको विहारको भिक्षुसंघलाई एउटा आर्थिक आधार पनि दिएको तथ्य बुझ्न सकिन्छ ।[१३]

**शिवदेव द्वितीय ( ई ६८५-७०५):**

राजा नरेन्द्रदेवका अन्तिम अभिलेखमा "भट्टारकश्री" को उपाधिसाथ देखिने शिवदेवले ई ६७९ तिरदेखि आफ्ना पिताका युवराजका रुपमा काम गर्न थालको देखिन्छ ।

शिवदेव द्वितीयले प्रसारित गरेका जम्मा पाँच शिलालेख हालसम्म प्रकाशित भएका छन् तिनमा संवत् ११९, १२१, १२२ र १२९ लेखिएका छन् र यसरी हेर्दा नरेन्द्रदेवको अन्तिम ज्ञात मिति संवत् १०३ र शिवदेवको पहिलो ज्ञात मिति संवत् ११९ को बीचमा सोह्र वर्ष जतिको व्यवधान रहेको छ । यद्यपि सो को बीचमा जनतातर्फबाट लेखाई राखिएका संवत् १०९ र ११८ का अभिलेख पाइएका छन् । अभिलेखका उक्त मितिहरुको विचार गर्दा पनि नरेन्द्रदेवको अन्तिम प्रमाणको ई ६७९ शिवदेवसम्बन्धी पहिलो अभिलेखको मिति ई ६८५ को बीचमा पनि ६ वर्ष जतिको अन्तर देखिन्छ । त्यही अन्तरमा नरेन्द्रदेवको स्वर्गवास भई शिवदेवले राजगद्दी पाएको अनुमान गर्न सकिन्छ । माथि चर्चित अन्तरालको काललाई लिच्छविकालको एक स्वाभाविक कुराको रुपमा मात्रै लिने कि कुनै राजनीतिक संकटको अवस्था पनि मान्ने भन्ने कुरामा केही भन्न सक्ने स्थिति छैन । नरेन्द्रदेवले घोषित गरेकै युवराजले गद्दी सँभालेको स्वाभाविक स्थिति देखिनाले त्यस्तो कल्पना गर्नु अतिशयोक्ति पनि हुन सक्दछ ।

शिवदेव द्वितीयले आफ्ना पिता नरेन्द्रदेवले लिएजस्तै "परमभट्टारकमहाराजाधिराज" उपाधि लिएका छन् (ऐजन: ५१४, ५३०) तर जनतातर्फबाट ई ६९४ मा राखेको अभिलेखमा भने उनीलाई "राजाधिराजश्री" मात्रै लेखिएको छ (ऐजन: ५१२) जुन लिच्छविकालको लागि एकदम नौलो कुरा हो ।

एउटा अभिलेखमा शिवदेव द्वितीयले आफूलाई "लिच्छविकुलानन्दकेतु:" (लिच्छवि कुललाई आनन्द दिने झण्डास्वरुप भएका) भन्ने उपाधि लिएका छन (ऐजन: ५३०) र आर्कोमा "लिच्छविकुलकेतु:" (लिच्छविकालका झण्डा) (ऐजन: ५१९) ।



नरेन्द्रदेवले लिएको "परममाहेश्वर" को उपाधि यिनले कायम गरेका छैनन । व्यक्तिगत माहात्म्यको रुपमा उनीले ई ६९५ को लगनटोलको अभिलेखमा "लक्ष्मीरुपी लहराको आड लिने कल्पवृक्ष जस्ता भएका " (लक्ष्मीलतालम्बन-कल्पपादप:) भन्ने विरुदावली लिएका छन् (ऐजन: ५१४) । यसै गरी उनीले भृंगारेश्वरको ई ६९७ को अभिलेखमा "बेरोकटोक हुकम चलेका " (अव्याहतशासन:) र "वर्णाश्रमसम्बन्धी स्थितिबन्देज राम्ररी बाँधेका (सुविहित्तवर्णाश्रमस्थिति:) को विरुदावली लिएका छन् (ऐजन: ५१९) । ई ७०५ को बलम्बू अभिलेखमा पनि "सम्पूर्ण वर्णाश्रमव्यवस्था राम्ररी लागू गरेका " (सम्यग्विरचित्त सकलवर्णाश्रमिव्यवस्थ:) र "सारा सामन्तहरुका शिरले पाउका नङ झल्झल टल्कने पारिएका (समस्तसामन्तशिरसा खरीकृतचरणनखमयूखसमूह:) का विरुदावली लेखाएका छन् (ऐजन: ५३०) ।

अभिलेखहरुले व्यक्त गरेका यस्ता विवरणबाट शिवदेव द्वितीय शक्तिशाली शासककै रुपमा देखा पर्दछन् ।

शिवदेव द्वितीयको महिमा जयदेव द्वितीयले आफ्ना पशुपतिको वंशावलीमा पनि बताएका छन्:

> धेरै सम्पत्ति भएका, न्यायले कमाएको धन दान दिने, शत्रुहरुको
> समूहलाई जित्ने, बन्धुवर्गलाई सन्तुष्ट पार्ने, व्यवस्थापूर्वक राम्ररी
> प्रजाको रक्षा गर्ने, आश्रयमा रहेका सज्जनहरुको आपत्ति हेर्नु,
> सत्यवादी र लोकले मानिएका श्री शिवदेव भन्ने राजा हुनुभयो । [१४]

जयदेव द्वितीयले आफ्ना पिताको माहात्म्यको रुपमा लेखिदिएको यो वक्तव्य र स्वंय शिवदेवका अभिलेखले बताएका कुरामा खास अन्तर छैन । तर यहाँ "शत्रुहरुको समूहलाई जित्ने" (जेता द्विषत् संहते:) भनेर कुनै विशेष घटनालाई संकेत गरेको हो कि साधारण अभिव्यक्ति मात्र हो यसबारेमा केही भन्न सक्ने प्रमाणको अभाव छ ।

गोपालवंशावली र संक्षिप्त गोपालवंशावलीमा पनि शिवदेव द्वितीयको संक्षिप्त इतिहास दिइएको पाइन्छ । गोपालवंशावलीमा शिवदेव द्वितीयले पशुपतिनाथलाई चाँदीको कमल बनाएको, "नन्दिसालाविहार" थापेको र "भिक्षुभोज्य सत्र" बनाएको कुरा लेखिएको छ (वज्राचार्य, मल्ल, १९८५: ३०) ।[१५] एकथरी संक्षिप्त गोपालवंशावलीमा पनि उनी राजा शिवदेवले "भिक्षुहरुलाई सुख दिई राखेको" र "शास्त्रार्थ आदि पनि गराइयो " भनिएको पाइन्छ (वज्राचार्य, १९७७: ११९, १२४) । यही कुरा आर्कोथरी संक्षिप्त गोपालवंशावलीमा पनि उल्लेख गरिएको पाइन्छ (रेग्मी, २०४६: ५) ।

वंशावलीहरुले प्रस्तुत गरेका उक्त सन्दर्भहरुको व्याख्या सम्भवत: शिवदेव द्वितीयको ई ६९५ को लगनटोल अभिलेखले गरेको छ जसमा उनी राजाले आफ्ना मातापिता र आफ्नो पुण्यको लागि स्थापना गरेको शिवदेवेश्वर महादेव मन्दिरको टुटफुट भएमा मरम्मत गर्नाको लागि एक गाउँ बशपाशुपत

सम्प्रदायका आचार्यहरुलाई दिइएको कुरा लेखिएको छ (वज्राचार्य, २०३०: ५१४-१५) ।

यो अभिलेखले राजाद्वारा स्थापित शिवमन्दिरसँग सम्बन्धित देखिने वश नामको पाशुपत सम्प्रदायका आचार्यहरुकोबारेमा संकेत गरेको र आचार्यहरुलाई मन्दिरको टूटफूट भएमा मरम्मत गर्ने कामको जिम्मा दिएको उल्लेख भएको छ। ती पाशुपत आचार्यहरुलाई मन्दिरमा पूजा आजा र सो सम्प्रदायको संगठनको लागि ती राजाले अन्य गाउँको पनि दान दिएको हुनुपर्दछ जुनको प्रमाणरुप अभिलेख हामीले पाउन सकेका छैनौं । त्यस्ता आयस्ताको बन्दोवस्त गरी पाशुपतहरुलाई नित्यभोजनको व्यवस्था गरेको हुनुपर्दछ जसलाई माथि चर्चित वंशावलीको वक्तव्यमा "भिक्षुहरुको भोजनको लागि सदावर्तको बन्दोवस्त गरेको" भनिएको छ । नन्दिशालाविहार भनिएको पनि शिवदेवेश्वरमन्दिरलाई संकेत गरेको हुनुपर्दछ जस्तो लाग्दछ । शास्त्रार्थ आदि गराइयो भन्ने आर्को सन्दर्भले पनि त्यस बेला धार्मिक सम्प्रदायहरुका बीच शास्त्रार्थ भएको अनुमान गर्न सकिन्छ । तर त्यस्तो शास्त्रार्थमा कुन कुन सम्प्रदाय संलग्न थिए केही भन्न सकिदैन ।

माथि चर्चित सन्दर्भबाट राजा शिवदेव द्वितीयले शिवमन्दिर थापी त्यसको पूरापूर बन्दोवस्तबारे विचार राखेको र त्यस कालमा संगठित हुन आएको नवीन सम्प्रदाय वशपाशुपत सम्पद्रायलाई पनि सोही मन्दिरसंग सम्बद्ध गराएर उक्त दुवै संस्थालाई राजकीय संरक्षण दिएको कुरा बुझ्न सकिन्छ ।

ई ७०५ को बलम्बू अभिलेखबाट शिवदेव द्वितीयले धार्मिक क्षेत्रमा अन्य कार्यहरु गरेको थाहा पाइन्छ । पुत्तीनारायण नामले कहलिएको कुनै नारायणमन्दिरसम्बन्धी गुठी जग्गा पहिले कुनै शासकको पालामा हरण भई दरबार (राजकुल) ले भोगचलन भई देवस्वको दुरुपयोग भएकोमा सो गुठी जग्गा फेरि सोही मन्दिरको काममा लगाउन राजाज्ञा प्रसारित गरी सो जग्गा शीताटीद्रंगका बासिन्दाहरुको जिम्मा लगाइएको कुरा त्यस अभिलेखमा वर्णन गरिएको छ (वज्राचार्य, २०३०: ५३०-५३२) ।[१६] शीताटीद्रंगका बासिन्दाहरुले पनि उक्त नारायणमन्दिरको टूटफुट भएमा मरम्मत र कारण पूजा (नैमित्तिक पूजा) गर्ने र बांकी पैसाले राजाको पुण्यको लागि वर्षेनी पशुपतिनाथलाई सुन्दर छाता चढाउने र त्यस उपलक्ष्यमा राम्रो जात्रा पनि गर्नुपर्ने र बाँकी बचेको आयस्ता आफैले बाँडेर लिने व्यवस्था गरेको छ ।[१७]

शिवदेव द्वितीयको विवाह समकालिक उत्तर भारतका मौखरिराजा भोगवर्माकी छोरीसँग भएको कुरा पशुपति अभिलेखमा लेखिएको छ । तिनको नाउँ वत्सदेवी भनेर त्यहाँ लेखिएको छ । उनी मगधका राजा आदित्यसेनकी छोरीकी छोरी (दौहित्री) थिइन् भनेर पनि अभिलेखमा वर्णन गरिएको छ :

उहाँ राजा (शिवदेव) ले बाहुबलले युक्त भएका मौखरिकुलका "श्रीवर्मचूडामणि" भन्ने प्रशस्तिले प्रख्यात भई शत्रु राजाहरुलाई लज्जित पारेका



श्री भोगवर्माकी छोरी, मगधका ठूला राजा श्री आदित्यसेनकी दौहित्री, लक्ष्मीजस्ती श्रीवत्सदेवीसँग आदरपूर्वक विवाह गर्नुभयो ।[१८]

यो श्लोकमा "मगधका ठूला राजा" भनिएका आदित्यसेन "परवर्ती गुप्त" (Later Guptas) वंशका राजा हुन् भन्ने थाहा पाइन्छ र उनी ई ६७० तिर राजा भएका हुन् भन्ने इतिहासकारहरुको विचार छ (मजुमदार, १९६२ १२७) । तर उक्त श्लोकमै चर्चित मौखरिकुलका भोगवर्मा भारतीय इतिहासको पानामै अज्ञात तथा विवादास्पद सिद्ध भएका छन् र तिनको परिचयको खोजी नेपालकै ऐतिहासिक सामग्रीमा गर्न खोजिएको छ । यी भोगवर्मालाई अंशुवर्माका भानिजका रुपमा चर्चित सोही नामसँग तादात्म्य गर्ने प्रयास इतिहासकारहरुले गरेको पाइन्छ । यस विषयमा माथि अंशुवर्माको प्रकरणमा भोगवर्माबारे विचार गर्दा विचार गरिएको छ । यो विवाह सम्बन्धबाट नरेन्द्रदेवले आभीरगुप्त र लिच्छविको संयुक्तशासन हटाउन सहयोग प्राप्त गरेको अनुमान गरिएको छ ।

शिवदेव द्वितीयको ई ६९५ को लगनटोलको अभिलेखमा उल्लेख भएको "भोट्विष्टि" (वज्राचार्य, २०३०: ५१५) ले इतिहासकारहरुमा ठूलो मतभेदको स्थिति ल्याएको छ । सो सन्दर्भले शिवदेव द्वितीयलाई वर्षेनी तिव्वतलाई कर तिर्नुपर्ने स्थितिमा रहेको अर्थ इतिहासकारहरुले गरेका छन् । नरेन्द्रदेवदेखिको इतिहासलाई जोडेर त्यतिखेर नेपाल तिव्वतको अधीनमा थियो र पछि शिवदेव द्वितीयले विद्रोह गरी नेपालाई स्वतन्त्र पारेको कुरा इतिहासकारहरु मान्दछन्।

बाबुराम आचार्यले यो भोट्विष्टिको अर्थ यसरी गर्नुभएको छ - नरेन्द्रदेवका समयमा भोटसँग बलियो मित्रसम्बन्ध कायम भएको हुनाले भोटमा आवतजावत गर्ने यात्रुहरुका सुविस्ताका निमित्त सीमानाका दुर्गम स्थानमा नेपालको रैतीबाट भरिया उठाई राखिदिने प्रबन्ध गरिदिएका थिए । भोटपट्टिबाट पनि यो किसिमको प्रबन्ध भएको हुंदो हो (आचार्य, २०३७: ३) ।

धनवज्र वज्राचार्यले सरकारी कामको लागि विदेश जान पर्दा "विष्टि" अथवा भाराको रुपमा भरियाहरु उठाउने चलन त्यस कालमा थियो । भोट्विष्टिको सन्दर्भले त्यसताका भोटसँग नेपाल सरकारको राम्रो सम्बन्ध रहेको थियो भन्ने कुरा मात्र सिद्ध हुन्छ । त्यस बेला नेपाल भोटको वशवर्ती थियो भन्ने कुरा सिद्ध हुँदैन भन्नु भएको छ (वज्राचार्य, २०३०: ५१७) ।

केही पूर्ववर्ती इतिहासकारहरुले चिनियाँ स्रोतको व्याख्या गर्दै नरेन्द्रदेवलाई तिव्वती शासकको अधीनमा मानेका छन् । उनीहरुको तर्क छ- नरेन्द्रदेवका छोरा शिवदेव द्वितीयले तिव्वतलाई तिर्ने गरिएको कर दिन छोडिदिए । यो कारणले तिव्वतले ई ७०३ मा नेपालमाथि आक्रमण गऱ्यो जसलाई शिवदेव द्वितीयले विफल पारिदिए । यो घटना भएको दुई वर्षपछि ई ७०५ मा तिव्वतले नेपालमाथि फेरि आक्रमण गऱ्यो । यसपालि पनि शिवदेव द्वितीयले तिव्वती आक्रमणको कड़ा प्रतिरोध गरे जसको फलस्वरुप युद्धमा तिव्वती राजा मारिए । यसरी शिवदेव द्वितीयले नेपाललाई तिव्वती अधीनबाट स्वतन्त्र पारे (भा, १९७०: १६७) ।

नरेन्द्रदेवपछि शिवदेव दोस्रा राजा भए तर त्यसबेला स्रङ चङ गम्पोका उत्तराधिकारीहरु बलियो हुँदै आएकाले नेपाललाई आफ्नो अधीनमा ल्याउने चेष्टा गर्न थालेका थिए । स्वाधीनताको लागि शिवदेव उठे, भोटबाट ठूलो फौज आयो र नेपालको राजधानीमा आक्रमण गर्दा शिवदेव हटेका हुनाले तिब्बती फौजले कैलासकूटभवन तोडेर ध्वस्त पारिदिए । पछिबाट जितबाजीले मात्तिएका तिब्बतीहरुमाथि नेपाली फौजले आक्रमण गरेर लघार्दै ब्रह्मपुत्रसम्म लखेटे । यस युद्धमा भोटका राजा चिनुश सलैंग पनि मारिएका थिए । सो घटना ई ७०५ मा भएको हो भन्ने बाबुराम आचार्यको भनाई छ (आचार्य, २०३०: ३) ।

काशीप्रसाद जायसवालले पनि ई ७०३ मा नेपाल र तिब्बतको बीच संघर्ष भएको र ई ७०५ मा भएको युद्धमा तिब्बतका राजा चिनुश सिलुंग (Chinush Silung) मारिएको कुरा मान्नुभएको छ (जायसवाल, १९३४: २२, जायसवाल, १९७६: ८३) ।

रमेशचन्द्र मजुमदारले पनि यस्तै विचार गर्नुभएको छ । उहाँको भनाईमा यस कालमा तिब्बती राजाहरु निकै बलिया थिए र उनीहरुले निश्चयनै नेपालमाथि कुनै किसिमको हैकम चलाएका थिए, यद्यपि उनीहरु नेपाल राज्यको आन्तरिक मामिलामा कुनै किसमको हस्तक्षेप गर्दैनथे । नेपालले ई ७०२ मा तिब्बतविरुद्ध विद्रोह गरेको थियो तर फेरि जितिन पुगेको थियो । शिवदेव द्वितीयको उक्त अभिलेखमा भोक्तविष्टि अथवा भोटलाई तिर्नुपर्ने करको उल्लेख भएको छ (मजुमदार, १९६१ १३८) ।

मूल चिनियाँ स्रोतको संक्षिप्त तर गहन विश्लेषणमा पेटेकले उक्त ई ७०३ र ई ७०५ का घटनाको कुनै सम्बन्ध नेपालसँग नभएको निष्कर्ष दिनुभएको छ (पेटेक १९८४:२५) । ई ६१५ पछि नै नेपालमा तिब्बतको प्रभाव कम हुन थालेको कुरा पनि उहाँ मान्नुहुन्छ ।

**जयदेव द्वितीय ( ई ७१३-७३३)**

शिवदेव द्वितीयका ई ६९५ देखिका अभिलेखहरुमा ती राजाका उत्तराधिकारी र युवराजका रुपमा जयदेव द्वितीयको उल्लेख पाउन थालिन्छ । सर्वप्रथम ई ६९५ को अभिलेखमा दूतकका रुपमा यिनलाई 'राजपुत्र' मात्र लेखिएको छ (वज्राचार्य, २०३०: ५१५) र यही रुप अरु दुई अभिलेखहरुमा पनि पाइन्छ (ऐजन: ५२०, ५२८) । ई ७०५ को अभिलेखमा यिनैलाई 'श्रीजयदेवो भट्टारक' भनिएको पाइन्छ भने (ऐजन: ५३२) आर्को मिति खण्डित अभिलेखमा 'भट्टारकश्रीजयदेव' लेखिएको छ (ऐजन: ५७३) । युवराजका रुपमा पनि यिनलाई प्रयोग भएको उपाधिमा किन यस्तो विविधता रहेको हो यसको ठीक जवाफ दिन सकिएको छैन ।

माथिको विवरणमा जयदेवलाई 'राजपुत्र' भनिएकोमा 'राजपूत' सम्बन्धी तात्कालिक धारणाको प्रभाव हो कि भन्न सकिन्छ । तर यसबारे स्पष्ट विवरण दिन सकिएको छैन । १९



शिवदेव प्रथमदेखि जयदेव द्वितीयसम्म

शिवदेव प्रथम
|
उदयदेव
|
नरेन्द्रदेव
|
स्कन्ददेव — शौर्यदेव — शिवदेव द्वितीय
|
जयदेव द्वितीय
|
विजयदेव

शिवदेव द्वितीयको अन्तिम ज्ञात मिति ई ७०५ र जयदेव द्वितीयको पहिलो ज्ञात मिति ई ७१३ को बीचमा आठ वर्ष जतिको अन्तर छ । यो अन्तरको कुन वर्षमा जयदेव राजा भए भन्ने कुरा बुझ्न सकिएको छैन । पहिलेदेखि नै युवराज घोषित गरिसकिएको हुनाले उक्त कालान्तरले पनि जयदेवको उत्तराधिकारमा कुनै खलबल परेको कल्पना गर्न सकिंदैन ।

जयदेव द्वितीयले आफ्नो शासनकालमा प्रसारित गरेका ७ ओटा शिलालेख पाइए पनि तिनमध्ये ४ ओटा खण्डित हुनाले[२०] बाँकी तीनबाट उनको शासनकालमा सं १३७, १४७ र १५७ मितिहरु थाहा पाइन्छन् । यी मितिहरुले

उनको शासनकालको मुख्य अवधि संवत् १३७ (ई ७१३) देखि संवत् १५७ (ई ७३३) सम्म २० वर्ष रहेको देखिन्छ ।

जयदेव द्वितीयका शिलालेखहरु निकै खण्डित छन् तर सग्ला भागबाट उनका उपाधि र विरुदावलीबारे केही कुरा थाहा पाइन्छ ।

उनका विरुदावलीमध्ये वंशसम्बन्धी दुइटा सन्दर्भ पाइन्छन् । एकमा उनले 'लिच्छविकुलाम्बरचन्द्र' (लिच्छविकुलरुपी आकाशका चन्द्रमा जस्ता) लेखाएका छन् (बज्राचार्य, २०३०: ५७८) भने आर्कोमा 'लिच्छविकुलकेतु' लेखाएका छन् (ऐजन: ५७३) ।

उनको एक अभिलेखमा उनको विरुदावलीमा 'अप्रतिहतधर्मशासन:' लेखिएको छ जसको अर्थ "बेरोकटोक न्यायपूर्वक शासन चलाएको" भन्ने हुन्छ (ऐजन: ५७३-७४) । उनका पालाका दुइटा अभिलेखमा न्यायव्यवस्थासम्बन्धी विवरण लेखिएको हुँदा जयदेवले लिएको उक्त विरुद सार्थक रहेको बुझ्न सकिन्छ । नक्साल नारायणचौरमा रहेको विशाल र विस्तीर्ण अभिलेख खण्डित भए पनि लिपि र वक्तव्यको आधारमा जयदेव द्वितीयले प्रसारित गरेको मानिएको छ (ऐजन: ५६३-५६७) । यसमा न्यायव्यवस्थासम्बन्धी विवरण परेको छ । तर शुरु र अन्त्यको भाग चित्त दुख्दो गरी खण्डित र अपठनीय भएकोले लिच्छविकालको एक महत्वपूर्ण प्रमाणको पुरापुर उपयोग गर्न अप्ठेरो छ । जयदेवले प्रसारित गरेको ज्ञानेश्वरको अभिलेखमा पनि न्यायव्यवस्थासम्बन्धी विवरण परेको छ (ऐजन: ५७३-७४) । तर यो पनि ज्यादै खण्डित र खिइएको अवस्थामा हुँदा यसका वक्तव्यको सिलसिला मिलाउन गाहारो परेको छ । तर यिनको संवत् १५७ (ई ७३३) को पशुपति अभिलेखको ठूलो महत्व देखिन्छ जसबाट लिच्छवि वंशावली एवं ऐतिहासिक महत्वका धेरै कुरा बुझ्न सकिन्छ । यो ग्रन्थमा यत्रतत्र यो श्रोतबाट उपयोग गरिएको छ । यो अभिलेखबाट थाहा पाइने जयदेव द्वितीयसम्बन्धी विवरणहरुको चर्चा तल गरिन्छ ।

**व्यक्तित्व र उपलब्धि**

पशुपतिका वंशावली अभिलेखमा बुद्धकीर्तिले जयदेवलाई विभिन्न रुपले अद्वितीय राजाको रुपमा प्रस्तुत गरेका छन् । उक्त अभिलेखको चौधौं श्लोकमा उनको बयान गर्दै भनिएको छ :

> शत्रुलाई जितेका उहाँ राजा (शिवदेव) का वत्सदेवीबाट जन्मेका छोरा श्रीजयदेव प्रख्यात राजा हुनुहुन्छ । उहाँ जित्न नसकिने, दानी, इज्जतको ख्याल राख्ने, ठूलाठूला आँखा भएका, असल स्वभाव भएका, विद्वान्, असल कवि, गुणीजनहरुलाई आश्रय दिने, पुष्ट र ठूलो छाती भएका हुनुहुन्छ । [२१]

> सो अभिलेखको अठारौं श्लोकमा पनि उनको महिमा गाइएको छ–

> "उहाँ श्री जयदेव ठूलो र पवित्र वंशका,
> प्रतापी तथा धेरै पुण्य बटुलेका हुनुहुन्छ।"[२२]



**जयदेवको महत्वाकाङ्क्षा**

कवि बुद्धकीर्तिले पशुपति अभिलेखको लघुकाव्यका नायक (हीरो) को रुपमा जयदेव द्वितीयलाई प्रस्तुत गर्दा निकै परिश्रम गरेका छन् । यसरी प्रस्तुत गर्दा सो अभिलेखको १६ औं श्लोकमा उनले दुई अर्थ लाग्ने जयदेवको वर्णन गरेका छन् । सो श्लोकको सोझो अर्थ यस्तो हुन्छ–

> "अङ्गश्रीले युक्त भएका (जीउडाल मिलेका), कामरुप जितेका (कामदेवभन्दा राम्रा), काञ्चीगुण (मेखलाको सिक्री) बाँधेका आइमाईहरुले टहल गरिएका, सुराष्ट्रको पालना गर्ने कामबारे चिन्ता गरिरहने जुन राजा सार्वभौम (चक्रवर्ती) राजाको चरित्रलाई प्रकट गर्नुहुन्छ ।"[२३]

यसै श्लोकमा देशका नामहरु अङ्ग (भागलपुर) काञ्ची (दक्षिणको काञ्जीवरम) कामरुप (आराम भेक) र सुराष्ट (सौराष्ट, गुजरात भेक) को उल्लेख पनि गरिएकोले ती ती देश जयदेवले जितेको भन्ने दोस्रो अर्थ लाग्दछ।

यो श्लोकको ऐतिहासिक महत्व छैन किनभने जयदेवले त्यतिका देश जितेको हुनु सम्भव छैन । कलमका धनी बुद्धकीर्तिले राजा जयदेवलाई 'सार्वभौम' अथवा सर्वतन्त्र स्वतन्त्र राजा छन् भन्ने कुरालाई माथिल्लो तहको काव्यात्मक आलंकारिक भाषामा त्यस्तो अभिव्यक्ति गरेका छन् । त्यसबेला पनि नेपाल स्वतन्त्र थियो, कसैको अंकुश थिएन भन्ने कुराचाहिं यो अभिव्यक्तिले अझ पुष्ट गरेको छ ।

जयदेव स्वतन्त्र राजा मात्रै हैन मौका परे अरुको देश जित्ने मनसुवा पनि राख्दथे भन्ने कुरा उक्त अभिलेखको सत्रौं श्लोकमा बुद्धकीर्तिले यसरी वर्णन गरेका छन:–

> "प्रशस्त सुख पाएका ब्राह्मणहरुले होमिएको घिउको आहुतिका ज्योतिले पैदा भएका ज्वाला मर्कनाले सारा प्रजाको विपत्ति र रोग हटाइएको, आफ्नै बाहुबलको आडले बढाइएको राज्यलाई निष्कण्टकपूर्वक चलाउने भएका जुन राजा (जयदेव) शूरा हुनाले 'परचक्रकाम' (अरुको मुलुक जित्ने)" भन्ने आर्को नाम लिनु भएको छ ।[२४]

यो श्लोकको भनाईबाट राजा जयदेवले 'परचक्रकाम' भन्ने उपनाम पनि लिएको थाहा पाइन्छ । यद्यपि उनका अरु अभिलेखमा यसको फेरि उपयोग गरिएको छ ।

**कवि राजा**

राजा जयदेव असल कवि पनि रहेछन् भन्ने कुरा पशुपति अभिलेखले स्पष्ट बताएको छ । सो अभिलेखका रचयिता कवि बुद्धकीर्तिले ३३ सौं श्लोकमा यसबारे लेखेका छन्–

"ठूलो कुलमा जन्मेको कुन मानिस आफ्नो गुणको वर्णन आफैं
गर्ला भन्ने लाजले गर्दा राजा (जयदेव) ले आफू असल कवि
भएर पनि आफ्नो कुलको वर्णन परेको काव्य बनाउनु भएन ।
विद्वान् राजाले आफैंले बनाएका राम्रा पांच श्लोकबाहेक अरु यो
अपूर्व प्रशस्तिरुप काव्य राजाको स्नेहले बुद्धकीर्तिले बनाएका हुन् ।"[२५]

माथि उद्धृत कुरामा राज जयदेवलाई 'सत्कवि' भनिएको छ र यस अभिलेखमा परेका पांच श्लोक उनले रचेका हुन भनिएको छ । सो अभिलेखका २१ सौं, २५ सौं, २८ सौं, २९ सौं र ३० सौं श्लोकका शुरुमा 'राज्ञः' राजाको भनेर परिचय दिइएको छ । ती पांच श्लोकहरुमा राजाले आफूहरुद्वारा पशुपतिनाथलाई चढाएको चाँदीको कमल र पशुपतिनाथको माहात्म्य गाइएको छ। यी पदहरु पढ्दा जयदेव विद्वान् र सांच्ची नै असल कवि रहेछन् भन्ने थाहा पाइन्छ । बुद्धकीर्तिले सो अभिलेखमैं आर्को ठाउंमा पनि जयदेवको बयान गर्दा उनलाई 'विद्वान' र 'असल कवि' भनेका छन् ।

### विवाह सम्बन्ध

आफू जयदेवको विवाह पनि उत्तरी भारतका प्रख्यात राजा हर्षदेवकी छोरी राज्यमतीसँग भएको कुरा पशुपति अभिलेखमा एक श्लोकमा लेखिएको छ:

"उहाँ राजा (जयदेव) ले मत्ता हात्तीका बथानका दांतरुपी मुसलले
शत्रु राजाका टाउको फोरेका, गौड उड कलिंग र कोसलका राजा
श्री हर्षदेवकी छोरी, भगदत्त राजाको वंशमा जन्मेकी, कूल सुहाउंदो
गुणले युक्त भएकी, कुलहरु (पितृ मातृ र पतिकुल) को गौरव
भएकी, लक्ष्मीजस्तै देवी राज्यमतीसँग विवाह गर्नु भयो ।"[२६]

जयदेव द्वितीयले सम्मानसाथ उल्लेख गरेका आफ्ना ससुरा हर्षदेवको राजनीतिक अस्तित्वको बारेमा पनि विवाद देखा परेको छ । हर्षका समकालिक कामरुपका राजा भाष्करवर्माको अन्त्य भएपछि शालस्तम्भको म्लेच्छवंशले शासन गर्न थालेको र यस वंशमा हरिष नामका राजा कामरुपमा भएको थाहा पाइन्छ । तर तिनले गौड, उड, कलिङ्ग र कोशल भेकमा शासन गरेको बारेमा केही थाहा पाइदैन । यो शालस्तम्भ वंश नरक र भगदत्तवंशी पनि कहलिएको थियो नरक भनेर वंशको नाम राख्नामा स्थानीय आदिवासी जाति भन्ने अर्थ गर्न सकिन्छ, (मजुमदार, १९६८ १४१) । जे होस यी हर्षदेवको इतिहास पनि विवादास्पद रहन पुगेको छ (मजुमदार, १९६८ १३८, १४१) ।[२७]



### जयदेव द्वितीयका नाता




पौराणिक स्रोतहरुमा भगवान् विष्णुको वराह अवतार र पृथ्वीको छोरो नरकासुर भएका थिए । नरकासुरका छोरा भगदत्त भएका र तिनको वंशले कामरुपमा लामो समयसम्म शासन गरेको विश्वास प्रचलित थियो (मजुमदार, १९६८ ८८) ।

नरकासुरसँग सम्बन्ध जोडने उक्त चलनको आधारमा सो वंश आर्येत्तर रहेको अनुमान गरिएको तर सो वंशले आस्तिक सनातनी परम्परा स्वीकार गरेको कुरा मानिन्छ (ऐजन) । भाष्करवर्मा त नरकासुरवंशी र भगदत्तका वंशज मानिएका थिए तर शालस्तम्भका वंशज भएका हर्ष वा हर्षवर्मनलाई भगदत्तराजकुलका भनेर पशुपति अभिलेखमा लेखिनाको तात्पर्य बुझ्न अप्ठेरो छ।

### पशुपति अभिलेख

जयदेव द्वितीय इतिहासमा आफ्नो पशुपतिमा थापेको संवत् १५७ अर्थात् ई. ७३३ को अभिलेखको कारणले विशेष प्रसिद्ध भएका छन् । जम्मा ३४ संस्कृत श्लोक भएको सो अभिलेखले एकातिर आफ्नै किसिमबाट काव्यात्मक सौन्दर्यको प्रस्तुति गरेको छ भने आर्कोतिर लिच्छवि राजाहरुको वंशावली र खास गरी नरेन्द्रदेव, शिवदेव द्वितीय र स्वयं जयदेवको केही विस्तृत विवरण दिइएको छ ।

सो अभिलेखमा शुरुका दुइ श्लोकमा पशुपतिनाथको स्तुति गरिएको छ । अनि तेस्रोदेखि एघारौं श्लोकसम्म भगवान् सूर्यदेखि नरेन्द्रदेवसम्मको वंशावली लेखिएको छ । बाह्रौं र तेह्रौं श्लोकमा शिवदेव द्वितीय र उनकी महारानी

वत्सदेवीको वर्णन गरिएको छ । त्यसपछि चौधौंदेखि अठाहौं श्लोकसम्म जयदेव र उनकी महारानी राज्यमतीको वर्णन गरिएको छ । उन्नाइसौं देखि तीसौं श्लोकसम्म पशुपतिनाथलाई चढाइएको चाँदीको कमलको कल्पनामय काव्यात्मक वर्णन तथा पशुपतिनाथको माहात्म्य बताइएको छ । एक्तीसौंदेखि चौंतीसौं श्लोकसम्म उपसंहार र अभिलेखका पद्यका रचयिताहरुको परिचय दिइएको छ । अन्त्यमा संवत् १५७ कार्तिक शुक्ल नवमी लेखिएको छ ।

पशुपतिको यो अभिलेख 'प्रशस्ति' हो । सो अभिलेखमा अन्तिम भागतिर 'पूर्वामपूर्वाभिमाम्) भनिएको 'पूर्वा' को अर्थ प्रशस्ति हुन्छ भन्ने देखिएको छ । कुनै राजाले महत्वपूर्ण उपलब्धि गरेपछि यस्ता प्रशस्ति लेखाइने गरिएको पाइन्छ। यस्तो प्रशस्तिमा सम्बद्ध राजा र उनको राजवंशको स्तुति लेखिएको हुन्छ । लिच्छविकालको इतिहासमा यस्तो पहिलो प्रशस्ति अभिलेख मानदेव प्रथमको चाँगुनारायण अभिलेख हो । दोस्रो र अन्तिम प्रशस्ति जयदेवको पशुपति अभिलेख हो । यो अभिलेख जयदेव द्वितीयले लेखाई राखेका हुन् तर उनले कुनै राजनीतिक उपलब्धि गरेको वर्णन त्यही अभिलेखमा पनि गरिएको छैन । त्यही अभाव पूर्ति गर्न भनेर बुद्धकीर्तिले सो अभिलेखको सोह्रौं श्लोकमा दुइ अर्थ लाग्ने कविता लेखी जयदेवको सार्वभौम चरित्र चित्रण गरेका छन् र 'परचक्रकाम' उपाधिको उल्लेख पनि गरेका छन् ।

यो अभिलेख लेखाउने अवसर पशुपतिनाथलाई चाँदीको कमल चढाइएको उत्सव हो । स्वभावतः यसमा अधिकांश पद्यमा पशुपतिनाथ र चढाइएको कमलको उत्प्रेक्षामय वर्णन गरिएको छ ।

हुन त यो अभिलेखमा एकसरो लिच्छविवंशावली पनि प्रस्तुत गरिएको छ । तेस्रो देखि एघारौं श्लोकसम्म भगवान सूर्यदेखि नरेन्द्रदेवसम्म । यो वंशावली राजाहरुको अपूरो नामसूची मात्र हुनाले नाम ठम्याउन मात्र उपयोगी रहेका छन् । बाह्र राजालाई एकै स्वस्ति भने झैं यसमा राजाहरुको नामावली मात्र दिइएको र उनीहरुको राजनीतिक उपलब्धिहरुको कुनै चर्चा नगरिएकोले इतिहासकारहरुको भार हलुंगो पनि भएको छैन ।

आफ्ना बाजे नरेन्द्रदेवले त्यत्रो पुरुषार्थ गरेर राज्य फिर्ता ल्याएको घटना जयदेवको दृष्टिमा त्यति महत्वपूर्ण ठहरिएन यसैले उक्त वंशावलीमा नरेन्द्रदेवको वर्णन एकै श्लोकमा सिध्याइएको छ र संकेत रुपमा 'मानोन्नत' (इज्जतको ख्याल गर्ने?) भनेर उनले आफ्नो खोसिएको राज्य फिर्ता लिएर इज्जत थामेको मात्र भनिएको छ र नरेन्द्रदेवले ई. ६४३ देखि एकच्छत्र राज्य गरेर जुन स्थिरता आएको थियो र शिवदेव द्वितीयले त्यसलाई कायम गरेका थिए र त्यस्तै पृष्ठभूमिमा जयदेवको शासनकाल पनि राज्यको सुव्यवस्थाको काल थियो र पहिलेको इतिहास हेरी यो पनि एउटा उपलब्धि नै मान्नुपर्दछ ।

माथि चर्चित पृष्ठभूमिमा यो प्रशस्ति लेखाइने मुख्य कारण थियो भारतका राजवंशहरुसँग विवाह सम्बन्ध भएर इज्जत बढेको अनुभव हुनु । जयदेवकी मुमा पनि नामी राजवंशकी छोरी र नातिनी, स्वयं जयदेवको विवाह



पनि भारतकै नामी राजवंशकी छोरीसंग भएको घटनालाई उनले गौरवको विषय ठानेको कुरा अभिलेखमा स्पष्ट शब्दमा वर्णन गरिएको छ । राज्यमतीलाई "कुलहरुको गौरव भएकी" (प्रभूता कुलैः) भनेर त्यहाँ पितृकुल, मातृकुल र पतिकुलको लागि यो विवाह सम्बन्ध महत्व मानिएको थियो भन्न सकिन्छ । राज्यमतीका माइती मावली खलकको यस सम्बन्धमा के भावना थियो बुझ्न सकिएको छैन तर हाम्रा जयदेवले भने त्यस कुरालाई विशेष महत्व दिएका थिए भन्ने कुरा त स्पष्टै भएको छ । यस्तै कारणले गर्दा यो प्रशस्ति लेखाइएको हो जस्तो लाग्दछ । तर त्यति कुरामात्रै लेखाएर राख्ने कुनै औचित्य नहुनाले अन्य कुरासाथ सो विषयलाई प्रस्तुत गरिएको बुझिन्छ ।

उक्त ऐतिहासिक पृष्ठभूमिमा यो प्रशस्तिले अरु तीन महत्वका पक्षलाई अंगालेको अनुभव हुन्छ– लिच्छवि राजवंशको अभिनन्दन, पशुपतिनाथको अभिनन्दन र तात्कालिक शान्ति र स्थिरता ।

### (क) लिच्छवि राजवंशको अभिनन्दन

हुन त इतिहास स्पष्ट पार्न सकिएको छैन तर प्रथम शताव्दीमा नेपालमा लिच्छवि राज्यको स्थापना भई त्यस वंशका राजाहरुले यस देशको सुव्यवस्था गरी एक राज्यको रुपमा नेपाललाई खडा राखेको र यहाँ संस्कृतिको विकासमा जुन नेतृत्व गरी आएका थिए इतिहासमा त्यस कुराको महत्व मान्नुपर्दछ । इतिहासकारहरुमा प्रचलित एक सिद्धान्त सकार्ने हो भने नेपालमा लिच्छवि शासन प्रचलित रहेको करीव सात शताव्दी भइसकेको थियो । यति लामो कालसम्म कुनै देशको शासन एउटै वंशले सन्चालन गरेको कुरा एक विशेषता नै मान्नुपर्दछ । त्यही विशेषताको अभिनन्दन यो वंशावलीले गरेको मान्न सकिन्छ ।

### (ख) पशुपतिनाथको अभिनन्दन

नेपालको इतिहासको गतिसाथै पशुपतिनाथ पनि नेपाली जनजीवनसँग घनिष्ठ रुपले सम्बद्ध भएर आएका थिए । लिच्छविकालमा त पशुपतिनाथको महिमा झन् बढेर आयो राजा र प्रजा सबैले उनीलाई आफ्ना घनिष्ठ देवताका रुपमा मान्न थालेका थिए । विभिन्न समयका प्रमाणहरुले त्यस कुराको समर्थन गरेका छन् तर जुन ललित अभिनन्दन यो अभिलेखले पशुपतिनाथको गरेको छ त्यो अपूर्व छ । नेपालको इतिहासमा पशुपतिनाथको यस्तो अभिनन्दन गरेको आर्को उदाहरण पाईंदैन । यो अभिनन्दन प्रौढ प्राञ्जल र सशक्त भाषाको माध्यमबाट गरिएको देख्दा नै यति महत्व मान्न परेको हो ।

### (ग) तात्कालिक शान्ति र स्थिरता

ई. ६४३ तिरदेखि नरेन्द्रदेवले निष्कण्टक राज्य गर्न थालेदेखि नेपालमा अपेक्षाकृत शान्ति र स्थिरताको वातावरण कायम हुन गएको पृष्ठभूमिमा नै यो

पशुपति लेखको लघुकाव्य रचिएको थियो भन्ने बुझिन्छ । त्यो शान्ति र स्थिरताको ध्वनि यस अभिलेखका दुइ श्लोकले व्यक्ताएका पनि छन् । सत्रौं श्लोकको पूर्वार्द्धमा भनिएको छ–

"प्रशस्त सुख पाएका ब्राह्मणहरुले होमिएको घिउको आहुतिका ज्योतिले पैदा भएका ज्वाला मर्कनाले सारा प्रजाको विपत्ति र रोग हटाइएको ......।"[२८]

सो अभिलेखको अन्तिम वा ३४ सौं श्लोकमा पनि त्यस्तै ध्वनि पाइन्छ–

"योग (नपाएको पाउनु) र क्षेम (पाएको जोगाउनु) गर्नामा लागेका प्रतापी, स्नेह गर्ने जहान छोरा छोरी र नोकर चाकरसहित भएका राजा (जयदेव) ले दीर्घायु र निरोगी भएर सँधै आनन्दपूवर्क प्रशस्त सम्पत्तिले समृद्ध र रत्तिएका प्रजा भएको पृथ्वीको पालना गरिरहुन्।"[२९]

**कवि बुद्धकीर्ति**

नेपालको प्राचीनकालका करीब तीन शताव्दी जति अवधिमा लेखाई राखिएका दुई शयभन्दा केही बढी शिलालेख पाइएका र प्रकाशित भएका छन् । आकारमा साना र ठूला जस्ता भए पनि र गद्य वा पद्य जस्ता भए पनि ती मीठो शैलीमा संस्कृत भाषामा लेखिएका छन् । तर अपशोच छ कि कुनै अभिलेखका लेखकको नाम लेखिएको पाईंदैन । यसले गर्दा उस बेलाका लेखक साहित्यिक र बुद्धिजीवी वर्गबारे थाहापाउन सकिएको छैन । अंशुवर्माले लेखेको भनिने व्याकरण ग्रन्थ पनि पाउन सकिएको छैन । यस्तो स्थितिमा नेपालको इतिहास नै अपूरो जस्तो अनुभव हुन्छ तर जयदेवको उक्त पशुपति अभिलेखले त्यस कमीको आंशिक परिपूर्ति गरेको मान्न सकिन्छ किनभने त्यस अभिलेखका रचयिता कवि बुद्धकीर्तिको नाम सुरक्षित गरेको छ । हुन त यही अभिलेखले राजा जयदेलाई पनि कवि राजाका रुपमा सम्झना गरेको छ र लिच्छविकालका दुइजना कविको बारेमा हामीलाई ज्ञान हुन सकेको छ ।

प्राचीनकालका कवि लेखकहरुको आफू,लाई सकेसम्म लुकाउने र विस्तृत परिचय नदिने चलनलाई बुद्धकीर्तिले कायम राखेकाले यिनको अरु परिचय अज्ञात रहन गएको छ ।

यसरी हेर्दा जयदेव द्वितीयको २० वर्ष जतिको कार्यकाल महत्वपूर्ण नै देखिए पनि उनीपछिको इतिहास अन्धकारमय जस्तो देखिनाले उनकै शासनको अन्तिम अवस्था पनि शान्तिपूर्ण ढंगले बित्यो बितेन भन्न सकिने देखिंदैन ।

जयदेव द्वितीयपछिका कालमा भएका केही राजाहरुको नाम त थाहा पाइन्छ तर शिलालेख प्रमाणहरुको अभावमा सिलसिलेवार इतिहास निर्माण गर्न गाहारो छ । यस कालको इतिहासबारे मिहीन र तुलनात्मक अध्ययन गर्ने काम बांकी नै छ । तर यस युगमा सामाजिक विश्रृंखलता आदि भएको र त्यसको



कारण कुनै किसिमको विदेशी आक्रमण भएको हुन नसक्ने पनि देखिंदैन । केही पछिका प्रमाणहरुबाट यहाँ 'हूण' जातिको बसोबास रहेको थाहा पाइने हुनाले त्यस जातिको नेपालप्रवेश वा आक्रमणको घटना पनि तात्कालिक इतिहासको परिवर्तनका अनेक कारणमध्ये एउटा हुन सक्दछ । यो विषयमा एउटा संक्षिप्त अध्ययन परिशिष्टमा प्रस्तुत गरिएको छ । उता मञ्जुश्रीमूलकल्पले पनि यस्तै किसिमको अवस्थातिर संकेत गरेको हुनाले यस्तो सम्भावनाबारे विचार गर्नु परेको छ । उक्त मञ्जुश्रीमूलकल्पको नेपालसम्बन्धी अंश पनि परिशिष्टमा प्रस्तुत गरिएको छ ।

**जयदेव द्वितीयपछि तथाकथित अन्धकारयुग ( ई ७३३ - ८८० )**

जयदेवका शिलालेखहरुको अन्तिम मिति ई. ७३३ र राघवदेवद्वारा नेपालसंवत् स्थापना गर्ने ई. ८८० को घटनाको बीचको करीब १४७ वर्षको अवधि "अन्धकार युग" को रुपमा हाम्रो सामु आउंछ । हुन त यस युगमा भएका राजाहरुको सूची वंशावलीहरुमा नपाइने हैन ।

गोपालवंशावलीमा नरेन्द्रदेव र शिवदेपछि फेरि नरेन्द्रदेव नामका राजाको उल्लेख गरेपछि राघवदेवसम्म भएका राजाहरुको निम्न विवरण प्रस्तुत गरिएको पाइन्छ–

१. राज श्री बलदेव वर्ष १७
२. राजा श्री वर्द्धमानदेव वर्ष १६
३. राजा श्री शंकरदेव वर्ष १६
४. राजा श्री वसन्तदेव वर्ष २१ ।
   त्यसपछि भोटका राजा आए नेपाल मण्डलमा राज्य गरे ।
५. राजा श्री रुद्रदेव भए, तिनले चाकुम्मी (नदीको) तटसम्म निष्कण्टक राज्य गरे ।
६. राजा श्री जयदेव भए वर्ष ४२ महीना ५
७. राजा श्री बलदेव भए वर्ष ११
८. राजा श्री बालार्जुनदेव भए वर्ष २१ महीना ५ । ...... तिनले श्रीबुङ्गमतीका लोकेश्वर भगवानलाई आफ्नो मुकुट चढाए ।
९. राजा श्री मानदेव भए वर्ष ३१ । तिनले न्होलत्तवनिमम् बनाए ।
१०. राजा श्री राघ(व) देव भए वर्ष ४३ महीना ६ (वज्राचार्य, मल्ल, १९८५: ३१, ७९ ) ।

माथि उद्धृत गोपालवंशावलीको वक्तव्यबाट ई. ७३३ र ई. ८८० को बीच जम्मा ९ राजा भएको बुझिन्छ तर यो सूचीमा छैठौं स्थानमा देखिने जयदेव जयदेव द्वितीय नै हुने अनुमान गर्दा ८ राजा मात्रैको अस्तित्व मान्नुपर्ने हुन्छ । तर ती मध्ये शिलालेख आदि प्रमाणबाट ज्ञात बलिराज र गणदेवका नाम परेका छैनन् । शिलालेख र पाण्डुलिपिको पुष्पिकाबाट ज्ञात दुइजना मानदेव भएकामा गोपालवंशावलीको सूचीमा एकजना मात्र मानदेवको

उल्लेख भएको छ । दोस्रो संख्यामा चर्चित वर्द्धमानदेव नै मानदेव तृतीय हुन सक्ने अनुमान गर्न सकिन्छ । साथै बलदेव नामका दुइ जना राजाको उल्लेख गोपालवंशावलीमा भएकोमा ऐतिहासिक सामग्रीमा एकजना बलिराज मात्रको उल्लेख भएकोमा बलदेवलाई नै बलिराजको रुपमा मान्नुपर्ने देखिन्छ । उक्त कालका अन्य राजाको देवान्त नाम रहन गएको परिप्रेक्ष्यमा बलिराजको नाममा राजान्त रुप देख्दा यो कल्पना गर्नु परेको हो । अभिलेखमा "बलीराज्ञा राज्ञा" उल्लेख परेकोमा बलिराज नाम पनि हुन नसक्ने देखिँदैन ।

गोपालवंशावलीको माथि उद्धृत सूचीमा प्रस्तुत राजाका अन्य नामबारे हाल केही भन्न सकिँदैन । धेरैजसो राजाको नामसाथ उनीहरुको शासनकालमात्र दिइएको र दुइटा राजाको वर्णनमा केही राजनीतिक महत्वका घटना वर्णित छन् । माथि उद्धृत सूचीमा चौथा राजा वसन्तदेवको नामोल्लेख गरेर "त्यसपछि भोटका राजा आए नेपालमण्डलमा राज्य गरे" भनिएको कहाँसम्म सत्य होला भन्न अप्ठेरै छ । यस युगमा भएका आर्का राजा रुद्रदेवको वर्णनमा उनले 'चाकुम्भी' (नदी) को किनारासम्म निष्कण्टक राज्य गरेको विवरणले के कुरा अर्थ्याउँछ केही भन्न सक्ने स्थिति छैन ।

यहाँ एउटा उल्लेखनीय कुरा के छ भने यस युगमा भएका राजाका नाम पहिलेका लिच्छवि राजाकै नाममा राखिएका देखिनु । मानदेव नामका दुइ राजा, शंकरदेव र गणदेव नामका एक एक राजा भएको देख्दा यस युगमा भएका राजाहरु पहिलेकै लिच्छवि राजाहरुका सन्तान रहेछन्, वंशपरिवर्तन भएको होइन रहेछ भन्न सकिने देखिन्छ जस्तो लाग्दछ । तर शिलालेख प्रमाणहरुको अभावमा राजनीतिक गतिविधि त्यति स्पष्ट गर्न सकिएको छैन ।

जयदेव द्वितीयभन्दा धेरै पछिसम्म भएका देवान्त नामधारी राजाहरुलाई पनि सूर्यवंशी भन्ने चलन चलेको देख्दा सूर्यवंशी लिच्छविहरुको राजवंशक्रम पनि टुटेर आर्को राजवंश स्थापित भएको पनि नदेखिने हुनाले केन्द्रीय क्षेत्रमा राजवंशपरिवर्तन पनि नभएको अनुमान गरिएको छ (वज्राचार्य, १९७७: १०५-१०६) ।

जयदेव द्वितीयपछि नेपालको इतिहासमा आएको "अन्धकार युग" वास्तवमा अन्धकार युग हैन, त्यसबेला पहिले लिच्छविकालमा जस्तो राज्य व्यवस्थासम्बन्धी सनद शिलालेखको रुपमा राख्ने चलन हराई ताम्रपत्रको रुपमा सनद जारी गरिने गरेको र त्यस्ता ताम्रपत्र धेरै गालिइसके, खोज्न सके अझै पाउन सकिने सम्भावना रहेको छ भन्ने व्याख्या धनवज्र वज्राचार्यको छ (वज्राचार्य, १९७७: ९४) ।

जयदेव द्वितीयको समयका शिलालेखहरुबाट "लिच्छवि राजाहरुको मनोबल पनि घटिसकेको थिएन बरु उच्च नै थियो भन्ने थाहा पाइन्छ" (वज्राचार्य, १९७७: ९३) भन्ने इतिहासकारहरुको मूल्याङ्कन छ ।

जयदेव द्वितीयपछि देखा परेको तथाकथित 'अन्धकारयुग' मा पनि नेपाल राज्य टुक्रिएको बुझिँदैन । हुन त यस विषयलाई स्पष्ट पार्ने



प्रमाणहरुको अभाव छ तर नेपालसंवत् थालिएपछिका कति प्रमाणहरुमा उल्लिखित 'गण्डीगुल्मविषय' लाई गुल्मी, जिग्लोद्गमविषयलाइ[३०] गण्डकी अञ्चल भेक, पन्नगविषयलाई पनि मग्रात भेक, धवलस्रोतपुरलाई धौलागिरी क्षेत्रतिर, पञ्चावतदेशविषय पनि गण्डकी भेकमैं र उदयपुर पूर्वी नेपालको त्यही नामको ठाउँसम्म तत्कालीन नेपाल राज्य फैलिएको बुझ्न सकिने आधारसूत्र पत्ता लगाइएको छ (वज्राचार्य, १९७७: ९८-१०१) ।

जयदेवपछि देखिएको राजनीतिक अन्योलको कारणमा तिब्बती राजाहरुको आक्रमणमा अनेक घटना (ई. ७५५- ८३६) हुन सक्ने तथा पूर्वी भारतका पाल राजाहरुको आक्रमणका घटना हुन सक्ने कुरा रमेशचन्द्र मजुमदारले अनुमान गर्नु भएको छ (मजुमदार, १९६४: ५९, ७०, ८७-१०१) ।

मञ्जुश्रीमूलकल्प नामको बौद्ध ग्रन्थमा 'जिन्हु' (अथवा जिष्णुगुप्त?) पछि "अनेक म्लेच्छ राजाहरु भएका", ती राजाहरु 'भ्रष्टमर्यादा', विदेशीका सेवक, नेपालाधिपतिहरु शास्त्रबाट ध्वस्त भएका, विद्या लुप्त भएको र 'म्लेच्छ' तथा 'तस्कर' का सेवक भएको कुराको उल्लेख गरेको पाइन्छ (जायसवाल, १९३४: ४०) । यो सन्दर्भबारे माथि पनि चर्चा गरिएको छ ।

उपर्युक्त ई. ७३३ - ७८० को बीचमा प्राप्त केही अभिलेखहरुबाट ज्ञात राजाहरुको परिचय तल प्रस्तुत गरिएको छ ।

### विजयदेव

जयदेव द्वितीयको शुरुदेखिकै अभिलेखमा उनका उत्तराधिकारीका रुपमा विजयदेवको उल्लेख भएको पाइन्छ । ललितपुर च्यासलटोलको संवत् १३७ (ई. ७१३) को अभिलेखको पुछारमा दूतकका रुपमा "भट्टारक श्रीविजयदेव" को उल्लेख भएको पाइन्छ (वज्राचार्य, २०३०: ५४०) । यसैगरी संवत् १४८ (ई. ७२४) को मीननाथ मन्दिर पाटनको अभिलेखमा दूतकका रुपमा "युवराज श्रीविजयदेव" को उल्लेख भएको छ (ऐजन: ५४४) । तिथि मिति खिइएको ज्ञानेश्वरको अभिलेखमा पनि दूतकको रुपमा 'युवराजश्रीविजयदेव' को उल्लेख भएको छ (ऐजन: ५७४) ।

उक्त प्रमाणहरुको आधारमा जयदेवले आफ्ना विजयदेवलाई उत्तराधिकारी बनाएको थाहा पाइन्छ तर उनका पालाका कुनै अभिलेख आजसम्म नपाइएकाले उनको शासनकालबारे शंका कायम हुन जान्छ ।

### शंकरदेव

चाँगुनारायण मन्दिरमा कुनै देवमूर्तिको आसनमा लेखिएको अभिलेखबाट संवत् १७३ (ई. ७४९) मा शंकरदेव नामका राजा भएको थाहा पाइन्छ (खनाल, २०४०: १५०) ।

### मानदेव तृतीय

मानदेव नामका राजाको उल्लेख गर्ने यस कालका दुइ अभिलेख पाइएका छन् । एउटाचाहिं पाटन यंगवहालमा अवलोकितेश्वर मूर्तिको पादपीठमा लेखिएको छ जसमा संवत् १८० लेखिएको छ (वज्राचार्य, २०३०, २०३०: ५९१) । यो अभिलेखमा "राज्य श्रीमानदेवस्य" भनिएकोले ई. ७५६ तिर त्यस नामका राजा भएको कुरा प्रमाणित भएको छ । काठमाडौं मखन तानावहालभित्र कुनै देवताको पादपीठमा लेखिएको खण्डित अभिलेखमा पनि "(राजाधि) राज परमेश्वर श्रीमानदेवराज्ये" लेखिएको पाइन्छ (ऐजन: ५९२) । मिति खण्डित भए पनि यो दास्रो अभिलेखका मानदेव र संवत् १८० का मानदेव एकै हुन भन्ने मान्न सकिन्छ ।

### महासामन्त रुपवर्मा

यही कालमा महासामन्त रुपवर्मा भएको थाहा पाइन्छ । देउपाटन जयवागीश्वरी मन्दिरनजीकैको आधुनिककालको अभिलेखमा सो स्थानको सुनधारा "संवत् २०५" मा "श्री महासामन्त रुपवर्मा" ले बनाएको भन्ने चर्चा गरिएको छ। 'रुपवर्मा' लेखिएको एउटा माटोको छाप हनूमानढोका मुद्रा संग्रहालयमा सुरक्षित छ (वज्राचार्य, २०२६: ११) ।[३१] उक्त दुई सन्दर्भको आधारमा श्रीमहासामन्त रुपवर्मा ई. ७८१ तिर भएका रहेछन्[३२] र उनले जयवागीश्वरी मन्दिरनेर रहेको हिटी बनाएका रहेछन् भन्ने थाहा पाउन सकिन्छ ।

रुपवर्मा सामन्त मात्र थिए, उनको राजनीतिक महत्व यो भन्दा बढी रहेको देखिँदैन ।

### बलिराज

पाटन मोतीटारको जलद्रोणीमा लेखिएको छोटकरी अभिलेखबाट संवत् २५० (ई.८२७) मा बलिराज नामका राजाको नाम थाहा पाइन्छ (वज्राचार्य, २०३०: ५९४- ५९५) । अभिलेखको अन्तिम भागमा "श्रीमताथ बलीराज्ञा राज्ञा पुण्याभिवुद्वये" भनी स्पष्ट रुपले राजा भन्ने सन्दर्भ पाइए पनि पेटेकले तिनलाई राजा नमान्नु (पेटेक, १९८४: २१) आश्चर्यको कुरो छ । उक्त अभिलेखको वक्तव्यबाट सो जलद्रोणी स्वयं राजा बलिराजले बनाउन लगाई अभिलेख पनि लेख्न लगाएको बुभिन्छ । यस कालका कुनै राजाले आफैंले कुनै काम गरी लेखाई राखेको अभिलेख नपाइने परिप्रेक्ष्यमा बलिराजले जलद्रोणी बनाई अभिलेख लेखाइएको हुनाले यो प्रमाणको त्यस किसिमको महत्व मान्न सकिन्छ ।

### बलदेव

चाँगुनारायणस्थानमैं रहेको कुनै देवमूर्तिको आसनमा लेखिएको अभिलेखबाट बलदेव नामका राजाको अस्तित्व थाहा पाइन्छ । यसमा संवत् २७१ (ई. ८४७) लेखिएको छ (वज्राचार्य, २०३०: ५९५) ।[३३]



### गणदेव द्वितीय

जयदेव द्वितीयपछि नेपाल संवत् शुरु हुनुअघि भएका राजाहरुमा गणदेव नामका राजा पनि भएको कुरा पाटन गावहाल जलद्रोणीमा लेखिएको छोटकरी र मिति खण्डित अभिलेखले बताएको छ (वज्राचार्य, २०३०: ५८९) । लिपिको आधारमा जयदेव द्वितीयपछिको कालको मान्न सकिने यो अभिलेखमा 'श्री गणदेव' को राज्यकालको उल्लेख गरेको बुझिने हुनाले यिनलाई पनि त्यस कालका एक राजाको रुपमा मान्न सकिने देखिन्छ ।

उक्त अभिलेखमा मिति खण्डित भएकोले र वंशावलीहरुमा पनि यस नामका कुनै राजाको उल्लेख नपाइनाले यिनको कालक्रम मिलाउन अप्ठेरो परेको छ ।

लिच्छविकालमा पहिले भएका गणदेव (ई. ५७७- ५६७) सँग फरक देखाउन यिनलाई द्वितीय भनी परिचय दिनुपरेको हो ।

### मानदेव चतुर्थ

पछिल्लो लिच्छवि लिपिमा ताडपत्रमा लेखिएको सहोत्तरतन्त्र (उत्तरतन्त्र सहितको सुश्रुत) ग्रन्थ केशरपुस्तकालयमा छ । त्यसको पुष्पिका वाक्यमा संवत् ३०१ लेखि तात्कालिक राजाको नाम मानदेव लेखिएको छ ।[३४] पेटेकले यसको गणना ई. ८७८ गर्नु भएको छ (पेटेक, १९८४: २९) ।

गोपालवंशावलीमा राघवदेवभन्दा ठीक अघि भएका राजा मानदेवले 'न्होलतवनिमम्' बनाएको र ३१ वर्ष शासन गरेको बताइएको छ (वज्राचार्य, मल्ल, १९८५: ३१) । तवनिमम्‌को ठीक अर्थ गर्न सकिएको छैन तर एकथरी अर्थ नयाँ बजार अथवा नयाँ शहर गरिएको छ (ऐजन: १२६) । कसैले त्यसको अर्थ दरबार गरेका छन् (पेटेक, १९८४: ३०) ।

### परिशिष्ट

जयदेव द्वितीयपछिको ऐतिहासिक अन्यौलका कारण के होलान् भन्नेबारेमा निश्चित कुरा भन्न नसकिने भए पनि एक सम्भावनाको रुपमा हूण जातिको ठूलो हूलको नेपाल प्रवेश वा आक्रमण हो कि भन्ने देखिन आएको छ । यसै विषयमा यहाँ छोटकरी चर्चा गरेर हेरिन्छ ।

उक्त घटनाको संकेत अरमुडीको ऐतिहासिक सन्दर्भबाट शुरु भएको मान्न सकिन्छ । अरमुडी बारेमा पहिले विचार गरौं ।

काश्मीरका राजा जयापीड (ई. ७८२ - ८१३) ले 'कालगण्डिका' का 'नेपालपालक' "मायावी अरमुडी" लाई आक्रमण गर्दा पक्रिएको तर पछि आफ्ना

मन्त्रीको त्यागबाट उम्किन सकेको र पछि त्यहाँ विजय गरेको वर्णन काश्मीरको इतिहास राजतरंगिणीमा पाइन्छ ।

कसैले यो घटनालाई काल्पनिक मानेका छन् (मजुमदार, १९६४: ५८) भने अरुले यसलाई सत्य घटनाको रुपमा लिएका छन् र आफ्-आफ्ना मत प्रस्तुत गरेका छन् ।

बाबुराम आचार्यको विचारमा मन्त्री देवशर्माले अरमुडीलाई लोभ देखाई ज्यान समेत दिएर आफ्ना राजा जयापीडलाई भगाए । तर उम्किन सकेका जयापीडले नेपालको राजधानीसम्म आएर हाहा पारेका थिए । नेपालीहरुले उनलाई धेरै समय टिक्न दिएनन् र हटाएका थिए । ई. ८०० तिर भएको यो घटनाले "लिच्छविहरुको बचेखुचेको शक्ति पनि खिएर गएको थियो (आचार्य, २०३७: ४) ।

अरमुडीलाई कसैले कालीगण्डकी भेकका स्थानीय सामन्त मानेका छन् (नेपाल, २०४०: ५) । अरमुडी यो नाम विचित्रको देख्दा कतै यो पुरानो मगर व्यक्तिको नाम त हैन भन्ने प्रश्न सबैको मनमा उठ्न सक्दछ ।

अरमुडीको इतिहास स्वदेशमा विस्मृत भैसकेको छ तर रातरंगिणीकारका कृपाले नेपालको यो महत्वपूर्ण कुरा हामीले उपलब्ध गर्न सकेका छौं ।

अरमुडीको ऐतिहासिकता सकारेपछि हामी त्यो तत्वलाई विस्तृतीकरण गरेर पनि हेरौं । हामीकहाँ अरमुडीको व्यक्तित्व, स्थान र समयबारे केही उल्लेख नपाइने हुनाले राजतरंगिणीकै सूचनाको भर गरेर विचार गर्नु परेको छ।

नेपालपालक' भनिएका अरमुडी 'कालगण्डकी' क्षेत्रसँग सम्बद्ध थिए र त्यस नामका कुनै शासक केन्द्रमा भएको नपाइने हुनाले तिनलाई पश्चिमी नेपालमा कालीगण्डकी भेकमा कतै शासक थिए भन्ने अड्कल गर्न सकिन्छ । उनीलाई कसैले कालीगण्डकीको भेकका स्थानीय सामन्त शासक मानेका छन् (नेपाल, २०४०: ५) ।

अरमुडीको समय, काश्मीरका राजा जयापीडको समय ई. ७८२ - ८१३ तिरै खोज्नु पर्ने भएको छ । यिनको नाम 'मगर' जातिसँग सम्बन्धित हुन सक्नेबारे माथि चर्चा गरिएको छ । यो तथ्य मान्न सकिएमा 'मगर' जातिको अस्तित्व आठौं - नवौं शताब्दीमा सिद्ध हुने र त्यसको राजनीतिक प्रभावबारे धेरै थरीका अनुमान प्रस्तावित गर्न सकिन्छ ।

जनकलाल शर्माले मध्य पश्चिमी नेपालका प्रमुख बासिन्दा मगर र गुरुङलाई हूण जातिसँग समीकरण गर्नु भएको छ (शर्मा, २०३९: २५६, २६९) । यसबारेमा विस्तृत र तुलनात्मक विश्लेष्ण हुनु आवश्यक भएको छ । तर गुरुङलाई हूण मान्ने परम्पराको संकेत पाइने हुनाले सो तथ्य विचारणीय हुन आएको छ ।

राजा रामशाहको पालामा धरणीधर शर्मा नामका कविले लेखेको "गोरक्ष राजवंशावली" मा कास्कीको शाह राज्यका संस्थापक कुलमण्डन शाहले "हूण



नृपति" लाई हराएर सो राज्यको स्थापना गरेको वर्णन गरिएको छ (योगी, २०१३: ५७५) ।

यति मात्रै हैन तल प्रस्तुत अध्ययनबाट माथि चर्चित विचारलाई बल पुग्ने देखिन्छ । यहाँ आर्को विचारणीय कुरा मगर र गुरुङ जस्तै तामाङ जातिको इतिहासलाई पनि खोतल्न सकिएमा माथि चर्चित ऐतिहासिक स्थितिको व्याख्या गर्न सकिने देखिन्छ । तामाङ र गुरुङको भाषामा समानता देखिने तथ्य यहाँ विचारणीय लाग्दछ ।

ने. सं. २२१ अर्थात ई. ११०१ को ताम्रपत्र अभिलेखमा "मंग्वर विषय" का सामन्त रामदेवको उल्लेख छ । त्यसमा सताडे भन्ने ठाउँमा फाण्टेश्वर महादेवको पूजा आजाको बन्दोबस्तको लागि (?)– "श्री इदाभावो नायक", "श्री धक्नप नायक" र "श्री सोहव राने" लाई गोष्ठी र पाञ्चालीका सदस्यहरुले नाइके छानिएको कुरा लेखिएको छ (पन्त, शर्मा, १९७७: ७) ।

माथि चर्चित "मंग्वर विषय" स्पष्ट छ मगर जातिसँग सम्बद्ध क्षेत्र हो जसको व्याख्या यसका प्रथम सम्पादक तथा व्याख्याताले पनि गरेका छन् (ऐजनः २१) । यो सन्दर्भबाट मगर बासिन्दाका नामबाट एउटा जिल्ला वा सामन्त क्षेत्रको नामकरण नै भईसकेको ई. ११०१ को यो सन्दर्भले मगर जातिको अस्तित्व इतिहासबारे अनुमान गर्ने आधार दिएको छ ।

उक्त अभिलेखका सम्पादकहरुले सजिलैसँग बुझ्न सकिने मंग्वरलाई मगरसँग मात्र जोडेर छोड्नु भएको छ । वास्तवमा सो अभिलेखमा नायक उपाधिधारी व्यक्ति नामहरु इदा, धक्नप र सोहव राने - राना पनि मगर नै हो जस्तो लाग्दछ ।

यो ताम्रपत्र कहाँबाट पाइएको हो थाहा पाइएको छैन तर यो मध्य पश्चिमी नेपालबाट पाइएको अनुमान गर्न सकिन्छ (कसैले यो ताम्रपत्र बन्दीपुरमा पाइएको हो भनेको पाइएको) ।

माथिको चर्चाबाट ई ११०१ सम्म मगरहरु पश्चिमी नेपालको कुनै पहाडी भेकमा बसोबास गर्न थालिसकेको र तिनले आफू बसेको ठाउँको नामकरण 'मंग्वर' को रुपमा गरिसकेको बुझ्न सकिने हुँदा उक्त समयभन्दा शय पचास वर्ष अगाडिदेखि मगरको यस भेकमा सम्पर्क भएको अड्कल गर्न सकिन्छ ।

हुन पनि उक्त मिति भन्दा १०२ वर्ष अघिको एक लोट किताबको पुष्पिकावाक्यमा 'गण्डीगुल्म' निवासी "सुवर्णकार श्रीराणक" को जुन उल्लेख पाइन्छ (वज्राचार्य, २०३४: ९९) । त्यसमा राणा व्यक्ति मगर हुनु धेरै सम्भव लाग्दछ । ने.सं. ११९ अर्थात् ई ९९९ को त्यो प्रमाणले पनि पश्चिमी नेपाल गुल्मी भेकमा राना मगरको अस्तित्व भेटिनु महत्वपूर्ण छ ।

गुल्मी भेकमा रानामगरको अस्तित्व बताउने सो प्रमाणपछि ई. १०६९ तिर लम्जुङमा राना मगरको अस्तित्व बताउने एउटा प्रमाण पाइन्छ । सो मितिमा 'लंजुंगु' का बासिन्दा 'गंगरानक' ले सारेको अष्टसाहस्रिका प्रज्ञापारमिता

ग्रन्थ पाइन्छ (पन्त, शर्मा, १९७७: १७) । लम्जुङकै पुरानो रुप लंजुगं भएको र गंगरानक राना मगर हुन् भन्ने विद्वानहरुले अर्थ्याएका छन् ।

'राणक' थरको आधारमा गंगालाई मगर भनिने माथिकै विचार अनुसार ने. सं. ३२१ (ई. १२०१) मा सारिएको वृत्तसारसंग्रह धर्मपुत्रिका ग्रन्थको पुष्पिका वाक्यबाट केन्द्रमा अरिमल्ल राजा भएको समयमा 'पञ्चावटदेश' का 'विषयाधिपति' (सामन्त) का रुपमा 'राणक' थर भएका श्री श्रीधरसिंहको जुन उल्लेख पाइन्छ (रेग्मी, १९६५: २०७) त्यसलाई पनि मगरसँग सम्बद्ध गर्न सकिने देखिन्छ । उक्त पञ्चावटदेश कहाँ थियो भन्ने थाहा नपाइए पनि यो सन्दर्भले 'मगर' वर्गकै एक व्यक्ति स्थानीय सामन्त शासकसम्म हुन पुगेको तथ्य महत्वपूर्ण लाग्दछ ।

ई.११५० को एक हस्तलिखित ग्रन्थको पुष्पिकावाक्यमा उल्लेख भएको 'पन्नगविषय' लाई पनि इतिहासकारहरुले मगर जातिसँग सम्बद्ध गरेका छन् (वज्राचार्य, श्रेष्ठ, २०३२ १९-२०) ।

मध्य पश्चिमी नेपालसँग मगर जातिकोसम्बन्धबारे माथिको चर्चाबाट सो भेकमा परिवर्तनका लहरको संकेत त पाइयो र त्यस लहरले काठमाडौं उपत्यकालाई पनि प्रभावित पारेको थियो कि भन्न सकिने केही प्रमाणहरुको चर्चा यहाँ गरिन्छ ।[३५]

भक्तपुर तौमढीटोलको ने.सं. १२५ (ई. १००५) को अभिलेखमा 'तिलिमिराण' यस्तो व्यक्ति नामको उल्लेख भएको पाइन्छ (तेवारी, भण्डारी, २०१८: ९) । यो व्यक्तिनाममा तिलिकम व्यक्तिको नाम र राण थरको नाम हो भन्ने अनुमान गर्न सकिन्छ । यो राण राणा- रानाकै रुप हो भनेर पनि अनुमान गर्न सकिन्छ ।

ललितपुरको प्रसिद्ध रुद्रवर्णमहाविहारबाट पाइएका मध्यकालका महत्वपूर्ण ताडपत्र तमसुकहरुबाट पनि राणा थर भएका अनेक व्यक्तिहरुको बारेमा सूचना पाइन्छ । त्यस विहारको संकलनमा रहेको 'यम्वु' (काठमाण्डौं) सम्बन्धी ई. १०७२ को ताडपत्रमा "वुवार वुदा राने" नामको व्यक्तिको उल्लेख भएको पाइन्छ (शाक्य, कोल्वर, १९८५: २०९) ।

सोही विहारबाट पाइएका पाटन शहरसम्बन्धी ताडपत्रहरुमा पाटन शहरका बासिन्दा राणा थरका अनेक व्यक्तिका नामको उल्लेख भएको पाइन्छ । ई. १०७४ को ताडपत्रमा ओम राणाको उल्लेख भएको छ (ऐजनः १९७) । ई. १०९१ को ताडपत्रमा तिभूरान नामका व्यक्तिको उल्लेख भएको छ (ऐजनः १०७)। ई. ११०४ को ताडपत्रमा देवू राणक र तिभूयी राणक व्यक्तिहरुको उल्लेख भएको छ (ऐजनः १११-११२) । ई. ११२९ को ताडपत्रमा "...... राणगृवल्लो" को उल्लेख छ (ऐजनः २१०-२११) । ई. ११३२ को ताडपत्रमा राण नायकको उल्लेख भएको छ (ऐजनः २११) ।

माथि चर्चिएकै रुद्रवर्ण महाविहारसम्बन्धी ताडपत्रहरुमा 'पाक' जस्तो नौलो खालको थर भएका अनेक व्यक्ति नामहरुको पनि उल्लेख पाइन्छ । ई.



१००१ का दुइ ताडपत्रमा - नायक चित्रभोगपाक र श्रीज्ञानजैपाक व्यक्तिहरुको उल्लेख पाइएको छ (शाक्य, कोल्वर, १९८५: १८८) । अनि भक्तपुर तौमढीटोलको ई. १००५ को अभिलेखमा जयचतुपाकको उल्लेख भएको पाइन्छ (तेवारी, भण्डारी, २०१८: ९) । ई. १०३९ का तीन ताडपत्रमा विजयसिंह पाक (शाक्य, कोल्वर, १९८५: १०३), जैपाक र प्यम्मिहे पाकको नामोल्लेख भएको पाइन्छ । (ऐजनः १८९- १९०) । ई. १०९६ का तीन ताडपत्रमा युच्छोपाक, युल्वी विनैपाक र दर्शनदेव पाकहरुको नामोल्लेख भएको छ (ऐजनः १९१-१९२) । उक्त विहारकै संग्रहमा रहेको यम्वु अथवा काठमाण्डू सम्बन्धी ताडपत्रमा नायक इन्द्राकरपाकको उल्लेख भएको छ (ऐजनः २०९) । ई. १०७४ को ताडपत्रमा चन्द्रपाकको उल्लेख भएको छ (ऐजनः १९७) । ई. १०९३ को ताडपत्रमा कुलपुत्र मानीजैपाकको उल्लेख भएको छ (ऐजनः १०८) । यसरी हेर्दा नौलो थर पाक भएका निकै व्यक्तिहरुको अस्तित्व पूर्वमध्यकालमा उपत्यकाका तीनै प्रमुख शहरहरुमा रहेको बुझिन्छ । पाक थर भएका यी व्यक्तिहरु पनि माथि चर्चित राणाकै आर्को हाँगा हो कि भन्ने अड्कल गर्न सकिन्छ किनभने ई. १०६९ को एउटा ताडपत्रमा वुंद्वाराणे पाक नामका व्यक्तिको उल्लेख भएको पाइनु महत्वपूर्ण छ (ऐजनः १९२) । एउटै व्यक्तिलाई राणा र पाक दुवै थरको प्रयोग गरिएको देख्दा राणा र पाक एउटै समाजका दुई वर्ग हुने सम्भावना स्पष्ट हुन जान्छ ।

ई. ९९९ मा पश्चिमी नेपालमा देखिने राणा मगर ई. १००१ तिरदेखि नै काठमाडौं उपत्यकामा पनि देखिन थालिएबाट मगर जातिको बेग पूर्वतिर काठमाडौं उपत्यकासम्म व्याप्त भएको बुझ्न सकिने देखिन्छ ।

ई. ११०१ को माथि चर्चित ताम्रपत्रमा मगर भनी हामीले अर्थ्याइएका व्यक्तिहरुलाई नायक भनिनु र पाटनका बासिन्दा कति राणा व्यक्तिहरुलाई नायक भनिएको, कति पाकहरुलाई पनि नायक भनिएको र पाटनका सन्दर्भ चर्चित धेरैजसो राणा र पाक ताडपत्र तमसुकका साक्षीका रुपमा सम्मानित तहका देखिएकाले तत्कालीन समाजमा तिनीहरुको सम्मानजनक ठाउँ पनि बुझ्न सकिने देखिन्छ ।

पाद टिप्पणी

१. अस्यान्तरेप्यूदयदेव इति क्षितीशाज्जातस्त्रयोदश इतश्च नरेन्द्रदेवः ।
मानोन्नतो नतसमस्तरेन्द्रमौलिमालारजोनिकरपाङ्शुलपादपीठः ॥
(वज्राचार्य, २०३०: ५४९) ।

२. कस्मिँश्चिद्वस्तुन्युपकृतमवेत्य
तत्प्रत्युपकारोत्कण्ठितमतिभिरस्माभिर्यूपग्रामद्रंगस्य
सर्वतलसहितस्य भट्टमाप्चोकाधिकारयोः प्रा (व) ल्यादवश्यं जनस्य महती
पीडेत्यनयोरेवाधिकारयोरप्रवेशेन प्रसादः कृतः (ऐजनः ४५८) ।

३. अपिचैतत्प्रत्युपकृतन्नबहुमन्यमानैरस्माभिःपुनरप्येषां
पीटल्जाधिकारम्प्रतिमुच्य
प्रसादीकृतमेवमर्थं विदित्वैतदधिकृतैर्न्न कैश्चिदेतद्गता पीडा कर्त्तव्या
यस्तु कुर्यात्सोस्माभिर्न्न मृष्यते तथैव भूपतिभिरप्यनुमोदनीयम् ...
(ऐजनः ४५९) ।

४. वल्गद्वीरपदातिकुन्तविशिखप्रोताश्वनागाकुले ।
शक्त्या (न्यस्पृहणी) यया रणमुखे संज्ञावशेषान् द्विषः ।
कृत्वा लोकहितोद्यमप्रभ (वया) कीर्त्या दिशो भासयन्-
अन्योन्याविहतान् प्रजासु विदधद्धमर्थिकामान्मुदा ॥ (ऐजनः ४५८) ।

५. आसागरप्रसृतशुभ्रयशोध्वजानां
राज्ञाङ्कुलाम्बरशशी भु (वि लि) च्छवीनाम् " (वज्राचार्य, ४५८) ।

६. शौर्यन्नीतिगुणैर्गुणैरकलितैरात्मानमुद्भासिभिःशक्त्या बाहुबल मतिं स्मृतिमती शास्त्रागमैर्भूरिभिः ।
मर्यादास्थितिभिर्दिशोपियशसा राज्यश्रिया मेदिनीजत्या लिच्छविराजवंशमनघं योलङ्करोत्युच्चकैः॥

७. राज्ञां मणिर्लिच्छिविवंशजानां योभूदगुणैस्सर्वजनातिगण्यै : ।
शक्तित्र्यापूरितमण्डलश्रीः शशीव सलक्ष्यतरो नृपाणाम् ॥ (वजाचार्य, २०३०: ४८५) ।

८. स विनयनपराक्रमालङ्कृतमूर्तिः ।

९. शौर्योत्साहपराक्रमाभयनयत्यागप्रतापादिभिः
श्लाध्यैः स्वामिगुणैरनन्यसुलभैः संस्पर्धयैवान्विते
पृथ्वीं पाति नरेन्द्रदेवनृपतौ वंशक्रमाभ्यागतां
संत्यक्तस्वसुखोद्यमे परहितव्यापारनिम्नात्मनि ॥

१०. "In a fragment possibly going back to Wang Hsuan-T'se Nepal is described as a state subordinate (shu) to Tibet."

११. "Summing up, both the silence (betraying lack of information) in the Chinese standard account of Nepal and the confused information on the events of 304 seem to imply that the Tibetan



ascendancy in Nepal had waned during the decades after 651" (Petech, 1984:25).

१२. यी उद्धरणको मूल अंग्रेजी यस ग्रन्थको परिशिष्टमा संकलन गरिएको छ ।

१३. ज्ञानमणि नेपालले गोपालवंशावलीको वक्तव्यको आधारमा पाटनको रातो मत्स्येन्द्रनाथको जात्रा यिनै नरेन्द्रदेवले शुरु गरेको हुन सक्ने मान्नु भएको छ (नेपाल, २०४०: १५२) । गोपालवंशावलीमा नरेन्द्रदेवसम्वन्धी अनेक विवरण पाइनेमा एकजनाको विवरणमा सो जात्रा चलाएको भनिएकोमा ती नरेन्द्रदेव मध्यकालका होलान् भन्ने लाग्दछ । किनभने डा. तुलसीराम बैद्य "ठिमीबाट प्राप्त ऐतिहासिक पत्र" Voice of History, Vol.VIII, No.1, Dec. 1982, p.26 मा सम्वत् २५१ मा "श्री नरिन्द्रमल्ल राजाले श्री ३ मछिन्द्रनाथ नेपालस विज्याकगु" भनिएकोले ई. ११३१ मा नरेन्द्रदेवले मत्स्येन्द्रनाथको जात्रा चलाएको थाहा पाइने हुनाले यस्तो अनुमान गरिएको हो ।

१४. दाता सद्द्रविणस्य भूरिविभवो जेता द्विषत्संहतेः
कर्ता बान्धवतोषणस्य विधिवत्पाता प्रजानामलम् ।
हर्त्ता संश्रितसाधुवर्ग्गविपदां सत्यस्य वक्ता ततो
जातः श्री शिवदेव इत्यभिमतो लोकस्य भर्त्ता भुवः ॥

१५. मातापित्रोरात्मनश्च विपुलपुण्योपचयहेतोरस्माभिः
स्वकारित श्रीशिवदेवश्वरं भट्टारकान्निमित्तीकृत्य
तद्देवकुलखण्डस्फुटितसंस्कारकरणाय वशपाशुपताचार्येभ्यः प्रतिपादित ...... ।

१६. पुत्तीनारायणदेवकुलप्रतिवद्धदावाकोट्टाभिधानोग्रामः पूर्व-
द्राजकुलेनाविच्छेदक्रमेणो-पभुज्यमानसतलशीताटीद्रंगनिवासिनां पालनोपभोगार्थ प्रसादीकृतोस्य ।

१७. देवकुलस्यखण्डस्फुटितसंस्कारकारणपूजादिकमेभिरेतत्कर्त्तव्यं
कारणपूजाव्यवशिष्टेन च
द्रव्येण भगवतः श्रीपशुपतिभट्टारकस्य प्रतिवर्षं मस्मत्यपुणधिगमनिभित्तं
शोभनच्छत्रा-रोपणा करणीया तमुद्दिश्य शोभाना यात्त्रापि करणीया
तदुपयुक्तशेषमपिप्रत्यायजातमेतैर्विभज्य स्वयमुपभोक्तव्यं एष च ग्रामः ॥

१८. देवीबाहुबलाढ्यमौखरिकुलश्रीवर्म्मचूडामणि
ख्यातिह्रेपितवैरिभूपतिगणश्रीभोगवर्म्मोद्भवा ।
दौहित्री मगधाधिपस्य महतः श्र्यादित्यसेनस्य या
व्यूढा श्रीरिवतेन सा क्षितिभुजा श्रीवत्सदेव्यादरात् ॥

१९. जयदेवलाई 'राजपुत्र' भन्नामा 'राजपुत्र' शूरसेन र भोगवर्माको मौखरिवंशसँग सम्बन्धित हुनुपर्दछ जस्तो लाग्दछ । जयदेवले पशुपति अभिलेखमा भोगवर्मालाई आफ्नो मातामहको रुपमा ससम्मान वर्णन

गराएका छन् । शूरसेनलाई राजपुत्र भनिएको देख्दा जयदेवलाई आफ्ना प्रमातामह र मातामहको वंशको गौरवको निकै प्रभाव परेको अनुमान गर्न सकिन्छ ।

२०. एक आर्को ज्यादै खण्डित अभिलेख पाटन मंगलबजारनिर रहेको छ जस्मा संवत् १४४ (ई.७२०) लेखिएको छ (वज्राचार्य, २०३०: ५९६) ।

२१. तस्माद् भूमिभुजोप्यजायत जितारातिरजयः परै
राजा श्रीजयदेव इत्यवगतः श्रीवत्सदेव्यात्मजः ॥
त्यागी मानधनो विशालनयनः सौजन्यरत्नाकरो
विद्वान् सत्कविराश्रयो गुणवतां पीनोरुवक्षः स्थलः ॥

२२. सः श्रीमान्जयदेवाख्यो विशुद्धबृहदन्वयः
लब्धप्रतापः सम्प्राप्तबहुपुण्यसमन्वयः ॥

२३. अङ्गश्रिया परिगतो जितकामरुपः
काञ्चीगुणाढ्यवनिताभिरुपास्यमानः ।
कुर्व्वन्सुराष्ट्रपरिपालनकार्यचिन्तां
यः सार्वभौमचरितं प्रकटीकरोति ॥

२४. राज्यं प्राज्यसुखोर्ज्जितद्विजजनप्रत्यर्प्पिताज्याहुति-
ज्योतिर्ज्जातिशिखाविजृम्भणजिताशेषप्रजापद्रुजम् ।
बिभ्रत्कण्टकवर्ज्जितन्निजभुजावष्टम्भविस्फूर्ज्जितं
शुरत्वात्परचक्रकाम इति यो नाम्ना परेणान्वितः ॥

२५. कः कुर्यात्कुलजः पुमान्निजगुणश्लाघामिति ह्रीच्छया
राज्ञासत्कविनापि नो विरचितं काव्यं स्ववंशाश्रयम् ॥
श्लोकान्पञ्चविहाय साधुरचितान्प्राज्ञेनराज्ञा स्वयं
स्नेहाद् भूभुजि बुद्धकीर्त्तिरकरोत्पूर्वामपूर्वाभिपमाम् ॥
(वज्राचार्य, २०३०: ५५२) ।

२६. माद्यद्दन्तिसमूहदन्तमूसलक्षुण्णरिभूभृच्छिरो
गौडोड्रादिकलिङ्गकोसलपतिश्रीहर्षदेवात्मजा ।
देवी राज्यमती कुलोचितगुणैर्युक्ता प्रभूता कुलै
र्येनोढा भगदत्तराजकुलजा लक्ष्मीरिवक्ष्माभुजा ॥

२७. "The identity of this king Harsha is not yet satisfactorily established. The reference to the dynasty of Bhagadatta seems to associate him with Assam, but this is by no means certain ……. This identification must remain doubtful until independent evidence of these great achievements of Harisha or Harsha is forthcoming."

२८. राज्यं प्राज्यसुखोर्ज्जितद्विजजनप्रत्यर्प्पिताज्याहुति-
ज्योतिर्ज्जातिशिखाविजृम्भणजिताशेषप्रजापाद्रुजम् ॥

२९. योगक्षेमविधानबन्धुरभुजस्संवर्द्धयन् बान्धवान् ।



स्निह्यत्पुत्रकलत्रभृत्यसहितो लब्धप्रतापो नृपः ।
दीर्घायुर्न्निरतान्निरामयवपुर्न्नित्यप्रमोदान्वितः ।
पृथ्वीं पालयतु प्रकामविभवस्फीतानुरक्तप्रजाम् ॥

३०. काशीनाथ तमोटले यो नामको शुद्ध रुप 'जि (च्चो) द्गेसु' हो भन्ने मान्नुभएको छ (तमोट, २०४७: ४) ।

३१. सुनधारामा अघि यी रुपवर्माको अभिलेख रहेको सुनिएको र हाल लुप्त भएको चर्चा धनवज्र वज्राचार्यले गर्नु भएको छ (ऐजन) ।

३२. यिनै रुपवर्मालाई बाबुराम आचार्यले अंशुवर्माका पिताका रुपमा मानिदिनु भएको थियो (वज्राचार्य, २०३७: ७) । यसबारेमा माथि अंशुवर्माबारे विचार गर्दा विचार गरिसकिएको छ ।

३३. यही अभिलेखमा संवत् १७२ पढेर राजाको नाममा शंकरदेव पढेर मोहनप्रसाद खनालले अलमल पार्नु भएको छ (खनाल, २०४०: १५१) । उहाँले धनवज्र वज्राचार्यको पाठको तुलना पनि नगर्नु भएको र शुद्धिपत्र पनि नदिनु भएकोले शंका उठेकाले यस कुराको तुलनात्मक निर्णय नहुञ्जेल धनवज्र वज्राचार्यको पाठलाई यहाँ आधार मानिएको छ ।

३४. समाप्तञ्चेदं सहोत्तरतन्त्रमिति ……
राज्ञि श्रीमानदेवे पृथुसितयशसि प्रोद्यदिन्दुप्रकाशे ।
काले पुण्यार्ज्जनस्य सकलजनमनोल्हादिरम्ये वसन्ते ॥
वर्षे चैकोत्तरस्मिंस्त्रितयशतगते माधवे मासि शुक्ले ।
सप्तम्यां पुष्यऋक्षे दश (श) त किरणे वासरे सिद्धयोगे ॥
उत्पत्त्याद्यम्बुवेलाकुलाविविधरुजाग्राह … तिरौद्रे ।
संसारे सागरेस्मिञ्जगदिदमखिलं ग्लानिनं सम्प्रवीक्ष्य
तस्माच्छ्रीहर्षचन्द्रान्निरतिशयघृणाभावितो भोक्तुकामः ।
प्रीत्या चे … प्रालिखत् सुश्रुताख्यम् ॥
श्रीगणदेवदेवकुलदूरीग्वलकनिवासिनो वैद्यवसुवर्मणः पुस्तकमिदं पठित्वार्धमवगम्य सर्वसत्वानामुपदेशं विधातुं (वज्राचार्य, २०३०: ५९९) ।

३५. उदयपुरमा सारिएको एउटा पाण्डुलिपिको पुष्पिकावाक्यमा ने.सं. २७० (ई. ११५०) को मिति दिएर "श्रिरो श्रीकुलपुत्रस्य फुलङ" को नामोल्लेख भएकोमा (रेग्मी, १९६५: १७८) अचम्मको नाम र नायक उपाधि जोडिएको देख्दा यी व्यक्ति पनि मगर नै हुन् भन्ने अनुमान गरी पूर्व उदयपुरसम्म मगरहरुको विस्तार भएको अनुमान गर्न सकिन्छ ।

# खण्ड - ६

## राजनीतिक अध्ययन

माथिका पृष्ठहरुमा लिच्छविकालको इतिहासको मोटामोटा अध्ययन गरिएको छ । त्यो इतिहासको राजनीतिक निष्कर्ष के कस्तो देखिन्छ भन्ने मूल्याङ्कन यहाँ गरिन्छ । हुन त यस खण्डमा वर्णन गरिने विषयहरुको विस्तृत र तुलनात्मक विश्लेषण गर्नुपर्ने हो त्यस्तो गर्न नसकिए पनि छोटकरीमा आवश्यक विषयहरुको संक्षिप्त समालोचना गरेर हेरिन्छ ।

### राज्य

एक राजनीतिक संगठनको रुपमा नेपालको इतिहास कहिलेदेखि आरम्भ हुन्छ भन्ने विषयमा राम्रो अनुसन्धान हुन बाँकी नै छ तर पुराना भारतीय साहित्यमा नेपाल नामको उल्लेख भएको पाइनाले गोपाल र किरातकालदेखि नै नेपाल राज्यको अस्तित्व रहेको देख्दा राज्यसम्बन्धी धारणाको प्राचीनता बारेमा अनुमान गर्न सकिन्छ । तर आन्तरिक लिखित सामग्रीहरुको अभावको कारणले राज्यको धारणासँग सम्बन्धित अन्य विविध पक्षहरुको बारेमा जान्न सकिएको छैन ।

शिलालेख प्रमाणहरु पाइन थालेपछि राज्यसम्बन्धी धारणा र राज्यको संगठनसम्बन्धी तात्कालिक सिद्धान्तबारे बुझ्ने सन्दर्भहरु पाइन्छन् । त्यस्ता सन्दर्भहरुको संक्षिप्त चर्चा यहाँ गरिन्छ ।

### राज्य सम्बन्धी धारणा:

राज्यसम्बन्धी धारणा त्यस कालका अनेक अभिलेखहरुमा व्यक्त भएको पाइन्छ । मानदेवको चाँगुनारायण अभिलेखमैं 'महत् राज्यं' र 'राज्यं' को उल्लेख भएको छ (वज्राचार्य, २०३०: ११) । राज्यको आर्को उल्लेख जयदेव द्वितीयको ई. ७३३ को पशुपति अभिलेखमा भएको छ (ऐजन: ५५०) ।

### देश

राज्यको विभाजन विभिन्न 'देश' हरुमा गरिन्थ्यो भन्ने थाहा पाइन्छ। मानदेवको चाँगुनारायण अभिलेखमैं यस कुराको सन्दर्भ पाइन्छ । त्यसमा "पूर्वदिशाश्रया: सामन्ता" भनेर पूर्वतर्फ रहेका 'देश' हरुका सामन्तहरुको चर्चा भएको छ । पश्चिमतर्फको सन्दर्भमा देश भनेर स्पष्ट उल्लेख भएको छैन तर 'पश्चाद्भुव' को रुपमा पश्चिम तर्फका देशहरुको अस्तित्वतिर संकेत गरेको अनुमान गर्न सकिन्छ । केन्द्रशासित क्षेत्रलाई पनि सोही अभिलेखमा 'देश' नै भनिएको छ । पूर्व र पश्चिम देशका सामन्तहरुलाई जितेर राजा मानदेव



"आफ्नो देशमा फर्किनुभयो" (स्वकं देशमभ्याजगाम) भन्ने वर्णन त्यहाँ भएकोले उक्त कुरा स्पष्ट हुन्छ ।

जिष्णुगुप्तलाई पनि एउटा अभिलेखमा 'देशसौख्यैकचित्त:' अर्थात् "देशलाई सुखी बनाउन एकचित्त भई लागेका" भन्ने विशेषण लगाइएकोमा (ऐजन: ४२३) सो 'देश' शब्दले केन्द्रशासित देशलाई अर्थ्याएको बुझ्न सकिन्छ । विष्णुगुप्तको मालीगाउँको अभिलेखमा पनि "देशपीडापरिहारनिष्ठं शासनं" (देशवासीको मर्का हटाउन गरिदिएको शासन) को रुपमा पनि देशको उल्लेख भएको देखिन्छ (ऐजन: ४३९) ।

### नेपाल नाम

उपर्युक्त 'देश' हरुद्वारा संघठित राज्यको नाम नेपाल रहेको कुरा विभिन्न स्रोतबाट थाहा पाइन्छ ।

ईस्वीपूर्व छैठौं शताब्दीतिरै राज्यको रुपमा नेपालको उल्लेख पाइने भए पनि लिच्छविकालका शिलालेखहरुमा यो नामको चर्चा अपेक्षाकृत कम नै भएको पाइन्छ ।

ई. ५१२ को अभिलेखमा सर्वप्रथम नेपालको स्पष्ट उल्लेख पाइन्छ (वज्राचार्य, २००३०: ११०) र ई. ७३३ तिरसम्मका अरु ९ अभिलेखहरुमा यसको उल्लेख पाइन्छ (ऐजन: ३०९, ३११, ४४२, ४६३, ४८५, ५१९, ५३०, ५७३) तर यी सन्दर्भमध्ये दुइटामा सो नामसँग दुइटा विशेषण जोडिएको पाइन्छ ।

शिवदेव द्वितीयको ई. ७०५ को बलम्बू अभिलेखमा 'नेपालभुक्ति' को उल्लेख भएको पाइन्छ (ऐजन: ५३०) । 'राष्ट्र' को अर्थमा यहाँ 'भुक्ति' को प्रयोग भएको कुरा धनवज्र वज्राचार्य मान्नुहुन्छ (ऐजन: ५३४) ।

जयदेव द्वितीयको ज्ञानेश्वर अभिलेखमा 'नेपालमण्डल' को उल्लेख भएको पाइन्छ (ऐजन: ५७३) । भुक्तिजस्तै मण्डलले पनि राज्यकै अर्थ गरेको मान्न सकिन्छ ।

### लिच्छवि राज्यको स्वरुप

उपर्युक्त देशहरुद्वारा निर्मित राज्यमा लिच्छवि राजाहरुको शासन रहेको थाहा पाइन्छ । तर त्यो राज्य कत्रो थियो र कहाँदेखि कहाँसम्म फैलिएको थियो भन्ने कुरा स्पष्ट बताउने सन्दर्भको अभाव हुनाले यस विषयमा इतिहासकारहरुमा मतभेद रहेको छ ।

चौथो शताब्दीमा नेपाल कत्रो थियो भन्ने कुरा बुझ्न समुद्रगुप्तको प्रयाग प्रशस्तिले केही सहयोग दिन खोजेजस्तो छ तर त्यसले प्रस्तुत गरेको सन्दर्भको व्याख्या पनि इतिहासकारहरुले भिन्नाभिन्नै रुपले गरेका छन् ।

बाबुराम आचार्यको विचारमा नेपाल र कामरुपका बीचमा अर्को स्वतन्त्र राज्य थिएन, टिष्टा नदी यी दुइ राज्यको बीचमा सीमाना थियो तर "यस बीचमा प्रदेशहरुमा अर्धसभ्य अवस्थामा रहेका आग्नेयदेशी जातहरु रहेका हुनाले

न नेपालका लिच्छविहरुले त्यस नदीसम्म अधिकार फैलाउन सकेका थिए न कामरुपीहरुले" (आचार्य, २०३७कः २) ।

आसाम र कुमाउंको बीचको भू-भागलाई नेपाल मान्ने विचारलाई चुनौती दिँदै डा कमलप्रकाश मल्लले त्यस्तो स्थिति प्रमाणहरुको आधारमा असम्भव मान्नु भएको छ (मल्ल, १९८४: ५-६) ।[1]

यता मानदेवको चाँगुनारायण अभिलेखले लिच्छवि राज्यमा मल्लपुरी र पूर्वदेश शामिल रहेको देखाई सो राज्य पूर्व र पश्चिममा ठूलो क्षेत्रमा फैलिएको संकेत गर्न खोजेको छ तर सो मल्लपुरी र पूर्वदेशको समीकरण गर्ने काममा प्रमाणको अभाव हुनाले समस्या कायमै रहन गएको छ ।

हाम्रो यस्तो समस्याको स्थितिमा चिनियाँ यात्री ह्वेनसाङ्गको टिपोटको हामीलाई ठूलो आधार हुन आएको छ । ह्वेनसाङ्गको सो टिपोटको व्याख्या गर्दै धनवज्र वज्राचार्य भन्नुहुन्छ – "... यस कारण ४००० लीको ५८६ २/३ कोश हुने भयो । यसरी नेपालको लम्बाई चौडाइको जम्मा २९३ कोश हुने भयो । यसबाट नेपालको लम्बाइ २०० कोशभन्दा बढी र चौडाई १०० कोशभन्दा कम भएको देखिन्छ । राजधानीको घेरा चाहिँ ३ कोश देखिन्छ (वज्राचार्य, २०१९: २४, वज्राचार्य, २०३०: २८) ।

अरु इतिहासकारले पनि ह्वेनसाङ्गको टिपोटको आधारमा लिच्छविकालीन नेपाल (सातौं शताब्दीतिर) एक हजार किलोमीटर लम्बाई चौडाई भएको थियो, जुन वर्तमान नेपालको स्वरुप जत्रै हुन्छ भनेका छन् (पन्त, शर्मा, १९७७: १६) ।

ज्ञानमणि नेपालको विचारमा "ह्युन च्वांगले आफ्नो यात्रा वृत्तान्तमा नेपालको परिधि ४००० ली को छ भनी बताएका छन् । ६ ली - १ कोसको हिसाबले जोड्दा वर्तमान नेपालको परिधिसँग अलिकति मात्रै फरक पर्न आउँछ । यता समुद्रगुप्तको स्तम्भलेखमा आसाम र कुमाउंका बीचको प्रत्यन्त देश नेपाल हो भन्नु उता चीनी वृत्तान्तमा नेपालको परिधि ६६६ २/३ कोस छ भनी लेख्नुले प्राचीनकालको विस्तारलाई बोध गराउँछ । सामान्यतः वर्तमान नेपालको भौगोलिक स्थितिसँग उस बेलाको स्थिति मिल्दोजुल्दो देखिन्छ (नेपाल, २०४०: ३-४) ।

ह्वेनसाङ्ग प्रामाणिक विवरणबाट लिच्छविकालिक नेपाल काठमाण्डू उपत्यकाभित्र र नजिकैका क्षेत्रमा मात्र सीमित थियो भन्ने कुराको खण्डन हुन्छ तापनि पूर्व-पश्चिममा कुनै शिलालेख नपाइएकोले यो समस्याको स्थायी समाधान हुन सकेको छैन ।

महेशराज पन्तले यस विषयमा भन्नु भएको छ – "नेपालको राष्ट्रिय गौरव बढाउने विचारले प्रमाणाभासको आधारमा प्राचीनकालमा नेपाल ठूलो थियो भनी सिद्ध गर्न (खोजिएको हैन) । ऐतिहासिक सामग्रीहरुको गहकिलो अनुशीलनबाट यो निर्णय गरिएको हो । यसकारण प्रमाणाभासको आधारमा नेपाल भन्नु नै नेपालखाल्डो हो (भन्ने कुरा इतिहासविरुद्ध ठहरिन्छ)" (पन्त, २०४०)।



## राज्यको राजनीतिक संगठन

तात्कालिक नेपाल राज्यको राजनीतिक संगठनका कतिपय तथ्यको उल्लेख माथि अनेक सन्दर्भमा भएको छ । यस विषयमा यहाँ अरु विचार गरिन्छ । तात्कालिक राज्यको राजनीतिक संगठनमा केन्द्रशासित र सामन्तशासित क्षेत्रको रुपमा मुख्य विभाजन भएको पाइन्छ ।

### केन्द्रशासित क्षेत्र

केन्द्रशासित क्षेत्रको प्रशासकीय विभाजनमा ग्राम सबभन्दा पहिलो तह रहेको र सोपछि तल (पछिको टोल?) रहेको र त्यसका तालुकेदार अधिकारी 'तलस्वामि' रहेको कुरा एक अभिलेखबाट थाहा पाइन्छ (ऐजनः २७४) । अभिलेखहरुमा यो तलस्वामिको उल्लेख फेरि भएको नपाइए पनि उपयुक्त स्थानहरुमा यस्तो व्यवस्था रहेको अनुमान गरिएको छ ।

'तल' भन्दा माथि द्रंगको स्थान रहेको पाइन्छ तर यस प्रशासकीय तहका प्रशासक को हुन्थ्यो भन्ने कुरा अज्ञात छ ।

राज्यभित्र कतिपय क्षेत्रमा 'विषय' अथवा जिल्ला रुपको प्रशासकीय तहको सिर्जना हुने गरेको अनुमान गरिएको छ । अंशुवर्माका भट्टवाल र टिष्टुङ्गका एकै भाकाका अभिलेखमा 'विषयपति' पदाधिकारी र तिनले नियुक्त गर्ने अनेक कर्मचारीहरुको उल्लेख भएको छ (ऐजनः ३०९, ३११) । विषय खालका प्रशासकीय क्षेत्रका हाकिम 'विषयपति' हुन्थे भन्ने यस सन्दर्भबाट बुझिन्छ । यस्तो सन्दर्भ फेरि अन्यत्र नपाइए पनि विषयपति नियुक्त गर्ने चलन अन्य क्षेत्रमा पनि लागू हुन्थ्यो कि भन्ने अनुमान गरिएको छ ।

केन्द्रशासित भूक्षेत्रमा पनि ठाँउ ठाउँमा सामन्तहरु नियुक्त भएका देखिनु पनि विचारणीय छ । अंशुवर्माको पालाको मान सकिने बलम्बू भेल्बुको खण्डित अभिलेखमा प्रशासनिक सन्दर्भमा 'सामन्त' चन्द्रवर्मा गोमीको उल्लेख भएको छ (ऐजनः ३९५) । ध्रुवदेव र जिष्णुगुप्तको पाटन छिन्नमस्ताको ई. ६२४ को अभिलेखमा उल्लेख हुने 'सामन्त' चन्द्रवर्मा (ऐजनः ४०१) र माथि चर्चिएका चद्रवर्मा एकै हुन् कि भन्ने अनुमान गर्न सकिन्छ र उनी पाटन- थानकोट भेकका सामन्त शासक थिए कि भन्ने अनुमान गर्न सकिन्छ । राजधानीको यति नजीकैको क्षेत्रमा पनि सामन्त नियुक्त गर्ने गरेको यो चलन अलिकति आश्चर्य लाग्दो छ । तर अलि पछिको आर्को अभिलेख दक्षिणकोलीग्राम भेकमा पनि सामन्त नियुक्त भएका देखिँदा सो नीति अन्यत्र पनि लागू गरिएको थाहा पाइन्छ । ध्रुवदेव र जिष्णुगुप्तको काठमाडौं जैसीदेवलनिर मीननारायणस्थानको अभिलेखमा उल्लिखित महासामन्त जीवदेवको सन्दर्भबाट सो कुरा समर्थित हुन पुगेको हो (ऐजनः ४०८) । पाटन अलि कम विकसित क्षेत्र हुनाले त्यहाँ 'सामन्त' तहका प्रशासक नियुक्त भएका थिए भने काठमाडौं भेक अथवा उस बेलाको दक्षिणकोलीग्राम अलि विकसित बस्ती हुनाले त्यहाँ 'महासामन्त' तहका प्रशासक नियुक्त भएको अनुमान गर्न सकिन्छ । तर राजधानीका यति नजीकैका क्षेत्रमा

सामन्त - क्षेत्र सिर्जना गर्ने चलन पहिले र पछि भएको थाहा नपाइने हुनाले यी आकस्मिक घटना हुन् जस्तो लाग्दछ । टाढा टाढाका केन्द्रशासित क्षेत्रमा सामन्त नियुक्त भएका सन्दर्भ नपाइनाले उपर्युक्त सन्दर्भलाई आकस्मिक मान्नुपरेको हो ।[२]

### सामन्त क्षेत्र

अभिलेख प्राप्तिको आधार मानेर पूर्व दुम्जादेखि पश्चिम गोरखासम्म र दक्षिणमा टिष्टुङ चित्लाङतिरसम्मको भूभाग केन्द्रशासित क्षेत्र थियो भन्ने विद्वानहरुले अनुमान गरेका छन् । यस विषयमा माथि केन्द्रशासित क्षेत्रबारे विचार गर्दा चर्चा गरिसकिएको छ । यो विचारबाट उक्त क्षेत्रभन्दा बाहिरका क्षेत्रतिरै सामन्तक्षेत्र पर्दथे भन्ने अनुमान गर्नुपर्ने देखिएको छ ।

तात्कालिक अभिलेखहरुमा सामन्त र सामन्तमण्डल (ऐजन: २४०) को उल्लेख निकै पाइन्छ । सामन्त उपाधिधारी कतिपय व्यक्तिको पनि ती अभिलेखमा उल्लेख भएको पाइनेमा तीमध्ये कतिलाई केन्द्रीय शासनक्षेत्रभित्रका सामन्तको रुपमा लिनुपर्ने देखिएको छ । सामन्तसम्बन्धी अन्य सन्दर्भलाई अर्धस्वतन्त्र सामन्त क्षेत्रसँग सम्बद्ध गर्न सकिने हुनाले तिनको अध्ययन त्यही परिप्रेक्ष्यमा गरिँदै छ ।

अर्धस्वतन्त्र सामन्त क्षेत्रलाई पनि एक अनुमानअनुसार निम्न रुपले वर्गीकरण गर्न सकिन्छ जस्तो लाग्दछ :

(क) सामन्त
(ख) श्रीसामन्त
(ग) श्रीमहासामन्त
(घ) महाराज महासामन्तश्री
(ङ) महाराज

यस्तो वर्गीकरण शिलालेखहरुमा चर्चित सदर्भहरुकै आधारमा गरिएको हो । उक्त वर्गीकरणको विवरण दिनु अघि मानदेवको चाँगुनारायण अभिलेखमा चर्चित मल्लपुरी र पूर्वदेशका तथाकथित सामन्तहरुलाई कुन वर्गमा राख्ने भन्ने विषयमा केही भन्न नसकिने स्पष्टीकरण यहाँ पहिले नै गरिहाल्नुपरेको छ ।

### सामन्त

शिलालेखहरुमा चर्चित सामन्तसम्बन्धी विवरण, अंशुको आरम्भिक पदवी र चन्द्रवर्माका उदाहरणहरुबाट सामन्त तहबारे अनुमान गर्न सकिन्छ । यो पदवीमा पनि श्रीको उपयोगमा अन्तर देखिन्छ । साधारण खालका सामन्तलाई सम्मानवाचक श्रीशव्द नजोडिने र विशेष खालका सामन्तलाई सो श्री जोडिने गरेको अनुमान गर्न सकिन्छ । अंशुवर्माको शुरुको पदवी श्रीसामन्त देखिँदा उनी दोस्रा् तहको सामन्त राजवंश परिवारका थिए कि भन्न सकिन्छ ।



### महासामन्त

अंशुवर्माको उदाहरणमा यो पदवी ज्यादै प्रसिद्ध भएको छ । यस विषयमा माथि चर्चा गरिसकिएको छ । यो उपाधिमा समनवाचक श्रीको पनि उपयोग गरिएको पाइन्छ । ई. ५९४ का प्रमाणहरुमा अंशुवर्माको पदवी श्रीसामन्त रहेको र त्यही मितिका अन्य प्रमाणहरुमा उनैको पदवी श्रीमहासामन्त देखिन थाल्ने हुनाले अंशुवर्माको पदोन्नति भएको अनुमान गर्न सकिन्छ ।

अंशुवर्माका भानिज भोगवर्मा पनि ई. ६१३ तिरको पाटन नवहिल अभलिखमा महासामन्त पदवीधारी देखिन्छन् (ऐजन: ३४५) । संवत् ५३६ वा ई. ५१४ को गोकर्ण अभिलेखमा उनको महासामन्त उपाधिमा श्री पनि थपिएको छ (राजवंशी, १९९०: ३४) । यसरी भोगवर्माको पदोन्नति आफ्ना मामा अंशुवर्माको समकक्ष हुन पुगेको देखिन्छ ।

सामन्तस्तरीय उपधि लेखाइएको आधारमा अंशुवर्मा र उनका भानिज भोगवर्मालाई अर्धस्वतन्त्र क्षेत्रीय शासकका रुपमा लिन सकिने कुरा स्पष्ट भए पनि तिनको राज्य मूलत: कहाँ थियो भन्ने प्रश्नको स्पष्टीकरण गर्न सकिने कुनै साधन उपलव्ध छैन ।

### महाराज

अंशुवर्माको ई. ६०७ को भटुवाल र टिष्टुङ अभिलेखमा दूतकका रुपमा 'महाराज' उपाधिधारी विप्रवर्माको नामोल्लेख गरिएको पाइन्छ (ऐजन: ३१०) । उक्त दुवै अभिलेख एकै भाकाका देखिने हुनाले टिष्टुङ अभिलेख अन्त्यमा खण्डित भए पनि त्यसमा भटुवालको अभिलेखमा जस्तै महाराज विप्रवर्मा दूतकका रुपमा राखिएको अनुमान गर्न सकिन्छ ।

शिवदेव-अंशुवर्माका ई. ५९५ र ५९७ का अभिलेखमा दूतकका रुपमा चर्चित विप्रवर्मा गोमी नै (ऐजन: २५८, २६१, २६७) माथि चर्चित महाराज विप्रवर्मा हुन् कि भन्न सकिन्छ ।

लिच्छवि राजाहरुलाई पनि महाराज नै भनिन्थ्यो तर उनीहरुको स्वाधीनतालाई व्यक्त गर्न 'भट्टारक' पदवी पनि जोडिन्थ्यो भने विप्रवर्मालाई महाराज पदवी मात्रै लेखिएको देख्दा उनी पनि महत्वपूर्ण सामन्तक्षेत्रका शासक होलन् भन्ने अनुमान सहजै गर्न सकिन्छ । अन्य सन्दर्भमा जस्तै विप्रवर्माको सन्दर्भमा पनि उनको शासन-क्षेत्रबारे थाहा पाउने कुनै प्रमाण उपलव्ध छैन ।

विप्रवर्मासम्बन्धी दुइ किसिमका सन्दर्भको चर्चा माथि गरिएको छ । त्यसबाट राजाको सम्पर्कमा आएर महत्वपूर्ण हुन पुगेका विप्रवर्मालाई महाराज खालका सामन्त शासक बनाई सम्बद्ध क्षेत्रमा पठाइएको अनुमान गर्न सकिन्छ ।

### महाराज महासामन्तश्री

राजा वसन्तदेव र राजमदेवका शासनकालमा ई. ५३२ र ई. ५४५ का सन्दर्भमा क्रमलीललाई उक्त उपाधि प्रयोग गरिएको देख्दा (ऐजनः १४५, १४७, १७५) यो तहको सामन्तक्षेत्रको अस्तित्व मान्नुपरेको हो ।

क्रमलीलमा प्रयुक्त भएको उक्त लामो उपाधिको तीन क्रम रहेको देखिन्छ। पहिलो त महासामन्तको पदवी हो जुन उनको मूल पदवी हो भन्ने अनुमान गर्न सकिन्छ । केन्द्रका शासकबाट उनीले पछि महाराज र श्री समेत पदवी पाएपछि उनी सामन्त खालका अर्धस्वतन्त्र शासकहरुमा सर्वोच्च तहका हुन पुगेको इतिहास बुझ्न सकिन्छ । उनको यो उन्नतिको परिणामस्वरुप उनी केन्द्रमा संयुक्तशासक तहमा पुग्न सफल भएको इतिहासबारे माथि विचार गरिसकिएको छ ।

सामन्तसम्बन्धी माथिको विवरण ऐतिहासिक साक्ष्यहरुको स्वरुपको आधारमा एकांगी रुपको हुन पुगेको तथ्य स्पष्ट भए पनि पदवीको वास्तविक स्वरुपको आधारमा यस्तो विचार गरिनु अतिशयोक्ति नहोला ।

माथि चर्चित सन्दर्भहरुमा उक्त खालका सामन्तहरुको आफ्-आफ्नो शासनक्षेत्र बारे थाहा पाउन नसकिए पनि यति थरीका सामन्त शासकको उल्लेख पाइनाले अन्य स्रोतबाट नेपालको विशालताबारे अनुमान गर्न सकिन्छ जस्तो लाग्दछ ।

माथि चर्चित सबै तहका सामन्तहरु केन्द्रीय शासनसँग सम्बद्ध भएका देखिंदा सामन्त-शासकहरुले पनि केन्द्रीय शासनमा हात हाल्न सक्ने स्थिति बुझ्न सकिन्छ । क्रमलील र अंशुवर्मा तात्कालिक राजनीतिमा जस्तो सक्रियता देखाएका छन् त्यसबाट सामन्त क्षेत्रको राजनीतिक महत्वको अनुमान गर्न सकिन्छ ।

यो व्याख्या मान्न सकिएमा सामन्त र केन्द्रको बीचमा त्यस्तो घनिष्ठताको स्थिति रहेबाट राष्ट्रिय एकताको धारणा पनि विकसित भएको अनुमान पनि गर्न सकिन्छ ।

केन्द्रका राजा र सामन्त क्षेत्रका शासक दुवैलाई साधारणतया 'नृपति' नै भन्ने गरिएको पाइन्छ । मानदेवको चाँगुनारायण अभिलेखमा सामन्तक्षेत्रका शासकलाई 'नृपति' भनिएको छ भने मानदेवलाई पनि 'नृपति' नै भनिएको पाइन्छ (ऐजनः १२, श्लोक १४-१५) । यो तुलनाबाट सामन्त राजाहरुको पनि आफ्नो सम्मान र इज्जत हुन्थ्यो भन्ने बुझ्न सकिन्छ । तर व्यावहारिक रुपमा सामन्त शासकहरुले केन्द्रका शासकलाई अनेक किसिमले सम्मान गर्नुपर्ने हुन्थ्यो । यस्ता सम्मानमा केन्द्रका राजालाई ढोग्न जानु पनि सामिल हुन्थ्यो भन्ने कुराको चर्चा तात्कालिक केही अभिलेखमा भएको छ । उदाहरणार्थ, चाँगुको अभिलेखमा शिवदेव प्रथमले अंशवर्माको माहात्म्य लेखाउंदा व्यक्त भएको "ढोग्न आएका सामन्त राजाका शिरपेचका मणिको चहकले पाउ फलमल्ल सुहाएका श्रीसामन्तअंशुवर्मा" (प्रणतसामन्तशिरोमणिमयूखविक्षुरित-चरणारविन्दद्युतिना श्रीसामन्तांशुवर्म्मणा) (ऐजनः २३३) बाट यो कुरा प्रष्ट हुन्छ।



जयदेव द्वितीयको पशुपति वंशावली अभिलेखमा राजा वसन्तदेव र नरेन्द्रदेवको वर्णनमा पनि सामन्त राजाहरुले उनीहरुलाई ढोग्न आएको वर्णन गरिएको पाइन्छ (ऐजनः ५४९) । बलम्बूको ई. ७०५ को अभिलेखमा पनि शिवदेव द्वितीयलाई "सारा सामन्तहरुका शिरले, पाउका नङ फल्फल टल्कने पारिएका" (समस्तसामन्तशिरसा खरीकृतचरणनखमयूखसमूहः) भन्ने विशेषण लेखिएको पाइन्छ (ऐजनः ५३०) ।

हालसम्मका अध्ययनमा सामन्तक्षेत्रसम्बन्धी कुनै किसिमका ऐतिहासिक सामग्री नपाइनाले त्यस्ता क्षेत्रको इतिहास अन्धकारमा विलीन रहन गएको छ । यस्तै कारणले गर्दा त्यस्ता क्षेत्रको विकाससम्बन्धी तथ्यको हामीलाई ज्ञान हुन सकेको छैन । केन्द्रशासितक्षेत्रमा जस्तो किसिमको सांस्कृतिक गतिविधि भएको प्रमाण पाइन्छ त्यसको एक अंश पनि सामन्तक्षेत्रबारे थाहा नपाइएकोले नेपालको तात्कालिक इतिहाससम्बन्धी हाम्रो ज्ञान अपूरै छ भन्नुपर्दछ ।

### प्रशासन, प्रशासन शैली र प्रशासक

लिच्छविकालका अभिलेखहरुमा तात्कालिक प्रशासन व्यवस्थाको ज्यादै स्पष्ट प्रतिनिधित्व नभए पनि त्यसको जंजाल (complex) को अस्तित्व रहेको थाहा पाइन्छ । त्यसबेलामा प्रशासन व्यवस्था सुव्यवस्थित थियो भन्ने कुरा शिलालेखहरुमा चर्चित पारिभाषिक शब्दावलीहरुबाट पनि स्पष्ट हुन्छ ।

लिच्छविकालको सामान्य, न्याय र सैनिक प्रशासनबारे अरु लेखकहरुले चर्चा गरिसकेका हुनाले त्यसबारेमा यहाँ पिष्टपेषण गरिँदैन । तर सारांशमा यस पक्षबारे भन्ने हो भने प्रशासनसंयन्त्रले तात्कालिक नेपाल राज्यलाई सुसंगठित पारेको थियो र राजनीतिक चेतनाको विकास गरेको थियो ।

तात्कालिक प्रशासन शैली शासकहरुका मनोभावनाका अनुकूल भएको देखिए पनि बेला बेलामा गाउँ गाउँमा स्वायत्त शासन सुम्पिँदै जाने नीति यहाँ विचारणीय छ । यो नीतिबारे विस्तृत र तुलनात्मक विश्लेषण यहाँ गर्न सकिएको छैन तर यो नीतिले तात्कालिक राजनीतिमा के कस्तो प्रभाव पा-यो भन्ने कुराचाहिँ यहाँ उल्लेखनीय छ ।

लिच्छवि राजाको वैधानिक शक्तिलाई टुक्र्याएर राजनीतिमा संलग्न हुने रविगुप्त, भौमगुप्त र अंशुवर्मा गाउँ गाउँमा स्वायत्त शासन सुम्पिँदै जाने नीति लिएको देख्दा यो नीतिको पूर्ण वैधानिकताबारे एकातिर प्रश्न उठाउन सकिन्छ भने यो नीतिले ग्रामीण जनतालाई के उपलब्धि दियो त भन्ने आर्को प्रश्न उठाउन सकिन्छ । यो प्रश्नको ठीक जवाफ दिन सजिलो त छैन तर त्यस्तो स्वायत्तशासन प्राप्त ग्रामीणहरुको जुन किसिमले जागरण हुनुपर्थ्यो त्यस्तो नदेखिनु र उल्टो राजनीतिको मूलप्रवाह र राष्ट्रिय एकताको गतिमा क्षेत्र क्षेत्रमा अन्तरको अवस्था आयो कि जस्तो लाग्दछ । यही पक्षबारेमा विस्तृत विश्लेषण गरेर हेरिएमा यसको चित्तबुझ्दो व्याख्या प्रस्तुत गर्न सकिएला तर सारांशमा माथि भनिसकिएको स्थिति आएन होला भन्न सकिँदैन । राजा

जयदेवपछि लामो अवधिसम्म राजनीतिक अन्धकारको स्थिति ल्याउनामा सो नीतिले काम गरेको पनि हुनसक्दछ ।

त्यस्तो स्वायत्त शासनको नीति लिने प्रशासकहरुनै अर्ध शासक हुन पुगेको तथ्य पनि यहाँ उल्लेखनीय छ । प्रशासकहरुमध्ये एकथरि अर्ध-शासकसम्म हुन पुगेका र अन्य खालका प्रशासकहरुको उल्लेख समकालिक अभिलेखहरुमा विभिन्न रुपमा भएको पाइन्छ ।

प्रशासकहरुका सामाजिक-आर्थिक प्रतिष्ठा थाहा पाइने साधनस्वरुप स्वतन्त्र अभिलेखहरुको कमी नै देखिन्छ ।

१. प्रशासकहरुका स्वतन्त्र अभिलेखहरुमध्ये पहिलो अभिलेख नरवर्माको ई. ४६६ को लाजिम्पाटको शिवलिंग अभिलेख देखिन्छ (ऐजन: ३१) । यो अभिलेखमा नरवर्माले आफूलाई राजा मानदेवका 'भृत्य' (नोकर) भनेका छन् ।
२. सरकारी प्रशासकका शिलालेखहरुमध्ये विशिष्ट पशुपति भष्मेश्वरको ई. ५३३ को प्रतिहार ध्रुवसंघ वार्त्तको अभिलेख हो (ऐजन: १५५) । यसमा राजाको उल्लेख नगरिएकोले विशिष्ट खालको मान्नु परेको हो ।
३. सरकारी प्रशासकहरु पनि सिद्धान्तवादी, बुद्धिवादी र विशेष खालको सिद्धान्तका प्रचारकको तहका रहेछन् भन्ने कुरा ई. ५६५ को पशुपतिको अभिलेखबाट थाहा पाइन्छ । वार्त्त तहका विशिष्ट सरकारी कर्मचारी स्वामिको यो अभिलेख हो (ऐजन: १९८-१९९) ।
४. 'वार्त्त' तहका कर्मचारी विभुवर्माको ई. ६२० को टुँडीखेल ढुंगेधाराको अभिलेख पाइन्छ (ऐजन: ३७८) ।
५. यसैताकाको एउटा संक्षिप्त अभिलेख पाइन्छ जसमा "ॐमहाप्रतिहारवार्त्तसुजातप्रभविहारस्य" लेख लेखिएको छ (ऐजन: ४५७)। जलद्रोणी जस्तो ढुंगामा लेखिएको छोटकरी अभिलेखले सुजातप्रभ नामका महाप्रतिहार र वार्त्तजस्ता उच्च तहका कर्मचारीले विहार बनाउन लगाएको थाहा पाइन्छ । राजाहरुले बौद्धविहार बनाएको त पाइन्छ र त्यसै गरी सर्कारी विशिष्ट कर्मचारीले पनि बौद्धविहार बनाउने गरेको कुराको उदाहरण यस अभिलेखले प्रस्तुत गरेको छ । लिच्छविकालमा सरकारी कर्मचारी नियुक्त गर्दा धर्मसम्प्रदायको भेदभाव गरिदैनथ्यो भन्ने महत्वपूर्ण कुरा पनि यो अभिलेखले स्पष्ट गरेको छ। ई. ६७९ को अभिलेखमा चर्चित भएको "वार्त्त कल्याणगुप्तविहार" ले पनि (ऐजन: ४९७) यस्तै तथ्यको संकेत गरेको छ ।
६. राजा नरेन्द्रदेवको ई. ६५९ को ललितपुर गैह्रीधाराको अभिलेखबाट महाप्रतिहार चन्द्रवर्माले पशुपतिमा वाग्वतीपारिपट्टि रहेको वज्रेश्वरमण्डलीलाई केही जग्गाको गुठी राखेको सन्दर्भ पाइन्छ (ऐजन: ४८१-४८२) । सरकारी कर्मचारीले सांस्कृतिक गतिविधिमा योगदान गरेको यो सन्दर्भबाट उसबेलाका प्रशासकहरुको धारणा पनि बुझ्न सकिन्छ ।



७. साँखुको संक्षिप्त अभिलेखबाट 'श्रीधार्मराजिकामात्य...' तहका सरकारी कर्मचारीले साघिकभिक्षुसंघलाई कुनै कुराको दान गरेको कुरा लेखिएको छ (ऐजन: ५०८) ।
८. महासामन्त रुपवर्माले ई. ७८१ मा देउपाटनमा हिटी बनाएको सन्दर्भका पनि यहाँ सम्झना गर्न सकिन्छ ।

यी उदाहरणबाट लिच्छविकालको इतिहासको निर्माणमा प्रशासकहरुको पनि आफ्नो स्थान रहेको थाहा पाइन्छ ।

## राजा

लिच्छविकालका राजाहरुको वैधानिक स्थिति र स्थानबारे विस्तृत विश्लेषणात्मक अध्ययन गर्न सकिने सामग्री शिलालेखहरुमा सुरक्षित छन् । तर यहाँ संक्षेपमा यस विषयमा चर्चा गरिछ ।

### उपाधि

लिच्छविकालका अभिलेखहरुमा राजाको निम्न उपाधिको प्रयोग गरिएको छ:-

१. भट्टारकमहाराजश्री
२. भट्टारकमहाराजाधिराजश्री
३. परमभट्टारकमहाराजाधिराजश्री
४. भट्टारकमहाराजाधिराज परमेश्वरश्री

नम्बर १ को उपाधि मानदेवदेखि शिवदेव प्रथमसम्मका राजाहरुले प्रयोग गरिएको पाइन्छ । नम्बर २, ३, ४ चाहिँ अंशुवर्मादेखि जयदेव द्वितीयसम्मका राजाहरुले क्रमैसँग प्रयोग गरेका हुन् र प्रभावशाली हुँदै आएका यी उपाधिले तत्तत् राजाहरुको महत्वाकाङ्क्षालाई व्यक्त गरेको बुझ्न सकिन्छ । तर ती सबै उपाधिमा कायम रहने 'भट्टारक' को विशेष महत्व रहेको देखिन्छ ।

भारतीय अभिलेखहरुमा पनि मुख्यत: स्वाधीन र ठूला राजालाई यो उपाधिको प्रयोग गरिएको पाइन्छ (सरकार, १९६६: ५२) । भारतीय नाट्यशास्त्रमा नाटकीय सन्दर्भमा सार्वभौम राजालाई 'भट्ट' भन्नुपर्दछ भनिएको पाइन्छ (शर्मा, उपाध्याय १९२९: २१९) ।[३] यो भट्टको सम्बन्धसँग पनि जोडन सकिन्छ साथै अमरकोशमा पनि राजालाई 'भट्टारक' भनिएको छ (गौतम, २०२६: ५३) ।[४]

संक्षेपमा राजालाई सम्बोधन गर्दा 'श्रीपाद', (वज्राचार्य, २०३०: ४४) र 'श्रीभट्टारकपाद' (ऐजन: ३०१) भन्ने गरिएका सन्दर्भ पनि पाइन्छन् ।

### दैवी व्यक्तित्व

हिन्दू परम्परामा राजालाई देवताका प्रतिनिधि, देवताका अंश धारण गर्ने र देवता स्वरुपका मान्ने चलन चलेको कुरा ऐतिहासिक र पौराणिक आख्यानहरुबाट थाहा पाइन्छ । त्यही धारणा लिच्छवि राजाहरुलाई पनि लागू गराइएको हुनु स्वाभाविक छ ।

देवताहरुलाई 'भट्टारक' भनिन्थ्यो भन्ने कुरा लिच्छविकालका अभिलेखहरुबाट थाहापाइन्छ । राजाहरुलाई पनि त्यही उपाधि दिइएको देख्दा राजालाई पनि देवताजस्तै पूज्य मानिएको बुझ्न सकिन्छ ।

लिच्छवि राजहरुको देवान्त नाम राख्ने चलनमा देव शव्दले पनि देवता भन्नु नै अर्थ मानिएको बुझ्न सकिन्छ । अमरकोशमा पनि राजालाई 'देव' भनिएको छ (गौतम, २०२५: ५३) । यही परम्परामा भारतीय नाट्यशास्त्रमा पनि राजालाई देव भनेर सम्बोधन गर्नुपर्ने विधान गरिएको छ (शर्मा, उपाध्याय, १९२९: २१९) ।[५]

लिच्छविकालका अभिलेखहरुमा कतिपय स्थलमा राजालाई दैवी व्यक्तित्व दिएका सन्दर्भ पनि पाइन्छन् । राजाका उपाधिमा प्रयोग भएको 'महाराज' शव्दले कुवेर देवतालाई अर्थ्याएको छ भने 'परमेश्वर' ले ठूला देवता ।[६]

राजाहरुको दैवी व्यक्तित्वसम्बन्धी धारणाको सम्बन्ध तिनको वैधानिक्तासँग रहेको बुझिन्छ । यही पारम्परिक वैधानिक्ताको अभाव त्यस कालका संयुक्त वा उप शासकहरुमा नरहेको र उनीहरुले सो प्राप्त गर्नाका लागि कठिन प्रयास गरिरहेको देखिन्छ । रविगुप्तको राजनीतिक पृष्ठभूमिमा भौमगुप्तले श्री स्तरको वैधानिक्ता पाएको, अंशुवर्मालि सो श्री शुरुदेखि नै पाएको तर अन्तिम समयतिर मात्रै 'भट्टारक' को वैधानिक्ता पाउन सकेको देखिन्छ । जिष्णुगुप्तले 'देव' को वैधानिक्ताको दावा अन्तिम समयतिर गरेको देखिएको छ । लिच्छविकालको इतिहासमा आभीरगुप्तहरु र अंशुवर्मालि संयुक्तशासक वा उपराज शासकका रुपमा आफूहरुलाई प्रस्तुत गरेर नौलो राजनीतिक प्रयोग गरेको देखिन्छ तात्कालिक इतिहासको विशेषता यो नै देखिएको छ । मध्य र मल्लकालमा त यो सिद्धान्तमा पनि नौलो प्रयोग भएको पाइन्छ ।[७]

### युवराजको स्थान

एकराजपद्धतिको राजनीतिमा गद्दीनशीन राजापछिको स्थान युवराजको हुने देखिन्छ । तर लिच्छविकालको इतिहासले तत्कालीन राजनीतिमा युवराजको स्थानबारे अधिकांश रुपमा मौन धारण गरेको पाइन्छ ।

मानदेवको चाँगुनारायण स्तम्भाभिलेख, खण्डित रुपमा छ तापनि, यसमा पुर्ख्यौली र पिता माताको जुन उत्साहसाथ विवरण दिइएको छ आफूपछिको उत्तराधिकारीबारेमा मौन रहेको छ । मानदेवपछि संयुक्त शासनको वेगमा प्रसारित कुनै अभिलेखमा युवाराजको कुनै उल्लेख नपाइनु स्वाभाविकै भन्न



सकिन्छ । शिवदेव प्रथमका विविध खालका अभिलेखमा युवराजको कुनै उल्लेख नपाइनुमा हामीलाई फेरि आश्चर्य लाग्दछ ।

शिवदेवबाट गद्दी लिइको ५ वर्षपछि मात्र ई. ६१३ देखि अंशुवर्मालि आफ्ना प्रशासकीय खालका अभिलेखमा दूतकका रुपमा "युवराज उदयदेव" को उल्लेख गराउन थालेको पाइन्छ (वज्राचार्य, २०३०: ३४९) । युवराजको रुपमा उदयदेवको साधारण उल्लेख अंशुवर्माका अन्य अभिलेखहरुमा पनि पाइन्छ (ऐजन: ३५२, ३५५, ३५८) तर अंशुवर्माको अन्तिम समयतिर उदयदेवको महत्व बढेर होला एक अभिलेखमा दूतकका रुपमा युवराज उदयदेवलाई 'श्री' को पनि उपयोग गरिएको पाइनु महत्वपूर्ण भएको छ (ऐजन: ३६४) ।

उदयदेवपछि चलेको लिच्छवि र गोपालवंशीको संयुक्त शासनकालमा गोपालवंशी संयुक्त शासकका छोरालाई नै युवराज घोषित गर्ने नीति रहेबमोजिम त्यस कालका अभिलेखमा दूतकका रुपमा विष्णुगुप्तलाई पनि 'श्री' को उपयोग गरिएको पाइन्छ (ऐजन: ४०२, ४०५, ४१२, ४२०, ४३४) । यही चलन विष्णुगुप्तका उत्तराधिकारी श्रीधरगुप्तलाई पनि कायम गरिएको छ (ऐजन: ४३९, ४४३, ४४९) ।

त्यसपछि नरेन्द्रदेवले लिच्छवि राजगद्दी फिर्ता लिएर शासन गर्न थालेपछि शुरुमा प्रसारित प्रशासकीय खालका अभिलेखमा दूतकका रुपमा अन्य सरकारी कर्मचारीहरुलाई नियुक्त गर्ने गरिएको र ईस्वी ६५९ देखिका अभिलेखहरुमा मात्र दूतकका रुपमा युवराजहरुलाई राख्ने गरेको पाइन्छ यद्यपि बीच बीचमा अन्य उदाहरण पनि पाइन्छन् ।

ई. ६५९ को प्रमाणमा दूतकको रुपमा "भट्टारक श्रीयुवराज" उपाधिसाथ स्कन्ददेवको नाम पाइन्छ (ऐजन: ४८२) । युवराजलाई राजालाई जस्तै भट्टारक उपाधि दिएको यो अपूर्व चलन यस प्रमाणमा भेटिनु महत्वपूर्ण छ तर यसपछिका प्रमाणहरुमा त्यही चलन कायम गरिएको नपाइनु पनि महत्वपूर्ण हुन गएको छ । अनन्तलिङ्गेश्वरको मिति खिइएको तर ई. ६६५ तिरको मान्न सकिने अभिलेखमा अन्तिम भाग खिइएको छ तर "दूतकश्चात्र श्रीयुवराज... देवेति" पाठ बचेको छ (ऐजन: ४८७) । माथि चर्चित प्रमाणमा जस्तो 'भट्टारक' उपाधि यहाँ किन दिइएन भन्ने प्रश्न उठिहाल्दछ । उक्त मितिपछिका केही अभिलेखमा दूतकका रुपमा अन्य सरकारी कर्मचारी राखिएका पाइन्छन् (ऐजन: ४९१-४९२) । यसपछि संवत् ९५ (ई. ६७१) को अभिलेखमा दूतकका रुपमा 'श्रीयुवराजशौर्यदेव' को उल्लेख भएको छ (ऐजन: ४९५) । ई. ६७९ को अभिलेखमा दूतकको रुपमा "भट्टारक श्रीशिवदेव" को उल्लेख पाइन्छ (ऐजन: ५०१) । यो अन्तिम प्रमाणमा युवराजको अर्थमा भट्टारक मात्रको उल्लेख गरिएको छ । पहिलेका अभिलेखमा चर्चित स्कन्ददेव र शौर्यदेव के भए? तिनलाई दिइने उपाधिमा किन अन्तर पाइन्छ? अन्तिम उत्तराधिकारी शिवदेवको नामसाथ भट्टारक मात्रै किन लेखिएको छ युवराज किन लेखिएको छैन भन्ने धेरै प्रश्न उठ्दछन् । उपाधिमा यत्ति अन्तर हुनुमा केही राजनीतिक कारण पनि छ कि

हाल केही भन्न सकिँदैन । अन्तिम प्रमाणमा उल्लिखित शिवदेवले नै पिता नरेन्द्रदेवपछि लिच्छवि राजगद्दी पाएको कुरा त्यसकालका अभिलेखहरुबाट थाहा पाइन्छ । तर नरेन्द्रदेवको अन्तिम ज्ञात मिति ई. ६८५ को बीच ६ वर्षको अन्धकार युग शायद उत्तराधिकारको संघर्ष नै थियो कि भन्ने प्रश्न राख्न नसकिने देखिँदैन ।

नरेन्द्रदेवका छोरा शिवदेव द्वितीयको समयका अभिलेखहरुमा पनि युवराजको उपाधिमा अनेक प्रयोग गरिएको पाइन्छ । शिवदेव द्वितीयका ई. ६९५, ६९७, र ई. ७०५ तिरका अभिलेखमा अन्त्यमा दूतकका रुपमा 'राजपुत्र' मात्र विशेषण लगाइएका जयदेवको नामोल्लेख गरिएको छ (वज्राचार्य, २०३०: ५१५, ५२०, ५२८) । तर संवत् १२९ (ई. ७०५) को बलम्बू अभिलेखमा उनै जयदेवलाई पहिले श्री र पछि भट्टारक लेखिएको छ (ऐजन: ५३२)। मिति खिइएको आर्को खण्डित अभिलेखमा नाम अगाडि 'भट्टारकश्री' लेखिएको छ (ऐजन: ५३७) । युवराजको उपाधिमा नरेन्द्रदेवदेखि आएको यो विविधताले के कुराको संकेत गर्दछ भन्ने कुरा यसै बुझ्न सकिँदैन ।

उक्त विविधता स्वयं जयदेव द्वितीयले पनि आफ्ना अभिलेखहरुमा कायम गर्नु अचम्मलाग्दो छ । जयदेव द्वितीयको संवत् १३७ (ई. ७१३) को अभलेखमा दूतकको रुपमा 'भट्टारकश्रीविजयदेव' को उल्लेख भएको छ (ऐजन: ५४०) भने उनकै संवत् १४८ (ई. ७२४) को अभिलेखमा 'युवराजश्री विजयदेव' लेखिएको छ (ऐजन: ५४४) ।

जयदेवले ई. ७३३ मा पशुपतिमा उत्सवपूर्वक वंशावली र आत्मप्रशंसा गराउँदा आफ्ना उत्तराधिकारीको उल्लेखै नगरी उपेक्षा गर्नु पनि (ऐजन: ५४८-५५२) एक अनौठो कुरा छ । वंशावलीको बयानमा पुर्ख्यौंलीको तारीफ गरेर मात्रै पुग्दैन उत्तराधिकारीको वर्णन नभई वंशावली अपूर्णै रहन्छ ।

युवराज शब्दले युवा राजा भन्ने अर्थ बताउने हुँदा यसको वैधानिकता अझ स्पष्ट हुन्छ । व्यावहारिक दृष्टिकोणले पनि यो कुरा बुझ्न सकिन्छ । अंशुवर्माअघि युवराजको घोषणा गर्ने चलन थिएन भन्ने धनवज्र वज्राचार्यको मत (ऐजन: ३५३) यो परिप्रेक्ष्यमा अमिल्दो देखिन्छ । कुनै राजा गद्दीमा बस्ने बित्तिकै छोरा भए छोरा नभए भाइलाई पनि युवराज घोषित गर्ने त राजतन्त्रको एक मुख्य विशेषता नै हो ।

अंशुवर्माको हाँडीगाउँको ई. ६०६ को अभिलेखमा "श्री भट्टारकपादानां प्रत्येकं पु २४" लेखिएकोमा (ऐजन: ३०१) "गद्दीनशीन राजा प्रत्येकलाई २५ पुराण" भन्ने धनवज्र वज्राचार्यको अर्थगराइको सट्टा ज्ञानमणि नेपालले "राजा, युवराज साहेबज्यू" भन्ने अर्थ गर्नु भएको (नेपाल, २०४०: ६५, ६८) बढी मिल्दो लाग्दछ र यो सन्दर्भले युवराजको वैधानिकता स्पष्ट हुन आउँछ ।



## रानी

लिच्छविकालको राजनीतिमा रानीको स्थान थाहा पाउने सन्दर्भको कमी नै छ । मानदेवको चाँगुनारायण अभिलेखमा धर्मदेवकी बडामहारानीको रुपमा र मानदेवकी आमा दुवै रुपमा राज्यवतीको सम्मानपूर्ण वर्णन गरिएको पाइन्छ। यो अभिलेखमा उनीलाई 'देवी' भनिएकोले उनी बडामहारानी थिइन् भन्ने पनि बुझिन्छ । उनैलाई ई. ४६७ का त्रिविक्रममूर्ति अभिलेखमा श्री को विशेषण लगाइएको छ ।

मानदेवका तीन रानीहरु भोगिनी क्षेमसुन्दरी र गुणवती देखिन्छन् तर भोगिनीलाई अभिलेखहरुमा देवी मानिएकोले उनी नै बडामहारानी रहिछन् भन्ने थाहा पाइन्छ । मानदेवको मनाङ्क टकमा पनि उनीलाई श्रीको विशेषण लगाइएको छ । विजयवतीले आफ्नो अभिलेखमा आफ्नी आमालाई 'श्री' र 'देवी' दुवै विशेषण लगाएर उनको यथोचित सम्मान गरेको पाइन्छ ।

मानदेवका पालाका यी सन्दर्भमध्ये भोगिनीको सन्दर्भ विशिष्ट छ किनभने उनको नाम मानाङ्कमा पनि लेखिएको छ । राजासाथै रानीको नाम टकमा लेखाइने यो चलन पछि मल्लकालमा मात्र फेरि देखिन्छ । भोगिनीसम्बन्धी यो सन्दर्भबाट लिच्छविकालमा रानी-बडामहारानीहरुको वैधानिक अधिकार रहेको पनि मान्न सकिन्छ ।[८]

रानीहरुको चर्चा गर्ने आर्को अभिलेख जयदेव द्वितीयको पशुपति अभिलेख हो जसमा राजमाता वत्सदेवी र रानी राज्यमतीको उल्लेख गरिएको छ। त्यहाँ वत्सदेवीलाई 'श्री' र राज्यमतीलाई देवी भनिएको छ ।

मानदेवका पालाकालाई छोडी रानीहरुले लेखाई राखेका कुनै स्वतन्त्र अभिलेख फेरि पाइँदैनन् । अपवादको रुपमा अंशुवर्माकी रानीको बनकालीको अभिलेखलाई मात्र लिन सकिन्छ ।

भारतका अभिलेखहरुमा स्वतन्त्र राजाका रानीलाई 'देवी' भनिएको पाइन्छ (सरकार, १९६६: ८९-९०) । अमरकोशमा भने "राज्याभिषेक गरिएकी राजाकी धर्मपत्नी" को रुपमा देवीको उल्लेख भएको छ (गौतम, २०२६: ५३) । भारतीय नाट्य शास्त्रमा पनि नाटकीय प्रयोजनमा पनि 'महिषी' वा रानीलाई 'देवी' भनेर राजा वा अरु मानिसले पनि सम्बोधन गर्नुपर्दछ भन्ने पाइएकोले (शर्मा, उपाध्याय, १९२९: २२०)[९] देवी शब्दको उक्त व्याख्या मिल्न आउँछ ।

लिच्छवि राजाका नाममा देवान्त रुप पाइने हुनाले त्यसैको स्त्रीलिङ्ग रुप देवीको प्रयोग गर्ने गरेको पनि बुझ्न सकिन्छ ।

## राजवंशका नाता गोताको स्थान

समाजमा हरेक कुलको सफलता -असफलतासँग त्यसको आफ्ना नाता-गोताको पनि केही न केही योगदान हुने कुरा स्वाभाविक छ । यो दृष्टिबाट लिच्छविकालको इतिहासको मूल्याँकन गरेर हेरिन्छ ।

### गोतियार

तात्कालिक अभिलेखहरुबाट लिच्छवि राजाहरुले बेला बेलामा आफ्नो कुल र वंशलाई महत्व दिएका सन्दर्भ पाइन्छन् । त्यस्ता सन्दर्भ पाइए पनि लिच्छवि राजाहरुले कुल र वंशको महत्तालाई आफैमा मात्र सीमित गरेजस्तो देखिन्छ । पारम्परिक संविधान अनुसार एक राजापछि उनका जेठा छोरा नै राजा हुन्छन् तर गद्दीनशीन राजाका भाइहरु, पूर्व राजाका भाइहरु तथा अन्य नातेदारहरु समेत गरेर एक कुलको स्वरुप बन्दछ । गद्दीमा एक जना बसे पनि उनका गोतियारहरुको पनि सम्मानित स्थान रहन्छ । यो एक स्वाभाविक स्थिति हो । तर लिच्छविकालको इतिहासमा राजाका गोतियारहरुको राजनीतिक महत्वका कुरा प्रायः अचर्चित छन् ।

वसन्तदेवदेखि नरेन्द्रदेवको उदय नहुन्जेलसम्म त लिच्छवि राजवंश राजकीय शक्तिको दृष्टिले केही महत्वहीन हुन गएका हुँदा उनका गोतियारहरुको उपेक्षा भएको हुनु स्वाभाविक छ तर मानदेवको जागरण कालमा उनका गोतियारहरु किन अचर्चित छन् भन्ने प्रश्न हाम्रो मनमा उठ्दछ । मानदेवको विजययात्रामा सहयोग गर्ने उनका मामाको उल्लेख त पाइन्छ तर उनका कुनै गोतियारको उल्लेख नपाइनु र उनका पालाका त्यतिका अभिलेख पाईंदा अरु लिच्छविको एउटा अभिलेख पनि नपाइनुबाट तात्कालिक राजनीतिमा गोतियारहरुको उल्लेखनीय स्थान नरहेको कुरा स्पष्ट हुन्छ ।

मानदेवको पालाको यस्तो स्थितिकै कारणबाट लिच्छविकुलमा फूटको भावना बढ्न थालेको र आभीर-गुप्तहरुको शक्तिको उदयलाई सहयोग दिएको पनि मान्न सकिने देखिन्छ । यस्तै कारणले होला इतिहासकारहरुले भौमगुप्त आफूलाई मनपरेका व्यक्तिलाई राजा छान्न सक्ने स्थितिमा पुगेको मानेका छन् । भौमगुप्तको सो नीतिलाई जिष्णुगुप्तले उपयोग गरी उदयदेवको विरुद्ध उनैका भाइहरुको प्रयोग गराई आफ्नो राजनीतिक महत्वाकाङ्क्षालाई साकार रुप दिन सफलता पाएको तथ्य स्पष्ट हुन्छ । त्यसैबेला बरु असन्तुष्ट लिच्छवि कुमारहरुको गुट केही सक्रिय हुन सकेको कुरा जीवदेवको सन्दर्भबाट बुझ्न सकिन्छ । यी जीवदेवबारे माथि विचार गरिसकिएको छ ।

आफ्ना पुर्खाहरुको नीतिको यो अभाव पक्षबारे विचार पु-याई नरेन्द्रदेवले आफ्नो समयमा अरु लिच्छवि कुमारहरुलाई प्रशासनमा सक्रिय रुपले संलग्न गराउने नीति लिएको थाहा पाइन्छ । उनको यो नीति उनको ई. ६४७ को देउपाटन कसाई टोलको अभिलेखमा दूतकका रुपमा चर्चित 'दण्डनायक' नृपदेवको उदाहरणमा (वज्राचार्य, २०३०: ४७५) झल्किएको छ ।

सम्पूर्ण लिच्छविकालको इतिहासमा गद्दीनशीन राजाभन्दा अतिरिक्त कुनै लिच्छवि वंशीले लेखाई राखेको एकमात्र अभिलेख नरेन्द्रदेवको पालाको पाइएको छ। ई. ६५४ को नक्सालको जलद्रोणी अभिलेख विष्णुदेवले लेखाई राखेका हुन (ऐजनः ४७९) । देवान्त नामधारी हुँदा यिनी लिच्छविवंशी देखिन्छन् ।[10] यी



विष्णुदेवलाई नरेन्द्रदेवले धन सम्पत्ति दिएर सन्तुष्ट पारेका थिए भन्ने कुरा सोही अभिलेखमा 'राजा' (नरेन्द्रदेव) के पाउको निगाहबाट ऐश्वर्य कमाएको" (तत्पादाब्जप्रसादादुपगतविभवः) भनी उनी विष्णुदेवले गर्वसाथ लेखाएबाट स्पष्ट हुन्छ ।

यसपछि यस्ता सन्दर्भ फेरि पाईंदैनन् ।

### नातेदार

गोतियारहरुभन्दा नातेदारहरुले लिच्छवि राजाहरुको राजनीतिलाई प्रभावित पारेका विविध उदाहरण पाइनु महत्वपूर्ण छ ।

मानदेवकै पालामा उनका नातेदारहरुसम्बन्धी सन्दर्भ र शिलालेखहरु उपलब्ध भएका छन् । मानदेवको विजय यात्रामा उनका मामाले सक्रिय सहयोग दिएको कुरा चाँगुनारायण अभिलेखबाट थाहा पाइन्छ । मानदेवकी रानी गुणवतीले ई. ४९७ मा आफ्ना पिता किन्नरवर्माको नाममा शिवमन्दिर थापेको अभिलेख छ । मानदेवका छोरी ज्वाई विजयवती र वार्त्त देवलाभ सम्बन्धी ई. ५०५ को अभिलेख पनि पाइएको छ ।

राजा महीदेवकी छोरी जयसुन्दरीको विवाह आभीर-गुप्त परिवारमा भएको र यही नाता सम्बन्धबाट सो आभीर गुप्तवंशले राजनीतिमा हातहाल्न पाएको होला भन्ने अनुमानको चर्चा माथि गरिसकिएको छ । त्यस वंशका चारजना रविगुप्त, भौमगुप्त, जिष्णुगुप्त र विष्णुगुप्तले आफ्-आफ्नो समयमा प्रभावशाली प्रशासनिक गतिविधि चलाएका थिए । उक्त अंशुवर्मा पनि राजवंशका नातेदार हुनाको कारणबाट राजनीतिमा ठूलो हलचल मच्चाएका थिए । अंशुवर्माका भानिज भोगवर्मासँग शिवदेव द्वितीयको नाता पर्ने कुराबाट तात्कालिक राजनीतिमा के कस्तो प्रभाव प-र्यो भन्ने विषयमा पनि चर्चा गरिसकिएको नै छ ।

राजवंशका सबै नातेदार राजनीतिमै लाग्नुपर्दछ भन्ने छैन आफ्नो सम्मानमा बसी, राजनीतिको तानातानमा नलागी लोकोपयोगी काममा पनि लाग्न सक्दछन् भन्ने कुराका उदाहरण मानदेवका नाति (दौहित्र) भारवि हुन् । उनीसँग सम्बद्ध ई. ५५० र ५७० का अभिलेख (ऐजनः १७९, २०८-२०९) धारा बनाएर स्मारक स्वरुप राखिएका छन् ।

यो संक्षिप्त तुलनात्मक विचारबाट लिच्छविकालको राजनीतिमा लिच्छविका गोतियारभन्दा नातेदारहरुले विशेष सक्रियता देखाएका वा देखाउने अवसर पाएको देखिन्छ ।

### राजपुत्रहरुको स्थान

लिच्छविकालको इतिहासलाई प्रभावित गर्ने आर्को महत्वपूर्ण पक्ष राजपुत्रवर्ग रहेजस्तो हामीलाई लाग्दछ । यस बारेमा यहाँ छोटकरी चर्चा गरिन्छ ।

लिच्छविकालका शिलालेखहरुमा आफूलाई 'राजपुत्र' हुनाको दावी गर्ने अनेक वंशहरुको उल्लेख पाइन्छ र उनीहरुमध्ये केही प्रशासनमा संलग्न देखिन्छन् भने केही स्वतन्त्र जीवन विताइरहेका देखिन्छन् । दुवै रुपमा उनीहरुको राजनीतिक महत्वको अनुमान गर्न सकिन्छ । यहाँ सबभन्दा पहिले तात्कालिक शिलालेखहरुमा उल्लेख भएका यस्ता राजपुत्रहरुबारे विचार गरिन्छ अनि तिनको महत्वको मूल्यांकन गरेर हेरिने छ ।

१. ई. ४९० को लाजिम्पाट शिवलिंग अभिलेखबाट राजा मानदेव प्रथमले किन्नवर्माकी छोरी गुणवतीसँग विवाह गरेका थाहा पाइन्छ(ऐजन: ६५)। लिच्छवि राजपरिवारसँग विवाह सम्बन्ध गरेको देख्दा यी किन्नरवर्मालाई धनवज्र वज्राचार्यले 'राजपुत्र' वंशका हुन सक्ने अनुमान गर्नुभएको छ (ऐजन: ६६) ।

२. गणदेवको ई. ५६३ को नुवाकोट ब्रह्मायणी स्थानको अभिलेखमा न्यायव्यवस्थासँग सम्बद्ध रहेका 'राजपुत्र' बन्धुजीवको उल्लेख पाइन्छ (वज्राचार्य, श्रेष्ठ, २०३८ ३) ।[११]

३. शंखमूल, सिकुवहीको ई. ५७३ को अभिलेखले एक 'राजपुत्र' परिवार र त्यसको सामाजिक सांस्कृतिक जीवनमा निकै प्रभाव रहेको कुरा थाहापाउन सकिने देखिन्छ । यो अभिलेखमा एकजना राजपुत्र वज्ररथको उल्लेख भएको छ । अभिलेखमा उनैलाई वा उनका कुनै गोतियारलाई "बहिर्देशबाट दक्षिणतिर" का बासिन्दा भनिएको छ । अभिलेख अलिकति खण्डित हुँदा यहाँ विषय अलि अस्पष्ट भएको छ (वज्राचार्य, २०३०: २११) तर यहाँ 'बहिर्देश' भनेर नेपालबाहिरको कुनै क्षेत्रलाई संकेत गरेको मान्न सकिन्छ । बहिर्देशदेखि दक्षिणतिर भनेर मगधक्षेत्रलाई संकेत गरेको पनि मान्न सकिने देखिन्छ ।[१२] यसरी अर्थ गर्न सकिएमा मगधक्षेत्रसँग सम्बद्ध एक राजपुत्र परिवारको नेपालसँग सम्पर्क रहेको थाहा पाउन सकिने भएको छ ।

उक्त अभिलेखअनुसार राजपुत्र वज्ररजका कुनै गोतियारले वाग्वती र मणिमतीको संगमक्षेत्र (शंखमूल) मा माटाले निर्मित मातृदेवीका मूर्ति थापेका थिए, कालक्रममा ती विग्रिए र ती मूर्तिहरु बिग्रिएका देख्दा ब्रभुवर्माले तिनको जीर्णोद्धार गर्ने विचार गरेका थिए तर सो काम गर्न नपाउँदैमा उनको स्वर्गवास भयो । बभ्रुवर्माले पूरा गर्न नसकेको काम उनैका दाजु अथवा भाइका छोरा देशवर्माकी आमा देश भट्टारिकाले ती मातृका मूर्तिहरुको जीर्णोद्धार गरी बभ्रुवर्मा तथा आफ्ना आमा, बाबु, पति र आफ्नो समेत पुण्य बढोस् भन्ने कामना गरेको कुरा उक्त अभिलेखमा बताइएको छ ।

उक्त विवरणबाट एक राजपुत्र परिवारले शंखमूलमा देवीका मूर्ति थापेको देखिने हुनाले वज्ररथका ती अज्ञातनामा नातेदारको महत्व थाहा पाइन्छ। तिनको सामाजिक प्रतिष्ठा हुनाले तिनको कीर्तिको पुनरुद्धार गर्ने काममा पनि निकै हलचल रहेको बुझिन्छ ।



बभ्रुवर्माको उल्लेख उक्त अभिलेखमा जसरी गरिएको छ त्यसबाट उनी सम्मानित व्यक्ति थिए भन्ने बुझिन्छ नत्र उनको उल्लेख त्यहाँ हुनु आवश्यक थिएन । तर उनी गणदेव-भौमगुप्तका ई. ५६० का ६ अभिलेखमा दूतकका रुपमा देखिएकाले (ऐजन: १८८-१९३) तात्कालिक प्रशासनमा संलग्न देखिएकाले उनका नातेदार देशवर्मा- देशभट्टारिकाले उनको उल्लेख गर्नु आवश्यक देखेको बुझिन्छ । यी बभ्रुवर्मालाई सो शंखमूल अभिलेखमा "ठूला धर्मात्मा" (परमधार्मिक) भनी उनको धार्मिक व्यक्तित्वलाई संकेत गरिएको छ ।

उक्त अभिलेखमा देशवर्मालाई "सधैं धर्ममा मन लाउने, परमभागवत" (नित्यधर्माभिरतचेतस्कस्य परमभागवतस्य) भनिएको छ । उनीलाई 'परमभावत' विशेषण लेखिएकोले उनी वैष्णव रहेछन् भन्ने देखिन्छ । लिच्छविकालमा यस्तो वैष्णव धार्मिक उपाधि अरुले लिएको उल्लेख नपाइने हुनाले यो सन्दर्भको विशेष महत्व छ ।

देशवर्माकी आमा देशभट्टारिकालाई पनि उक्त अभिलेखमा "पतिव्रता, धर्मात्मा" (पतिव्रतया धर्मिष्ठया) भनिएको छ ।

राजपुत्र वज्ररथसँग बभ्रुवर्माहरुको नाता पर्दथ्यो भन्ने धनवज्र वज्राचार्यको विचार छ (ऐजन: २१२) । अभिलेखमा यो कुरो स्पष्ट छैन । वज्ररथलाई स्पष्टसँग राजपुत्र भनिएको छ तर बभ्रुवर्मा र देशवर्मालाई त्यस्तो नलेखिनाले उनीहरुको सामाजिक स्तरमा अन्तर रहे जस्तो लाग्दछ । अभिलेखमा नाताबारे पनि स्पष्ट उल्लेख नपाइने हुनाले यो पक्ष पनि स्पष्ट छैन । तर ती दुइ परिवारको घनिष्ठता भने स्पष्ट बुझ्न सकिन्छ ।

आर्को किसिमले व्याख्या गरेर हेर्ने हो भने बभ्रुवर्मा-देशवर्मालाई राजपुत्र नभनिए पनि उनीहरु राजपुत्रवंशकै होलान् भन्ने अनुमान गर्न सकिने देखिन्छ । यो कुरा देशवर्माकी आमाको नामशैलीबाट बुझ्न सकिन्छ । राजालाई 'भट्टारक' उपाधि दिइन्थ्यो भने रानीलाई 'भट्टारिका' भनिन्थ्यो भन्ने कुरा भारतको ऐतिहासिक सन्दर्भबाट थाहापाइन्छ (सरकार, १९६६: २१२) । देशवर्माकी आमाको नाममा सो भट्टारिका शब्द जोडिएको देख्दा उनीलाई रानी भनिएको देखिन्छ । उनी कुनै स्वतन्त्र राजाकी रानी त थिइनन् तर राजवंशका क्षत्रिय परिवारलाई पनि समाजले राजा भन्ने चलन चलेको देख्दा उनीलाई पनि रानी भन्ने गरिएको मान्न सकिन्छ । राजपुत्रवंशकी सम्मानित महिला हुनाले उनको नाममैं भट्टारिका वा रानी अर्थ लाग्ने शब्दको प्रयोग भएको देखिन्छ । यसरी घुमाउरो किसिमबाट बभ्रुवर्माको वंश पनि राजपुत्र नै थियो भन्ने अनुमान गर्न सकिन्छ ।

यो अभिलेख लेखाई राखिएको वेलामा भौमगुप्त शक्तिशाली थिए तर उनको उल्लेख यस अभिलेखमा नभएको देख्दा देशवर्मा भौमगुप्तका विरोधी हुन पुगेको अनुमान गर्न सकिन्छ । यद्यपि उनका काका बभ्रुवर्मा भौमगुप्तका अनुकूल नै देखिएका छन् ।[१३] समाजका प्रतिष्ठित वर्ग हुनाले 'राजपुत्र' हरु राजनीतिका

प्रतिद्वन्दी गुटहरुको समर्थक वा विरोधी हुनाको राजनीतिक महत्व हुन्थ्यो भन्ने अनुमान गर्न सकिन्छ ।

सांस्कृतिक क्षेत्रमा राजपुत्र वर्गको विशेष महत्व रहेको कुरा माथिको चर्चाबाट स्पष्ट हुन्छ ।

राजपुत्रवंश - ३




४. अंशुवर्माको भक्तपुर इनायटोलको ई. ६०७ को खण्डित अभिलेखमा दूतकका रुपमा राजपुत्र स्थितिवर्माको उल्लेख भएको पाइन्छ (ऐजनः ३१५) ।

५. अंशुवर्माका नातेदार राजपुत्र शूरसेन, भोगवर्मा, र विक्रमसेनहरुको उल्लेख तात्कालिक अभिलेखहरुमा भएको छ । यो वंश उत्तरी भारतको मौखरिराजवंश थियो भन्ने कुराको चर्चा माथि गरिसकिएको छ । यो वंशका भोगवर्मा र तिनका छोरा जनार्दनवर्माको राजनीतिक महत्ववारे पनि विचार गरिसकिएको छ ।

६. ध्रुवदेव– जिष्णुगुप्तको आदेश्वर अभिलेखमा राजपुत्र नन्दवर्माले आफ्ना पिता जिष्णुवर्मा, आमा वत्सदेवी र भाइ भीमवर्माहरुको पुण्यको लागि नाथेश्वर भगवान्लाई केही जग्गा दान गरेको कुरा लेखिएको छ (ऐजनः ४१०) ।



राजपुत्रवंश - ६

राजपुत्र जिष्णुवर्मा + वत्सदेवी

नन्दवर्मा | भीमवर्मा[१४]

हालसम्म प्रकाशित लिच्छविकालका अभिलेखहरुबाट उपर्युक्त ६ राजपुत्र परिवारहरुको अस्तित्व पाइएको छ । माथि चर्चित राजपुत्रहरुमध्ये बन्धुजीव र वज्ररथलाई छोडी अरु सबै वर्मावंशी देखिनु यहाँ उल्लेखनीय लाग्दछ । दुई सन्दर्भमा राजपुत्रवंशीहरु वैवाहिक सम्बन्धबाट तात्कालिक शासकहरुसँग सम्बन्धित रहेका देखिएका छन् । अरु परिवारको पनि यस्तै सम्बन्ध रहेको हुन सक्दछ । यसबारे स्थिति त्यति स्पष्ट नभए पनि राजपुत्रहरु तात्कालिक राजनीतिमा राजपरिवारपछिको शक्ति केन्द्रको रुपमा रहेको पनि अनुमान गर्न सकिन्छ ।

**जनताको स्थान**

प्राचीनकालमा राज्यमा जनताको कस्तो स्थान रहन्थ्यो भन्ने कुरा महत्वपूर्ण हुन्छ । उस बेलाको परम्परा र स्मृति शास्त्रहरुले राजा र शासकवर्गको महत्वबारे जति बयान गरिएको पाइन्छ त्यत्तिकै महत्व जनपक्षलाई दिइएको पाइन्छ । नियन्त्रणको सिद्धान्तबारे भन्ने हो भने शासकवर्गलाई पनि धेरै थरीका नियामक सिद्धान्तहरुको चर्चा स्मृतिशास्त्रहरुमा भएको पाइन्छ । सिद्धान्तका यी कुरा र लिच्छविकालका अभिलेखहरुमा व्यक्त भएका सन्दर्भहरुको तुलनात्मक विश्लेषण गर्न सके त्यसबेलाको वास्तविक स्थिति थाहा पाउन सकिन्छ । तर यहाँ सीमित स्थानमा यो काम गर्नु सम्भव छैन । यहाँ उदाहरणका केही कुराको चर्चा गर्न सकिन्छ ।

लिच्छविकालका प्रशासनिक खालका कतिपय अभिलेखहरुमा राजाले आफ्ना प्रजाको कुशल कामना गरेर वक्तव्यको आरम्भ गरेको पाइन्छ । प्रशासनिक खालको पहिलो अभिलेख, वसन्तदेवको ई.४२८ को थानकोट अभिलेखमा भनिएको छ – "जयपल्लिका ग्राममा बस्ने ब्राह्मणलगायत ... गृहस्थीहरुलाई कुशल मंगल सोधेर आज्ञा भएको छ" (जयपल्लिकाग्रामे निवासोपगतान् ब्राह्मणपुरस्सरान्... प्रधानान्ग्रामकुटुम्बिनः ... कुशलम्पृष्ट्वा समाज्ञापयति) (ऐजनः ९१) । ग्रामीणहरुलाई सम्बोधन गरिएका अन्य अभिलेखहरुमा पनि यस्तै भाका लेखिएको पाइन्छ । यस्तो भाकाबाट राजाले पनि जनताको उचित सम्मान गर्नुपर्दछ भन्ने धारणा रहेको पाइन्छ ।

लिच्छविकालको ई. ५१२ देखि ६२० सम्म र त्यसपछि पनि ग्रामीण क्षेत्रहरुलाई स्वायत्त शासन सुम्पिने जुन लहर चलेको पाइन्छ त्यसको ठीक ठीक मूल्यांकन गर्न त सकिएको छैन तर प्रत्यक्ष रुपमा हेर्दा जनतालाई खुशी पार्न वा सुविधा दिन आभीर-गुप्तवंशी रविगुप्त, भौमगुप्त तथा वर्मावंशी अंशुवर्माले आफ्नो शक्ति बढाउन र लोकप्रिय हुन यस्तो नीति लिएको अनुमान गरिएको छ। यस्तो व्याख्या मान्न सकिएमा तात्कालिक राजनीतिमा जनता पनि शक्तिको एक स्रोत थियो भन्ने बुझ्न सकिन्छ । यस अतिरिक्त जनता पाञ्चाली र गोष्ठीका रुपमा पनि राजनीतिक एवं सामाजिक सांस्कृतिक रुपमा संगठित रहेकाले तिनको महत्व रहेको मान्न सकिन्छ ।

तर अंशुवर्मादेखि राजाको शक्ति बढ्न थालेको र नरेन्द्रदेव र उनका दुइ उत्तराधिकारीहरु शिवदेव द्वितीय र जयदेव द्वितीय पनि प्रभावशाली राजकीय उपाधि धारण गरेर शक्तिशाली हुन पुगेको अवस्थामा जनताको महत्वमा केही कमी आउन थालेको पनि अनुमान गर्न सकिन्छ । लिच्छविकालको इतिहासलाई माथि चर्चित किसिमले वर्गीकरण गरेर व्याख्या गर्ने हो भने जनताको स्थानबारे पनि त्यस्तै किसिमले विचार गर्नुपर्दछ । राजाका महिमा गाउँदा उनका अरु विशेषतासाथै प्रजाप्रेम दर्शाउने कुराको बयान गरिएको पाइनु महत्वपूर्ण छ । चाँगुनारायण अभिलेखमा मानदेवको महिमा बताउँदै जाँदा उनीलाई 'प्रजावत्सलः' (दुनियाँलाई मायाँ गर्ने) पनि भनिएको छ । केलटोलको अभिलेखमा पनि उनीले "आफ्ना प्रजालाई पिताले जस्तै माया गर्ने" (प्रकृतेः पितेव दयते) भन्ने दावा गरेको पाइन्छ । लिच्छविकालका शिलालेखहरुमा यस्ता सन्दर्भ यत्रतत्र पाइन्छन् ।

तात्कालिक राजाहरु आफ्ना प्रजा पनि कसरी बसून् भन्ने चाहन्थे भन्ने कुराका सन्दर्भ पनि त्यस बेलाका अभिलेखहरुमा चर्चिएको पाइन्छ । उदाहरणको लागि ई. ६४३ को एक अभिलेखमा नरेन्द्रदेवले आफ्ना प्रजालाई यस्तो सन्देश दिइएको पाइन्छ – "सानालाई नदबाई परस्परमा प्रेमपूर्वक दयामाया गरी रहनुपर्छ" (अन्योन्यप्रीतिदृढीकृतस्नेहानुबन्धये ... वर्तितव्यं) (ऐजनः ४६४) ।

जनतातर्फबाट राख्न लगाएका तात्कालिक धेरै अभिलेखहरुमा तत्कालका राजाका नाम पनि सम्मान र भक्तिसाथ लेखाइएको देख्दा जनताले राजाको मान सम्मान भक्ति गर्नुपर्ने चलन त्यस कालमा रहेको देखिन्छ । यस्ता सन्दर्भहरुको चर्चा माथि यथास्थानमा गरिसकिएकै छ ।

### राजनीतिको लक्ष्य

प्राचीनकालको राजनीतिको संविधान धर्मशास्त्र नै हुन् र तिनमा राजनीतिको लक्ष्य धर्म अर्थ र कामप्राप्ति बताइएको पाइन्छ । लिच्छविकालका अभिलेखहरुमा पनि राजाका महिमाको रुपमा बताइएका कुरा र प्रजातर्फबाट



लेखाई राखिएका अभिलेखहरुमा पनि आदर्शको रुपमा तिनै कुरा रहेको झझल्को पाइन्छ । तर यस कुराको सूक्ष्म विश्लेषण भने यहाँ गर्न भ्याइएको छैन ।

धर्मशास्त्रीय आदर्श जस्तो भए पनि व्यवहारमा के हुन्थ्यो भन्ने कुराको मूल्याङ्कन गर्न गाहारो छ । उस बेलाका शासक वर्ग लिच्छवि, आभीरगुप्त र वर्मावंशका अंशुवर्माले राजनीतिको लागि जुन किसिमको टक्कर लिएको देखिन्छ त्यसमा कुनै सिद्धान्तको लागि हो कि व्यक्तिगत महत्वाकाङ्क्षा हो मूल्याङ्कन गरेर हेर्न गाहारै छ ।

### आर्थिक स्थितिः संक्षिप्त अवलोकन

कुनै देश वा राज्यको मुख्य आधार आर्थिक स्थिति नै रहन्छ र लिच्छविकालिक नेपालको आर्थिक आधारशिला कस्तो थियो भन्ने विषयमा यहाँ छोटकरी विचार गरिन्छ ।

आर्थिक गतिविधिका ५ मुख्य भेद हुन्छन् — १. कृषि, २. पशुपालन, ३. उद्योग, ४. वाणिज्य र ५. सेवा ।

### १. कृषिः

लिच्छविकालमा अधिकांश जनताको जीविकाको साधन कृषि नै रहेको देखिन्छ । तात्कालिक शिलालेखहरुबाट भूमि व्यवस्थाका विविध रुप, कृषि उत्पादन तथा सिञ्चन व्यवस्थासम्बन्धी विस्तृत सूचनाहरु प्राप्त हुन्छन् । यी सूचनाहरुको आधारमा त्यसबेला कृषिको अवस्था सन्तोषजनक रहेको अनुमान गर्न सकिन्छ ।

### २. पशुपालन

तात्कालिक नेपालको अधिकांश भाग जंगलै जंगलले घेरिएको हुनाले केही भागमा मात्र कृषि कार्य हुने गरेको र बसोबास भएका अन्य भागमा पशुपालन मात्र मुख्य जीविकाको साधन लिने जनसंख्या पनि निकै रहेको अनुमान गर्न सकिन्छ । यस्ता पशुमा भेडा र बाख्रा एवं चौंरी हुनु सम्भव छ ।

लिच्छविकालका अभिलेखहरुमा धेरै चर्चित मल्लकर (वज्राचार्य, २०३०: २१४ इत्यादि) लाई ज्ञानमणि नेपालले भेडामा लाग्ने कर भनी अर्थ गर्नु भएकोले (नेपाल, २०४०: १३८-१५४) यसले भेडा पालनको स्थितिलाई संकेत गरेको बुझिन्छ । नेपालको ऊनी वस्तुहरु धेरै पहिलेदेखि विदेशमा पनि प्रसिद्ध रहेकोले त्यसको सम्बन्ध विशेष गरी भेडा पालन र केही सम्बन्ध बाख्रा पालनसँग रहेको स्पष्ट छ । अंशुवर्माका ई.६०७ का भट्टुवाल र टिष्टुङका अभिलेखमा 'मृगरोम' अथवा ऊनको निकासी हुने कुराको सन्दर्भ पाइने हुनाले पनि (वज्राचार्य, २०३०: ३०९, ३११) यो कुरा स्पष्ट हुन्छ । सानातिना भेडागोठ उपत्यकाभित्र र नजीकैका पहाडी क्षेत्रमा हुँदा हुन् तर ठूलठूला भेडागोठ भित्री पहाडी र हिमाली भेकतिर नै रहनु सम्भव देखिन्छ ।

माथि चर्चित अंशुवर्माका अभिलेखमा 'चामर' (चँवर) को पनि निकासी हुने गरेको संकेत पाइनाले चौंरी पालनको अनुमान गरिएको हो । जंगली चौंरीबाट त्यसको पुच्छर फिकेर व्यापारिक उपयोग गर्ने गरिएको पनि हुन सक्दछ ।

पशुपालनका आर्का रुप गोपालन र महिषीपालन पनि थिए । लिच्छविकालमा गोपालन सम्बन्धमा अनेक किसिमका सन्दर्भ पाइन्छन् । मूलत: गोपालन पेशामा संलग्न गोपालजातिको त्यस बेला बहुसंख्या रहेको र 'गोमी' थरका धेरै जनता रहेका सन्दर्भले पनि सो पेशाको यहाँ लोकप्रियता देखिन्छ ।

गोपालसँग सम्बद्ध 'गोपाल' गोमीजस्तै महिषीपालनसँग सम्बद्ध महिषपालवंशको अस्तित्व पनि यहाँ प्राचीन कालदेखि रहेको पाइन्छ । अंशुवर्माको ई. ६१३ को टौखेल अभिलेख (ऐजन: ३४८) मा महिषीपालनसम्बन्धी सन्दर्भ परेको छ ।

पशुपालनमा कुखुरा, सुंगुर र घोडा पनि पर्दथे । अंशुवर्माको बुङमती अभिलेखमा कुखुरा, सुँगुर र माछापालनको सन्दर्भ पाइन्छ (ऐजन: २९०) । माछाको विक्रीसम्बन्धी सन्दर्भ शिवदेव प्रथमको चापागाउँ अभिलेखमा भएको छ (ऐजन: २२५) ।

गणदेवको, नुवाकोट अभिलेखमा "घोडा ल्याइने" सन्दर्भ परेको छ (वज्राचार्य, श्रेष्ठ, २०३२ ३-४, ९०) । पहाडी भेकतिर अश्वपालन हुने कुराको संकेत यो सन्दर्भले गरेको मानिएको छ ।

**उद्योग:**

उद्योग विषयअन्तर्गत शिल्पसम्बन्धी जीविकाका साधन एवं खानी र खनिज पदार्थसम्बन्धी उद्योगहरुलाई लिन सकिन्छ । शिल्पसम्बन्धी जीविकाका साधनहरुमध्ये मूर्तिनिर्माण एक रहेको देखिन्छ । शिवदेव प्रथमको ई. ६०४ को लेले अभिलेखमा चर्चित 'अर्च्चागोष्ठी' लाई (ऐजन: २८३) यसै रुपमा पिलइएको छ। शिल्पसम्बन्धी अरु किसिमका जीविकाका साधनहरुबारे पनि विचार गर्न सकिन्छ ।

खानी खनेर धातु निकाली तिनबाट भाँडा कुँडा हात हतियार अन्य वस्तुको निर्माण गरिन्थ्यो भन्ने कुराका सन्दर्भ उपलब्ध हुन्छन् । अंशुवर्माका ई. ६०७ का भटुवाल र टिष्टुङ अभिलेखमा 'लोह' र 'कृतताम्रभाण्डानि' को निर्यातको सदर्भ परेको छ (ऐजन: ३०९, ३११) । यसबाट फलाम र ताँबोको खानीको उपयाग गर्ने र ती धातु र धातुनिर्मित भाँडाहरुको निर्यातसमेत गरिन्थ्यो भन्ने थाहा पाइन्छ ।

नेपालको ताँबा विदेशमा पनि असल खालको मानिने गरेको सन्दर्भ पाइने हुनाले (रेग्मी, २०४०: ३६-३७, नेपाल, २०४०: ७०, १६२) यससम्बन्धी काम यहाँ पहिलेदेखि हुने गरेको अनुमान गर्न सकिन्छ । नक्सालको अभिलेखमा 'ताम्रकुट्टशाला' .को उल्लेख भएकोले (वज्राचार्य, २०३०: ५६५) ताँबोमा आधारित



उद्योगको अस्तित्व प्रमाणित भएको छ । ताँबोको प्रचुर उपयोग स्वदेशमै गरिन्थ्यो । पैसा निकाल्ने काममा पनि यसैको उपयोग गरिएको पाइन्छ ।

**४. वाणिज्य**

वाणिज्य-व्यापार समाजको आवश्यक आर्थिक पक्ष हो जसको विकाससाथै सभ्यता पनि बढ्दै जान थाल्दछ । आरम्भमा आन्तरिक व्यापारको काम हुन्छ र त्यसैको विकास विदेश व्यापारको रुपमा हुन थाल्दछ । हुन त आर्थिक गतिविधिको आरम्भिक अवस्थामा पनि बाह्य व्यापार हुने कुरोको सन्दर्भ कौटिल्य अर्थशास्त्रले बताएको छ ।

आन्तरिक वाणिज्य व्यापारसम्बन्धी धेरै सन्दर्भ शिलालेखहरुमा आएका छैनन तर कृषि, पशुपालन तथा खानी उद्योगबाट उत्पादित अन्न पशु पंक्षी र धातुनिर्मित वस्तुहरुको व्यापारिक प्रयोग त्यसबेला हुन्थ्यो भन्ने कुरा त स्पष्टै छ किनभने लिच्छविकालिक समाज जति विकसित देखिन्छ त्यसमा आन्तरिक व्यापारको स्थिति अपरिहार्य छ ।

अरु केही सन्दर्भले लिच्छविकालका विकसित बस्तीहरुमा पसलहरु खोलिएका हुन्थे र तीसम्बन्धी केही नियम कानून पनि प्रचलित रहेको थाहा पाइन्छ । नरेन्द्रदेवको ई. ६७९ को पशुपति वज्रधरको अभिलेखमा 'आपणकर:' र 'अधिकमासतुलादण्ड:' को उल्लेख पाइन्छ (ऐजन: ५००) । 'आपणकर' ले पसलहरुमा लाग्ने कर 'अधिकमासतुलादण्ड' ले असार र पुस महीनामा नापतौलका साधन ढक तराजूको जाँच गर्दा फरक परे गरिने दण्ड (ऐजन: ५०२) भन्ने अर्थ बुझिने हुनाले पसल र व्यापारको स्थिति स्पष्ट हुन्छ।

मानदेव प्रथमको पालाका तीन अभिलेखहरुले लिच्छविकालिक व्यापारको स्थितितिर राम्रो स्पष्टीकरण गरेका छन् । मानदेव प्रथमको पालाको ई. ४८० को पशुपति देउपाटनको अभिलेखमा 'सार्थवाह' रत्नसंघले प्रभुसंघको नाममा प्रभुकेश्वर शिवमन्दिर थापेको र सो मन्दिरको नाममा थुप्रै जग्गा गुठी राखेको विवरण परेको छ (ऐजन: ५५-५६) । यिनै रत्नसंघले देउपाटनमै ई. ४७७ मा रत्नेश्वर महादेव मन्दिर थापी थुप्रै जग्गा गुठी राखेको अभिलेख रहेको छ (ऐजन: ५०-५१) । रत्नसंघ 'सार्थवाह' अथवा देश विदेश घुमी व्यापार गर्ने व्यापारीहरुका नेता थिए भन्ने उक्त सन्दर्भबाट स्पष्ट हुन्छ । उनको आर्थिक स्थिति पनि उच्च रहेको कुरा थाहा पाइन्छ । उनैले प्रभुसंघको नाममा मन्दिर बनाएको देख्दा उनको पनि संघान्तनाम देख्दा उनी पनि व्यापारी नै रहेछन् भन्ने अनुमान गर्न सकिन्छ ।

मानदेव प्रथमकै पालाको ई. ४८० को टेबहाल अभिलेखबाट पनि 'सार्थवाह' गुहमित्रले सूर्य मन्दिर बनाएको तथ्य थाहापाइन्छ (ऐजन: ५९) । गुहमित्र पनि रत्नसंघ जस्तै व्यापारीहरुका नेता रहेछन् उनीले पनि व्यापार गरेर समृद्धि पाएका रहेछन् भन्ने बुझिन्छ ।

उक्त तीन सन्दर्भबाट आन्तरिक साथै बाह्य व्यापारको तात्कालिक स्थिति बुझ्न सकिन्छ । यस्तै सन्दर्भ लिच्छविकालका अन्य अभिलेखहरुमा नपाइनु

आश्चर्य छ । तर अंशुवर्माका ई. ६०७ का भट्टुवाल र टिष्टुङका अभिलेखबाट बाह्यव्यापारको सन्दर्भ ज्ञात हुन्छ (ऐजन: ३०९, ३११) ।

ई. ६१८ देखि तिव्वतसँग व्यापार सम्पर्कको आरम्भ भएको र त्यसले पछि क्रमश: प्रगति गर्दै लगेको र मल्लकालतिर त यसले ज्यादै विकसित रुप लिएको थाहा पाइन्छ ।

यति छोटकरी चर्चाबाट वाणिज्य व्यवसायमा लागेर जीविका गर्नेहरुको संख्या पनि लिच्छविकालमा निकै रहेछ भन्ने बुझिन्छ ।

५. सेवा

सरकारी र ठूलाबडाकहाँ सेवा (नोकरी) गरेर जीविका चलाउने केही जनसंख्या पनि लिच्छविकालमा रहेको अन्दाजी गर्न सकिन्छ । अनेकन् खालका ठूला साना सरकारी कर्मचारीहरुको उल्लेख तात्कालिक अभिलेखहरुमा भएको छ ।

उपर्युक्त छोटकरी अध्ययनबाट लिच्छविकालमा जनताहरु विभिन्न किसिमका जीविकामा संलग्न रही आर्थिक उपलब्धि गर्दा रहेछन् भन्ने बुझिन्छ ।

**विदेश सम्बन्ध: अवलोकन**

'राज्य' र 'देश' सम्बन्धी तात्कालिक धारणाबारे माथि चर्चा गरिसकिएको छ र यसबाट स्वदेश र स्वाधीनता सम्बन्धी धारणा पनि विकसित भैसकेको कुरा स्पष्ट छ । "अरु राजालाई ढोग्न अघि नसर्ने" भन्ने अंशुवर्माको दावाले पनि त्यही तथ्यको स्पष्टीकरण गरेको बुझिन्छ । लिच्छविकालका राजाहरुको राजकीय उपाधि पनि स्वाधीन राजाले लिने उपाधि नै देखिएको र कसैले (जयदेव द्वितीय) त सार्वभौम चरित्रको पनि दावा गरेको देख्दा एक परम्परागत स्वाधीन राज्यको रुपमा नेपालको स्थान रही आएको देखिन्छ ।

आफ्नो भौगोलिक अवस्था अनुसार कुनै राज्यको अरु देश वा राज्यसँग सीमाना जोडिएको हुन्छ र त्यस्ता देशसँग समय समयको परिस्थितिअनुसार राम्रो वा नराम्रो सम्बन्ध हुनसक्दछ । लिच्छविकालमा नेपालको आफ्नो सीमा जोडिएका अरु राज्यहरुसँग कस्तो सम्बन्धको विकास भएको थियो भन्ने विषयमा यहाँ छोटकरी विचार गरिन्छ ।

लिच्छविकालमा आफ्नो राज्यलाई राज्य वा देश भन्ने चलन रहेको चर्चा त गरिसकिएकै छ । यसै गरी विदेशलाई अर्थ्याउन उसबेला 'बहिर्देश' शब्दको प्रयोग गरिएको पाइन्छ (वज्राचार्य, २०३०: ४९६, ४९९) । उक्त 'बहिर्देश' लाई पनि साधारणतया भारततर्फ र तिब्बत-चीनतर्फ गरी दुइ वा तीन भागमा बाँडेर विचार गर्न सकिन्छ ।



**भारततर्फ**

यो ग्रन्थले ओगटेको समयभित्र आरम्भमा भारततर्फ प्रख्यात गुप्त साम्राज्य रहेको र पछि क्रमश: अनेक राज्यहरु खडा भएकोमा तिनसँग नेपालको सम्बन्धबारे प्राप्य सन्दर्भहरुको चर्चा माथि यथास्थान गरिएकै छ ।

भारतका गुप्त सम्राट्हरुको अगाडि नेपालले केही हेपिएर बस्नुपरेको भए पनि परिस्थिति अनुकूल हुनासाथ तात्कालिक नेपाली शासकहरुले आफ्नो पूर्ण स्वाधीनता कायम गर्न सफलता पाएको देखिन्छ । लिच्छविकालभरि भारततर्फबाट कसैले नेपालमाथि सैनिक हस्तक्षेप गरेको सन्दर्भ उपलब्ध नहुनाले त्यसतर्फ आफ्नै नीति लिइएको हुन सक्ने देखिएको छ । भारतका विभिन्न क्षेत्रका राजवंश र क्षेत्रीयवंशहरुसँग विवाह सम्बन्ध कायम गरी हार्दिक सम्बन्ध कायम गर्ने प्रयास गरिएको प्रयास यहाँ विचारणीय छ ।

मानदेवको मावली खलकबारे स्पष्ट कुरो थाहा नभए पनि उनका ज्वाइँ देवलाभलाई 'राजपुत्र' मानेर उनलाई 'डोलाजीप्रथा' अनुसार यहाँ ल्याएर विवाह गरिदिएको अनुमान गर्न सकिन्छ (ऐजन: ८७) । यस्तै परम्पराको कारणबाट 'राजपुत्र' का विभिन्न परिवारहरु त्यसकालमा देखिएको हुनुपर्दछ भन्ने हामीलाई लाग्दछ । यस्ता राजपुत्रहरुमा मौखरिवंशी शूरसेन पनि देखिएका छन् । अन्य राजपुत्रहरुको ठीक ठीक परिचय पाउन सकिएको छैन ।

भारततर्फका राजपरिवारका राजकुमारीहरुको नेपालका शासक र राजपुत्र वंशका कुमारहरुसँग विवाह भएका धेरै सन्दर्भ उपलब्ध छैनन । राजपुत्र वंशका भोगवर्मालाई मगधका राजा आदित्यसेनकी छोरीको विवाह भएको घटनाको यहाँ उल्लेख गर्न सकिन्छ । जयदेव द्वितीयको विवाह गौड, ओड्र, कलिङ्ग र कौशल क्षेत्रका राजा हर्षदेवकी छोरी राज्यमतीसँग भएको उदाहरण यहाँ उल्लेखनीय छ । यस्ता वैवाहिक सम्बन्धका घटनाले राजनीतिकसाथै सांस्कृतिक क्षेत्रमा ठूलो प्रभाव परेको अनुमान गर्न सकिन्छ ।

वाङ् हुयेन शेको काण्डमा नरेन्द्रदेवले तिरहुत क्षेत्रमा आक्रमण गर्ने काम गरेको त· थाहा पाइन्छ तर यो आकस्मिक घटना थियो, विस्तारवादी उद्देश्य थिएन भन्न सकिन्छ ।

विदेश सम्बन्धका अरु अनेक उल्लेखनीय पक्षहरु व्यापार र यात्रीहरुको आवागमनजस्ता कुराका तथ्यहरुको पनि यहाँ उल्लेख गर्न सकिन्छ । यसबारे स्पष्ट प्रमाण धेरै नपाइए पनि यसबारे विचार गर्न सकिने सन्दर्भहरुको अभाव छैन ।

माथि चर्चित सबै पक्षहरुबारे विस्तृत र तुलनामक विश्लेषण गर्न सके वास्तवमा स्थिति अझ स्पष्ट हुने विश्वास गरिन्छ ।

**तिब्बत-चीनतर्फ**

तिब्बत-चीनतर्फ हिमालयको कठिन छेकावारले गर्दा नेपालको सम्बन्ध-विकासमा अपेक्षाकृत बेर लागेको देखिएको छ । ई. ६१८ मा

नेपाल-तिब्बत मार्ग आरम्भ गरिएको तथ्यको ठीक ठीक व्याख्या गर्न सकिएको छैन । यसै गरी भृकुटीसम्बन्धी तथ्यको ऐतिहासिकता र प्रामाणिकताबारे पनि ठेगान लगाउन सकिएको छैन ।

नेपालको तिब्बतसम्बन्धी पहिलो प्रामाणिक सन्दर्भ राजनीतिक महत्वको छ । स्रोङ्ग चन गम्पोले नरेन्द्रदेवलाई गद्दी फिर्ता लिन दिएको सहयोगले नेपालको राजनीतिमा ठूलो परिवर्तन पाएको तथ्यबाट तिब्बत सम्बन्धको महत्व स्पष्ट हुन्छ । यही सम्बन्धलाई नेपाल त्यतिखेर तिब्बतको अधीन रहेको भन्ने अर्थ पनि इतिहासकारहरुले गरेका छन् । तिब्बत सम्बन्धबारे माथि नरेन्द्रदेव र शिवदेव द्वितीयको इतिहासमा पनि विचार गरिएको छ ।

तिब्बतसँग सम्बन्ध बढेपछि चीनसँग पनि सम्बन्ध हुने स्थिति आयो । भारत जाने चिनियाँ दूतमण्डलीले नेपालमार्गको उपयोग गर्न थालेकोले र ई. ६४८ को अरुणाश्व काण्डमा नरेन्द्रदेवले चीनका सम्राट्को पक्ष लिएकाले अब तिब्बतसाथै चीनसँग पनि नेपालको सम्बन्ध स्थापित हुन गएको थियो । ई. ६५१ मा नरेन्द्रदेवले आफ्ना छोराको नेतृत्वमा एक दूतमण्डली चीन सम्राट्कहाँ पठाएर सो सम्बन्धलाई अझ अगाडि बढाएको पाइनु महत्वपूर्ण छ ।

लिच्छविकालको आर्थिक क्षेत्रमा तिब्बतसँगको व्यापार सम्बन्धले पनि ठाउँ ओगटन थालिसकेको तथ्यले पनि इतिहासलाई प्रभावित पारेको पाइन्छ । यस्तै पृष्ठभूमिमा मध्यकालमा तिब्बतर चीनसँग अझ घनिष्ट सम्बन्ध बढ्न गएको र त्यसले आर्थिक, सांस्कृतिक र राजनीतिक क्षेत्रमा ठूलो हलचल ल्याएको थियो ।

नेपालको वंशावली साहित्यमा भोटका राजाले आक्रमण गरेका सन्दर्भ, तिब्बती र चिनियाँ स्रोतहरुमा नेपाललाई तिब्बतको अधीन रहेको भन्ने दावाका तथ्यहरुको प्रामाणिकताबारे शोधखोज हुने काम बाँकी नै रहेकोले यसबारे केही भनिहाल्न गाहारो छ ।

लिच्छविकालमा नेपालको विदेश सम्बन्धबारेको यो संक्षिप्त अध्ययनबाट तात्कालिक राजनीतिक आर्थिक तथा सांस्कृतिक क्षेत्रमा यो पक्षले पनि नेपाललाई प्रभाव पारेको कुरा बुझ्न सकिन्छ ।



**पादटिप्पणी**

१. "The fact that Nepal is mentioned between Kamarupa and Kartrpura does not necessarily mean that all the land-masses in between were uniformly settled or, that the political borders between Nepal and Kamarupa, on the one hand, and Nepal and Kartrpura, on the other, were clearly delimited and fixed or, that they remained stable for a thousand years-assuming that they were so delimited by a kind of ancient border commission" (Malla, 1984: 5-6).

२. नक्सालको लामो तथा खण्डित अभिलेखमा 'सामन्त' को उल्लेख भएको छ (ऐजन: ५६७) तर यसको ठीक अर्थ गर्न गाहारो छ । विशालनगर भेकमा पनि सामन्त नियुक्त हुन्थे? भन्ने प्रश्न यो सन्दर्भले उठाए जस्तो छ?

३. भट्टेति सार्वभौमस्तु नित्यं परिजनेन हि ।

४. राजा भट्टारको देवः ।

५. देवेति नृपतिर्वाच्यो
भृत्यैः प्रकृतिभिस्तथा ।

६. कुनै कुनै इतिहासकारहरुले गरुडका मूर्तिमा निर्माता व्यक्ति र राजाहरुको अनुहार मिलाइन्थ्यो भन्ने विचार गरी (वज्राचार्य, २०३३: १२७) चाँगुनारायणस्थानमा थापेको गरुडमूर्तिमा मानदेवले आफूलाई नै स्थापित गरेको कुरा पनि मानेका छन् । राजाहरु आफैं ठूला देवता वा नारायणजस्तै मानिने हुँदा उनीहरुले आफूलाई गरुडको रुपमा प्रस्तुत गरे होलान् भनी मानिहाल्न गाहारो लाग्दछ ।
कुनै इतिहासकारले पशुपति खालका मुद्राको प्रचुरताको आधारमा लिच्छविकालमा राजालाई पशुपतिनाथको अवतार मान्ने धारणा थियो भन्ने अर्थ गरेका छन् (गोपाल, वर्मा, १९७७: ३२) । लिच्छविकालमा राजाका नाममा मुद्रा नचलाइएको कारणमा राज्य पशुपतिनाथलाई चढाइएको हुनाले राजाहरुले आफ्नो नाउँ राखेर मुद्रा नचलाएका हुन् भन्ने पनि यस्ता इतिहासकारको विचार रहेको छ (ऐजन) ।

७. काशीप्रसाद जायसवालले यसबारेमा यस्तो टिप्पणी लेख्नु भएको छ । "Dual sovereignty is a bad working hypothesis to the modern political theorists. But it is fully attested and authenticated by the history of Nepal. It is in the very soil of Nepal and works well, wonderfully well (Jaysawal, 1976:) .

८. अंशुवर्माको ई. ६०६ को हाँडीगाउँको अभिलेखमा "श्रीभट्टारकपादानां प्रत्येकं पु २४" भन्ने सन्दर्भ परेको छ (वज्राचार्य, २०३०: ३०१) । राजा युवराज र युवराजका भाइहरु (साहेबज्यू) प्रत्येकलाई २४ पुराण दिने भन्ने यो सन्दर्भमा (नेपाल, २०४०: ६५,६८) राजा र

राजकुमारहरुको मात्र सन्दर्भ पाइने र रानी महारानीहरुको भेटीको व्यवस्था सो अभिलेखमा गरिएको नदेख्दा रानी महारानीहरुको संवैधानिकताबारे शंका उठाउने ठाउँ उब्जेको छ ।

९. देवीति महिषी वाच्या राज्ञा परिजनने च ।

१०. यो अभिलेखको अन्त्यमा "प्रयुगादो (सत्ययुगादि)" लेखिएको हुनाले "आभीर गुप्तहरुको हातबाट लिच्छवि नरेन्द्रदेवको हातमा शक्ति आएपछि अब सत्ययुग लाग्यो भन्ने प्रख्यापनसम्म पनि यस अभिलेखमा गरिएको छ" भन्ने अर्थ धनवज्र वज्राचार्यले गर्नुभएको छ (ऐजन: ४८०)। उक्त अभिलेखमा "संवत् ७८ कार्तिक शुक्लनवम्याम् प्रयुगादौ" लेखिएको र कार्तिकशुक्ल नवमीको दिनदेखि सत्ययुग आरम्भ भएको मान्ने कर्मकाण्डी र ज्योतिष परम्परा रही आएको कुरा पात्रोबाट थाहापाइन्छ । यस कारणले उक्त व्याख्या अतिशयोक्तिपूर्ण रहेको स्पष्ट बुझिन्छ ।

११. जीवान्त नाम देख्दा नरेन्द्रदेवका ई. ६४३ का दुइ अभिलेखमा कुमारामात्य पदवीसाथ देखिने प्रियजीव (ऐजन: ४५९, ४६५) र शिवदेव द्वितीयको ई. ६९७ को भृंगारेश्वर अभिलेखमा चर्चित क्षेमजीव (ऐजन: ५२०) लाई राजपुत्र बन्धुजीवका वंशज मान्न सकिएला?

१२. नरेन्द्रदेवको ई. ६७९ का एकै भाकाका दुइटा अभिलेखमा ।

१३. शिवदेव-अंशुवर्माको ई. ५९८ को खोपासी अभिलेखमा दूतकका रुपमा उल्लिखित देशवर्मा गोमीलाई माथि चर्चित देशवर्मासँग धनवज्र वज्राचार्यले समीकरण गर्नु भएको छ (ऐजन: २१२) । नामसाम्य देखिए पनि 'गोमी' थरमा अन्तर देखिएकोले यस विषयमा विशेष विचार गर्नुपर्ने देखिएको छ ।

१४. अभिलेखमा भीमवर्मालाई श्री पनि लेखिएको अर्थ बुझ्न सकिएको छैन । नन्दवर्माले आफ्ना पितालाई श्री नलेखाएको र दाजु वा भाइ भीमवर्मालाई श्री लेखिदिनाले केही विशेष कारण हुनुपर्दछ भन्ने लाग्दछ।



# खण्ड - ७

## परिशिष्ट

### १. अभिलेख सूची

राजा धर्मदेव

| क्र.सं. | संवत् | ईस्वी | कर्ता | स्थान | सन्दर्भ |
|---|---|---|---|---|---|
| १. | ... | ... | (धर्मदेव) | पशुपति | |
| | राजवंशी, २०४६ | | | | |

राजा मानदेव

राजा मानदेव प्रथम, उनका रानी तथा छोरीहरुका अभिलेख

| क्र.सं. | संवत् | ईस्वी | कर्ता | स्थान | सन्दर्भ |
|---|---|---|---|---|---|
| २. | ३८६ | ४६४ | मानदेव | चाँगुनारायण | |
| | वज्राचार्य, २०३०:१०-१३ | | | | |
| ३. | ३८९ | ४६७ | मानदेव | लाजिम्पाट | ऐजन: ३४ |
| ४. | ३८९ | ४६७ | मानदेव | लाजिम्पाट | ऐजन: ३५ |
| ५. | ३९० | ४६८ | रानी क्षेमसुन्दरी | लाजिम्पाट | ऐजन: ३९ |
| ६. | ३९८ | ४७६ | मानदेव | विष्णुपादुका फेदी | ऐजन: ४१-४२, पन्त, २०४३: ५५८-५६० |
| ७. | - | - | (रानी भोगिनी) | ऐजन | वज्राचार्य, २०३०: ४४ |
| ८. | ४१९ | ४९७ | रानी गुणवती | लाजिम्पाट टुकुचा | ऐजन: ६५ । |
| ९. | - | - | मानदेव | केलटोल | ऐजन: ७१ । |
| १०. | ४२७ | ५०५ | राजकुमारी विजयवती | सूर्यघाट | ऐजन: ८२-८३। |

मानदेवको पालामा उनको नामोल्लेख गरी जनताले लेखाइ राखेका मितिसहितका अभिलेख

| क्र.सं. | संवत् | ईस्वी | कर्ता | स्थान | सन्दर्भ |
|---|---|---|---|---|---|
| १२. | ३८८ | ४६६ | नरवर्मा | लाजिम्पाट धोवीचौर | ऐजन: ३१ । |
| १३. | ३९९ | ४७७ | रत्नसंघ | देउपाटन | ऐजन: ५०-५१ । |
| १४. | ४०२ | ४८० | सार्थवाहरत्नसंघ | देउपाटन | ऐजन: ५५-५६ । |
| १५. | ४१३ | ४९१ | जयलम्म | टेबहाल | ऐजन: ५९ । |
| १६. | ४१३ | ४९१ | जयलम्भ | पशुपति | ऐजन: ६२-६३ । |
| १७. | ४२५ | ५०३ | विजयस्वामिनी | पलाञ्चोक | ऐजन: ६७ |
| १८. | ४२७ | ५०५ | निरपेक्ष | चांगु | ऐजन: ७९ |

